## आदि कवि भानुभक्त कृत

# आठ काण्ड रामायण



# रामायणको विषय-सूची

## विषय : (श्लोकदेखि-श्लोकसम्म)

## बालकाण्ड
### पृष्ठ १ देखि ४४ सम्म



## अयोध्याकाण्ड
### पृष्ठ ४५ देखि ७५ सम्म

## अरण्यकाण्ड
**पृष्ठ ७६ देखि १०१ सम्म**



## किष्किन्धा काण्ड
**पृष्ठ १०२ देखि १३० सम्म**

## सुन्दरकाण्ड
पृष्ठ १३१ देखि १६३ सम्म



## युद्धकाण्ड
पृष्ठ १६४ देखि २९१ सम्म

## उत्तरकाण्ड
**पृष्ठ २९२ देखि ३३९ सम्म**

## रामाश्वमेधकाण्ड

**पृष्ठ ३४० देखि पृष्ठ ५५० सम्म तथा श्लोक १ देखि श्लोक १२४२ सम्म**

## चित्राऽऽवलिः

पृष्ठमा: ९-१४-२१-२२ (२)-२३ (२)-२४ (२)-२५ (२) २६-२९-३०-३१-३२-३४ (२)-३५-३६ (२) -३७-३८-३९-४२ (२)-४७-४९-५०-५४-५७ (२) -५८ (२)-५९-६१-६२-६३-६४-६५-६६ (२) -६७-६८-७२-७३-७४-७५-७९-८०-८१-८३-८४-८५-९४-९५-१०१-१०४-११०-१११-११६-१२३-१२६-१२९-१३०-१३२-१३३-१३४-१३७-१४१-१४७-१४८-१५२-१५६-१५७-१६०-१६३-१७१-१७३-१७४-१८४-१८५-१८६-१८७-१८९-१९४-१९६-२०६(२)-२२३ (४)-२४६-२५४-२५९-२६१-२६२-२६५-२६७-२७२-२७३-२७६-२७९ -२८१-२८२-२८४ (२)-२८५-२८६-२८७-३१९-१३९ मा हेर्नुहोस् । प्रारम्भको १९ चित्रसहित कुल १३५ चित्र ॥

- इति -


**वि०सं० १९४४ सालमा, भारत जीवन मुद्रणालय, बनारसमा मोतिराम भट्टद्वारा पहिलोचोटि 'भानुभक्तको रामायण' छापिएको थियो । त्यसपछि धेरै प्रकाशकले धेरै किसिममा छपाउँदै आएका छन् । तर, त्यसै रामायणलाई एक सय चौध वर्षपछि वि० सं० २०५८ सालमा तुलसीराम आचार्यद्वारा चित्रमय रूपमा यो यसरी पहिलोचोटि छापिएको हो।**

( अपरिवर्तनीया भानुभक्तीय-भाषा )






श्रीः



आदिकवि भानुभक्तकृत



# आठकाण्ड रामायण



माहात्म्य–१

एक् दिन् नारद सत्यलोक् पुगिगया ❀ लोक्को गरूँ हित् भनी ।
ब्रह्मा ताहिँ थिया पऱ्या चरणमा ❀ खूशी गराया पनि ।।
क्या सोध्छौ तिमि सोध भन्छु म भनी ❀ मर्जी भयाथ्यो जसै ।
ब्रह्माको करुणा बुझेर ऋषिले ❀ बिन्ती गऱ्या यो तसै ।।१

हे ब्रह्मा ! जति हुन् शुभाऽशुभ सबै ❀ सूनीरह्याँछू कछु ।
बाँकी छैन तथापि सुन्न अहिले ❀ इच्छा म यो गर्दछु ।।

आऊला जब यो कली बखतमा ❀ प्राणी दुराचार् भई ।
गर्न्याछन् सब पाप् अनेक् तरहका ❀ नीच्का मतीमा गई ॥२
साँचो बात गरैन कोहि अरुकै ❀ गर्नन् त निन्दा पनि ।
अर्काको धन खानलाइ अभिलाष् ❀ गर्नन् असल् हो भनी ॥
कोही जन् त परस्त्रिमा रत हुनन् ❀ कोही त हिंसामहाँ ।
देहैलाइ त आत्म जानि रहनन् ❀ नास्तिक् पशू झैं तहाँ॥३
काम्का चाकर झैं भएर रहनन् ❀ स्त्रीलाइ द्यौता सरी ।
मान्नन् पितृ र मातृलाइ बुझि खूब् ❀ शत्रू सरीका गरी ॥
ब्राह्मण् भैकन वेद बेचिरहनन् ❀ कोही पढुन् तापनि ।
धन् ठूलो छ पनी भन्या सहज धन् ❀ आर्जन् गरौंला भनी ॥४
जाती धर्म रहैन क्षत्रिहरुमा ❀ जो छन् इ नीचाहरू ।
शूद्रादी त तपस्वि होइरहनन् ❀ ब्राह्मण् सरीका बरु ॥
स्त्री धेर् भ्रष्ट हुनन् पती र ससुरा- ❀ को द्रोह ठूलो गरी ।
यस्ता दुष्ट कसोरि मुक्त त हुनन् ❀ संसार-सागर् तरी ॥५
यो चिन्ता मनमा भयो र अहिले ❀ सोधूँ उपायै भनी ।
आयाको छु दयानिधान ! कसरी ❀ तर्नन् सहज् ई पनि ॥
यस्तालाइ उपाय तर्न सजिलो ❀ कुन् हो उ आज्ञा गरी ।
मेरो चित बुझाइ-बक्सनुहवस् ❀ क्याले इ जान्छन् तरी ॥६
नारद्ले दुनियाँ-उपर् गरि दया ❀ बिन्ती गर्‍या यो जसै ।
ब्रह्माजी पनि खूब् प्रसन्न हुनुभै ❀ मर्जी भयो यो तसै ॥

हे नारद् ! सब पाप हर्नकन ता ❀ रामायणैका सरी ।
आर्को मुख्य उपाय छैन सबको ❀ हित् यै छ अमृत् सरी ॥७
शम्भूदेखि सुनेर तत्त्व सब यो ❀ गान् पार्वती गर्दछिन् ।
राम्को नाम अपार जानि बहुतै ❀ आनन्दमा पर्दछिन् ॥
जस्ले गान्कन गर्दछन् ति त सहज् ❀ संसार पार् तर्दछन् ।
कालैको पनि ताप् हुँदैन भय सब् ❀ तिन्का सहज् टर्दछन् ॥८
यो सब् शास्त्रविषे बडो छ रघुनाथ्- ❀ को रूप् जनाईदिन्या ।
जो छन् सब् इ पुराणहेरु सबमा ❀ यै मुख्य जानीलिन्या ॥
गर्छन् कीर्तन सुन्दछन् पनि भन्या ❀ यो पाउँछन् फल् भनी ।
तिन्को पुण्य बखान गर्न त सबै ❀ सक्तीनँ मैले पनि ॥९
सून्याथ्याँ शिवदेखि यस्कि महिमा ❀ एक् श्लोक् पढुन् तापनि ।
भक्तीले यदि यो पढ्यो पनि भन्या ❀ पाप् छुट्तछन् सब् भनी ॥
जो एक्चित्त गरेर पाठ खुशि भै ❀ गर्छन् सदा यै भन्या ।
जीवन्-मुक्त तिनै त हुन्, नर भई ❀ ईश्वर् सरीका बन्या ॥१०
पूजा पुस्तकको गर्‍या पनि त फल् ❀ एक् अश्वमेध्का सरी।
पाऊँछन् सुनि यो कहीं पनि भन्या ❀ पाप् छुट्तछन् त्यै घरि ॥
जो ता पुस्तकका नजीक् गइ नमस्- ❀ कारै फगत् गर्दछन् ।
तेस्ता जन् सब देवता पुजि हुन्या ❀ फल्-भोगमा पर्दछन् ॥११
चारै वेद पढेर शास्त्रहरुको ❀ व्याख्यान गर्दा पनि ।
पाईंदैन उ फल् त पाउँछ सहज् ❀ पुस्तक् दिनाले पनि ॥

भक्तीले कहिँ भक्तका घर गई ❀ एकादशीमा कह्या।
चौबीस्पल्ट पुरश्चरण् गरि हुन्या ❀ गायत्रिका फल् भया॥१२
जस्ले रामनवमी उपासि खुशिले ❀ जाग्राम् समेतै गरी।
यो रामायण पाठ् गरोस् कि त सुनोस् ❀ तन्मन् यसैमा धरी॥
तेस्ले तीर्थपिछे तुला-पुरुष दान् ❀ सूर्य्यै ग्रहण्मा गऱ्यो।
यस्मा संशय छैन जान्नु सबले ❀ आनन्दमा त्यो पऱ्यो॥१३
रामायण्कन गाउन्या पुरुषको ❀ आज्ञा त इन्द्रै पनि।
मान्छन् श्रीरघुनाथका प्रिय इ हुन् ❀ मान्न्या इनै हुन् भनी॥
रोज् रोज् यस्कन पाठ् गरेर जनले ❀ सत्कर्म गर्छन् जति।
कोटीगुण् फल बढ्ति मिल्छ सबको ❀ घट्तैन तिन्का रती॥१४
यस्मा राम्-हृदयै छ पाप् हरिलिन्या ❀ क्वै ब्रह्म-घाती पनि।
शुद्धात्मा बनिजान्छ दिन् दिन पढ्या ❀ गर्नन् कृपा राम्-धनी॥
रोज्-रोज् तीनपटक् अगाड़ि हनुमान् ❀ राखेर पाठ् गर्छ जो।
जस्तो भोग्कन गर्न खोज्दछ उ भोग् ❀ सम्पूर्ण पाऊँछ सो॥१५
जो यो पाठ् तुलसी पिपल् वरिपरी ❀ गर्छन् प्रदक्षिण् गरी।
तिन्का पाप् सब जन्मका जति त छन् ❀ छुट्छन् ति तेसै घरि॥
तेस्मा रामगिता छ ज्ञन् अति ठुलो ❀ जस्को महात्म्यै पनि।
सब् जान्न्या शिव मात्र छन् अरु त क्वै ❀ जान्दैन यस्तो भनी॥१६
आधा पार्वति जान्दछिन्, म त अझै ❀ चौथाइ पो जान्दछु।
गीता पाठ गरेर नाश नहुन्या ❀ पाप् छैन यो मान्दछु॥

राम्ले वेद मथन् गरीकन झिक्या ❀ गीता र अमृत् सरी ।
लक्ष्मण्लाइ दिया, यही पढिलिया ❀ जाइन्छ संसार् तरी ॥१७
मार्छू निश्चय कार्तवीर्य भनि खुब् ❀ ठूलो इरादा धरी ।
पढ्थ्या श्रीशिवथ्यैँ गई परशुराम् ❀ दिन्-दिन् चरण्मा परी ॥
पढ्थिन् पार्वति राम्गिता तहिँ सुनी ❀ पाठ् गर्न लागीगया ।
राम्गीता तहिँदेखि पाठ् गरिलिदा ❀ नारायणै ती भया ॥१८
मैह्ला दिन् यहि राम्गिता पढिलिया ❀ सब् ब्रह्म-हत्त्याहरू ।
छुट्छन्, निश्चय छुट्तछन् सकल पाप् ❀ भन्न्या बखान् क्या गरूँ॥
शालिग्राम् तुलसी पिपल् कित बड़ा ❀ संन्यासिथ्यैँ जो गई ।
राम्-गीताकन पाठ् गर्‍यो पनि भन्या ❀ ठूलो महात्मा भई ॥१९
जुन् फल् छन् मुखले भनी नसकिन्या ❀ सो फल् ति भोग् गर्दछन् ।
कोही श्राद्धविषे पढुन् त तिनका ❀ पितृ सबै तर्दछन् ॥
पैह्ले खूब नियम् गरी दशमिमा ❀ एकादशीमा पनि ।
आसन् बाँधि अगस्ति-वृक्षमनि पाठ् ❀ गर्छू र. गीता भनी ॥२०
राम्-गीता उपवास् गरीकन बहुत् ❀ आदर् गरी पढ्छ जो ।
तेस्लाई त नभन्नु मानिस भनी ❀ रामै सरीको छ त्यो ॥
दान् ध्यान् तीर्थ कदापि केहि नगरी ❀ यै राम-गीता पढी ।
बस्छन् जो ति अनन्तका पदविमा ❀ जान्छन् सदा पार् तरी॥२१
धेरै बात गरेर हुन्छ अब क्या ❀ रामायणै हो जबर् ।
पाप् हर्नाकन छैन केहि बुझि यो ❀ येसै सरीको अवर् ॥

जो छन् तन्त्र पुराण् श्रुति स्मृति इ ता ❀ सोहै कलामा पनि ।
पुग्दैनन् त बखान् कहाँतक गरूँ ❀ यो फेरि ठूलो भनी ॥२२
जो रामायणको महात्म्य विधिले ❀ नारद्जिलाई कह्या ।
जुन् सूनीकन चित्तले बुझिलिँदा ❀ नारद् पनी खुश् भया ॥
पाठ् गर्छन् कि त सुन्दछन् यदि भन्या ❀ यो येति सुन्दा पनि ।
जान्छन् सब् उहि विष्णुका पुरिमहाँ ❀ खूब् पूज्य सब्का बनी॥२३

**श्रीराम जय राम जय जय राम**

●



# आठकाण्ड रामायण बालकाण्ड





कैलास्मा भगवान् सदाशिव थिया ❀ ध्यान्मा बहुत् मन् दिई ।
वाम् काख्मा बहुतै पियारि हितकी ❀ श्री पार्वतीजी लिई ॥
एक् दिन् पार्वतिले तहाँ शिवजिथ्यैँ ❀ सोधिन् चरण्मा परी ।
आफू ता सब जान्दथिन् तर दया ❀ संपूर्ण लोक्मा गरी ॥२४
हे नाथ् ! बिन्ति म गर्दछू हजुरमा ❀ राम् हुन् जगत्का पति ।
राम्देखी अरु कोहि छैन जनका ❀ संसार तार्न्या गति ॥
जस्को भक्ति गर्‍यो भन्या अति गभीर् ❀ संसार सागर्महाँ ।
नौका झैँ तरिजान्छ झट्पट गरी ❀ तेस् नर्कि देहै तहाँ ॥२५
यस्ता राम्कन लोकमा जनहरू ❀ एक् ईश्वरै मान्दछन् ।
केही तत्त्व नपाइ मूर्खहरु ता ❀ मानिस् सरी ठान्दछन् ॥
ज्या भन्छन् ति कि राम ईश्वर भया ❀ शोक् क्यान तिन्ले गर्‍या ।
सीता रावणले जसै हरिदियो ❀ ठूलो विपत्मा पर्‍या ॥२६
ईश्वर्लाइ त शोक् हुँदैन र भनूँ ❀ हूँदैन अज्ञान् पनि ।
यिन्मा यो सब देखियो त कसरी ❀ जान्नू इ ईश्वर् भनी ॥
लोक् यस्तो पनि भन्छ कोहि भगवन् ❀ यस्मा विचार् खुब् गरी ।
जस्तो हो सब यो बताउनुहवस् ❀ सन्देह मेरो हरी ॥२७
यस्तो प्रश्न सुन्या र पार्वतिजिको ❀ खूशी पनी खुब् भया ।
राम् यस्ता प्रभु हुन् भनेर शिवले ❀ सब् तत्त्व तार्हिँ कह्या ॥
सून्यौ पार्वति ! राम् अनादि परमे- ❀ श्वर् हुन्ति आकाश्सरि ।
सब् ढाकीकन बस्तछन् अधिविराट् ❀ सम्पूर्ण सृष्टी गरी ॥२८

जस्तै चुम्बकका नजीक् परिगया ❀ नाच्छन् इ लोहा पनि।
तस्तै जस्कन पाइ नाच्तछ जगत् ❀ नाना किसिम्को बनी ॥
यस्तो तत्त्व नजानि मानिस सरी ❀ राम्लाइ जो गर्दछन् ।
संसार्का इ अनन्त ताप्हरु तिनै- ❀ लाई सदा पर्दछन् ॥२९
बादल्ले अरु ढाक्छ, ढाक्छ कहिँ क्या ❀ श्रीसूर्यलाई पनि ।
लोक् ता भन्छ उठ्यो र बादल ठुलो ❀ सब् सूर्य ढांक्यो भनी ॥
तस्तै तत्त्व नजानि बोल्छ जन जो ❀ सो भन्छ मानिस् पनि।
योगी ज्ञानि त चिन्दछन् इ रघुनाथ् ❀ त्रैलोक्यका नाथ् भनी ॥३०
जस्लाई रिङ्टा छ भन्छ उ फगत् ❀ घुम्छन् उ पर्वत् भनी।
घुम्दैनन् इ त, घुम्छ तेहि रिङ्टा ❀ जान्दैन कोही पनि ॥
अज्ञान्-रूप् रिङ्टा हुन्या जनहरू ❀ भन्छन् ति मानिस् भनी।
राम् ता हुन् परमेश्वरै सकल यो ❀ चौधै भुवन्का धनी ॥३१
सूर्यैमा पनि अन्धकार् छ कहिँ क्या ❀ तेस्तै यि राम्मा पनि ।
शोक् अज्ञान् रति छैन जान्नु सबले ❀ आत्मा यिनै हुन् भनी ॥
आर्को गोप्य रहस्य भन्छु सुन यो ❀ सम्वाद् सिता-रामको ।
भूभार् हर्नु थियो हऱ्या जब सबै ❀ छिन्छान् भयो कामको॥३२
भूमीको सब भार् हरेर रघुनाथ् ❀ राज् गर्न लाग्या जसै ।
देख्या श्रीहनुमानलाइ र दया ❀ आयो प्रभूमा तसै ॥
सीतालाइ हुकुम् तहीँ दिनुभयो ❀ सीते ! हनूमान् बड़ा ।
हाम्रा भक्त भया इ तत्त्व लिनका ❀ खातिर् यहाँ छन् खड़ा ॥३३
इन्लाई तिमि तत्त्व देउ भनि यो ❀ हूकूम् भयाथ्यो जसै ।
सीताले हनुमानलाइ दिनुभो ❀ जुन् तत्त्व हो सो तसै ॥

आर्को तत्त्व त केहि छैन हनुमान् ! ❀ कुन् आज आर्को कहूँ ।
राम् हुन् ब्रह्म यिनैकि शक्ति बलिई ❀ माया भन्याकी म हूँ ॥३४
राम्को सन्निधि पाइ गर्छु सबको ❀ सृष्टी र पालन् पनि ।
आरोप् रामविषे गरिन्छ सब यो ❀ गर्न्या इनै हुन् भनी ॥
यस् निर्मल् रघुवंशमा प्रभुजिले ❀ जो जन्म याहीँ लिया ।
विश्वामित्र निमित्त यज्ञहरुमा ❀ राखी दया मन् दिया ॥३५
जो पाप् गौतम-पत्निका हरिदिया ❀ जो भाँचिदीया धनू ।
जो मैलाइ बिहा गर्न्या सब कुरा ❀ यस्ता कहाँतक् भनूँ ॥
जो ता गर्व हर्‍या ति वीर् परशुराम्- ❀ को, जो अयोध्या बस्या।
बाह्रै वर्ष बिहा गर्न्या-पछि बसी ❀ जो ता वनैमा पस्या ॥३६
यस्ता जे जति काम् भया त सब काम् ❀ गर्न्या म हूँ तापनि ।
भन्छन् लोक त रामलाइ सबका ❀ कर्ता यिनै हुन् भनी ॥
अन्तर्यामि अनादि साक्षि ति त हुन् ❀ कर्ता कहाँ ती थिया ।
मेरा गूण लिँदा त लोकहरुले ❀ कर्ता भनी पो दिया ॥३७
येती ताहिँ सिताजिबाट उपदेश् ❀ पाई सक्याथ्या जसै ।
आफैँ राम् प्रभुले पनी दिनुभयो ❀ फेर् तत्त्वको ज्ञान् तसै ॥
यस्तो हुन्छ परात्म आत्म यहि हो ❀ यो हो अनात्मा भनी ।
आत्मा और परात्मलाइ बुझदा ❀ पाइन्छ मुक्ती पनि ॥३८
आत्माको र परात्मको छ कति फेर् ❀ त्यो एक जानीलिनू ।
जुन्-जुन् चीज अनात्म हुन् उ त झुटा ❀ जानेर छाड़ीदिनू ॥
आत्माको र परात्मको गरि विचार् ❀ एक् तत्त्व जान्यो जसै ।
अज्ञान् सब् छुटिजान्छ ती पुरुषका ❀ मै तुल्य हुन्छन् तसै ॥३९

यो मेरो हृदयै त हो प्रिय छ यो ❀ खूब् गुप्त राख्नू पनि ।
तत्त्वज्ञान् भनि यै कहिन्छ बुझिल्यौ ❀ सून्यौ हनूमान् भनी ॥
तत्त्वज्ञान् हनुमानलाइ रघुनाथ्- ❀ ले यै दिनूभो तहाँ ।
सोही ज्ञान् तिमिथ्यैँ कहीकन सक्याँ ❀ सम्पूर्ण मैले यहाँ ॥४०
सून्यौ पार्वति रामको हृदय यो ❀ जो-जो त पाठ् गर्दछन् ।
जो छन् जन्म सहस्त्रका सकल पाप् ❀ तिन्का सबै टर्दछन् ॥
जातिभ्रष्ट अधम् हवस् तपनि लौ ❀ यस्लाइ खुप् पाठ् गरी ।
राम्को ध्यान् पनि गर्छ पो पनि भन्या ❀ त्यो जान्छ संसार्तरी ॥४१
सूनिन् पार्वतिले अपार महिमा ❀ यो रामजीको जसै ।
फेर् विस्तार् गरि सुन्नलाइ मन भो ❀ ती पार्वतीको तसै ॥
बिन्ती फेर् शिवथ्यैँ गरिन् पनि तहाँ ❀ हे नाथ् ! सबै रामको ।
लीला सुन्न मलाइ मन् हुन गयो ❀ येही बुझ्याँ कामको ॥४२

भारपीडित पृथ्वी ब्रह्मादि देवताहरू भाठौं जानु र भगवान् उनको प्रार्थनाले प्रकट भई उनलाई धैर्य दिनु-३

सूनोस् रामलिला भनेर म- उपर् ❀ माया बहूतै धरी ।
सब् लीलाहरु फेर् बताउनुहवस् ❀ जो छन् ति विस्तार् गरी ॥
यो प्रेम् पार्वतिको सुन्या र शिवले ❀ खुप् प्रेम राखिन् भनी ।
जो जो हुन् सब राम्-चरित्र शिवले ❀ ताहाँ बताया पनि ॥४३
ई भूमीकन रावणादि विरले ❀ भारी बनाई-दिया ।
भारी भै ति रुँदै गइन् उहिँ, जहाँ ❀ ब्रह्मा बस्याका थिया ॥
पापी धेर् भइ भार् भयो मकन ता ❀ यो भार छूटोस् भनी ।
आयाँ आज दयानिधान् ! चरणमा ❀ यो बिन्ति पारिन् पनि ॥४४
यस्तो बिन्ति सुनी दया पनि उठ्यो ❀ ती भूमिमाथी तहाँ ।
दौडी क्षीर समुद्रका तिर गया ❀ विष्णू रहन्थ्या जहाँ ॥

इन्द्रादीहरु साथमा लिइ स्तुती ❀ ताहाँ गऱ्याथ्या जसै ।
सर्वात्मा भगवान् प्रसन्न हुनुभै ❀ दर्शन् दिनूभो तसै ॥४५
देख्या सुन्दर रूप् जसै प्रभुजिको ❀ ब्रह्मा चरण्मा पऱ्या ।
भक्तीले स्तुति खुप् गरेर खुशि भै ❀ हात् जोरि बिन्ती गऱ्या॥
हे नाथ् ! रावण दुष्ट भै सकल लोक्- ❀ लाई विपित्ती दियो ।
इन्द्रादीहरुको त तेज् सहजमा ❀ खैँचेर तेस्ले लियो ॥४६
यस्लाई अब मारिबक्सनुहवस् ❀ मानिस् सरीका बनी ।
मानिस्देखि मऱ्यास् भनेर वरदान् ❀ दीईरह्याँछू पनि ॥
ब्रह्माको बिनती सुनेर भगवान्- ❀ को यो हुकूम् भो अनि ।
रावण्लाइ म मारुँला सहजमा ❀ मानिस् सरीको बनी ॥४७
माया मेरि सिता भएर रहनिन् ❀ छोरी जनक्की भई ।
छोरो भैकन जन्मुँला म दशरथ्- ❀ जीका घरैमा गई ॥
सीतालाइ लिएर पूर्ण गरुँला ❀ बिन्ती म तिम्रो भनी ।
अन्तर्धान् भगवान् तहीँ हुनुभयो ❀ त्रैलोक्यका नाथ् अनि॥४८

भगवान्को जन्म र बाललीला–४

अन्तर्धान् भगवान् जसै हुनुभयो ❀ इन्द्रादिलाई पनि ।
ब्रह्माले खुशि भै अह्राउनुभयो ❀ भूलोक जाऊ भनी ॥
मानिस् भै भगवान् जती त रहनन् ❀ तेस् पृथ्वितल्मा गई ।
वानर् भैकन सब् तिमी बसिरह्या ❀ साहाय जस्ता भई ॥४९
ब्रह्माजी अनि सत्यलोक् गइगया ❀ येती अह्राईवरी ।
इन्द्रादी पनि वानरै भइ रह्या ❀ सब् पृथ्विलोक्मा झरी॥
यै बीच्मा दशरथ् बडा विर थिया ❀ राजा अयोध्यामहाँ ।
तिन्को वृद्ध उमेर् भयो र पनि एक् ❀ छोरा भयानन् तहाँ ॥५०

तापले पूर्ण भई गुरूसित गया ❀ सोध्या उपायै पनि ।
हे सर्वज्ञ मुने ! कसोगरि हुनन् ❀ छोरा मलाई भनी ॥
यस् कामले फल मिल्छ यो भनि सबै ❀ जान्या वशिष्ठै थिया ।
यस्तो बिन्ति सुनी वशिष्ठ गुरुले ❀ युक्ती बताईदिया ॥५१
हुन्छन् पुत्र अवश्य जल्दि महराज् ❀ एक् यज्ञ ऐह्ले गऱ्या ।
शान्ताका पति ऋष्यशृंग ऋषि छन् ❀ ती डाक्नु ऐह्ले पऱ्या ॥
ती हामी बसि यज्ञ एक् हजुरको ❀ खातिर् गरौँला जसै ।
चार् छोरा अति वीर् हुनन् हजुरका ❀ सब् ताप छुट्नन् तसै ॥५२
यस्तो अर्ति वशिष्ठको जब सुन्या ❀ राजा बहुत् खुश् भया ।
शान्ताका पतिलाइ डाकिकन खुप् ❀ याग् गर्न लागीगया ॥
ऋष्यशृङ्ग वसिष्ठ दूइ ऋषिले ❀ याग् गर्न लाग्या जसै ।
पायस्को थलिया लिईकन तहाँ ❀ आया ति अग्नी तसै ॥५३
यस् पायस्कन आज लेउ महराज् ❀ छोरा हुन्याछन् भनी ।
राजालाइ दिया र पायस तहाँ ❀ लूक्या ति अग्नी पनि ॥
राजा खूशि भई दुवै ति ऋषिका ❀ कोमल् चरण्मा परी ।
कौसल्या र ति कैकयीकन दिया ❀ पायस् दुवै भाग् गरी ॥५४
खानै बाँकि थियो तसै बखतमा ❀ आइन् सुमित्रा पनि ।
कौसल्या र ति कैकयीसित भनिन् ❀ ख्वै भाग मेरो भनी ॥
दूवैले दुइ भागदेखि झिकि भाग् ❀ तिन्को पुऱ्याईदिया ।
तीन् रानि मिलि तेहि पायस तहाँ ❀ संपूर्ण खाईलिया ॥५५
तीनै रानि ति गर्भिणी पनि भया ❀ तेज् देवताको सरि ।
देखीयो सब रानिका, सकल लोक् ❀ खूशी भया तेस् घरि ॥

कौसल्या जननी गराइ भगवान् ❀ श्रीराम पैदा भया ।
देखिन् श्रीप्रभुको चतुर्भुज स्वरूप् ❀ सब् माइका ताप् गया ॥५६
हात् जोरी बहुतै स्तुती पनि गरिन् ❀ ईश्वर् इनै हुन् भनी ।
जान्याँ नाथ ! हजूरलाइ सबका ❀ आत्मा-स्वरूपी भनी ॥
यो ब्रह्माण्ड पनी सहज् उदरमा ❀ लीन्या त आफै थियौ ।
मेरा आज उदर्- विषे बसि यहाँ ❀ यो जन्म ऐह्ले लियौ ॥५७



(१. रामले जन्मनासाथ मातालाई आफ्नू चतुर्भुजस्वरूपको दर्शन दिनुभएको ।)

देख्याँ भक्त-उपर् दया हजुरको ❀ हे नाथ् ! शरण्मा पर्‍याँ ।
यै मूर्ती प्रभुको सदा मनमहाँ ❀ झल्कोस् पुकारा गर्‍याँ ॥
यस्तो दिव्यशरीर् लुकाइकन लौ ❀ बालक् स्वरूप्का बनी ।
दर्शन् देउ मलाइ हेर्छु भगवान् ❀ फेर् बाललीला पनि ॥५८
तेही बालक मूर्तिलाइ म यहाँ ❀ आलिङ्गनादी गरी ।
सब् पाप् नष्ट गराउँला र करुणा ❀ होला र जाँला तरी ॥
यो बिन्ती महतारिको सुनि हुकूम् ❀ यो भो प्रभूको तहाँ ।
मातर् ! जुन् छ हजूरको हित कुरो ❀ होओस्सबैथोक् यहाँ ॥५९



(२. रामले मातालाई आफू जन्म लिनाको कारण बताउनुभएको ।)

दूवै स्त्री पुरुषै भई अघि ठुलो ❀ मेरो तपस्या गऱ्यौ ।
तीमीलाइ म पुत्र पाउँ भनि खुप् ❀ इच्छा यसैमा धऱ्यौ ॥
हूँला पुत्र भनेर वर् पनि दियाँ ❀ सोही कुराले यहाँ ।
तिम्रो पुत्र भएर जन्मन गयाँ ❀ व्यर्थै म गर्थ्याँ कहाँ ॥६०



(३. आमाको आज्ञाले आफ्नू स्वरूप बदली बालक हुनुभएको राम ।)

कौसल्यासित बात् पनी यति गरी ❀ बालक् सरीका बनी ।
चोष्टा बालककै लिया प्रभुजिले ❀ खुप् रून लाग्या पनि ॥

सोही बिन्ति गरूँ भनेर अहिले ❀ आयाँ हजुर्मा यहाँ ।
जेठा पुत्र मलाइ बक्सनुहवस् ❀ लैजान्छु ऐह्ले वहाँ ॥६९
लक्ष्मण् साथ् गरि रामलाइ अधिराज् ❀ ऐह्ले हजुर्ले दिया ।
मारीच्लाइ सुबाहुलाइ सहजै ❀ मार्न्या यिनैले थिया ॥
यस्मा अर्ति वशिष्ठको लिनुहवस् ❀ दीना नदीना-महाँ ।
भन्छन् दीनु त बक्सनू पनि हवस् ❀ यै काम आयाँ यहाँ ॥७०
विश्वामित्रजिको सुन्या वचन यो ❀ राजा सकस्मा पऱ्या ।
दीऊँ की नदिऊँ यही मनमहाँ ❀ चिन्ता बहूतै गऱ्या ॥
सोध्या ताहिँ वशिष्ठथ्यैँ पनि गुरो ❀ यस्तो पऱ्यो क्या गरूँ।
कल्याण् हुन्छ कसो गरेर अहिले ❀ अर्तीमिलोस् एक्बरु ॥७१
राम्लाई म नदेखि बाँच्छु कसरी ❀ एक् यै कठिन् भो अनि ।
इन्लाई नदिया सराप् पनि दिनन् ❀ की लाग्छ यस्तो पनि॥
यस्मा श्रेय यसो छ, यो गर भनी ❀ पाऊँछु आज्ञा जसो ।
सोही काम म गर्दछू हित हुन्या ❀ कुन् पाठ् छ गर्नू कसो॥७२
यो बिन्ती दशरथ्जिको जब सुन्या ❀ ताहीँ गुरूले पनि ।
राम्को गुह्य कुरा सबै भनिदिया ❀ यस्ता इ राम् हुन् भनी॥
हे राजन् ! तिमि रामलाइ अहिले ❀ हुन् पुत्र मेरा भनी।
भन्छौ पुत्र ति हुन् तथापि इ त हुन् ❀ चौधै भुवन्का धनी ॥७३
भूभार् हर्न निमित्त आज भगवान् ❀ यस् पृथ्वितल्मा झऱ्या ।
कौसल्यातिर जन्मनू पनि थियो ❀ सो सत्य ऐह्ले गऱ्या॥
कौसल्या दशरथ् दुवै तिमिहरू ❀ कश्यप् अदीती थियौ।
ईश्वर्लाइ म पुत्र पाउँ भनि तप् ❀ गर्दै समाधी लियौ॥७४

खूशी भै वरदान् दिया प्रभुजिले ❀ छोरो म हूँला भनी ।
सोही सत्य गराउनाकन यहाँ ❀ जन्म्या परात्मा पनि ॥
शेषहुन् 'लक्ष्मण' शंख हुन् 'भरतजी' ❀ 'शत्रुघ्न' चक्रावतार् ।
हुन्, को जान्दछ तत्त्व यो बुझ तिमी ❀ लीला प्रभूको अपार् ॥७५
मूल् शक्ति प्रभुकी अनन्त गुणकी ❀ सो दिव्य मूर्ती बनी ।
छोरी भै ति बस्याकि छन् जनककी ❀ सीता छ नांऊँ पनि ॥
सीता राम् दुइको विवाह विधिले ❀ संयोग् गराऊँ भनी ।
विश्वामित्रजिको भयो र मनमा ❀ आईरह्याछन् पनि ॥७६
दीन्यै योग्य म मान्दछू भनि गुरू- ❀ ले अर्ति दीया जसै ।
खूशी भै दशरथ्जिले पनि दिया ❀ लक्ष्मण् सहित् राम् तसै॥
राम् लक्ष्मण्कन पाउँदा ऋषि पनी ❀ अत्यन्त खूशी भया ।
आशीर्वाद् दशरथ्जिलाइ दिइ राम् ❀ लक्ष्मण् लिई ती गया ॥७७
केही दूर् गइ रामलाइ ऋषिले ❀ विद्या सिकाईदिया ।
जुन् विद्या पढि भोक् थकाइ कहिल्यै ❀ लाग्दैन यस्ता थिया ॥
गङ्गाका तिरमा बडो वन थियो ❀ पूग्या जसै ती तहाँ ।
विश्वामित्रजिले कह्या प्रभुजिथ्यैँ ❀ राम् ! ताडका छे यहाँ॥७८
त्यो हो राक्षसि कामरूपि छ बहुत् ❀ लोक्लाइ बाधा पनि ।
गर्छे यस्कन मारिबक्सनुहवस् ❀ यो पापिनी हो भनी ॥
विश्वामित्रजिको वचन्कन सुनी ❀ श्रीरामजीले पनि ।
टङ्कार् खुब् धनुको गऱ्या सुनि यहाँ ❀ यो जल्दि आवस् भनी ॥७९
त्यो टङ्कार् सुनि ताडका पनि तहाँ ❀ दौडेर आई जसै ।
हान्या वाण् प्रभुले गड्यो हृदयमा ❀ ताहीँ मरी त्यो तसै ॥

यक्षी थी अघिकी सराप् परि तहाँ ❀ तेस्ती भयाकी थिई ।
राम्ले मारिदिदा त श्राप् पनि टऱ्यो ❀ फेर् यक्षिको रूप् लिई॥८०



(१०. रामले ताडका राक्षसीलाई वाण हानी मारेको ।)

श्रीराम्चन्द्रजिका वरीपरि घुमी ❀ प्रेम्ले नमस्कार् गरी ।
स्वर्गैमा गइ, रामका वचनले ❀ बेस् एक् विमान्मा चढी ॥
विश्वामित्र ऋषी बहुत् खुशि भया ❀ यो कार्य देख्या जसै ।
जो सब् शास्त्र-रहस्य हो सब दिया ❀ श्रीरामलाई तसै ॥८१
कामाश्रम् रमणीयस्थल् तहिँ थियो ❀ एक् रात् तहाँ वास् गरी ।
फेर् सिद्धाश्रममा गया रघुपती ❀ सब्लाइ मङ्गल् गरी ॥
त्यस्सिद्धाश्रममा अनेक् ऋषि थिया ❀ पूजा सबैले गऱ्या ।
मारीच् फेक्न, सुबाहु मार्नकन राम् ❀ ताहाँ अगाडी सऱ्या ॥८२

मारीच र सुबाहुको दमन तथा अहिल्योद्धार–६

विश्वामित्रजिलाइ भन्नु पनि भो ❀ मारीच् सुबाहू कहाँ ।
बस्छन्, यज्ञ ठुलो गरीलिनुभया ❀ ती आउँथ्या की यहाँ ॥
भेटै आज भयेन, मार्नु कसरी ❀ यो मर्जि सून्या जसै ।
विश्वामित्र ऋषी अरू ऋषि लिई ❀ होम् गर्न लाग्या तसै ॥८३

दिन् मध्याह्न भयो उसै बखतमा ❀ आया ति राक्षस् पनि।
मार्न्या काल्कन चाल् नपाइ अघिझैं ❀ होम् नाश् गरौंला भनी॥
काहीं हाड खसाउँछन् कहिं रगत् ❀ यस्तै प्रकार्ले गरी।
आया ती जब यज्ञमा प्रभुजिले ❀ हान्या अगाडी सरी॥८४



(११. रामले राक्षसहरूलाई मारेर मारीचलाई समुद्रको तीरमा पुऱ्याइदिएको।)

मारीच्लाइ त बाणले जलधिका ❀ तीर्मा पुऱ्याईदिया।
अग्नी-बाण धरी सुबाहुकन ता ❀ भस्मै गराईदिया॥
तिन्का फौज् पनि ताहिं लक्ष्मणजिले ❀ मारीसक्याथ्या जसै।
खूशी भैकन पुष्प-वृष्टि गरियो ❀ सब् देवताले तसै॥८५
विश्वामित्र बहुत् प्रसन्न हुनगै ❀ राम्लाइ काख्मा लिया।
भोजन् गर्न निमित्त राम्कन तहाँ ❀ मीठा फलादी दिया॥
तीन्दिन्ताहिंमुकाम्गऱ्याप्रभुजिले ❀ बार्ता कथाको गरी।
चौथादिन् ऋषिले गऱ्या विनति एक् ❀ राम्का अगाडी सरी॥८६
हे राम् ! जाउँ जनक्जिका पुरिमहाँ ❀ राजा जनक् छन् बडा।
गर्नन् आदर भक्तिले हजुरका ❀ साम्ने हुन्याछन् खडा॥

ताहाँ एक् शिवको धनुष् पनि छ बेस् ❀ देखीयला त्यो पनि।
यो बिन्ती ऋषिको सुनेर रघुनाथ् ❀ खूशी भया बेस् भनी ॥८७



(१२. राम लक्ष्मणले विश्वामित्रको सेवा गरेको ।)

विश्वामित्र र भाइ लक्ष्मण लिई ❀ श्रीराम् हिड्याथ्या जसै ।
आश्रम् गौतमको पर्‍यो नजरमा ❀ गंगा-किनार्मा तसै ॥
आश्रम्का नजिकै असल् फलसहित् ❀ फूल्को बघैँचा थियो ।
जन्तू नाम् त थियेन कोहि तपनी ❀ संभार् बिना त्यो जियो ॥८८
मालूम् राम्कन क्या कहीँ कमि थियो ❀ जो ता जगत्का धनी ।
सोध्या तैपनि यो असल् छ किन हो ❀ रित्तो बघैँचा भनी ॥
विश्वामित्र थिया सबै गुणनिपुण् ❀ विस्तार् सुनाया पनि ।
गौतम्को अघि बस्ति हो अब भन्या ❀ छैनन् यहाँ क्वै पनि ॥८९
भार्या गौतमकी समान गुणकी ❀ भक्तै अहिल्या थिइन् ।
ब्रह्माकी ति त पुत्रि हुन् गुणि हुँदा ❀ सब् खुश् गराईलिइन् ॥
गौतम् कार्य-निमित्त दूर् जब गया ❀ रूप् गौतमैको सरि ।
धारी गौतम-पत्निका नजिकमा ❀ श्रीइन्द्र सोही घरि ॥९०

आई भोग-विलास् गरेर खुशि भै ❀ फर्की गयाथ्या जसै ।
देख्ता गौतमलाइ गौतमजिले ❀ आश्चर्य मान्या तसै ॥
आफ्नू रूप दुरुस्त देखिकन खुप् ❀ गौतम् रिसाया पनि ।
सोध्या होस् तँ कउन् ? बता नहिँ भन्या ❀ हेर् भस्म गर्छू भनी ॥९१
ब्रह्मन् ! इन्द्र म हूँ भनेर डरले ❀ बिन्ती गऱ्याथ्या जसै ।
गौतम्ले पनि रीसमा परि दिया ❀ यस्तो सराप् पो तसै ॥
योनीमा अति लुब्ध आज भइछस् ❀ यत्रो बडो भै पनि ।
तेरा येहि शरीरमा अब हुनन् ❀ हज्जार योनी भनी ॥९२
पाया येति सराप् र इन्द्र पनि फेर् ❀ आफ्ना स्थलैमा गया ।
पत्नीलाइ सराप् दियेर ऋषिले ❀ पत्थर् बनाई-दिया ॥
जन्तु क्वै नहुनन् यहाँ अब उपर् ❀ पत्थर् भई तँ रह्यास् ।
जैले श्रीरघुनाथ् चरण् धरिदिनन् ❀ तैले तँ मुक्त भयास् ॥९३



(१३. श्रीरामले आफ्ना पाउले छोइदिदा अहिल्याको श्राप टरी सुन्दर रूप भएको।)

यस्तो सत्य सराप् पऱ्यो र पतिको ❀ ताहीँ अहिल्या पनि ।
पृथ्वीमा गिरिगैगइन् अचल भै ❀ पत्थर् स्वरूप्की बनी ॥

पादस्पर्श ति खोज्दछिन् हजुरको ❀ पाप् मुक्त होला भनी।
तिन्लाई करुणा गरी हजुरले ❀ कुल्चीदिन्या हो पनि॥९४
यस्तो बिन्ति सुन्या जसै ति ऋषिका ❀ श्रीराम् तुरुन्तै गया।
देख्या पत्थर एक् ठुलो प्रभुजिले ❀ कुल्चीदिदा त्यो भया॥
सुन्दर् मूर्ति भई खडा भइगइन् ❀ ताहाँ अहिल्या पनि।
श्रीराम्चन्द्रजिले प्रणाम् पनि गऱ्या ❀ यी ब्राह्मणी हुन् भनी॥९५

धनुषभङ्ग र विवाह–७

देखिन् श्री रघुनाथलाइ र तहाँ ❀ खूशी अहिल्या भइन्।
पूजा स्तूति गरेर राम्सित बिदा ❀ मागी पतीथ्यैँ गइन्॥
ताहाँदेखि चल्या र जल्दि रघुनाथ् ❀ गङ्गाजिका तीर् झऱ्या।
तर्नाको प्रभुले जसै मन गऱ्या ❀ माझीचरण्मा पऱ्या॥९६
ख्वामित् ई दुइ पाउको अति असल् ❀ धूलो जसै ता पऱ्यो।
पत्थर् हो तपनी मनुष्य सरिको ❀ सुन्दर् स्वरूपै धऱ्यो॥
तेस्तै पाठ यहाँ भयो पनि भन्या ❀ डुङ्गा स्वरूप् धर्दछन्।
डुङ्गाले पनि रूप् धऱ्या यदि भन्या ❀ हाम्रा जहान् मर्दछन्॥९७
तस्मात् पाउ पखालि वारि तिरमा ❀ हाम्रा शिरोपर् छऱ्यौ।
येती बात गऱ्यौ भन्या त तिमि ता ❀ गंगाजिका पार् तऱ्यौ॥
यस्तो बिन्ति सुनी तहाँ प्रभुजिले ❀ पाऊ अगाड़ी दिया।
माझीले जलले पखालि उहि जल् ❀ आफ्नाशिरोपर् लिया॥९८
यस्ता रीत्सित नाउमा चढि सहज् ❀ गंगाजिका पार् गया।
श्यामसुन्दर् रघुनाथ् बहुत् खुशि हुँदै ❀ दाखिल् जनक्पुर् भया॥
विश्वामित्र ऋषी बहुत् खुशि हुँदै ❀ दूई कुमार् साथ् गरी।
आया यस् पुरिमा भनी जब सुन्या ❀ दौड्या जनक् तेस्घरि॥९९

पूग्या प्रश्न गऱ्या सबै कुशलको ❀ पाऊमहाँ शिर् धरी ।
देख्या सुन्दर राज्कुमार् जनकले ❀ पूज्या ति ईश्वर् सरि ॥



(१४. राम लक्ष्मण जनकपुर पुगेका ।)

पक्का गर्न निमित्त फेर् जनकले ❀ सोध्या ऋषीथ्यैं पनि ।
जान्याँ जान्न त चित्तले त भगवान् ❀ विष्णू इनै हुन् भनी ॥१००



(१५. जनकले विश्वामित्रसँग दुवै बालकको परिचय सोधेका ।)

ब्रह्मन् ! पुत्र इ हुन् कउन् पुरुषका ❀ विस्तार् हवस् येस् घरि ।
क्लेश्को लेश नराखि यस् बखतमा❀ मेरो लग्या मन् हरी ॥

विश्वामित्रजिले सुन्या विनति यो ❀ राजा जनक्को जसै ।
यस्ता हुन् इ भनेर सब् ति ऋषिले ❀ विस्तार्बताया तसै ॥१०१
हे राजन् ! दशरथ्जिका इ सुत हुन् ❀ नाम् राम-लक्ष्मण् भनी ।
भन्छन्, मानिसले गरी नसकिन्या ❀ गर्छन् पराक्रम् पनि ॥
मारीच्लाइ सुबाहुलाइ अरु ता ❀ को जित्न सक्न्या थिया ।
राम्ले मारिचलाइ फेकि सहजै ❀ सूबाहु मारीदिया ॥१०२
पत्थर् भै कति वर्षसम्म रहँदी ❀ गौतम्कि पत्नी थिइन् ।
पाऊले तहिँ कुल्चँदा उठिगइन् ❀ जस्ता कि तस्ती भइन् ॥
याहाँ एक् शिवको धनुष् छ भनि यो ❀ सूनेर आयाँ यहाँ ।
देख्नाको मतलब् छ आज उ यहाँ ❀ राखी रह्याछौ कहाँ ? ॥१०३
चाँडो आज नजर् गराउ भनि यो ❀ विस्तार् गर्याथ्या जसै ।
मन्त्रीलाइ हुकूम् दिया जनकले ❀ लौ ल्याउ भन्न्या तसै ॥



(१६. जनकले रामलाई शिवको धनुष देखाएको ।)

यै बीच्मा ऋषिथ्यै भन्या जनकले ❀ राम्ले उचालून् धनू ।
सीता छोरि म दिन्छु राम्कन गरून् ❀ बीहाबहुत्क्याभनूँ ॥१०४

साँचा बाणि सुन्या र सोहि रितका ❀ बात्चित्गऱ्याथ्या जसै ।
पाँच् हज्जार् विरले उचालि बलले ❀ ल्याया धनूषै तसै ॥



(१७. श्रीरामले शिवको धनुष उठाएको)

ताहाँ श्री रघुनाथ् उठेर नजिकै ❀ सोही धनुष्थ्यै गया ।
वाम् हात्मा सहजै उचालि धनु त्यो ❀ राम्ले त लीदा भया ॥१०५



(१८. राम एकलैले उठाउँदा शिवधनुष दुई टुक्रा भएको ।)

ताँदो जल्दि चढाइ खैँचनुभयो ❀ ताहाँ धनुष्को जसै ।
दूई टूक भई गिऱ्यो उ धनु ता ❀ खूशी भया सब् तसै ॥

हर्षैहर्ष भयो तसै बखतमा ❀ सारा जनक्पुर् भरि ।
आदर् खुप् प्रभुको गऱ्या जनकले ❀ आलिंगनादी गरी ॥१०६
सीताजी पनि रामका शिर-उपर् ❀ माला कनक्को धरी ।
छम्छम् पाउ गरी फिरिन् घरमहाँ ❀ मंगल् भयो तेस् घरि ॥
मालिक् हुन्दशरथ् खबर्दिनुपऱ्यो ❀ ती छन् अयोध्यामहाँ ।
जाउन् पत्र लिएर मानिसहरू ❀ चाँडोतिआउन्यहाँ ॥१०७



-(१९. सीताले रामलाई स्वयंवर-माला पहिराएकी ।)

यस्तो बिन्ति जनक्जिले पनि गऱ्या ❀ लेखेर विस्तार् दिया ।
विस्तार् पत्र लिएर दूत्हरु पनी ❀ जल्दी अयोध्या गया ॥
यो विस्तार सुन्या जसै नृपतिले ❀ आनन्दमा ती पऱ्या ।
सब्ले जानुपऱ्यो जनक्पुरमहाँ ❀ भन्न्या हुकूम्योगऱ्या ॥१०८
जम्मा लश्कर भै गयो क्षणमहाँ ❀ जल्दी जनक्पर् पुग्यो ।
क्या वर्णन् यिनको गरूँ त्यस बखत् ❀ खाली अयोध्या भयो ॥
यस्ता रीत् सित सब् गया जति थिया ❀ सेना जनक्पुर्-महाँ ।
दाखिल् भो दशरथ्जिको हुकुमले ❀ हर्षै बढ्यो खुब् तहाँ ॥१०९

ताहाँ श्री दशरथ्जिको जनकले ❀ आदर् बहूतै गऱ्या ।
लक्ष्मण्ले सँग राम् पनी तहिँ पिता- ❀ जीका चरण्मा पऱ्या ॥
बस्नालाइ हवेलि सुन्दर जनक्- ❀ जीले खटाया जहाँ ।
खूशी भै दशरथ् पनी गइ बस्या ❀ तेसै हवेलीमहाँ ॥११०
सुन्दर् लग्न खटन् गऱ्या जनकले ❀ मंगल् शहर्मा चल्या ।
नाच्कीर्तन्सितका प्रकाश्कन हुन्या ❀ रात्माचिराक्खुप्बल्या ॥
जो मण्डप् छ विवाहको तस उपर् ❀ झुम्का हिराका झुल्या ।
मूगा मोति जुहार् जनक्पुरमहाँ ❀ घर्घर् सबैका झुल्या ॥१११



(२०. विवाह-मण्डपमा दुलहा भएर उभिएका रामचन्द्र ।)

यस्तै रीत् गरि भो विवाह विधिले ❀ चारै जना भाइको ।
हर्षैले परिपूर्ण मन् हुन गयो ❀ सीताजिकी माइको ॥
राम् लक्ष्मण् दुइलाइ ता जनकले ❀ आफ्ना ति छोरी दिया ।
भाईका त भरत्जिलाइ र ति वीर् ❀ शत्रुघ्नलाई दिया ॥११२
सीता पत्नि भइन् रमापतिकि ता ❀ लक्ष्मण्जिकी उर्मिला।
पत्नी हुन् श्रुतकीर्ति ता भरतकी ❀ शत्रुघ्नकी माण्डवी।।

जस्तै आफु थिया अनन्त गुणका ❀ चोधै भुवन्का धनी ।
अभ्यन्तर् मनले विचार गरदा ❀ तेस्तै ति पत्नी पनि ॥११३
विश्वामित्र वशिष्ठ दुइ ऋषिथ्यैं ❀ यस्ती सिता हुन् भनी ।
उत्पत्ती अघिको सबै जनकले ❀ विस्तार् बताया पनि ॥
जान्थ्यौं भूमि पवित्र गर्न भनि एक् ❀ क्वै यज्ञ गर्दामहाँ ।
जोत्तामा त सिताजि निस्किन गइन् ❀ आश्चर्य मान्यौं तहाँ ॥११४
पाल्याँ छोरि भनेर नाम् पनि असल् ❀ सीताजि राखीदियाँ ।
गर्थिन् बालकमा अनेक् तरहका ❀ लीला म खूशी थियाँ ॥
राम् नाम्ले दशरथ्जिका सुत भई ❀ खेल्छन् अयोध्यामहाँ ।
तिम्री पुत्रि सिता उनै प्रभुजिकी ❀ माया ति आइन् यहाँ ॥ ११५
यो लीला छ, बुझी सिताकन तिनै ❀ राम्लाइ दीया भनी ।
नारद्जी उठि गैगया, उहि कुरा ❀ याद् भो मलाई पनि ॥



(२१. जनकको प्रतिज्ञा सुनी देशदेशावरका राजा आई निराश भै फर्केका ।)

कुन् पाठ्ले अब रामलाइ म सिता ❀ पारूँ विचार् यो गर्‍याँ ।
थीयो यो शिवको धनुष् यहि यसै- ❀ मा यो प्रतिज्ञा गर्‍याँ ॥११६

ताँदो यस् धनुको चढाउन जउन् ❀ वीर्ले त सक्ला यहाँ ।
सीता छोरि दिन्याछु तेस्कन फिका ❀ होवैन यस् बात्महाँ ॥
जानुन् सब् विरले भनीकन गऱ्याँ ❀ यस्तो प्रतिज्ञा जसै ।
यो सूनीकन देशका विरहरू ❀ आया तुरुन्तै तसै ॥११७

को सक्थ्यो धनु त्यो उठाउन विना ❀ श्रीराम् अगाडी सरी ।
हिक्मत् हारि सबै घरै फिरिगया ❀ दर्शन् धनूको गरी ॥
राम्ले पूर्ण गराइबक्सनुभयो ❀ मेरो प्रतिज्ञा पनि ।
यो चीन्ह्याँ पनि सब् कृपा चरणले ❀ गर्दा भयाको भनी ॥११८

विश्वामित्रजिथ्यैँ पनी जनकले ❀ बिन्ती अगाडी गरी ।
सीतानाथ् रघुनाथको स्तुति गऱ्या ❀ आनन्दमा ती परी ॥
दाईजो सय कोटि दौलथ सहित् ❀ बेस् बेस् अयुत् रथ् दिया ।
घोडा ता सय लाख् दिया, छ सय ता ❀ खुप् मत्तहात्ती थिया ॥११९

पैदल् लश्कर एकलाख् र सय तीन् ❀ कोटी दियाथ्या जसै ।
पूजा फेरि वशिष्ठको पनि गऱ्या ❀ भारी डबल्ले तसै ॥
पूजा ताहिँ भरत्जिको पनि गऱ्या ❀ लक्ष्मण्हरूको पनि ।
इच्छा भो रघुनाथको अब फिरौँ ❀ जाऊँ अयोध्या भनी ॥१२०

जानाको मतलब् बुझी जनकजी ❀ राम्का चरण्मा पऱ्या ।
खूशी मन् सबको गराइ बहुतै ❀ बीदा जनक्ले गऱ्या ॥
सीताजी महतारिका अगि गई ❀ आलिङ्गनादी गरी ।
लागिन् रून र सोहि सूनि सबका ❀ आँसू खसे बर्बरी ॥१२१

सीताजीकन अर्ति यो पनि दिया ❀ सासू ससूरा सरि ।
आर्को छैन बडो यही बुझि गऱ्या ❀ तिन्को टहल् बेस् गरी ॥

स्त्रीको धर्म पतिव्रता हुनु ठुलो ❀ जानेर हूनू भनी ।
अर्ती येति दिया र तेस् बखतमा ❀ बीदा भया ती पनि॥१२२
यै बीच्मा नगरा बज्या प्रभुजिका ❀ भेरी मृदङ्गा पनि ।
स्वर्गैमा पनि हर्ष भो प्रभु गया ❀ फेरी अयोध्या भनी ॥
राम्को लश्कर बाह्र कोश् जनकपुर्- ❀ देखी जसै ता गयो ।
सब्का चित्तमहाँ बड़ो भय दिन्या ❀ उल्का बहूतै भयो ॥१२३

परशुरामजीसँग भेट–८

यस् पृथ्वीतलका ति क्षत्रिहरुको ❀ ठूलो विनाशै गरी।
आया तेस् बिचमा तहाँ परशुराम् ❀ उल्का भयो जुन् घरि॥
पृथ्वी कम्प भइन् तसै बखतमा ❀ हा हा सबैमा परी।
राजाका मनमा विचार् यहि पऱ्यो ❀ छोरा बचुन् क्या गरी ॥१२४
यस्तो चञ्चल चित्तले परशुराम्- ❀ का पाउमा झट् पऱ्या ।
मेरा पुत्र बचून् प्रभो परशुराम् ! ❀ भन्न्या इ बिन्ती गऱ्या ॥
यस्तो बिन्ति पनी अनादर गरी ❀ कालाग्नि जस्ता भया ।
राम्को गर्व हरूँ भनी परशुराम् ❀ राम्कै अगाडीगया ॥१२५
कस्को पुत्र तँ होस् बता मकन लौ ❀ जाबो पुरानू धनू ।
भाँच्तैमा अति गर्व भो तँकन ता ❀ धेरै कुरा क्या भनूँ ॥
यो ता हो हरिको धनू विर भया ❀ ताँदो यसैमा चढा ।
भन्दै खुप् रिसले रह्या परशुराम् ❀ राम्कैअगाडीखडा ॥१२६
ताँदो आज चढाउँछस् त यसमा ❀ संग्राम् तँथ्यैँ गर्दछु ।
सक्तैनस् तब हेर् म राख्तिनँ सबै- ❀ को प्राण् सहज् हर्दछु ॥
यस्तो क्रूर वचन् गरी परशुराम् ❀ कालाग्नि झैँ रूप् धऱ्या ।
पृथ्वी कम्प गराइ लोकहरुका ❀ सम्पूर्ण सातो हऱ्या ॥१२७

यस्तो क्रूर वचन् सुनेर रघुनाथ् ❀ क्रोध्ले अगाडी सरी ।
खोसीलीनुभयो धनुष् परशुराम्- ❀ को त्यो बलैले गरी ॥



(२२. परशुरामको क्रोधी कुरो सुनेर रामले उनीसँग उनको धनु माँग्नुभएको ।)

ताँदो जल्दि चढाइ बाण् पनि तहाँ ❀ लीनूभयाथ्यो जसै ।
ठूलो बल् रघुनाथको बुझि सबै ❀ खूशीभयालोक्तसै॥१२८



(२३. रामले तारो कहाँ हानूँ भनी परशुरामसँग हात जोरेको ।)

हूकुम् श्री रघुनाथको परशुराम्- ❀ लाई भयो यो तहाँ ।
तारो आज बताउ, हान्छु अहिले ❀ ब्रह्मन् ! म हानूँ कहाँ ॥

चाँडो उत्तर देउ यस् बखतमा ❀ यस्लाइ लौ हान् भनी ।
तारो क्यै नदिया त काट्छु अहिले ❀ तिम्रा इ गोडा पनि ॥१२९
हूकूम् येति गरेर तेज् परशुराम्- ❀ को खैँचनूभो जसै ।
चीह्न्या श्रीरघुनाथलाइ अघिको ❀ वृत्तान्त सम्झ्या तसै ॥
बिन्ती येति तहाँ गन्या पनि हरे ❀ चीह्न्याँ जगन्नाथ् भनी ।
जस्को अंश मिल्यो र केहि भगवन् ❀ यस्तो भयाँ मै पनि ॥१३०
पापी भो अति कार्तवीर्य अब ता ❀ यस्लाइ मार्छू भनी ।
बालक् पो म थियाँ गन्याँ हजुरको ❀ ठूलो तपस्या पनि ॥
यस्तो वर् खुशि भै मलाइ दिनुभो ❀ शक्ती समेतै गरी ।
इच्छा पूर्ण हुन्याछ जाउ अब ता ❀ क्यै शक्ति मेरो धरी ॥१३१
पैले मार र कार्तवीर्यकन फेर् ❀ सब् क्षत्रिको नाश् पनि ।
एक्काईस बखत् गन्या प्रभुजिको ❀ हूकूम् छ यस्तै भनी ॥
क्षत्री शून्य भयाकि पृथ्वि तिमिले ❀ कश्यप्जिलाई दिया ।
येती कर्म गरीसकेर अघिको ❀ सेखी पुऱ्याईलिया ॥१३२
त्रेतामा अवतार् लिन्याछु नरमा ❀ राम्नाम् जगत्मा धरी ।
भेट् होला तिमिथ्यै उही बखतमा ❀ यो शक्ति ल्यूँला हरी ॥
ताहाँदेखि तपै गरेर रहनू ❀ ब्रह्माजिका दिन्भरि ।
येती अर्ति मलाइ दीकन गया ❀ वैकुण्ठ धाम्मा हरि ॥१३३
मैले काम् पनि सो सबै गरिसक्याँ ❀ राम्लाइ भेट्याँ पनि ।
मेरो शक्ति हजूरले हरिलिँदा ❀ चीह्न्याँ प्रभू हुन् भनी ॥
मेरो जन्म सफल् भयो सहजमा ❀ पायाँ परात्मा पनि ।
बूझ्याँ तत्त्व पनी सबै हजुरको ❀ पात्रै कृपाको बनी ॥१३४

जो छन् भक्त हजूरका ति सँगको ❀ सत्सङ्ग मेरो हवस् ।
यो भक्ती दृढ भै प्रभो ! हजुरका ❀ येही चरण्मा रहोस् ॥
येती बिन्ति तहाँ गरी सकल पाप् ❀ पुण्यै समर्पण् गऱ्या ।
इच्छित् वर् प्रभुले दिदा, चरणमा ❀ आनन्द मानी पऱ्या ॥१३५
ताहाँ श्रीरघुनाथका वरिपरी ❀ घूमी नमस्कार् गरी ।
मर्जीले ति गया महेन्द्र गिरिमा ❀ मन् राम्चरण्मा धरी ॥
देख्या तेज् दशरथ्जिले र सुतको ❀ हर्षाश्रुधारा धरी ।
प्रेम्का सागरमा तहाँ डुबिगया ❀ आलिङ्गनादी गरी ॥१३६
येती काम् गरि राम् गया सहजमा ❀ पूग्या अयोध्यामहाँ ।
सीतालाइ लिएर राज्य सुख-भोग् ❀ राम्ले गऱ्या क्यै तहाँ ॥
क्यै दिन् भानिज हुन् भरत्कन यहीँ ❀ ल्याऊँ घरैमा भनी ।
भानिज्लाइ लिनानिमित्त खुशिले ❀ आया युधाजित् पनि ॥१३७
बीदा श्रीदशरथ्जिले पनि दिया ❀ बीदा मिलेथ्यो जसै ।
एक् शत्रुघ्न लिई भरत्जि त गया ❀ मामाकहाँ पो तसै ॥
आया राम बिहा गरेर पुरिमा ❀ जस्सै उठेथ्यो खबर् ।
सारा रैयतको प्रसन्न मन भो ❀ हुन्थ्यो खुशी क्या अवर् ॥१३८
सीता राम् अघि तप् गरिन् र त यहाँ ❀ छोरा बुहारी भया ।
कौसल्याकन ता मिल्यो अदितिको ❀ शोभा सबै ताप् गया ॥
सीता राम् पनि लोकमा सकलको ❀ आनन्द मङ्गल् गरी ।
चेष्टा मानिसको गरीकन रह्या ❀ त्रैलोक्यका नाथ् हरि ॥१३९

## ❀ इति बालकाण्ड समाप्त ❀



# आठकाण्ड रामायण अयोध्याकाण्ड



रामभाठौँ नारदजी आउनु–१

एकान्त स्थलमा सितापति थिया ❀ सीता हजुर्मा रही ।
हात्मा चामर ली प्रभूकन तहाँ ❀ हाँक्थिन् समीप्मा गई ॥
आकाश् मार्ग गरी बहुत् खुशि हुँदै ❀ नारद्जि ताहीँ गया ।
नारद्जीकन दण्डवत् गरि तहाँ ❀ राम्जीबहुत्खुश्भया ॥१
संसारी म थियाँ बडो हुन गयाँ ❀ दर्शन् मिलेथ्यो जसै ।
यो भाग्योदय हो बुझ्याँ पनि यहाँ ❀ दर्शन् मिल्याको उसै ॥
मैले गर्नु छ काम् कउन् हजुरको ❀ चाँडो उ आज्ञा हवस् ।
त्यो काम् सिद्ध गराउँला हजुरको ❀ आनन्द मन्मा रहोस् ॥२
यस्ता बात् प्रभुका सुनीकन जवाफ् ❀ सोही बमोजिम् दिया ।
नारद्ले बहुतै गऱ्या स्तुति तहाँ ❀ राम्लाइ मन्मा लिया ॥
बिन्ती गर्नु कुरो थियो मनविषे ❀ बिन्ती गऱ्या त्यो पनि ।
ब्रह्माको बिनती लिई हजुरमा ❀ आईरह्याँछू भनी ॥३
भूको भार म दुष्ट मारि हरुँला ❀ जान्छू अयोध्यामहाँ ।
भन्ऱ्या येति वचन् गरीकन हजुर् ❀ पाल्नूभयाथ्यो यहाँ ॥
यस्तो हो तर गादि दीन दशरथ् ❀ राजाजिको मन् भयो ।
ख्वामित्ले अब राज्यमा भुलिदिया ❀ भार् हर्नु काम् ता रह्यो ॥४
नारद्का इ वचन् सुनी खुशि भई ❀ उत्तर् प्रभूले पनि ।
जल्दी बक्सनुभो म राज्य नगरी ❀ भोली म जान्छू भनी ॥
ख्वामित्का इ वचन् सुनेर बहुतै ❀ नारद्जि खूशी भया ।
तीन् फेरा प्रभुको प्रदक्षिण गरी ❀ आकाश्–गतीले गया ॥५

राज्याभिषेकको तैयारी तथा वशिष्ठ र रामको संवाद–२

सन्तोष्‌ले दशरथ्‌जिको मनविषे ❀ आनन्द मङ्गल्‌ भयो ।
राम्‌लाई अब राज्य द्यूँ भनि उसै ❀ मन्‌मा लहड्‌ यो गयो ॥
यस्तो मन्‌ हुनगो र डाकि गुरुथ्यैँ ❀ यस्तो हुकूम्‌ भो पनि ।
भोली राज्य म दिन्छु पुत्रकन सब्‌ ❀ सामग्रि ल्याऊ भनी ॥६
मन्त्री डाकि हुकूम्‌ भयो सँग रह्या ❀ जो–जो कहन्छन्‌ गुरु ।
सो–सो चीज्‌ झटपट्‌ तयार्‌ गर अवर्‌ ❀ सब्‌ काम छोड्नू बरु ॥
मन्त्रीले पनि त्यो हुकूम्‌ सुनि तहाँ ❀ साथै गुरूका रह्या ।
चाहिन्छन्‌ जति चीज खोज्न गुरुले ❀ खोलेर सब्‌ चीज्‌ कह्या ॥७
मन्त्रीलाइ अह्राइ राघवजिका ❀ साथ्‌मा गुरूजी गया ।
पैले श्री रघुनाथले गुरु भनी ❀ सम्मान गर्दा भया ॥
हे त्रैलोक्यपते ! गुरू हुन त हूँ ❀ तिम्रो म क्या हूँ गुरु ।
इन्‌का हुन्‌ इ गुरू भनेर इ सबै ❀ भन्छन्‌ भनुन्‌ लौ बरु ॥८
तिम्रो दर्शन पाउँला भनि यहाँ ❀ प्रोहित्‌ भयाको म हुँ ।
गुह्यै खुल्छ भनेर डर्‌ हुन गयो ❀ धेरै कुरा क्या कहूँ ॥
खोल्न्या छैन म गुह्य चुप्प रहुँला ❀ सब्‌ जान्दछू तापनि ।
जानी–जानि म बिन्ति गर्न अहिले ❀ आयाँ हजुर्‌मा पनि ॥९
भोली हुन्छ तिलक्‌ हजुर्‌कन यहाँ ❀ सामग्रि जम्मा भयो ।
पृथ्वीमा सुकला हवस्‌ हजुरको ❀ सब्‌ शास्त्रले भन्छ यो ॥
सब्‌ इन्द्रीय जितेर आज उपवास्‌ ❀ गर्नू सिताले सँगै ।
आज्ञा पाउँ म जान्छु काम्‌ छ बहुतै ❀ सब्‌ काम्‌ बिचार्छू म गै ॥१०

राजा दशरथले कैकेयीलाई वर दिनु–३

यस्तो बिन्ति गरी वशिष्ठ गुरु फेर्‌ ❀ जस्सै गयाथ्या पनि ।
राम्ले लक्ष्मणथ्यैँ भन्या म तिमिलाइ्‌ ❀ काम्‌ गर्न द्यूँला भनी ॥

छैनन् भाइ भरत् पनी त तिनका ❀ खातिर् छ मेरी दया ।
कौसल्या सुनि खुश् हुनिन् भनि तहाँ ❀ सम्चार् बताउँदै गया ॥११
राजाले त हुकूम् गऱ्या दिनु भनी ❀ क्या गर्दछिन् कैकयी ।
यस्मा विघ्न कदापि पर्न नदिऊन् ❀ लक्ष्मी र दुर्गा भई ॥
कौसल्या पनि यो विचार् गरि तहाँ ❀ गर्थिन् पुजा देविको ।
द्यौताका मनमा भन्या ठहरियो ❀ काम् विघ्न गर्नू निको ॥१२
वाणी, गै तिमि विघ्न पारिकन आउ ❀ ती मन्थरा कैकयी ।
द्वी स्त्रीका घटमा पसेर तिमिले ❀ काम् सिद्ध लाऊ गई ॥
द्यौताका इ वचन् सुनेर झटपट् ❀ तेस् मन्थरामा पसिन् ।
कैकेयीकन खुप् भुलाउन भनी ❀ ती कैकयीमा बसिन् ॥१३
वाणीका वशमा पऱ्याकि छँदि ती ❀ जाहाँ थिइन् कैकयी ।
काम्बित्लाभनिचट्पटाइतहिँ झट् ❀ त्यो मन्थरा गैगई ॥



(२४. मन्थराले कैकेयीलाई बिथोलेकी ।)

नाना छल् गरि ठिक्क पारिकन सब् ❀ वृत्तान्त विस्तार् भनी ।
द्वी वर् छन् तिमि मागिल्यौभनिठुलो ❀ सूचन् गरी यो पनि ॥१४

वाणीले ति भुलाइयाकि छँदि लौ ❀ भन्दी भइन् कैकयी ।
राम्लाई वनवास् भरत्कन रजाइँ ❀ माग्छू म चाँडो गई ॥
द्वी वर्ले जब काम सिद्ध गरुँला ❀ द्यूँला सये गाउँ भनिन् ।
बीदा दी घर मन्थराकन फिराइ ❀ रिस् गर्न लाग्दी भइन्॥१५
सुन्दर् वस्त्र निकालि फालि कपडा ❀ मैला शरीर्मा धरिन् ।
आभूषण् सब फ्याँकि खूब रिसले ❀ खाली जमीन्मा परिन् ॥
सज्जन् बेस् सुमती पनी कुमतिका ❀ सँग्ले त बिग्रीगयो ।
भन्छन् जो दुनियाँ उ लक्षण यहाँ ❀ ठीक् कैकयीमा भयो ॥१६
कैकेयीसित बस्नलाइ खुशिले ❀ राजा गयाथ्या जसै ।
देख्यानन् र तहाँ कता गइ भनी ❀ चाकर्नि सोध्या तसै ॥
क्रोधागार-विषे भयाकि त बुझ्याँ ❀ कारण् छ कुन् कत्ति यो।
बूझ्याको पनि छैन गै हजुरले ❀ बुझ्नूहवस् क्यान हो ॥१७
केटीका इ वचन् सुनीकन डराइ ❀ राजा नजीक्मा गया ।
कैकेयीकन क्यान यो रिस गर्‍यौ ❀ बात् खोल भन्दा भया ॥
जे भन्छ्यौ म पुर्‍याउँला भनि शपथ् ❀ खाँदा जसै, बात् गरिन् ।
राजा वृक्ष सरी गिर्‍या पृथिविमा ❀ यस्माबहुत्जिद्गरिन् ॥१८
राम्लाई वनवास् भरत्कन रजाइँ ❀ देऊ भनी जिद् गरी ।
द्वी वर्ले यहि द्यौ दिदौन त भन्या ❀ बाँच्नू त मुर्दा सरी ॥
भोली येति कुरा भएन त भन्या ❀ मर्न्याछु विष् खाइ म ता।
भंन्या येति कुरा सुनी गिरि गया ❀ राजा जमीन्मा यता ॥१९
त्यो रात् वर्षसमान् व्यतित् हुनगयो ❀ राजा ति मूर्छा भया।
सब् सामग्रि तयार् गरीकन बिहान् ❀ मन्त्री हजुर्मा गया ॥

देख्या चाल् र उहाँ विचार् हुन गयो ❀ सोध्या पऱ्यो क्या भनी ।
विस्तार् पाइ सुमन्त्र राम् लिन गया ❀ आया तहाँ राम् पनि ॥२०
राजालाइ त दुःख सुक्ख हुनको ❀ कारण् तिमी छौ भनी ।
वन्मा गै तिमि,राज्य द्यौ भरतलाइ् ❀ भन्दी भइन् यो पनि ॥
यस्ता बात् सुनि बात्गऱ्याप्रभुजिले ❀ सुन्छ्यौ कि हे कैकयी ।
राजा खूशि रहुन्, म जान्छु वनमा ❀ क्या काम् छ घर्मा रही ॥२१



कैकेयीले भरतलाई राज्य दिई तिमी वन जाऊ भन्दा रामले हात जोरी राजाले भने म तुरुन्तै जान्छु भनेको ।)

गाह्रो कत्ति नमानि जान्छु वनमा ❀ राजा त बोलून् भनी ।
बोल्याको प्रभुको वचन् सुनि तहाँ ❀ बोल्छन् ति राजा पनि ॥
हे राम्चन्द्र ! मलाइ आज तिमिले ❀ बाँधेर राज्यै गरी ।
झूटोदेखि बचाउ पाप् तिमिकनै ❀ लाग्दैन यस्तो गरी ॥२२

रामले आमासँग बिदा हुनु तथा सीता र लक्ष्मणसहित वन जान तयारिनु–४

राजा येति भन्या र फेर् पनि विलाप् ❀ खुप् गर्न लाग्दा भया ।
राजाको बुझियो र आशय तहाँ ❀ राम्चन्द्र माइथ्यैँ गया ॥
कौसल्या पनि भक्तिले हरिजिको ❀ ध्यान्मा रह्याकी थिइन् ।
राम्जीलाइ नदेखि कत्ति नछुटाइ् ❀ ताना प्रभूमा दिइन् ॥२३

सुमित्राले भन्दा पछि पलक माइका खुलिगयो ।
प्रभूलाई देख्ता अधिक मन सन्तोष् पनि भयो ॥
खुशीले काखमा लीकन जब भनिन् खाउ् कछु भनी ।
सुनी राम्ज्यू भन्छन् अब त कति खाँला नि म पनि ॥२४॥
गयो खान्या बेला मकन त मिल्यो राज्य वनको ।
भरत्ले राज् पाया यहिँ बसि गरून् राज्यं जनको ॥
बिदा बक्स्या जावस् खुशिसित म जान्याछु वनमा ।
म चाँडै फिर्न्याछू विरह नहवस् कत्ति मनमा ॥२५॥



(२६. रामले कौसल्यासँग वन जान बिदा माँगेको ।)

वचन् सुन्दा मूर्छा परिकन उठ्याकी छँदि तहाँ ।
भनिन् कौसल्याले अब म तिमिलाइ् छोड्दछु कहाँ ॥
भन्या राजाले ता तर म तिमिलाइ् रोक्तछु यहाँ ।
कि साथै लैजाऊ मकन तिमि जान्छौ अब जहाँ ॥२६॥
तिमीलाइ् बीदा दी म कसरि यहाँ दुःख सहुँला ।
बरु प्राणै त्यागी यमपुरिमहाँ जाइ रहुँला ॥

विलाप् कौसल्याको यति सुनि दयाले भरिगयो ।
तहाँ लक्ष्मण्को मन् तब अरु-उपर् रिस् हुन गयो ॥२७॥
नजर् दी राम्ज्यूमा अरुसित उठ्याको रिस बढाइ् ।
गऱ्या बिन्ती राम्थ्यैँ अब भरतथ्यैँ गर्दछु लडाइँ ॥
हजुर्का राज् हर्न्या जति-जति त छन् मार्छु सबलाइ् ।
पितै बाँध्छू पैले भनिकन भन्या· क्या छ अरुलाइ् ॥२८॥
चढ्याजावस् गादी सकल रिपुको नाश गरुँला ।
यसै काम्ले माइ्का सकल मनको शोक हरुँला ॥
सुन्या लक्ष्मण्जीका यि वचन जसै राम् खुशि भया ।
बुझाया विस्तार्ले पनि तहिँ ठुलो लीकन दया ॥२९॥
सुन्यौ भाइ् ! संसार्मा शरिर अति कच्चा छ जनको ।
शरीर् कच्चा जानी नगर तिमि रिस् कत्ति मनको ॥
सबै भोग् चञ्चल् छन् बिजुलि सरि एक्छिन् नरहन्या ।
विचार् यस्तो राखी सहु तिमि, बडो हुन्छ सहन्या ॥३०॥
भ्यागतो खाँ भनि खोज्छ डाँस् मुखविषे ❀ साँप्ले धऱ्याको पनि ।
तेस्तै भोग् गरुँला भनेर मनले ❀ भन्छन् दुनीयाँ पनि ॥
क्याको रस् छ यहाँ विचार मनले ❀ काल्सर्पको मुख् परी ।
क्या होला वन जाउँला म, सबलाइ् ❀ आनन्द राखून् हरि ॥३१
देश्देश्का बाटुलिन्छन् बुझ तिमि मनले बाटका पाटिमाहाँ ।
बात्चित् गर्दै रहन्छन् खुशिसित मनले बन्धु झैँ राति ताहाँ ॥
प्रातःकाल् भो जसैता उठिकन ति सबै दश्दिशा लागिजान्छन् ।
बन्धूको संग यस्तो बुझिकन गुणिले दुःखसुख् एक मान्छन् ॥३२

छायातुल्य छ लक्ष्मि, यौवन भन्या ❀ भेलै सरीको भनी ।
भन्छन् स्त्री-सुखलाइ स्वप्न सरिको ❀ साँचो कुरा हो पनि ॥
यस्तै जानि पनी मनुष्यहरु सब् ❀ संसारमा भुल्दछन् ।
भुल्नैको वशले अनेक् फजितिले ❀ संसारि भै डुल्दछन् ॥३३
जुन् यस् देह-निमित्त यो रिस गऱ्यौ ❀ चिन्छौ कि कस्तो छ यो ।
हाड् मासू र रगत् नसा यति कुरा ❀ जम्मा भई बन्छ यो ॥
विष्टा हुन्छ कि भस्म हुन्छ पछितक् ❀ बाँच्तैन यो ता कसै ।
यस्का खातिर घात् गऱ्यौ पनि भन्या ❀ पाप् मात्र लाग्ला उसै ॥३४
क्रोधै हो यमराज सर्व जनको ❀ वैतर्नि भन्नू पनि ।
तृष्णा हो भनि यो बुझेर तिमिले ❀ कैह्ल्यै नबिर्स्या पनि ॥
संतोषै बुझि कामधेनु सरिको ❀ सन्तुष्ट मन्ले रहू ।
रिस् गर्नू बढ़िया त छैन, वनमा ❀ जानू असल् हो सहू ॥३५
यस्तै हो सुन कर्मका वश हुँदा ❀ बस्तैन एक् ठाम् रही ।
कस्तै कोहि हवस् अवश्य नरले ❀ जानू छ जाहाँ गई ॥
कर्मैको फल भोग गर्छ दुनियाँ ❀ यै चित्तमा लेउ भाइ ।
आमैले यहि बात् बुझीकन बिदा ❀ दीनूहवस् हामिलाइ ॥३६
यो बिन्ती गरि पाउमा जब पऱ्या ❀ बीदा दिइन् मन् बुझाइ ।
आँसू थाम्न कठिन् भयो र बहुतै ❀ रोइन् शरीरै रुझाइ ॥
आशीर्वाद वचन् समेत् मिलिगयो ❀ ताहाँ बिदा रामलाइ ।
लक्ष्मणले पनि साथ जान्छु म भनी ❀ बिन्ती गऱ्या जानलाइ ॥३७
लक्ष्मण्लाइ हिड लौभन्याररघुनाथ् ❀ सीता भयामा गया ।
सीतालाइ तिमि ता घरै बस भनी ❀ पैह्ले त भन्दा भया ॥

पड्खा छत्र चमर् रहित् प्रभुकनै ❀ देख्ता त शंकित् भइन् ।
क्या कारण् हुनगो भनीकन सिता ❀ हात् जोरि साम्ने गइन् ॥३८
शंकित् जानकिलाइ देखि प्रभुले ❀ तीमी घरैमा यहाँ ।
सासूको टहलै गरीकन रहू ❀ वर्षै त चौधैमहाँ ॥
पीताको वचनै लिई शिर-उपर् ❀ जान्छू म वन्मा प्रिये ।
चौधै वर्ष बिताइ जल्दि म यहाँ ❀ फिर्न्याछु निश्चै श्रिये ॥३९
यस्ता बात् प्रभुका सुनीकन तहाँ ❀ सीताजि मूर्छा परिन् ।
पैह्ले ज्योतिषिको कुरा सब कही ❀ छोड्दीनँ सेवा भनिन् ॥
सीताका यति बात् सुन्या र खुशि भै ❀ साथै सिताजी लिया ।
ब्राह्मण् खूशि सदा रहून् भनि तहाँ ❀ दौलत् बहूतै दिया ॥४०
कौसल्याजि जहाँ थिइन् तहिँ गई ❀ लक्ष्मण्जिले बिन्ति लाइ ।
माता मेरि पिछा भइन् भनि तहाँ ❀ सुम्प्या सुमित्राजिलाइ ॥
येती काम् गरि रामका हुकुमले ❀ लक्ष्मण् तयारी भया ।
सीता लक्ष्मण साथमा लि रघुनाथ् ❀ राजा-भयामा गया ॥४१
बिदा हून पिताजिथ्यैँ जब सिता ❀ लक्ष्मण् लि राम्ज्यू गया।
यस्तो देखि असह्य भो र दुनियाँ ❀ सब् शोक गर्दा भया ॥
सीता राम्कन दुःख यो हुन गयो ❀ कैकेयि दुष्टै भई ।
सीता आज कसोरि दुःख सहनिन् ❀ घोर् जङ्गलैमा गई ॥४२
यो अन्याय भयो यहाँ त नबसौँ ❀ जाऔँ प्रभूका सँगै ।
राम्लाइ छोडि यहाँ कसोगरि बसौँ ❀ बूझेन मन् ता नगै ॥
यस्ता बात् गरि लोकले त बहुतै ❀ शोक् गर्न लाग्या भनी ।
सब् विस्तार् गरि वामदेव ऋषिले ❀ सब्लाइ बुझाया पनि॥४३

हे लोक्हो ! अति गर्दछौ तिमितशोक् ❀ यो शोक ता छाडिद्यौ ।
साक्षात् विष्णु इ हुन् भनेर मनले ❀ श्रीरामलाइ् जानिल्यौ ॥
पृथ्वीको सब भार् हरेर रघुनाथ् ❀ फिर्छन् इ जान्छन् कहाँ।
साँचा हुन् यि कुरा अवश्य तिमिले ❀ खेद् कीन मान्यौ यहाँ॥४४
यस् बात्ले ऋषिले मनुष्यहरुको ❀ खुप् मन् बुझाईदिया।
पौंच्या राम् पनि कैकयी र दशरथ् ❀ जाहाँ बस्याका थिया ॥
हे मातर् ! वन जानलाइ अब ता ❀ आयौं जना तीन् मिली ।
बीदा जान मिलोस् म जान्छु वनमा ❀ रीस्राग् रतीभर् नली ॥४५
आज्ञा जान मिलोस् पिताजिकि पनी❀ जान्छू सदा खुश् म छु ।
दुखपाउन्नकिभनीपिताजिकनशोक् ❀ मन्मा नलागोस् कछु ॥
कैकेयी यति बात् सुनी खुशि भई ❀ बस्तर् पुराना दिइन् ।
लाया श्री रघुनाथले ति कपडा ❀ सीताजिले ता लिइन् ॥४६



(२७. वनमा जान बिदा हुन गएका रामलाई कैकेयीले थोत्रा लुगा दिएकी ।)

यस्ता वस्त्र म लाउँ आज कसरी ❀ भन्न्या मनैमा धरी।
लज्जाले रघुनाथका मुखविषे ❀ हेरिन् कटाक्षै गरी ॥

श्रीराम्ले मुटुरा गरी ति कपडा ❀ हात्मा जसै ता लिया ।
त्यो देखीकन राज-पत्निहरु सब् ❀ रोया तहाँ जो थिया ।।४७
दुष्टे, आज सिताजिलाइ किन यो ❀ लूगा पुराना दियौ ।
यस् काम्ले जति छन् यहाँ इ सबको ❀ प्राण् खैंचि ऐह्ले लियौ ।।
कैकेयीसित बात् वशिष्ठ गुरुले ❀ येती गऱ्याथ्या जसै ।
बीदा भै रघुनाथ् चढ्या रथविषे ❀ सम्पूर्ण रोया तसै ।।४८

रामको वनगमन–५

सीता राम् वनमा चल्या रथ चढी ❀ लक्ष्मण् गया साथमा ।
वृक्षैका तलमा रह्या रघुपती ❀ घर् छोडि तेस् रातमा ।।
सुन्दर् एक् तमसा नदी तहिँ थिइन् ❀ तिन्का दुवै तीर्-भरि।
आयो लश्कर राम्जिका सँग बस्यो ❀ खाली अयोध्या गरी ।।४९
फिर्नन् ता रघुनाथ् सँगै फिरियला ❀ जानन् चलौँला सँगै ।
राम्लाइ् छोडि यहाँ कसोगरि बसौँ ❀ काहाँ बसौँला नगै ।।
यस्तो सुर् प्रभुले बुझीकन तहाँ ❀ युक्ती गऱ्या छलको ।
प्रातःकाल भयो उठेर झटपट् ❀ इच्छा गऱ्या चलको ।।५०
फर्की फेरि शहर् गया झइँ गरी ❀ बाटो छली राम् गया ।
फर्क्याछन् रघुनाथ् भनेर दुनियाँ ❀ सम्पूर्ण फिर्दा भया ।।
यस् रीत्ले दुनियाँ फिराइ शहरै ❀ श्री राम् वनैमा गया ।
गङ्गाका तिरमा पुगेर अब ता ❀ रथ् थाम भन्दा भया ।।५१
सुन्दर् वृक्ष थियो ठुलो तिरविषे ❀ एक् शिंशपाको तहाँ ।
दोस्रो वास् रघुनाथको तहिँ भयो ❀ त्यै वृक्षका तल्महाँ ।।
फल् फूल् लीकन भेट्नलाइ गुहजी ❀ आया बडो हर्षले ।
निर्मल् देह भयो उसै बखतमा ❀ श्रीरामका स्पर्शले ।।५२

मेरो आज पवित्र घर् पनि हवस् ❀ स्वामिन् ! गर्‍याँ बिन्ति यो।
सेवक् हूँ करुणानिधान् ! मकन होस् ❀ माया र मर्जी छ जो ॥
यो बिन्ती सुनि भन्दछन् प्रभु तहाँ ❀ सून्यौ सखे ! आज ता ।
वन्मा जान चल्याँ म जान्नँ घरमा ❀ याहीं रहन्छू म ता ॥५३
कौनै फल्-फुल खानु छैन अरुले ❀ केही दिउन् तापनि ।
भन्न्या यो मनमा छ, थाम्छु मनको ❀ आफ्नू प्रतिज्ञा भनी ॥
मैरै हौ तिमि राज्य जो छ उ पनी ❀ मैरै छ भन्दा भया ।
वर्को दूध घसी जटा मुकुट झैँ ❀ पारेर बाँध्दा भया ॥५४
जल्पान् मात्र गरी सिता र रघुनाथ् ❀ कुश्का शयन्मा गया ।
लक्ष्मण्का सँगमा रही गुह पनी ❀ रात्भर् खडा भै रह्या ॥
सीता राम् फगतै कुशासनविषे ❀ देख्या सुत्याको तहाँ ।
साह्रै ग्लानि भयो बहुत् गुहजिको ❀ शोक् बढ्नगो मन्महाँ ॥५५
भन्छन् लक्ष्मणलाइ भाइ ! फजिती ❀ खुप् कैकयीले दिइन् ।
राजालाइ वशमा गरेर बहुतै ❀ हुर्मत् प्रभूको लिइन् ॥
लक्ष्मण्बात्सुनिभन्दछन्गुहजिको ❀ दिल्भित्र ठंडा गरी ।
लाग्या सुन्न पनी तहाँ गुहजिले ❀ तन्मन् उसैमा धरी ॥५६
दाता को छ यहाँ यि दुःख सुखको ❀ फल् मिल्छ सब् कर्मको ।
दिन्छन् भन्नु कुबुद्धि हो, नभन यो ❀ नाश् हुन्छ सब् धर्मको ॥
कर्ता हूँ पनि भन्नु छैन अभिमान् ❀ जन्ले नगर्नू कहीँ।
कर्मैको फल-भोग मिल्छ तिमिले ❀ यो बुझ्नु जाही तहीँ ॥५७
धीरा भै रहनू विपत्ति सहनू ❀ कस्तै परून् तापनि ।
कैह्ले मोहविषे नपर्नु जनले ❀ मिथ्या छ संसार् भनी ॥



गुहले मेरो नाउ पनि अहिल्या जस्तै मान्छे हुने हो कि भनिठानेर वारि नै रामका चरण धोई चरणोदक अचाएको ।)

यस्तै बात् सुनि रात् बित्यो गुहजिको ❀ राम्का नजीक्मा रही ।
गङ्गा तर्न हुकूम् भयो प्रभुजिको ❀ ताहाँ उज्यालो भई ॥५८

गंगा तर्नु तथा भरद्वाज र वाल्मीकिसँग भेट–६

गंगे ! आज म जान्छु घोर वनमा ❀ केवल् नमस्कार् गरी ।
फिर्दामा म पुजा अवश्य गरुँला ❀ सामग्रि ठूलो धरी ॥



(२९. केवट गुहले राम सीता लक्ष्मणलाई डुँगामा चढाई गङ्गा तारेको ।)

यस्तो बिन्ति गरी सिता पतिजिका ❀ साथै चलिन् पार् तरी ।
आज्ञाले घरमा फिऱ्या गुह पनी ❀ भक्ती मनैमा धरी ॥५९

गङ्गा पार् तरि मिर्ग मारि पकुवा ❀ लाया र खाया तहाँ ।
तेस्रो वास् रघुनाथको तहिँ भयो ❀ एक् वृक्षका तल्महाँ ॥



(३०. गङ्गा-पारि तरी राम सीता लक्ष्मणले जङ्गलको बाटो लिएको ।)

चौथा वास् रघुनाथको हुन गयो ❀ आश्रम् भरद्वाजको ।
राम्ज्यूको ऋषिले गऱ्या स्तुति तहाँ ❀ सुर्जानि काम्काजको ॥६०



(३१. रातभरि भरतद्वाजकहाँ विश्राम गरेर भोलिपल्ट अगाडि जान भरतद्वाजसँग बिदा माँगेको।)

पाँचौं दिन् ऋषिका कुमार् सँगलिया ❀ बाटो बताऊन् भनी ।
राम्ज्यूलाइयमुनाजितारि ति कुमार् ❀ साँझमा त फऱ्क्या पनि ॥

सीता राम् पनि चित्रकूट् पुगिगया ❀ वाल्मीकि बस्थ्या जहाँ।
वाल्मीकीकन दण्डवत् गरि बहुत् ❀ आनन्द मान्या तहाँ ।।६१
वाल्मीकीकन भन्दछन् रघुपति ❀ क्यै दिन् रहन्छू यहाँ।
कुन् जग्गा बढिया छ सब् तरहले ❀ होला सुबिस्ता कहाँ ।।
सून्या वाल्मिकिले मनुष्य सरि भै ❀ रामले गर्‍याका कुरा।
सोही माफिक बिन्ति बात् पनि गर्‍या ❀ वाल्मीकि छन् झन् पुरा ।।६२



(३२. चित्रकूटमा वाल्मीकिको स्वागत स्वीकारिरहेका राम सीता लक्ष्मण ।)

जान्दैनन् महिमा बडा ऋषि पनी ❀ जस्का त एक् नामको ।
यस्ता हौ रघुनाथ् हजुर्‌कन यहाँ ❀ क्या काम् असल् ठामको।।
सज्जन्‌को हृदयै छ घर् हजुरको ❀ अच्छा बहुत् फेर् कहाँ।
विस्तार् एक् सुनिबक्सनू पनि हओस् ❀ बिन्ती म गर्छू यहाँ ।।६३
व्याधा हूँ अघिको म सप्तऋषिको ❀ निर्मल् कृपाले गरी।
वाल्मीकीभनिनाम्‌चल्योजबजप्याँ ❀ राम्‌नाम उल्टा गरी ।।
उल्टै नामकि ता छ यस्ति महिमा ❀ विस्तार धेर् क्या कहूँ ।
गङ्गाका र यि चित्रकूट गिरिका ❀ बीच्का जगामा रहू ।।६४

वाल्मीकी ऋषिका वचन् सुनि बहुत् ❀ खुश् भै जगन्नाथ् गया ।
गङ्गाका र ति चित्रकूट गिरिका ❀ बीच् पारि बस्ता भया ॥

सुमन्त्र फर्कनु, राजा दशरथको स्वर्गवास हुनु तथा भरतले अन्त्येष्टि संस्कार गर्नु–७

गङ्गादेखि सुमन्त्र फर्कि दशरथ् ❀ जाहाँ बस्याका थिया ।
ताहाँ जल्दि गएर जो छ समचार् ❀ सारा सुनाईदिया ॥६५
बर्को दूध घसी जटा मुकुट झैं ❀ बाँध्या दुवै भाइले ।
फिर् लौ जा भनियोहुकूम्तहिँ दिया ❀ राम्ले सिता माइले ॥
गङ्गा पार् रघुनाथ् गया नजरले ❀ हेर्दा कठिन् भो तहाँ ।
छोड्याँ देख्न जसै रुँदै रथ लिई ❀ दौडेर आयाँ यहाँ ॥६६
सेवा बिन्ति गरेस् भनी हुकुम भो ❀ लक्ष्लण् सिता रामको ।
हाम्रो शोक् रतिभर् कदापि नगरून् ❀ हूँदैन शोक् कामको ॥
यस्ता बात् गरि राम् गया भनि सबै ❀ विस्तार् सुनाया जसै ।
कौसल्या दशरथ्जिलाइ रिसले ❀ वाक्वाण् बजारिन् तसै ॥६७
वाक्शर्ले अतिताप् भयो र दशरथ् ❀ भन्छन् मलाई कति ।
भन्छ्यौ मर्न बखत् यसै हुन गयो ❀ छाड्यो शरीर्ले गति ॥
ऐहे मर्छु सराप् पनी छ तिमिले ❀ खुप् पुत्र-शोक्ले गरी ।
जस्तै हामि मर्यौं उसै गरि मर्या ❀ ठूलो विपत्ती परी ॥६८
येती एक तपस्विले अघि शराप् ❀ जो दी गयाथ्या मरी ।
तिन्को तेहि सरापको फल मिल्यो ❀ ठीक् आज उस्तै परी ॥
सब् विस्तार सरापको कहिसकी ❀ हा राम ! सीता गरी ।
प्राणै त्याग् दशरथ्जिले जब गर्या ❀ खल्बल्पर्यो तेस् घरि ॥६९
प्रातःकाल भयो वशिष्ठ गुरु झट् ❀ मन्त्री लि दर्वार् गया ।
तेल्माथी दशरथ्जिलाइ धरि फेर् ❀ छोरा झिकाईलिया ॥



( ३३. रामको वियोगमा दशरथले प्राण त्यागेको ।)

चाँडै आउनको वशिष्ठ गुरुको ❀ आज्ञा छ भन्न्या सुनी ।
दूतैका सँग लागि भाइकन ली ❀ आया भरत्जी पनि ॥७०
कैकेयीसित भेट् भयो भरतको ❀ सोध्या पिता छन् कहाँ ।
सब् वृत्तान्त गरी भरत्कन त सब् ❀ विस्तार् सुनाइन् तहाँ ॥
सून्या शोक् मनमा पऱ्यो भरतको ❀ साह्रै रिसाया पनि ।
पापी हौ तिमि कुम्भिपाक् नरकमा ❀ भोग्गर्न जाउ्ली भनी ॥७१
कैकेयीकन गालि दीकन तहाँ ❀ दुःखी बहूतै भया ।
कौसल्याजि जहाँ थिइन् तहिँ रुँदै ❀ धाउँदै भरत्जी गया ॥
हे मातर् ! मनमा कदापि नपरोस् ❀ मत् छैन मेरो रती ।
पाप् लागोस्कछुमत्भयागुरुजिलाइ् ❀ काटेर माऱ्या जति ॥७२
बिन्ती यो गरि दुःखमा परि विलाप् ❀ गर्थ्या भरत्जी तहाँ ।
मन्त्रीवर्ग समेत् वशिष्ठ गुरुजी ❀ पौँच्या नजीक्मा तहाँ ॥
देख्या शोक भरत्जिको र गुरुले ❀ पीता बित्याछन् भनी ।
शोक् गर्नू बढिया त छैन, किन शोक् ❀ गर्छौ महाराज् ! भनी ॥७३



(३४. भरतले कैकेयीलाई पापिनी भन्दै फट्कारेको ।)

नाना तत्त्व कही तहाँ भरतको ❀सब् शोक् गुरूले हऱ्या।
सब् आज्ञा गुरुको लिई भरतले ❀काम्काज्पिताकोगऱ्या॥
राजाको किरिया जसै गरि सक्या ❀दान्को असङ्ख्यै गरी ।
तेस् बीच्मा मनले विचार् भरतले ❀राख्या बहुत् शोक् धरी ॥७४

भरतजी वन जानु, बाटामा गुह र भरद्वाजसँग भेट तथा चित्रकूट दर्शन–८

माता मेरि त राक्षसी सरि भइन् ❀इन्का नजीक्मा यहाँ ।
बस्नू योग्य अवश्य छैन अब ता ❀जान्छू प्रभू छन् जहाँ ॥
यस्तो चित्त थियो तहाँ भरतको ❀इन्को छ यो मन् भनी ।
मालूम् ता गुरुमा थियो तरपनी ❀भन्छन् उचित् हो भनी ॥७५
बाबाको छ हुकूम् यहाँ भरतले ❀राज् गर्नु, राम्ले गई ।
चौधै वर्ष तलक् बसून् वनविषे ❀मानो मुनीश्वर् भई ॥
सीता राम् यहि बातले वन गया ❀याहाँ हजूर्ले पनि ।
गादी चढ्नुहवस्, हुकूम् दिनुहवस् ❀यो राज्य मेरो भनी ॥७६
यस्तो बिन्ति गरी वशिष्ठ गुरु चुप् ❀जस्सै रह्याथ्या तहाँ ।
उत्तर् जल्दि दिया तहाँ भरतले ❀क्या गर्छु यो राज् यहाँ ॥

कीर्तीमा अपकीर्ति पारि कसरी❀राज् गर्नु याहाँ बसी।
दाज्यूको टहलै गरी सँग रह्या ❀लक्ष्मण् रह्याछन् जसी ॥७७
गया जाहाँ सीतापति म पनि जान्छू अब तहाँ।
फगत् एक् कैकेयी यहिँ बसिरहून् छोड्दछु यहाँ ॥
फलाहारी हुन्छू शिरभरि ज़टा धारि वनमा।
म भोली जान्याछू हिडिकन विचार् यै छ मनमा ॥७८॥
प्रभूको गादी हो प्रभुकन फिरायेर घरमा।
म गादी सुम्पन्छू किन म गरुँला राज्य करमा ॥
भरत्का यस्ता बात् सुनिकन सबै खुश् अति भया।
भरत् भोलीबैरै उठिकन सबैरै हिडिगया ॥७९॥
सबै माता भ्राता गुरुसहित सब् फौज पनि ली।
फगत् सीतारामको चरणतलमा चित्त पनि दी ॥



(३५. रामलाई भेट्न दलबल-सहित आएका भरतलाई देखी गुहले आपसमा सरससल्लाह गरेको।)

भरत् गङ्गा पौँच्या गुहजिकन शंका हुन गयो।
ठुलो लश्कर् देख्या नबुझिकन तानैं डर भयो ॥८०॥

लडौँला नाउ् खैँची भरत कपटी हुन् यदि भन्या ।
भनी मन्मन् लश्कर्‌हरुकन तयार् हौ पनि भन्या ॥
ठुलो भित्री मत्लब् गरिकन गया बुझ्दछु भनी ।
तहाँ भेटी राखी नजरतिर हेऱ्या कछु अनि ॥८१॥
जसै देख्या आँसू गहभरि धरी शोक् पनि गरी ।
कहाँ मिल्छन् सीतापति मकन भन्दै घरिघरि ॥
जसै शिर् पाऊमा गरि ति गुहले ढोग् पनि दिया ।
भरत्‌ले अङ्कैमाल् गरूँ भनि उठाईकन लिया ॥८२॥



(३६. गङ्गातीरमा पुगेका भरतलाई गुहले ढोगेको ।)

भरत्‌जीले सोध्या गुहसित सिताका पति यहाँ ।
सुत्याको स्थल् कुन् हो मकन कहु जान्छू अब तहाँ ॥
गया विस्तार् पाई रघुपति सुत्याका शयनमा ।
भरत्‌ले खेद् मान्या कुश-शयन देखेर मनमा ॥८३॥
अहो ! मेरा खातिर् वन वन सिताजी पति-सँगै ।
कुशासन्‌मा सुत्छिन् न त यसरि सुत्थिन् अघि कतै ॥

अहो धिक्कार् मेरो जनम-जननी कैकयि भइन् ।
इनैले गर्दामा पतिसँग सिताजी वन गइन् ॥८४॥
कहाँ छन् सीतानाथ् कति पर गया भेट्तछु कहाँ ।
छ केही मालूम् ता मकन कहु जान्छू अब तहाँ ॥
बताया याहाँ छन् भनि ति गुहले राम्कन पनि ।
गुहेका सम्चार्ले खुशि पनि भया भेट्तछु भनी ॥८५॥



(३७. गङ्गा तरी भरद्वाजको आश्रममा पुगेका भरतले भरद्वाजलाई ढोगेको ।)

सब् विस्तार बताइ ताहिँ गुहले ❀ गङ्गाजि तारीदिया ।
ताहाँदेखि भरत् चली पुगिगया ❀ जाहाँ भरद्वाज् थिया ॥
एक्दिन् ताहिँ मुकाम् गऱ्या भरतले ❀ सम्मान् ऋषीले गऱ्या ।
सारा सैन्य जती थिया भरतका ❀ मेज्मानिले छक् पऱ्या ॥८६
भोली बेर सबेर लश्कर लिई ❀ बीदा ऋषीथ्यैं भया ।
कैह्ले पुग्दछु चित्रकूट गिरिमा ❀ भन्दै भरत्जी गया ॥
खूश् भै लश्कर चित्रकूट गिरिका ❀ पौंच्या नजीक्मा जसै ।
खोज्या ताहिँ भरत्जिले अघि गई ❀ डेरा प्रभूको तसै ॥८७



(३८. भरतजी दलबल-सहित चित्रकूट जान हिडेका ।)

डेरा देखी भरत्जी तर्हिं नजिक गया पाउका छाप देख्या ।
श्रीराम्का पाउका छाप् चिह्निकन खुशिले माथले ताहिँ टेक्या ॥
भन्छन् धन्यै रह्याँछू सहज नमिलन्या पाउका छाप देख्याँ ।
ब्रह्माजीले नपाउ्नू छ तपनि सहजै माथले आज टेक्याँ ॥८८



(३९. चित्रकूटमा रामका पाइलाका छाप देखेर भरतले ढोगी खुव्य गरेर बसेको ।)

यस्तो बोल्दै प्रभूको चरणधुलिविषे भक्तिले लट्पटीदै ।
कैह्ले पुग्छू कहाँ छन् भनिकन मनले दश् दिशा दृष्टि दीदै ॥

जाँदा ताहीं भरत्‌ले प्रभुजिकन जसै नेत्रले देख्न पाया ।
ख्वामित्‌लाइ् आज पायाँ भनिकन खुशिले पाउमा पर्न धाया ॥८९



(४०. वाल्मीकिको आश्रममा रामलाई भेटेर गुह र भरतले ढोगेको र रामले भरतलाई अँगालेको ।)

राम र भरतको मिलाप, भरत अयोध्या फर्कनु र रामजी अत्रि मुनिको आश्रममा आउनु–९

देख्या पाऊ पर्‍याको गहभरि बहँदा अश्रुधारा झर्‍याको ।
सब्‌ राज्यै तृण्‌ बराबर्‌ गरिकन बहुतै आफुमा मन्‌ धर्‍याको ॥
यस्तो देखी कृपाले भरतकन तहाँ काखमा राखिलीया ।
जस्तो मन्‌ हो भरत्‌को बुझि रघुपतिले खुप्‌ कृपादृष्टि दीया ॥९०

श्रीसीतापति माइका चरणमा ❀ राख्या र शिर्‌ फेर्‌ पिता ।
काहाँ छन्‌ किन आज देख्तिनँ यहाँ ❀ क्या गर्दछन्‌ छन्‌ *कता* ॥
भन्दै खोजि गर्‍या पिताकन तहाँ ❀ श्रीरामजीले जसै ।
सब्‌ विस्तार वशिष्ठले भनिलिँदा ❀ शोक्‌ गर्न लाग्या तसै ॥९१

गङ्गा–स्नान गरी तिलाञ्जलि दिया ❀ फेर्‌ पिण्डदानै पनि ।
फल्‌ फूल्‌ले रघुनाथले तहिँ दिया ❀ पाऊन्‌ पिताले भनी ॥
तेस्‌ दिन्‌मा उपवास्‌ गर्‍या जब बित्यो ❀ रात्‌ फेरि गङ्गा गया ।
गङ्गास्नान्‌ गरि फेर्‌ फिरेर मढिमा ❀ आएर बस्ता भया ॥९२

तहाँ सीतारामका चरण-तलमा शिर् पनि धरी ।
अयोध्यै लैजान्छू भनिकन ठुलो मन्सुब गरी ॥
भरत् बिन्ती गर्छन् किन रघुपते ! आज वनमा ।
हजूर्ले आयाको मकन अति ताप् हुन्छ मनमा ॥९३

ख्वामित् ! हजुर्को म त दास पो हूँ ।
यो राज्य गर्नाकन योग्य को हूँ ॥
यो गादि ता याहिँ हजूरको हो ।
मैले त सेवा गरि बस्नु पो हो ॥९४॥
छोरा हुनन् यज्ञ बहुत् गरीनन् ।
सम्पूर्ण लोक्को पनि ताप् हरीनन् ॥
तब् पो ति छोरासित राज्य छाडी ।
जानू असल् हो त छँदै छ झाडी ॥९५॥



(४१. चित्रकूटमा भरतले रामलाई अयोध्या फर्कन आग्रह गरेको ।)

बेला त यो होइन जान वन्मा ।
मेरा त यै निश्चय हुन्छ मन्मा ॥

जाऔँ घरै फर्कि सधाइ-जावस् ।
मेरी इ मातासित रिस् नआवस् ॥९६॥
यस्ता प्रकार्ले गरि बिन्ति गर्दै ।
आँखा-भरी आँसु बहूत धर्दै ॥
रोया भरत्ले जब पाउमा गै ।
बोल्या प्रभूले पनि खूशि मन् भै ॥९७॥
हे भाइ ! गर्छौ किन आज जिद्दी ।
फिर्नू असल् छैन नि काम् नसिद्धी ॥
जान्छू म वन्मा तिमि फर्कि जाऊ ।
तेस् राज्यको काम् तिमिले चलाऊ ॥९८॥
राम्ले वनै गै मुनि-भेष धर्नू ।
याहाँ भरत्ले बसि राज्य गर्नू ॥
भन्न्या पिताको जब सुन्न पायाँ ।
आज्ञा उसैले वन जान आयाँ ॥९९॥
ई बात् भरत्ले जब सुन्न पाया ।
फेरी चरण्मा परि बिन्ति लाया ॥
हे नाथ् ! पिता हुन् मतिहीन् भयाका ।
स्त्रीका त साह्रै वशमा पर्याका ॥१००॥
उन्ले भन्याथ्या भनि राज्य छाडी ।
जानू असल् होइन आज झाडी ॥
ख्वामित् बहुत् बिन्ति छ फर्कि जाऊँ ।
फर्कन्नँ भन्या त जवाफ् नपाऊँ ॥१०१॥

यस्तो भरत्‌ले जब जिद्दि लीया ।
उत्तर्‌ प्रभूले पनि फेरि दीया ॥
फर्कन्नँ भैया तिमि फर्कि जाऊ ।
पिताजिलाई पनि दोष्‌ नलाऊ ॥१०२॥
खुप्‌ सत्यवादी त पिताजि थीया ।
साँचै हुनाले वरदान दीयां ॥
सो पूर्ण गर्नाकन जान्छु वन्मा ।
साँचो कुरा हो बुझिलेउ मन्मा ॥१०३॥
उत्तर्‌ प्रभूको सुनि दुःख मान्या ।
फेरी चरण्‌मा परि बिन्ति लाया ॥
फिर्नूहवस्‌ ख्यामित ! बिन्ति गर्छु ।
यस्‌ दण्डकारण्यविषे म जान्छु ॥१०४॥
यस्ता वचन्‌ सूनि भरत्‌जिलाई ।
फेरी हुकूम्‌ भो तिमि फर्क भाइ ॥
यो राज्य साट्या पनि हुन्छ झूटो ।
हे भाइ ! गर्छौ किन आज भूटो ॥१०५॥
हुकूम्‌ यस्तो सूनी भरत पनि राम्‌का चरणमा ।
परी बिन्ती गर्छन्‌ म त रघुपते ! छू शरणमा ॥
चरण्‌-बाहिक्‌ एक्‌छिन्‌ रहन पनि ताप्‌ हुन्छ मनमा ।
नफर्क्या ख्वामित्‌का पछि-पछि म ता जान्छु वनमा ॥१०६॥
न ता फर्की जान्या न त मकन लान्या वन पनि ।
भन्या मर्छू ख्वामित्‌ ! अब अरु कुरा केहि नभनी ॥

भनी आसन् बाँधी जब मरणमा निश्चय धऱ्या ।
खुशी भै श्रीराम्ले पनि अति दयालू मन गऱ्या ॥१०७॥
दिया सूचन् राम्ले गुरुकन बुझाऊ तिमि भनी ।
गुरूले एकान्तै लगिकन भरत्जीकन पनि ॥
बुझाया बात् खोलीकन सुन इ जो हुन् रघुपति ।
जगन्नाथ् साक्षात् हुन् त्रिभुवनंपतीका अधिपति ॥१०८॥
अघी ब्रह्माजीले सकल भुमिको भार् हर भनी ।
स्तुती गर्दा खुश् भै सुन म हरुँला भार्हरु पनि ॥
भन्याका हूनाले उहि वचन पालन् गरुँ भनी ।
प्रभू जान्छन् वन्मा पछि त सुन फिर्छन् घर पनि ॥१०९॥
प्रभूको इच्छा हो नतर कसरी कैकयि पनि ।
वनै जाऊन् भन्थिन् प्रभुकन रती तुल्य नगनी ॥
कुरो यस्तो जानी नगर तिमि यो आग्रह यहाँ ।
भुमीको भार् टारीकन पछि त जान्छन् प्रभु कहाँ ॥११०॥

रावण् मारि उतारि भारि भुमिको ❀ फिर्छन् जगन्नाथ् भनी ।
यस्ता हुन् रघुनाथ् भनेर गुरुले ❀ खोलेरे गुह्यै पनि ॥
सब् विस्तार गरीदिया र गुरुको ❀ वाणी सुनी खुश् भया ।
फक्र्यानन् रघुनाथ् भनी मन बुझ्यो ❀ राम्का नजीक्मा गया ॥१११
हे नाथ् तत्त्व बुझ्याँ म फिर्छु अब ता ❀ जान्छू अयोध्यामहाँ ।
पूजा गर्न दिनू-हवस् हजुरका ❀ एक् जोर् खराऊ यहाँ ॥
यस्तो बिन्ति गरी प्रणाम् वरिपरी ❀ घुम्दै भरत्ले गऱ्या ।
आफ्ना साफि खराउ दी प्रभुजिले ❀ सब्ताप् भरत्का हऱ्या ॥११२

फेरी बिन्ति गऱ्या तहाँ भरतले ❀ लौ फिर्दछू फिर्न ता ।
चौधै वर्ष समाप्ति पारि नफिऱ्या ❀ मर्न्याछु साँचै म ता ॥
यो बिन्ती सुनि लौ भनी भरतका ❀ साम्ने हुकूम् भो तहाँ ।
कैकेयी रघुनाथका चरणमा ❀ रूँदै परीन् खुप् तहाँ ॥११३



(४२. भरतले रामका खराउ माँग्दा रामले दिएको खराउ थापिरहेका भरत ।)

हे नाथ् दुर्बुद्धि आई अति फजिति दियाँ राज्यको घात् गराई ।
मायाले मोह पार्दा मन पनि भुलिगै मेरि बुद्धी हराई ॥
क्यारूँ नाथ् ! आज रुन्छू विपति परिगयो आज पो चेत पायाँ ।
कठ्पुत्ली झैँ नचाउँछिन् त्रिभुवनकन सब् धन्य छन् तिम्रि माया ॥११४
मेरो माया छ छोरा जन-धनहरुमा यो सबै खैंचिदेऊ ।
दुर्बुद्धी हो पछी ता शरण परि भनी खूप् कृपा राखिलेऊ ॥
कैकेयी येहि पाठ्ले स्तुति गरि हरिको पाउमा शीर धारिन् ।
हेनाथ् आई शरण्मा परि भनि करुणा राख यो बिन्ति पारिन् ॥११५
हाँसी सीतापतीले पनि अभय दिया जो भनायाँ भन्यौ सो ।
दोष् तिम्रो छैन यस्मा बुझ तिमि मनले मेरि इच्छा त हो यो ॥

मन्मा सन्तोष पाऊ मकन दिनदिनै सम्झँदै दिन् बिताऊ ।
छुट्नन् सब् कर्म तिम्रा रतिभर मनमा शोक् नराखेर जाऊ ॥११६
कैकेयी करुणा बुझी खुशि भई ❀ बीदा प्रभूथ्यैं भइन् ।
श्रीराम्को चरणारविन्द मनले ❀ भज्दै अयोध्या गइन् ॥
सब् लश्कर्हरु ली भरत् पनि बिदा ❀ भै फेर् अयोध्या गया ।
सब् लश्कर्हरुलाइ राखि घरमा ❀ आफू फरक् भैरह्या ॥११७
नन्दीग्राम्मा सन्याका भुमिशयन गरी रोज् फलाहार् गर्‍याका ।
एक् गट्ठा सब् जटाको गरिकन ति खराउ् गादिमाथी धर्‍याका ॥
गर्थ्या सब् राज्यको काम् तपनि सब कुरा गादिमा बिन्ति गर्दै ।
यस्ता रीत्ले बिताया दिन भरतजिले राममा चित्त धर्दै ॥११८
केही दिन् चित्रकूट्मा बसिकन रघुनाथ् वाल्मिकीथ्यैं बिदा भै ।
जान्छू वन्मा म फिर्छू भनिकन खुशिले अत्रिका आश्रमै गै ॥



(४३. वाल्मीकिसित बिदा भै अत्रिका आश्रममा पुगेका राम सीता लक्ष्मण ।)

अत्रीका पाउमा शिर् धरिकन म त हूँ राम् भनी नाम् बाताया ।
श्रीराम्का वाणि-सुन्दा मन अति खुशि भै अत्रिले हर्ष पाया ॥११९

पूजा सीतापतीको गरिकन ऋषिले पाउमा बिन्ति लाया ।
वृद्धा छन् पत्नि मेरी सकल विषयमा एक् रती छैन माया ॥
भित्रै छन् आज दर्शन् दिन मढुलिविषे भित्र सीताजि जाऊन् ।
सीताजीलाइ पाई अब त ति बुढिले जन्मको सार पाऊन् ॥१२०
अत्रीको बिन्ति सूनी हुकुम पनि दिया लौ सिता भित्र जाऊ ।
अत्रीकी पत्नि भेटीकन अब तिमिले जल्दि फर्केर आऊ ॥
आफ्ना नाथ्को हुकूम् यो सुनिकन खुशि भै भित्र सीताजि जाई ।
भेटिन् वृद्धा बहुत् भैकन बसिरहन्या अत्रिकी पत्निलाई ॥१२१
सीताले पाउमा शिर् धरिकन बहुतै प्रेम् बुढीमा बढाइन् ।
जोर् जोर् कुण्डल् र सारी दिइकन बुढिले अङ्गराग् फेर् चढाइन् ॥
यस्ले शोभा निरन्तर् दृढ पनि रहला यो पनी बिन्ति लाइन् ।
सीताजीलाइ आशिष् दिइ ति अनसुयाले बहुत् हर्ष पाइन् ॥१२२



(४४. अत्रिकी पत्नी अनसुयाले सीतालाई कुण्डल, सारी, आशीर्वाद दिएकी।)

सीता र लक्ष्मण-सहित् गरि रामलाई ।
भोजन् म दिन्छु भनि खुप्सित चीज् बनाई ॥

भोजन् गराइ रघुनाथकि जानि माया ।
ताहाँ सपत्नि भइ रामकि कीर्ति गाया ॥१२३॥

## ❀ इति अयोध्याकाण्ड समाप्त ❀







(४५. कैकेयी-भवन, अयोध्या ।)





शिरीषादपि मृद्वङ्गी क्वेयमायतलोचना ।
अयं क्व च कुकूलाग्निः कर्कशो मदनानलः ॥



# आठकाण्ड रामायण अरण्यकाण्ड



विराध-वध–१

अत्रीका आश्रमैमा बसि रघुपतिले प्रेमले दिन् बिताई ।
दोस्त्रा दिन्मा सबेरै उठिकन वनमा जान मन्सुब् चिताई ॥
अत्रीजीका नजीकै गइकन अब ता जान्छु बीदा म पाउँ ।
रस्ता यो जाति होला भनिकन कहन्या एक् अगूवा म पाउँ ॥१
सीताराम्को हुकूम् यो सुनिकन ऋषिले भन्दछन् क्या बताउँ ।
सब्को रास्ता त देख्न्या यहिँ हजुर भन्या कुन् अगूवा खटाउँ ॥
चिन्छू लीला हजुर्को तरपनि अगुवा याहिँ अस्सल् खटाई ।
यै मर्जी पूर्ण गर्नाकन भनि अगुवा आज दिन्छू पठाई ॥२
अत्रीले बिन्ति येती गरिकन अगुवा शिष्य धेरै खटाया ।
केही रस्ता त आफै पनि पछि पछि गै रामलाई पठाया ॥
एक् कोश् तक् पौचँदामा बडि नदि बहँदी नाउले तर्नुपर्न्या ।
मिल्थिन्त्योतारिफर्क्यामढितिर ऋषिकाशिष्य सब् फिर्नुपर्न्या ॥३
सीताराम् वनमा पुग्या वन थियो ❀ साह्रै खजित्को तहाँ ।
बाघ् भालू अरु दुष्ट राक्षसहरू ❀ डुल्छन् निरन्तर् जहाँ ॥
ताहाँ पौंचि हुकूम् भयो प्रभुजिको ❀ भाई ! तयारी भई ।
सीताका म अगाडि हिड्छु तिमिले ❀ हिड्नू पछाडी रही ॥४
यस्ता बात् गरि राम लक्ष्मण तहाँ ❀ हिड्थ्या तयारी भई ।
एक् सुन्दर् वनमा तलाउ मिलिगो ❀ ठूलो छः कोश् वन् गई ॥
ठण्डा जल् तहिँ पान् गरेर रघुनाथ् ❀ छायाँ बस्याथ्या जसै ।
आयो ताहिँ विराध राक्षस ठुलो ❀ डर् दीन लाग्यो तसै ॥५

को हौ स्त्री पनि साथमा छ किन यो ❀ आयौ बडा वन्महाँ ।
कस्तो सुर् मनमा छ फेर् अब उपर् ❀ जानू छ इच्छा कहाँ ।।
मैले सुन्दर गाँस् बनाउन असल् ❀ मान्याँ र सोध्याँ यहाँ ।
सब् नाम् कार्यसमेत् बताउ तिमिले ❀ जुन् काम् छ जान्छौ जहाँ ।।६

राक्षस्का यि वचन् सुनी प्रभुजिले ❀ नाम् काम् बताया सबै ।
बाँच्ने मन् छ भन्या सिता र हतियार् ❀ छोडेर जाऊ अबै ।।
यस्तो बोलि सिताजिलाइ लिन सूर् ❀ बाँधेर राक्षस् जसै ।
दौडेथ्यो रघुनाथले पनि ति हात् ❀ दूवै गिराया तसै ।।७

जस्सै हात गिऱ्या तसै त रिसले ❀ खाँ रामलाई भनी ।
दौडेथ्यो मुख बाइ फेर् प्रभुजिले ❀ काट्या ति गोडा पनि ।।
हात् गोडा नहुँदा त सर्प सरिको ❀ पऱ्यो भुमीमा जसै ।
हात् गोडा सब काटियो तब पनी ❀ घस्रेर आयो तसै ।।८

घस्री घस्रि उ सर्दथ्यो प्रभुजिले ❀ काट्या तहाँ शिर् पनि।
विद्याधर् गण हो छुटोस् अब सराप् ❀ जाओस् परम्धाम् भनी ।।
राक्षस् देह मऱ्यो सराप् पनि टऱ्यो ❀ विद्याधरै फेर् भयो ।
श्रीराम्को स्तुति खुप् गरेर खुशि भै ❀ फेर् स्वर्गलोक्मा गयो ।।९

शरभङ्ग तथा सुतीक्ष्ण आदि मुनिहरूसँग भेट–२

जस्सै स्वर्ग विराध् गयो प्रभुजिले ❀ रस्ता वनैको लिया ।
पालन् गर्छु म योगिको अब भनी ❀ मन्मा दया खुप् लिया ।।
ध्यान् गर्दै शरभङ्गजी वनमहाँ ❀ जाहाँ बस्याका थिया ।
ताहीं श्रीरघुनाथजी खुशि हुँदै ❀ पौंचेर दर्शन् दिया ।।१०

ताहाँ श्रीशरभङ्गले प्रभुजिमा ❀ तन्मन् वचन् सब् धरी ।
आफ्नू कर्म जती थियो तहिँ तती ❀ सम्पूर्ण अर्पण् गरी ।।

अस्सल् ताहिँ चिता बनाइ हरिको ❀ दर्शन् नजर्ले गरी ।
आफ्नू देह दहन् गरी चलिगया ❀ संसार-सागर् तरी ॥११
मुक्ति श्रीशरभङ्गको जब भयो ❀ तस्सै मुनीश्वर्हरू ।
आया भेट्न भनी बहुत् खुशि भई ❀ वन्मा थिया जो अरू ॥
हात् जोरी स्तुति खुप् गर्‍यातिऋषिले ❀ ख्वामित् इनै हुन् भनी ।
कोमल् चित्त गरी तहाँ नजरले ❀ हेर्‍या प्रभूले पनि ॥१२
बिन्ती सब् ऋषिले गर्‍या हजुरमा ❀ हाम्रो विपत्ती पनि ।
देख्या पूर्ण दया हुन्या थिइ बहुत् ❀ आपत् रह्याछन् भनी ॥
जाऔँ सब् ऋषिका मढी-मढिविषे ❀ वाही गई पो दया ।
होला चित्तविषे भनी ति ऋषिले ❀ भन्दा प्रभूजी गया ॥१३
देख्या तेस् वनमा अनेक् पृथिविमा ❀ खप्पर् र सोध्या तहाँ ।
कस्का खप्पर हुन् अनेक् नजरले ❀ देख्छू मर्‍याका यहाँ ॥
श्री सीतापतिका वचन् सुनि तहाँ ❀ बिन्ती ऋषीले गर्‍या ।
ई शिर् हुन् ऋषिका यहाँ छल परी ❀ धेरै ऋषीश्वर् मर्‍या ॥१४
राक्षस्का छलले बहुत् ऋषि मर्‍या ❀ भन्न्या कुरा त्यो सुनी ।
ताहाँ सब् ऋषिलाइ राखि सबका ❀ साम्ने प्रतिज्ञा पनि ॥
सब् राक्षस्हरुको म नष्ट गरुँला ❀ भन्न्या प्रभूले गर्‍या ।
खूशी मन् हुनगो र ताहिँ ऋषि ता ❀ आनन्दमा सब् पर्‍या ॥१५
केही वर्ष बिताइ ताहिँ हरिले ❀ सब् योगिको ताप् हर्‍या ।
माया फेरि सुतीक्ष्णका उपर भै ❀ प्रस्थान् प्रभूले गर्‍या ॥
जाहाँ भक्त सुतीक्ष्ण छन् तहिँ गई ❀ दर्शन् प्रभूले दिया ।
पूजा पूर्ण गरी सुतीक्ष्ण ऋषिले ❀ राम्लाइ मन्मा लिया ॥१६



(४६. सुतीक्ष्णाको आश्रममा पुग्दा सुतीक्ष्ण ऋषि रमाएका ।)

सायुज्यै मुक्ति मिल्ला तिमिकन सुन यो देह जैले त छुट्ला ।
भन्न्या आज्ञा प्रभूको सुनिकन अब ता कर्मको पाश टुट्ला ॥
भन्न्या यो मन् ऋषीको हुन गइ बहुतै चित्तमा हर्ष पाया ।
सीतारामलेअगस्तीसितगइकछु दिन् बस्न मन्ले चिताया ॥१७

मुनिवर अगस्त्यजीसँग भेट–३

प्रभूका साथैमा पछि-पछि सुतीक्ष्णै पनि गया ।
अगस्तीका भाईसित पुगि त एक् रात् प्रभु रह्या ॥
ति अग्नीजिह्वा खुप् खुशि पनि भया ईश्वर भनी ।
चिनी ताहाँ तिन्ले विधिसित गऱ्या पूजन पनि ॥१८॥
तहाँदेखी सीतापति उठि सबैरै चलिगया ।
अगस्ती काहाँ छन् भनि खबर ली दाखिल भया ॥
अगस्तीले खुश् भै स्तुति गरि बहुत् मन् पनि धऱ्या ।
विराट् रूप्कोवर्णन् गरिकन त पूजा पनि गऱ्या ॥१९॥
सुन्दर् धनू र तरवार् सँग बाण् भऱ्याको ।
ठोक्रा त जोडि अघि इन्द्रजिले धऱ्याको ॥

ताहीं थिया सब दिया रघुनाथलाई।
बिन्ती गऱ्या सकल भार् हर आज जाई ॥२०॥



(४७. अगस्ति ऋषिको आश्रममा राम सीता लक्ष्मण पुगेका।)

आठ् कोशमा असल पञ्चवटी भन्याको।
आश्रम् असल् छ रमणीय बहुत् बन्याको ॥
ताही बसेर कछु दिन् तिमिले बिताऊ।
सब् साधु-माथि करुणा तहिँ गै चिताऊ ॥२१॥
यस्तो अगस्ति ऋषिको उपदेश पाई।
श्रीराम् तयार् पनि भया तहिँ जानलाई ॥
मालुम् थियो तपनि जुन् ऋषिले बताया।
सो मार्ग जानकन पाउ उतै चलाया ॥२२॥
जान्थ्या प्रभू अलिकती पर केहि जाई।
जङ्गल्-विषे अधिक वृद्ध जटायुलाई ॥
देख्या र राक्षस भनीकन मार्नलाई।
माग्या धनू प्रभुजिले त लिला जनाई ॥२३॥

मार्‍या कुरा सुनि जटायु बहुत् डराया।
राजाजिको प्रिय सखा हुँ भनी कराया॥
गर्‍याँछु हित् यहिँ बसी म सिताजिलाई।
कल्याण् मिलोस् हजुरदेखि बहुत् मलाई ॥२४॥
श्रीरामले पनि तहाँ अति खुशि मन्‌ले।
आनन्द निर्भय दिया पछि फेरि तिन्‌ले॥
स्वामित् ! शरण् छु भनि खुप्‌सित बिन्ति लाया।
श्रीराम् तहाँ-पछि त पञ्चवटी त आया ॥२५॥

## पञ्चवटी-निवास र लक्ष्मणजीलाई उपदेश-४

डेरा पर्‍यो प्रभुजिको तहिँ बीच वन्‌मा।
एकान्त देखिकन हर्ष भयो र मन्‌मा॥
आनन्द-पूर्वक रह्या रघुनाथ ताहीँ।
आर्को त आश्रम नजीक थिएन काहीँ ॥२६॥



(४८. पञ्चबटीमा रामको मढी।)

एकान्त देखिकन लक्ष्मणले चरण्‌मा।
बिन्ती गर्‍या रघुपते ! म त छू शरण्‌मा॥

ज्ञान् कुन् कहिन्छ भनि कुन् त कहिन्छ विज्ञान् ।
जान्दीनँ केहि म-विषे त ठुलो छ अज्ञान् ॥२७॥
आज्ञा हवस् सकल तत्त्व म सुन्न पाउँ ।
जान्या पुरुष् अरु छ को र कता म जाउँ ॥
यो बिन्ति लक्ष्मणजिको सुनि हर्ष पाया ।
लक्ष्मण्जिलाइ सब तत्त्व तहाँ बताया ॥२८॥
यै ज्ञान् कहिन्छ सुन येहि कहिन्छ विज्ञान् ।
यो रीत् गरीकन बस्या हुँदि छुट्छ अज्ञान् ॥
खोलेर येहि रितले प्रभुले बताया ।
लक्ष्मण्जिले पनि तहाँ सब तत्त्व पाया ॥२९॥

शूर्पणखालाई दण्ड, खर-दूषण आदि राक्षसहरूलाई मार्नु र रावणभाठौँ शूर्पणखा जानु-५

यै बीचमा नजिक शूर्पणखा त आई ।
देख्या तहीँ प्रभुजिले पनि दुष्टलाई ॥
कन्दर्पका वश परी प्रभुको नजीक् गै ।
सोधी तहाँ प्रभुजिलाइ बहूत् खुशी भै ॥३०॥
नाम् सब् कह्या प्रभुजिले जब नाम सूनी ।
ऐह्ले म भज्दछु पती भनि येति गूनी ॥
बिन्ती गरी मकन पत्नि बनाइलेऊ ।
कन्दर्पको कठिन ताप छुटाइदेऊ ॥३१॥
यस्ता वचन् सुनि सिताकन हाँसि हेरी ।
उत्तर् दिया प्रभुजिले सँगमै छ मेरी ॥
सौता बुझीकन नभज् तँ पती मलाई ।
भाई छ खालि बरु भज् पति भाइलाई ॥३२॥

साँचो भन्या भनि त लक्ष्मणका नजीक् गै ।
आयाँ म पत्नि हुन येति भनेर खुश् भै ॥
सून्या वचन् सकल लक्ष्मणले र ताहाँ ।
दास् हूँ म ता मसित कुन् सुख मिल्छ याहाँ ॥३३॥
जा वाहिँ मालिक उ हुन् उहिँ बस्नु अच्छा ।
बुद्धी रहेनछ बहुत् रहिछस् तँ कच्चा ॥
यस्ता वचन् सुनि र शूर्पणखा रिसाई ।
सीताजिलाइ अब खाँ भनि फर्कि आई ॥३४॥



(४९. शूर्पणखालाई लक्ष्मणाले लात मारेको ।)

भार् हर्न बीज् प्रभुजिले तहिँ रोप्न आँट्या ।
लक्ष्मण्जिलाइ भनि नाक र कान काट्या ॥
आज्ञा लि लक्ष्मणजिले पनि काटिदीया ।
भागी डराइकन भाइ जहाँ त थीया ॥३५॥
विस्तार् गरी त्रिशिर दूषण खर् भन्याका ।
राक्षस् पनी सुनि ति अग्नि सरी बन्याका ॥



(५०. लक्ष्मणजीले शूर्पणखाको नाक-कान काटेको ।)

आया जहाँ प्रभु थिया तहि तीन भाइ ।
लश्कर् समेत् अधिक जल्दि कदम् बढाई ॥३६॥
राक्षस् भनी प्रभुजिले तहिँ चाल पाया ।
लक्ष्मण्जिलाइ तहिँ काम् प्रभुले अह्राया ॥
हे भाइ ! आज तिमिले इ सिताजिलाई ।
गूफाविषे लगि बसीरहु जल्दि जाई ॥३७॥
एक् बात् नबोल्किन जल्दि उठेर जाऊ ।
संग्रामको बखत भो अब बेर् नलाऊ ॥
मार्छू म दुष्टकन तेज् अधिकै जनाई ।
चौधै हजार्कन सहज् टुकुरा बनाई ॥३८॥
यस्तो हुकूम् हुन गयो र सिताजिलाई ।
लक्ष्मण्जिले सँग लिईकन जल्दि जाई ॥
गूफाविषे बसिरह्या, रघुनाथ् तयारी ।
चाँडै भया धनु र वाण्हरु ठिक्क पारी ॥३९॥

खर-दूषण आदि राक्षसहरूलाई मार्नु-५ (२)

आया खर, त्रिशिर, दूषण तीन भाइ ।
लश्कर् समेत् सँग लिईकन रिस् बढाई ॥
ठाकुर्जिका उपर बाणकि वृष्टि पाऱ्या ।
ठाकुर्जिले पनि ति बाण् सब काटि टाऱ्या ॥४०॥
तिन्का सबै ति हतियार्हरु काटि टारी ।
सम्पूर्ण राक्षसहरूकन जल्दि मारी ॥
काट्या खर, त्रिशिर, दूषणलाइ ताहाँ ।
सम्पूर्ण राक्षस सक्या घरि चारमाहाँ ॥४१॥



(५१. रामले खर, त्रिशिर, दूषण-सहित त्यहाँका सारा राक्षस मारेको ।)

माऱ्या खर त्रिशिर दूषणलाइ जस्सै ।
सीता र लक्ष्मण पनी प्रभुसीत तस्सै ॥
आया डराइकन शूर्पणखा त भागी ।
रावण् जहाँ छ उहिँ जाँ भनि जान लागी ॥४२॥

शूर्पणखा रावणभाठौँ जानु-५ (३)

रावण् जहाँ छ उहिँ पौंचि विलाप गर्दै ।
सब् भाइ बन्धुहरुको मनलाइ हर्दै ॥

देख्यो तहाँ बहिनिलाइ त नाक् गयाकी ।
त्यो फेरि बुच्चि पनि कान नभै रह्याकी ॥४३॥
माया भयो बहिनिमाथि र झट्ट ऊठ्यो ।
विस्तार सोध्न नजिकै पनि जल्दि छूट्यो ॥
हे बैनि ! कुन् पुरुष हो ? भन नाक काट्न्या ।
खूबै रहेछ सहजै पनि मर्न आँट्न्या ॥४४॥
जस्ले त नाक् सित इ कान्कन आज काट्यो ।
हे बैनि ! जान सुन त्यो अब मर्न आँट्यो ॥
यस्ता वचन् सुनि र नाम समेत् बताई ।
सीता र लक्ष्मण सहित् रघुनाथलाई ॥४५॥
ती छन् पराक्रमि त पञ्चवटी बस्याका ।
ठोक्रा भिरीकन धनू पनि खुप् कस्याका ॥
गर्छू विचार मनले त यही म मान्छु ।
सब् भस्म पो गरिदिनन् कि भनेर ठान्छु ॥४६॥
आईरह्याँछु म त खुप्सित मन् डराई ।
फिर्छन् ति सर्व ऋषिलाइ त खुश् गराई ॥
आश्चर्य मानिकन दौडि म याहिँ आयाँ ।
विस्तार् पनी हजुरमा सब बिन्ति लायाँ ॥४७॥
सीताजिलाइ अति सुन्दरि मानि ताहाँ ।
ल्याऊँ टपक्क टिपि सुन्दरिलाइ याहाँ ॥
भन्ना-निमित्त अति चित्त धरी गयाकी ।
पायाँ विपत् नकटि बुच्चि समेत् भयाकी ॥४८॥

ल्याऊ समर्थ छ भन्या तिमि आज जाऊ।
साम्ने त हर्न छ कठिन् तिमि मन् नलाऊ ॥
एक् युक्तिले छल गरीकन हर्नुपर्ला।
साम्ने कदापि नगया तहिँ देह मर्ला ॥४९॥
तेस्ले बहूत भयमा परि बात् गऱ्याको।
लश्कर् समेत् त्रिशिर, दूषण, खर् मऱ्याको ॥
सून्यो र बैह्निकन खातिर खूब दीयो।
एकान्तमा गइ लहड् पनि खूब लीयो ॥५०॥
सामान्य मानिस भया कसरी ति माऱ्या।
लश्कर् खर, त्रिशिर, दूषण छुट्टि पाऱ्या ॥
सामान्य होइन इ ता परमेश्वरै हुन्।
नाहीं त भाइहरुको अघि टिक्तथ्यो कुन् ॥५१॥
ईश्वर् भया हुँदि कसै पनि मार्दछन् ती।
सामान्य हुन् पनि भन्या हरुँला सिताजी ॥
ईश्वर् भया हुँदि विरोध् गरि खुश् हुन्याछन्।
रीसै हुन्याछ भजुँला त ममाथि ता झन् ॥५२॥

मारीचभाठौं रावण जानु-६

येती विचार् गरि तऱ्यो र समुद्र-पारि।
मारीच् जहाँ छ ऋषिको सरि रूप धारी ॥
पूग्यो तहाँ र रथ राखि नजीक् गयाको।
विस्तार् गऱ्यो खरहरू सब नाश् भयाको ॥५३॥
यस्तो पऱ्यो मकन आज सहाय देऊ।
सुन्दर् ठुलो मृग-स्वरूप् तिमि आज लेऊ ॥

रामचन्द्रलाइ छलि दूर् तिमिले गराया ।
सीता जसै म हरुँला तब फर्कि आया ॥५४॥
मारीचले यति हुकूम् जब ताहिँ सून्यो ।
तेस्तो हुकूम् सुनि तहाँ मनभित्र गून्यो ॥
बिन्ती गऱ्यो सकल तेज् प्रभुको जनाई ।
ख्वामित् भनेर मनले हित खुप् चिताई ॥५५॥
कस्ले गऱ्यो र उपदेश् तिमि आज आई ।
सीता म हर्छु मृग हो तँ भन्यौ मलाई ॥
त्यै शत्रु हो तिमि त्यसैकन मार ताहाँ ।
कूलै समेत् क्षय गराउन खोज्छ याहाँ ॥५६॥
को सक्छ जित्न र ठुलो तिमि सूर गर्छौ ।
यो सूर् लिया कुल समेत् तिमि आज मर्छौ ॥
एक् वाणले मकन चार् सय कोश सान्या ।
बालक् थिया तपनि भस्म सुबाहु पाऱ्या ॥५७॥
आज्काल् गयाँ वनविषे मृग-रूप धारी ।
एक् वाणले मकन याहिँ दिया पछारी ॥
छाद्दै रगत् अति डरायर भागि आयाँ ।
जावैन भन्छु अब खुप्सित चेत पायाँ ॥५८॥
तस्मात् तिमी पनि विरोध् मति यो नलेऊ ।
सीता म हर्छु भनि आग्रह छाडिदेऊ ॥
सब् नष्ट हुन्छ तिमिले मति यस्ति लीया ।
देख्यौ खर त्रिशिर दूषण मारिदीया ॥५९॥

हीतै कहन्छ भनि यो तिमि जानिलेऊ।
आर्को कहन्छु म गुठिल् तिमि चित्त देऊ॥
ई ता अनन्त अधिनाथ् परमेश्वरै हुन्।
ब्रह्माजिले पनि भजिन्छ सदा पुरुष् जुन्॥६०॥
नारद्जिका वचन सूनि म आज भन्छु।
स्वामित्! म ता हित चिताइ सदा रहन्छु॥
लौ मार रावण भनी वरदान माँग्या।
ब्रह्माजिले र उहि सूर् प्रभु गर्न लाग्या॥६१॥
जाऊ घरै बसिरहू मति यो नलेऊ।
ईश्वर् बुझेर उहि माफिक चित्त देऊ॥
जो गर्दछन् प्रभु गरून् छ लिला उनैको।
चल्दैन जोर् प्रभुविषे अरुका कुनैको॥६२॥
मारीचले जब यती सब बात् बतायो।
झन् बात् सुनेर बुझि खुप्सित चित्त लायो॥
मारीचलाइ अनि रावण भन्छ हेरी।
सीता म हर्छु मृग भैकन जाउ फेरि॥६३॥
ईश्वर् हुनन् यदि भन्या ति अवश्य मार्छन्।
सामान्य हुन् यदि भन्या ति अवश्य हार्छन्॥
ईश्वर् भया पनि असल् छ अवश्य तर्छु।
सामान्य हुन् त म सितासँग भोग गर्छु॥६४॥
जाऊ अवश्य म सिताजि हरेर लिन्छु।
बोल्यौ यहाँ कछु भन्या त म काटिदिन्छु॥

यस्तो हुकूम् गरि तहाँ जब बीच पार्‍यो ।
मारीचले पनि तसै जिय आश मार्‍यो ॥६५॥
आखिर् मर्‍याँ म हरिदेखि भन्या त तर्छु ।
यस् दुष्टदेखि मरियो त नरक् म पर्छु ॥
यस्तो विचार् गरि तहाँ मृगरूप धारी ।
हूकूम् शिरोपर धरीकन भो तयारी ॥६६॥

मारीचवध र सीताहरण–७

दौड्यो लिला पनि चरित्र विचित्र गर्दै ।
सीताजिका नजिक गैकन ताहिँ फिर्दै ॥
सीताजिलाइ गरुँ मोह भनेर दाग्यो ।
लीला गरीकन वरीपरि चर्न लाग्यो ॥६७॥
छल् हो भनी प्रभुजिले पनि चाल पाया ।
एकान्तमा गइ सिताकन काम् अह्राया ॥
सीते ! अदृश्य भइ लौ बस अग्निमाहाँ ।
छाया सिता पनि बनायर छोड याहाँ ॥६८॥
एक् भिक्षुको रुप लि रावण आज आई ।
हर्न्याछ दुष्ट तिमिलाइ स्वरूप् छिपाई ॥
चाँडो अवश्य तिमिले पनि रूप् छिपाऊ ।
एक् वर्षसम्म छिपि दिन् तिमिले बिताऊ ॥६९॥
यस्तो हुकूम् सुनि अदृश्य स्वरूप धारी ।
छाया सिता पनि दुरुस्त गरिन् तयारी ॥
सीता छिपीकन रहिन् जब अग्निमाहाँ ।
छाया सिता-सँग बस्या रघुनाथ ताहाँ ॥७०॥

छाया सिताजि अति चित्र विचित्र मानी ।
खेलाउँ तेस मृगलाइ भनेर ठानी ॥
बिन्ती गरिन् रघुपते ! मृग आज देऊ ।
खेलाउँछू अधिक जाति छ पक्रिलेऊ ॥७१॥
इच्छा थियो प्रभुजिको पनि बिन्ति सूनी ।
जानू असल् छ भनि यो मनभित्र गूनी ॥
हात्मा धनू लि मृगका पछि आफु धाया ।
लक्ष्मण्जिलाइ बस तीमि भनी अह्राया ॥७२॥
लक्ष्मण् रह्या तहिँ सिता-सित चौकिदारी ।
मारीचलाइ प्रभुले पनि खुप् लघारी ॥
माऱ्या तहाँ जब त दिक् बहुतै गरायो ।
हे भाइ लक्ष्मण ! मऱ्याँ भनि छल् करायो ॥७३॥
छल्का वचन् सुनि सिताजि बहुत् डराइन् ।
लक्ष्मण्जिलाइ तिमि जाउ भनी अह्राइन् ॥
लक्ष्मण्जिले हुकुम यो सुनि बिन्ति पाऱ्या ।
हे माइ ! जो मृग थियो प्रभुले त माऱ्या ॥७४॥
तेस्तो कहाँ मृग थियो, मृगरूप-धारी ।
मारीच राक्षस थियो र त आज मारी ॥
ठाकूर्जिले तहिँ गिराइदिदा करायो ।
हे भाइ लक्ष्मण ! मऱ्याँ भनि छल् गरायो ॥७५॥
ज्योतिःस्वरूप् तहिँ भयो र मिल्यो हरीमा ।
आश्चर्य भो सकललाइ तसै घरीमा ॥

यस् दुष्टले पनि त यो गति आज पायो ।
भन्न्या बुझेर सब जन्‌कन हर्ष आयो ॥७६॥
लक्ष्मण्‌जिको वचन सूनि सिता रिसाइन् ।
आँसू बहुत् नजरदेखि पनी खसाइन् ॥
बोलिन् अवाच्य पनि लक्ष्मणलाइ ताहाँ ।
भज्ली मलाइ भनि मन् छ कि आज याहाँ ॥७७॥
राम्‌देखि बाहिक अवर् त भजैनँ मैले ।
तिम्रै अगाडि यहिँ छोड्‌दछु देह ऐल्हे ॥
तिम्रो त चित्त अति दुष्ट रहेछ जान्याँ ।
काम् देखि आज तिमिलाइ त शत्रु मान्याँ ॥७८॥
यस्तो वचन् सुनि ति लक्ष्मणजी रिसाया ।
बोलिन् अवाच्य भनि भित्र मनै चिताया ॥
धिक् चण्डि ! येति भनि खुप्‌सित चट्पटाया ।
वन्-देविलाइ रखवारि तहाँ खटाया ॥७९॥
सीताजिलाइ तहिँ छोडि उठी गयाका ।
दूरै हुँदा नजरदेखि फरक् भयाका ॥
देख्यो र रावण सितातिर जल्दि आयो ।
संन्यासिको स्वरुप लीकन रूप् छिपायो ॥८०॥
संन्यासि हुन् भनि बहुत् गरि भक्ति लाइन् ।
पूजा प्रणाम् पनि गरीकन हर्ष पाइन् ॥
बिन्ती गरिन् बस गुरो ! प्रभु फर्कि आई ।
गर्नन् बहुत् प्रिय हजुर्‌कन चित्त लाई ॥८१॥

यस्ता वचन् सुनि सितातिर दृष्टि दीदो ।
को हो पती बुझुँ भनीकन गुह्य लीदो ॥
सोध्यो सितासित पती पनि जो छ को हो ।
नाम् काम् समेत् तिमि बताउ न आज जो हो ॥८२॥
सीताजिले पनि भनिन् सब जो छ नाम् काम् ।
संन्यासि जानिकन कत्ति नपारि छल्छाम् ॥
सोधिन् तहाँ म पनि नाम्हरु सुन्न पाऊँ ।
कुन् हो बताउ तिमिले पनि नाम ठाउँ ॥८३॥
यस्ता वचन् सुनि सिताकन हर्न आँटी ।
नाम् काम् तहाँ सब कह्यो रतिभर् नढाँटी ॥
बोल्यो अवाच्य पति मानि मलाइ लेऊ ।
राम्चन्द्रलाइ तिमिले अब छाडिदेऊ ॥८४॥
यस्तो वचन् सुनि अलिक् मनमा डराइन् ।
बात्ले त दुष्टकन तृण् सरिको गराइन् ॥
हे दुष्ट रावण ! अवश्य तँ आज मर्लास् ।
ऐह्ले जसै प्रभुजिका अगि याहिँ पर्लास् ॥८५॥
यस्ता वचन् सुनि रिसायर जल्दि ऊठ्यो ।
धाऱ्यो स्वरूप् र अब हर्छु भनेर छूट्यो ॥
बीस् बाहु दश् मुख शरीर् पनि शुद्ध कालो ।
देखाइ सब्कन तरास् मन-भित्र हाल्यो ॥८६॥
सीताजीलाइ मन्ले चिह्निकन मनमा मातृवत् बुद्धि गर्दो ।
हात्ले मैले छुँदामा अनुचित छ भनी स्पर्श केही नगर्दो ॥

आफ्ना नङ्सब्‌जमीन्‌मा धसिकन जमिनैजल्दिहात्‌ले उठायो ।
सीताजीलाइ रथ्मा धरिकन दगुऱ्यो रामदेखिन्‌ छुटायो ॥८७



(५२. रावणले सीता हरेको ।)

सीताजीको वियोगमा रामको विलाप, जटायुसँग भेट–८

हा राम्‌ ! लक्ष्मण ! येति मात्र मुखले ❀ बोलेर साह्रै रुँदी ।
तन्‌-मन्‌ रामविषे धरेर बहुतै ❀ विह्वल्‌ निरन्तर्‌ हुँदी ॥
देख्या ताहिँ जटायुले र उडि गै ❀ रथ्‌ चूर्ण पारीदिया ।
घोडा चूर्ण गराइ फेर्‌ धनु समेत्‌ ❀ टुक्‌टुक्‌गराईदिया॥८८
रावण्‌ झन्‌ वीर थीयो झटपट करमा क्रोधले खड्ग लीयो ।
काट्यो दूवै पखेटा रिससित र तहाँ भूमिमा झारिदीयो ॥
बाधा पाई जटायू पृथिवितल गिऱ्या फेरि रथ्‌को तयारी ।
जल्दी पाऱ्यो र सीता लिइकन पुगिगो दुष्ट त्यो सिन्धुपारि ॥८९
आकाश्‌मा जब ऋष्यमूक गिरिका ❀ ऊपर्‌ पुगीथिन्‌ जसै ।
आफ्ना सब्‌ गहना फुकालि बलियो ❀ पोको बनाइन्‌ तसै ॥
राम्‌ लक्ष्मण्‌कन यो दिउन्‌ भनि तहाँ ❀ पोकै खसालिन्‌ पनि ।
सुग्रीव्‌ले त गुफाविषे धरिलिया ❀ कस्ले खसाल्यो भनी॥९०

सीताजीलाइ लङ्का लगिकन मनमा मातृवत् बुद्धि गर्दो ।
भित्री जुन् हो बगैचा तहिँ असल अशोक् वृक्षका बीच धर्दो ॥
सेवा खुप् गर्न लाग्यो तर पनि मनमा माइले दुःख पाइन् ।
हा राम् ! हा राम् ! जगन्नाथ् यहि वचन गरी राममा चित्त लाइन् ॥९१
मारीच् मारेर फिर्थ्या प्रभु पनि वनमा देखिया ताहिँ भाइ ।
राम्ले ताहीँ विचार्‍या मन मन इ कुरा भाइ पुग्ये नपाई ॥
माया सीता बन्याकी अलिकति पनि याद् छैन ई भाइलाई ।
साँचै सीता इनै हुन् भनिकन मनले भन्दछन् चाल् नपाई ॥९२
यो बात् बोल्दिनँ गुह्य राख्छु म पनी ❀ मानून् सिता हुन् भनी ।
सीता निश्चय हुन् भनी ति रिसले ❀ लङ्नन् रिपूथ्यैँ पनि ॥
यस्तो निश्चय मन् भयो प्रभुजिको ❀ लक्ष्मण् पुग्या झट् तहाँ ।
सोध्या श्रीरघुनाथले किन सिता ❀ छाडेर आयौ यहाँ ॥९३



(५३. रामले मारीच मारेर फर्कदा बाटामा लक्ष्मण भेटेको ।)

लक्ष्मण्ले पनि यो हुकूम् सुनि तहाँ ❀ बिन्ती गर्‍या क्या गरूँ ।
जो दुर्वाच्य गरिन् सबै भनुँ भन्याँ ❀ सक्तीनँ मैले बरु ॥

मारीच्का छलका वचन् सुनि बहुत् ❀ दुर्वाच्य बोलिन् जसै ।
सम्झायाँ भरसक् अनेक् तरहले ❀ लागेन बिन्ती कसै ॥९४
फेर् उत्तर् प्रभुले दिया अनुचितै ❀ तिन्ले भनुन् तापनि ।
छोड्नू कत्ति थियेन दुर्वचनले ❀ स्त्री हुन् तिं सीता भनी ॥
येती बात् गरि राम आश्रमविषे ❀ जल्दी कदम् ली गया ।
देख्यानन् र सिताजिलाइ बहुतै ❀ शोक्गर्नलाग्दाभया ॥९५
की राक्षस्हरुले हऱ्या कि वनमा ❀ की दुष्टले पेट् भऱ्या ।
एक् थोक् क्यातभयो अवश्य म गयाँ ❀ कुन् दुष्टका खेल् पऱ्या ॥
वन्देवीहरुलाइ मालुम भया ❀ विस्तार् बताऊ यहाँ ।
सीता मेरि पियारि देखिनँ म ता ❀ जान्छू सिता छिन् जहाँ ॥९६
यस्ता रीत्सित सोधि सोधि रघुनाथ् ❀ ज्ञानै स्वरूपी पनि ।
जस्तो मानिस गर्छ सोहि रितले ❀ हा मेरि सीता ! भनी ॥
फिर्थ्या तेस् वनमा बडा विरहले ❀ सोध्या नपाई उसै ।
यै बीच्मा वनमा त रथ् र धनुको ❀ देख्या अनेक् टुक् तसै ॥९७

जटायुसँग भेट–८ (२)

भन्छन् लक्ष्मणलाइ भाइ ! तिमिले ❀ देख्यौ यहाँको त चाल् ।
अर्को आइ जिती लियेछ बिचमा ❀ मैले त देख्याँ कुचाल् ॥
येती बात् गरि राम् अलिक् पर गया ❀ देख्छन् त पल्टीरही ।
चिन्नैलाइ कठिन् जटायुकन ता ❀ दूवै पखेटा गई ॥९८
अज्ञान् कत्ति थियेन तापनि तहाँ ❀ लीला नरैको गरी ।
चीन्याको नचिह्न्यै गरेर भगवान् ❀ भन्छन् अगाडी सरी ॥
हे भाई ! धनु देउ दुष्ट मिलिगो ❀ मार्छू म बाणै धरी ।
खान्या येहि रहेछ हेरि बुझियो ❀ पल्टेछ खुप् पेट् भरी ॥९९

सून्या बात् र जटायुले पनि हवाल् ❀ वृत्तान्त बिन्ती गऱ्या।
सूनी पूर्ण दया भयो नजिक गै ❀ छाम्या र सब् ताप् हऱ्या॥
सीताको समचार् सबै कहि तहाँ ❀ साम्ने जटायू मऱ्या।
स्नान् दाहा गरि मांसपिण्डहरु दी ❀ क्रीया प्रभूले गऱ्या ॥१००
सायुज्यै मुक्ति पाई स्तुति पनि बहुतै. भक्ति राखेर गाई।
पौँच्या धाम्मा जटायू प्रभु पनि नरको ठिक्क लीला जनाई॥
वन्वन्मा फिर्न लाग्या विरह गरि गरी सोद्धछन् जाहिँ ताहिँ।
दोस्त्रादेखन्यामिल्यानन्सकलवनढुड्याएक्पनीकाहिँनाहीँ॥१०१

कबन्धको उद्धार–९

छातीमा मुख् भयाको शिर पनि नहुँदा नाम् कबन्धै रह्याको।
चार् चार् कोशसम्म पुग्न्या गुइ अतिबलिया दीर्घबाहू भयाको॥
राक्षस् थीयो तहाँ एक् बसि-बसिकन सब् हातले खैंचि खान्या।
तेसैका बाहु बीच्मा रघुपति परदा रोकियो मार्ग जान्या॥१०२
राक्षस्ले घेरियाको बुझिकन रघुनाथ् भन्दछन् भाइलाई।
हे लक्ष्मण् ! आज देख्यौ अब बिच परियो निल्छ की हामिलाई॥
ठाकुर्जीका वचन् यी सुनिकन विनती ताहिँ लक्ष्मण्जि गर्छन्।
हेनाथ् ! क्या डर् छ यस्को दुइ भइ दुइ हात् काटिद्यूँ याहिँ झर्छन्॥१०३
येती बात् गरि हात् दुवै सहजमा ❀ काटी खसाल्या जसै।
राक्षस्ले पनि हात् गिऱ्या जब तहाँ ❀ आश्चर्य मान्यो तसै॥
सोध्यो आज म वीरका पनि सहज् ❀ हातै खसाल्यौ यहाँ।
को हौ क्या मनमा लियेर वनमा ❀ डुल्छौ छ जानू कहाँ॥१०४
उत्तर् श्री रघुनाथले पनि दिया ❀ हाँसेर विस्तार् गरी।
सून्यो राम भनी तहाँ र मनले ❀ चीह्न्या इनै हुन् हरि॥

ठाकुर्‌जीकन चीह्नि खुश्‌ अधिक भै ❀ विस्तार आफ्नू गऱ्यो ।
हे नाथ् ! आज चिह्न्याँ हजूर्‌कन यहाँ ❀ पायाँरसब्‌ताप्‌टऱ्यो ॥१०५
ब्रह्मादेखि अवध्य पाइ वरदान्‌ ❀ गन्धर्व हूँ तापनि ।
राम्रो छू भनि गर्व भो र ऋषि ता ❀ साह्रै नराम्रा भनी ॥
हाँस्याँ केहि र अष्टवक्र ऋषिले ❀ राक्षस्‌ भयास्‌ लौ भनी ।
पैह्ले श्राप गरी दिया पछि त फेर्‌ ❀ मुक्ती बताया पनि॥१०६
राक्षस्‌ भैकन फिर्दथ्याँ म, रिसले ❀ शिर्‌ इन्द्रजीले हऱ्या ।
ब्रह्माको वरदान्‌ थियो र म जियाँ ❀ इन्द्रादि सब्‌ छक्‌ पऱ्या ॥
शीरै गै पनि यो जियो अब कसो ❀ गर्ला भनी खुप्‌ दया ।
आयो इन्द्रजिमा र खानकन मुख्‌ ❀ छातीविषे दी गया ॥१०७
चार्‌ चार्‌ कोश तलक्‌ समाउन भनी ❀ लामा त हातै दिया ।
सो हात्‌ आज गिराइबक्सनुभयो ❀ याहीँ तलक्‌ ई थिया ॥
जस्तो मुक्ति ति अष्टवक्र ऋषिले ❀ पैह्ले बताया तहाँ ।
त्यस्तो ठिक्क भयो इ हात्‌ गिरिगया ❀ मुक्ती त पायाँ यहाँ ॥१०८
क्या बात्‌ धन्य रहेँछु आज म प्रभो ❀ आशा गऱ्याँथ्याँ जति ।
रातोदिन्‌ रटना थियो चरणको ❀ भैगो शरण्‌को गति ॥
खाडल्‌ खुप्‌ गहिरो खनेर उसमा ❀ यो देह मेरो धरी ।
पोली भस्म गराइ-बक्सनुहवस्‌ ❀ जान्छू म संसार्‌ तरी ॥१०९
सीता पाउनको उपाय विनती ❀ गर्न्याछु साँचो गरी ।
भन्र्या यो विनती सुन्या र हरिले ❀ पोलीदिया खाक्‌ गरी॥
सुन्दर्‌. शुद्धस्वरूप्‌ धऱ्यो प्रभुजिले ❀ खुश्‌ भै दिया वर्‌ पनि ।
भक्तीले बहुतै गऱ्यो स्तुति र त्यो ❀ पौँच्यो परम्‌ धाम्‌अनि ॥११०

हे नाथ् ! सीताजिमिल्निन्अबतिमिशबरीछन्जहाँ ताहिँ जाऊ ।
साह्रै भक्ती छ तिम्रा चरणकमलको ताप तिन्का छुटाऊ ॥
येती बिन्ती जगन्नाथ्सित गरि जब धाम् त्यो गयो राम फेरि ।
आश्रम्मा पौंचि दर्शन् शबरिकन दिया खुप् कृपा राखि हेरी॥१११

शबरीसँग भेट–१०

आसन्देखि उठेर जल्दि शबरी ❀ राम्का चरण्मा परिन् ।
सक्भर्को बहुतै पुजा गरि तहाँ ❀ हात् जोरि बिन्ती गरिन् ॥
हेनाथ् हीन् कुलकीस्त्रिजातिमगरीब् ❀ जान्दीनँ तिम्रो स्तुति ।
आधार् मात्र फगत् छ यै चरणमा ❀ यस्तै छ मेरो गति॥११२
विस्तार् सब् गुरुदेखि सूनि गुरुको ❀ आज्ञा मनैमा लिई ।
कैह्ले देख्छु हजूरलाइ भनि खुप् ❀ तन्-मन् हजुर्मा दिई ॥
पूजा नित्य हजूरको गरि यहाँ ❀ स्वामित् ! बस्याकी थियाँ।
हे नाथ् ! आज दया भयो हजुरको ❀ प्रत्यक्ष देखीलियाँ ॥११३
क्याले आज बहुत् प्रसन्न हुनुभो ❀ कुन् कर्म मैले गऱ्याँ ।
योगीका मनले नभेटि सकिन्या ❀ मैले त दर्शन् गऱ्याँ ॥
यस्तो बिन्ति सुनी दया बहुत भो ❀ हेतू प्रभूले कह्या ।
ऊँच् नीच् स्त्री र पुरुष् विचार्दिनँ म ता ❀ खुश् हुन्छु भक्ती भया॥११४
नौ साधन्कि त भक्ति छन् ति नउमा ❀ पैह्लो त सत्संग हो ।
पैह्लो साधन पो भयो पनि भन्या ❀ बाँकी रह्याका ति जो ॥
आठ् साधन्हरु हुन् ति ता क्रमसितै ❀ मिल्छन् असल् सङ्गले ।
सत्को संग भया सबै बनिगया ❀ क्या हुन्छ ती सङ्गले॥११५
सत्को सङ्ग भै रह्याकी दिनदिन म उपर् भक्ति ठूलो भयाकी ।
सज्जन्को सङ्ग पाईकन सब गुणमा पार पौंची-गयाकी ॥

देख्याँ मैले र दर्शन् दिन भनि खुशिले आज आफै म आई ।
दीयाँ दर्शन् र पायौ तिमि अधम भया पाउँथ्यौ क्या मलाई ॥११६
मुक्ती भो आज तिम्रो अब फजिति छुट्या खूशि भै आज जाऊ ।
मेरी सीता कहाँ छन् खबर यदि भया त्यो पनी सब् बताऊ ॥
हूकूम् जस्सै सुनीथिन् तब तहिं बिनती गर्दछिन् क्या बताउँ ।
सर्वव्यापी हजुरले बुझि त नसकिन्या एकरती छैन ठाउँ ॥११७
साँचो बिन्ती गर्‍याँ यो तरपनि नरको आज यो रूप धारी ।
आज्ञा भो ता म बिन्ती पनि हजुरविषे गर्दछू काल् विचारी ॥
सीता लंकाविषे छिन् अब त हजुरले भेट सुग्रीवलाई ।
बक्स्याजावस् ति गर्नन् जतिजति अरु काम् बिल्कुलै पार लाई ॥११८
पम्पा भन्न्या तलाऊ पनि नजिक हुन्या ऋष्यमूक् पर्वतैका ।
टाकूरैमा ति बस्छन् अति फजिति सही दिन् बिताई सधैंका ॥
बालीको डर् हुनाले तहिँ बहुत बस्या बालि जाँदैन ताहाँ ।
बालीलाई नजानू भनिकन छ सराप् सब् गर्‍याँ बिन्ति याहाँ ॥११९
सुग्रीव्-सीत मित्यारि गर्नु सब काम् ❀ हून्याछ, सीता पनि ।
मिल्लिन् आज म देह खाग् गरि यहाँ ❀ पोल्छू नजीक् भै भनी ॥
बिन्ती पारि चिताविषे पसि शरीर् ❀ त्यो देह सब् खाग् गरिन्।
ठाकुर्को अति भक्तिले ति शबरी ❀ संसार-सागर् तरिन्॥१२०
क्या दुर्लभ् रघुनाथ् खूशी हुन गया ❀ जात्की अधम् भै पनि ।
श्रीराम्का अगि देह छाडिकन पार् ❀ पौंचिन् सहज्मै तिनी ॥
ब्राह्मण् भैकन भक्ति गर्दछ भन्या ❀ उस्का त झन् क्या कुरा ।
जो कोही पनि भक्ति भो पनि भन्या ❀ योगी ति हुन्छन् पुरा॥१२१

हे लोक् हो ! रघुनाथका चरणको ❀ भक्ती छ मुक्ती दिन्या ।
यो जानीकन कामधेनु सरिका ❀ राम्नाम्मनैमालिन्या ॥
क्या गर्छौं अरु मंत्र-तंत्रहरुले ❀ छोडेर सब् राममा ।
तन्मन् लाइ अवश्य जान मनले ❀ सार् मिल्छ यै काममा॥१२२

## ❀ इति अरण्यकाण्ड समाप्त ❀



पथि पथिकवधूभिः सादरं पृच्छमाना
कुवलयदलनीलः कोऽयमार्ये तवेति ?
स्मितविकसितगण्डं व्रीडविभ्रान्तनेत्रं
मुखमवनमयन्ती स्पष्टमाचष्ट सीता ॥



# आठकाण्ड रामायण किष्किन्धाकाण्ड



सुग्रीवसँग भेट–१

जस्सै मुक्त भई गइन् ति शबरी ❀ सब् बात् सुनी राम् पनि।
जान्छू आज म ऋष्यमूक गिरिमा ❀ सुग्रीव भेट्छू भनी॥
जान्थ्याकोशभरिकोतलाउमिलिगो ❀ पम्पा भन्याको पनि।
चीह्न्या श्रीरघुनाथले शबरिले ❀ यै हो भन्याको भनी ॥१

माछा कच्छप चल्दछन्, कमलको ❀ सब् गिर्छ केसर् तहाँ।
केसर्ले जब छोपियो पनि भन्या ❀ देखिन्छ जल् पो कहाँ॥
नीलालालसफेद् कमल् पनि अनेक् ❀ रंका भयाका तहाँ।
बोल्छन् हाँस चकोर सारसहरू ❀ लाटाकुस्यारा जहाँ ॥२

जस्तो निर्मल हुन्छ सन्तहरुको ❀ मन् सोहि माफीक जल्।
निर्मल् देखि बहुत् प्रसन्न हुनुभो ❀ लाग्यो र साह्रै असल्॥
थोडा जल् पनि पान् गरी सकल वन् ❀ हेर्थ्या जगन्नाथ् तहाँ।
देख्या सुग्रिवले डरायर नजर् ❀ लाया प्रभू छन् जहाँ ॥३

बालीको छल हो भन्या बुझि तहाँ ❀ हात्ले इशारा दिया।
औरै कोहि रह्या छ सज्जन भन्या ❀ हेरेर हाँसी-लिया॥
ब्राह्मण्को लडिका बनेर हनुमान् ❀ जाऊ ति को हुन् कहाँ।
जान्छन् क्या मनमा छ सब् वरिपरी ❀ हेरेर डुल्छन् तहाँ ॥४

सुग्रीव्ले हनुमानलाइ जब यो ❀ हूकूम् दिया जौ भनी।
ब्राह्मण्को लडिका बनेर हनुमान् ❀ राम्का हजुर्मा पनि॥
पौँची पाठ्सित बिन्ति पारि सब काम् ❀ सोध्या प्रभूको जसै।
विस्तार् नाम र कामको प्रभुजिले ❀ खुश् भै बताया तसै ॥५

सुग्रीव्को हनुमानले पनि तहाँ ❀ विस्तार बिन्ती गऱ्या ।
बोकूँ श्रीरघुनाथलाइ भनि फेर् ❀ आफ्नू स्वरूप् झट् धऱ्या॥
राम्लक्ष्मण्कनबोकिजल्दि हनुमान् ❀ सुग्रीवका पासमा ।
पौँचाऊँ रघुनाथलाइ भनि खुप् ❀ कूद्या ति आकाशमा ॥६
जल्दी पर्वतका उपर् पुगिगया ❀ छायाविषे राम् रह्या ।
सुग्रीव्लाइ खबर् दिनाकन तहाँ ❀ जल्दी हनूमान् गया ॥
विस्तार् पायर आइ सुग्रिवजिले ❀ दर्शन् प्रभूको गऱ्या ।
हाँगा कोमल भाँचि आसन दिया ❀ आनन्द-सागर् पऱ्या ॥७
आसन् सुग्रिवलाइ लक्ष्मणजिले ❀ दीया हनूमानले ।
लक्ष्मण्जीकन बस्त्र आसन दिया ❀ ताहीँ ठुला मानले ॥
सब् वृत्तान्त बताइ लक्ष्मणजिले ❀ विस्तार् सुनाया जसै ।
सीता जुन् गहना खसालि गइथिन् ❀ हाजिर् गराया तसै ॥८
हा राम् लक्ष्मण ! येति मात्र मुखले ❀ बोलेर आकाशमा ।
जान्थिन् सब् गहना फुकालिकन ता ❀ हाम्रा यसै वासमा ॥
गिर्न्या पाठ्सित पो खसालि ति गइन् ❀ चिह्नीनँ याहीँ थियाँ ।
कस्का हुन् यहि चीह्नि बक्सनुहवस् ❀ यै हो हजूर्मा दियाँ ॥९
येती बिन्ति गरी दिया ति गहना ❀ देख्या प्रभूले पनि ।
चीह्न्या सब् गहना र शोक् बहुत भो ❀ हा ! मेरि सीता भनी ॥
रोया छातिविषे धऱ्या र गहना ❀ नाना विलाप्ले जसै ।
लक्ष्मण् सुग्रिवले तहाँ प्रभुजिको ❀ दिल्खुश्गरायातसै ॥१०
हे नाथ् ! रावणलाइ मारि सहजै ❀ सीताजिलाई यहाँ ।
हाजिर् हामि गराउँला हजुरमा ❀ त्यो दुष्ट जाला कहाँ ॥

येती बिन्ति तहाँ ति सुग्रिवजिले ❀ राम्का हजूरमा गऱ्या।
बोल्या श्री हनुमानले पनि तहाँ ❀ अग्नी त साक्षी धऱ्या ॥११
अग्नी साक्षि धरेर सुग्रिवजिले ❀ राम्थ्यैं मित्यारी गरी।
बाहाँ जोरि सखा भई नजिकमा ❀ सुग्रीव् बस्या तेस् घरि ॥
सुग्रीव्ले तहिँ बिन्तिबात् पनि गऱ्या ❀ हे नाथ् ! फजीती सही।
बालीका डरले बहुत् दिन बित्या ❀ येसै ज़गामा रही ॥१२



(५४. रामले अग्नि साक्षी राखी सुग्रीवसित मीत लाएको ।)

याहाँ बालि त आउँदैन छ सराप् ❀ मातङ्गजीको र पो।
पायाँ बस्न नहीँ भन्या मकन ता ❀ कस्ले बचाऊँदथ्यो ॥
बालीको बल बिन्ति गर्छु अहिले ❀ जस्देखि सब् डर्दछन्।
कस्तै वीर हउन् लड्या पनि भन्या ❀ लड्न्या सबै मर्दछन् ॥१३
ठूलो वीर् मयपुत्र राक्षस थियो ❀ मायावि नाऊँ थियो।
बालीसीत लडाइँ गर्न भनि त्यो ❀ आयो र हाँक् खूप् दियो॥
बालीले पनि दौडि गैकन तहाँ ❀ हान्यो मुठीले जसै।
बाधा पाइ डराइ भागि उ गयो ❀ लाग्यो पछाडी तसै ॥१४

बालीका पछि लागि मै पनि गयाँ ❀ राक्षस् गुफामा गयो ।
ढोकामा त मलाइ राखि रिसले ❀ फेर् भित्र जाँदो भयो ॥
मैह्ना दिन् बिति गैगयो त पनि त्यो ❀ फर्केन बाली जसै ।
साह्रै दिक् म थियाँ कसो गरुँ भनी ❀ आयो रगत् पो तसै ॥१५
लौ बाली त मरेछ हेरि ! रगतै ❀ आयो गुफादेखि ता ।
मैलाई पनि फर्कि मार्छ रिसले ❀ गूफा थुनी जाँ म ता ॥
यस्तो बुद्धि भयो र पत्थर ठुलो ❀ ल्यायाँ र गूफा थुन्याँ ।
फर्की आउन मन् गऱ्या पनि सहज् ❀ निस्की नसक्नू हुन्या ॥१६
यस्तापाठ्सितखुप् थुन्याँर मफिऱ्याँ ❀ बाली मऱ्या लौ भनी ।
विस्तार् सब् ति सुनाउँदा मकन ता ❀ राजा बनाया पनि ॥
राजा भैकन राज्य भोग् पनि गऱ्याँ ❀ क्यै दिन् पछी बालि ता ।
राक्षस् मारि फिरेर दाखिल भयो ❀ रीसाइ मैमाथि ता ॥१७
उस् दिन्देखि डराइ याहिँ म रह्याँ ❀ मेरी त पत्नी पनि ।
बल्जफ्ती-सित भोग गर्छ गरुँ क्या ❀ पुग्दैन जोर् तैपनि ॥
याहाँ आउन सक् भया यहिँ पनी ❀ आएर मार्न्या थियो ।
पाप्को क्या डर मान्छ त्यो र बलले ❀ जस्ले बुहारी लियो ॥१८
साह्रै दुःखि भयेर सुग्रिवजिले ❀ बिन्ती गऱ्याको सुनी ।
सुग्रीव्को अब दुःख हर्दछु भनी ❀ अन्तस्करण्ले गुनी ॥
खातिर् श्रीप्रभुले गऱ्या सुन सखे ❀ त्यो बालि मारी यहाँ ।
तिम्रो राज्य गराउँला अब उपर् ❀ जोर् चल्छ तेस्को कहाँ॥१९
यस्तो सत्य वचन् सुन्या प्रभुजिको ❀ शंका पऱ्यो तैपनि ।
सक्छन् क्या तब बालि मार्नकन ता ❀ ठूलो छ बाली भनी ॥

बालीलाइ बहूत वीर् बुझि तहाँ ❀ राम्का अगाडी सरी।
बालीको अधिको पराक्रम कह्या ❀ बिल्कूल विस्तार् गरी ॥२०
एक्दिन् दुन्दुभि नाम राक्षस ठुलो ❀ आयो र हाँक् खुप् दियो।
बालीले सहजै निमोठिकन शिर् ❀ छुट्ट्याइ हात्मा लियो ॥
सोही फ्याँकिदिदा यहाँ गिरिगयो ❀ चार् कोश् जगामा जसै।
छीटा पर्न गयो बहुत् रगतका ❀ ऋृषी रिसाया तसै ॥२१
बालीलाइ सराप् दिया अब यहाँ ❀ आइस् भन्या तैँ पनि ।
शिर् छुट्टा भइ पृथ्विमा गिरिगयास् ❀ जस्तै गिर्‍यो यो भनी ॥
यो मालुम् त मलाइ सब् अघिथियो ❀ सो जानि याहीँ रह्याँ ।
उस्लाई पनि यो छ याद् तब म तेस् ❀ वीर्देखि बाँच्तो भयाँ॥२२
सोही शिर् अझतक् छ पर्वत सरी ❀ यो फ्याँक्न सक्नूभया ।
बाली मार्न समर्थ ताहिँ चिह्नुँला ❀ मेरा त सेखी गया ॥
यी बात् सुग्रिवका सुनी झलक द्यूँ ❀ यिन्लाइ भन्न्या भयो ।
फ्याँक्या शिर् तहिँ पाउका अँगुलिले ❀चालीस कोश् तक् गयो॥२३
देख्या सुग्रिवले तथापि मनमा ❀ शंका त फेरी रह्यो।
सक्छन् क्या तब बालि मार्नकन ता ❀ ठूलो छ भन्न्या भयो ॥
सात् ताल् वृक्ष इ छन् इ एक शरले ❀ छेद्छन् त मार्छन् भनी।
सुग्रीव्का मनमा भयो र इ कुरा ❀ सब् थोक् सुनाया पनि॥२४
हे नाथ् ! बिन्ति म गर्दछू अरु पनी ❀ यस्तो छ बाली भनी ।
येही शिर्कन फ्याँकि मात्र मनले ❀ मानेन विश्वास् पनि ॥
बालीले यहि ताल वृक्षकन ता ❀ बूटै बराबर् गनी।
हल्लाएर खसालिदिन्छ जति छन् ❀ सम्पूर्ण पत्ता पनि ॥२५

ई ताल्-वृक्ष पनी यहाँ हजुरले ❀ एक् बाण ऐह्ले धरी ।
सब्मा छिद्र गराइबक्सनुहवस् ❀ बुझ्न्या छ मन् खुप् गरी ॥
येती बिन्ति तहाँ ति सुग्रिवजिले ❀ राम्थ्यैं जसै ता गऱ्या ।
राम्जीले पनि लौ भनेर खुशिले ❀ हात्माधनुष्वाण्धऱ्या ॥२६
वाण् फ्याँक्याप्रभुलेरवेग्सित गयो ❀ सात् ताल भेदन् गरी ।
पर्वत् भूमि-समेत् बिदारि पर गो. ❀ साम्ने सफाचट् गरी ॥
ठोक्रैमा फिरि आइ बाण् जब पऱ्यो ❀ सुग्रीवजी छक् पऱ्या ।
साक्षात् श्रीपति हुन् भनी चिनि तहाँ ❀ राम्कोस्तुतीखुप्गऱ्या ॥२७
हे नाथ् ! बल्ल चिह्ने अहो सकलका ❀ आत्मा जगन्नाथ् भनी ।
मायादेखि फरक् भयो अब त मन् ❀ लाग्दैन माया पनि ॥
क्या गर्छू अब पुत्र दार धनले ❀ सम्पूर्ण ई दूर् हऊन् ।
मेरा सब् दश इन्द्रियै हजुरका ❀ सेवा टहल्मा रहून् ॥२८
यै पाठ्ले जब ता गऱ्या स्तुति तहाँ ❀ सुग्रीवको सो सुनी ।
यो ज्ञान् आज नह्यूँ भनी प्रभुजिले ❀ अन्तस्करण्ले गुनी ॥
मायाले अनि मोह पारि रघुनाथ् ❀ हाँस्या र बोल्या जसै ।
सुग्रीव् मोह भया वचन् सुनि तहाँ ❀ ऊ ज्ञान बिर्स्या तसै ॥२९

बालीको वध र राम-बाली संवाद-२

हे सुग्रीव सखे ! मलाइ दुनियाँ ❀ भन्नन् मित्यारी गरी ।
कुन् चीज् सुग्रिवलाइ दीकन गया ❀ आपत्ति तिन्का हरी ॥
यो लोक्को अपवाद् म मेट्छुअबता ❀ बाली छ ऐह्ले जहाँ ।
ताहाँ गैकन हाँक देउ तिमिले ❀ त्यस्लाइ मार्छू यहाँ ॥३०
ऐह्ले राज्य गराउँछू भनि तहाँ ❀ राम्को हुकूम् भो जसै ।
सुग्रीव् खुशि भया र बालिकन खुप् ❀ हाँक्या वचन्ले तसै ॥

किष्किन्धा पुरिका नजीक वनमा ❀ आयार हाँक् खुप् गरी ।
सुग्रीव्जी जब ता रह्या बुझि खबर् ❀ बाली छुट्यो तेस्घरि ॥३१
बाली सुग्रिवको लडाइँ पनि भो ❀ सुग्रीव एक्क्षण् लड्या ।
सक्थ्या सुग्रिवले कहाँ सहजमा ❀ बाली विरैले धड्या॥
वाण् छोडीकन बालिलाइ अब ता ❀ मार्नन् प्रभूले भनी ।
एक्क्षण् ती यहि आशले टिकिगया ❀ घुस्सा दिस्दामा पनि ॥३२
बाली सुग्रिवको दुरुस्त अनुहार् ❀ एक् देखि राम्ले जसै ।
वाण्थाम्याटिकिसक्नुमुश्किल भई ❀ सुग्रीव भाग्या तसै ॥
पौँच्या श्रीरघुनाथका हजुरमा ❀ काम्दै र छाद्दै रगत् ।
बल् तोडीकन बालिले हरिलियो ❀ एक् देह पौँच्यो फगत्॥३३
सुग्रीव्ले तहिँबिन्ति खुप्सित गऱ्या ❀ हे नाथ् ! मलाई यहाँ ।
मार्नैको यदि मन् छ पो पनि भन्या ❀ जोर् चल्छ मेरो कहाँ ॥
आफैले यहिँ मारिबक्सनुहवस् ❀ ख्वामित् ! हजूर्ले पनि ।
शत्रूलाइ लगाइ मार्न त उचित् ❀ हो क्या सखा हो भनी॥३४
सुग्रीव्का इ वचन् सुनी गहभरी ❀ आँसू प्रभूले धऱ्या ।
सुग्रीव्जीकन अंकमाल गरि खुप् ❀ खातिर् प्रभूले गऱ्या ॥
हे सुग्रीव सखे ! दुरुस्त अनुहार् ❀ एक् देखि शंका भयो ।
मर्नन् मित्र भनेर पो डर हुँदा ❀ बाँचेर बाली गयो ॥३५
चिह्नो देहविषे धरेर अहिले ❀ जाऊ र हाँक् देउ फेर् ।
बालीलाइ म मारिदिन्छु सहजै ❀ लाग्वैन ऐह्ले त बेर् ॥
यस्ताबात्गरिखुप् शपथ्पनि गऱ्या ❀ सुग्रीवको मन् भरी ।
आज्ञा लक्ष्मणलाइ बक्सनुभयो ❀ फूल्ल्याउ मालाधरी ॥३६

सो माला पहिराइ भाइ तिमिले ❀ जल्दी पठाऊ तहाँ ।
हाँक् दीउन् अब बालिलाइ अहिले ❀ मार्छू म छोड्छू कहाँ ॥
लक्ष्मण्ले पनि यो हुकूम् सुनि तहाँ ❀ माला लगाईदिया ।
त्यो माला पहिरेर सुग्रिव गया ❀ बाली जहाँ वीर् थिया॥३७
बालीलाइ सुनाइ हाँक् बहुत दी ❀ सुग्रीव् बस्याथ्या जसै।
बालीले पनि शब्द सुग्रिवजिको ❀ सून्यो र ऊठ्यो तसै॥
आश्चर्यै मनमा भयो अघि भन्या❀ ऊठ्यो पछी रिस् पनि ।
मुक्का ख्वाइ लघारियो तपनि फेर् ❀ फर्क्यो भगूवा भनी ॥३८
बालीले पनि फेर् कछाड् कसि तयार् ❀ भै जान लाग्या जसै ।
ताराले त नजाउ यस् बखतमा ❀ भन्दै समातिन् तसै ॥
कोही वीर् बलवान् सहाय मिलि पो❀ सुग्रीव आया यहाँ ।
साहायै नभया त येहि घडिमा ❀ सुग्रीव फिर्थ्या कहाँ ॥३९
ताराका इ वचन् सुनेर बलवान् ❀ वीर् बालि बोल्छन् तहाँ।
हे प्यारी ! नडराउ को छ म सरी ❀ वीर् आज दोस्रो यहाँ॥
सुग्रीव्लाइं सहज् सहाय-सहितै ❀ मारेर फिर्न्या म छु ।
वीर् हूँ, हाँक दिदा कसो गरि बसूँ ❀ शंका नमान्या कछु ॥४०
बालीका इ वचन् सुनीकन तहाँ ❀ ताराजिले फेर् पनि ।
भन्छिन् नाथ् ! कछुसूनिबक्सनुहवस्❀ क्या भन्दछे यो भनी ॥
बिन्ती गर्छु म हित् कुरा हजुरमा ❀ साक्षात् अयोध्यापति ।
श्रीराम्चन्द्र सहाय छन् अब तहाँ ❀ चल्दैन जोर् एक् रती ॥४१
सुग्रीव्सीत मित्यारि लाइ रघुनाथ्- ❀ ज्यूले पिछामा लिया ।
बाली मारि म राज्य आज दिउँला ❀ भन्या वचन् यो दिया॥

भन्या बात् अरुमा हुँदा वनमहाँ ❀ सूनेर अङ्गद् यहाँ।
आई सब् ति कुरा मलाइ अघि नै ❀ भन्थ्यो, नजाऊ तहाँ ।।४२
सुग्रीव्सीत विरोध् नराख तिमिले ❀ जाऊ र ल्याऊ यहाँ।
यो राज् सुग्रिवलाइ देउ अब ता ❀ जित् छैन तिम्रो तहाँ ।।
श्रीराम्का दुइ पाउमा पर तिमी ❀ गर्नन् प्रभूले दया ।
साँचा हुन् इ कुरा बुझी लिनुहवस् ❀ भोग् गर्न इच्छा भया ।।४३
येती बिन्ति गरेर पाउ दुइमा ❀ पक्रेर रोइन् जसै ।
तारालाइ बुझाउनाकन तहाँ ❀ फेर् बालि बोल्या तसै ।।
हे प्यारी ! नडराउ कत्ति रघुनाथ् ❀ साक्षात् रमाका पति ।
नारायण् भनि चिन्दछू म पनि सो ❀ नाथ् हून् जगत्का गति।।४४
ताहाँ छन् रघुनाथ् भन्या चरणमा ❀ पर्न्याछु चाँडै वहाँ ।
सुग्रीवै छ फगत् भन्या सहजमा ❀ मार्न्याछु छाड्छू कहाँ ।।



(५५. बाली - सुग्रीवको गदा-युद्ध ।)

सुग्रीव् कुन् बलियो छ पाजि भगुवा ❀ त्यो लड्न मन्सुब् लिन्या।
तेस् पाजीकन डाकि आज कसरी ❀ यो राज्य मैले दिन्या ।।४५

तस्मात् शोक् नगरी बसीरहु तिमी ❀ जान्छू म ताहाँ भनी ।
लड्नैलाइ कछाड् कसीकन तयार् ❀ भै बालि दौड्या पनि ॥
बाली सुग्रिव दूइ भाइ रिसले ❀ फेर् लड्न लाग्या जसै ।
रूख्को आड गरी तहाँ प्रभुजिले ❀ एक् वाण छाड्या तसै ॥४६
वाण् बज्यो जब बालिका हृदयमा ❀ सर्वाङ्ग बाधा गरी ।
पृथ्वी कम्प गराइ झट् तहिँ गिऱ्या ❀ वीर् बालि मूर्छा परी ॥



(५६. रामले वाण हानी बालीलाई मारेको ।)

मूर्छा दूइ घडी पऱ्यापछि अलिक् ❀ चैतन्य आयो जसै ।
देख्या श्रीरघुनाथलाइ खुशि भै ❀ साम्ने बस्याका तसै ॥४७
भन्छन् श्रीरघुनाथलाइ रघुनाथ् ! ❀ तिम्रो विराम् क्या गऱ्याँ ।
धर्मैं छाडि लुकेर आज तिमिले ❀ माऱ्यौ म ऐल्हे मऱ्याँ ॥
यो क्या क्षत्रिय धर्म हो लुकिलुकी ❀ वीर् वाण छोड्छन् कहीँ।
छत्री भैकन धर्म छोडि लडन्या ❀ एक् आज देख्याँ यहीँ ॥४८
साम्ने भैकन वाण छोडि तिमिले ❀ माथ्र्यौ त खुप् यश् थियो।
सुग्रीव्होकतिसाख्महूँकति कुसाख् ❀ हादैव ! क्या मन् दियो ॥

सीता रावणले हऱ्यो भनि बहुत् ❀ सन्ताप मन्ले गरी ।
सुग्रीव्लाइ सहाय ली मकन ता ❀ लूकेर चोर् झैं गरी ।।४९
माऱ्यौ यो अतिचुक् भयो गरुँ कसो ❀ बाँच्थ्याँ त याहीं बसी ।
रावण्लाइ कुलै समेत् सहजमा ❀ झिक्थ्याँ म पाता कसी ।।
लंका पूरि समेत् पनी म बलले ❀ झिक्थ्याँ सहज्मा यहीं ।
पाजी रावणलाइ मार्न तिमिले ❀ क्या जानुपर्थ्यो उहीं ।।५०
चोरी मारिलिदा न यश् हुन गयो ❀ मासू न खानू भयो ।
धर्मात्मा तिमि पापि झैं हुन गयौ ❀ ज्यान् व्यर्थ मेरो गयो ।।
बालीका इ वचन् सुनेर रघुनाथ् ❀ भन्छन् तँ बोल्छस् कति ।
बाली हूँ भनि गर्व गर् तपनि हेर् ❀ साँचै तँ होस् दुर्मति ।।५१
पाप्को डर् रतिभर् नराखि तइँले ❀ खुश् भै बुहारी हरिस् ।
सोही पाप् अहिले प्रकट् हुन गयो ❀ तेस् पापले पो मरिस् ।।
धर्म स्थापन गर्नलाइ त यहाँ ❀ औतार मैले लियाँ ।
धर्मै जानि अधर्म ठानि अहिले ❀ तैँलाइ मारीदियाँ ।।५२
श्रीराम्का इ वचन् सुनी प्रभु भनी ❀ जानी चरण्मा पऱ्या ।
वानर् हूँ रघुनाथ् ! क्षमा गर भनी ❀ हात् जोरि बिन्ती गऱ्या ।।
नामोच्चारणले फगत् सहजमा ❀ संसार सागर् तरी ।
स्वामित् ! जान्छु हजूरमा, अब भन्या ❀ मैले त दर्शन् गरी ।।५३
पायाँ मर्न म भाग्यको कति बखान् ❀ मेरो म ऐह्ले गरूँ ।
को पाऊँछ हजूरलाइ भगवान् ❀ मर्न्या बखत्मा अरू ।।
मेरो ता गति यै थियो मिलिगयो ❀ जान्छू परम्धाम् म ता ।
अङ्गद्माथि दया रहोस् हजुरको ❀ हाजिर् छ सेवक् उता।।५४

मेरा छातिमहाँ छ वाण् हजुरको ❀ यो खैंचि छोईदिया।
शीतल् देह हुन्या थियो सहजमा ❀ प्राण् आज जान्या थिया॥
बालीका इ वचन् सुनी प्रभुजिले ❀ वाण् झीकि छूँदा भया।
ठाकुर्का अगि देह छाडि खुशि भै ❀ बाली परम्धाम् गया॥५५
बालीका सँगमा थिया जति तहाँ ❀ वानर् ति भागी गया।
ताराजीसित गै उहाँ सब हवाल् ❀ विस्तार गर्दा भया॥
राम्जीले लुकि वाण छोडि सहजै ❀ बाली त मारीदिया।
सुग्रीव् मंत्रिसमेत् बहुत् खुशि भई ❀ राम्कै हजूर्मा थिया॥५६
यो राज् अङ्गदलाइ बक्सनुहवस् ❀ ढोका शहर्को थुनी।
बस्छौं जल्दि हुकूम् हवस् हजुरको ❀ क्या हुन्छ धेरै गुनी॥
येती बिन्ति गऱ्या र वानरहरू ❀ जल्दी तयारी भया।
हूकूम् माफिक काम गर्न भनि सब् ❀ वानर् खडा भै रह्या॥५७

ताराको विलाप, रामले तारालाई बुझाउनु र सुग्रीवले राज्य पाउनु-३ (१)

बालीको परलोक् भयो भनि खबर् ❀ सूनिन् र तारा रुँदै।
हा नाथ् ! आज कता गयौ भनि बहुत् ❀ विह्वल् निरन्तर् हुँदै॥
क्या गर्छू अब पुत्र राज्य धनले ❀ भन्दै ति तारा जहाँ।
बालीको परलोक् भयो उहि जगा ❀ सोधेर पौंचिन् तहाँ॥५८
बालीको दुइ पाउ पक्रि बहुतै ❀ रूँदै विलाप् खुप् गरी।
भन्छिन् श्रीरघुनाथलाइ रघुनाथ् ❀ फेर् वाण ऐह्ले धरी॥
मारीलेउ मलाइ जान्छु म पनी ❀ मेरा पतीका सँगै।
खोज्छन् स्वर्गविषे मलाइ पतिले ❀ काहाँ म बस्छू नगै॥५९
पत्नीसीत विंयोग् हुँदा यति विलाप् ❀ हूँदा रह्याछन् भनी।
मालुम् सब् त तहीं छ फेर् म भनुँ क्या ❀ पर्दैन भन्नू पनि॥

पत्नीदान् गरि पुण्य हुन्छ जति सो ❀ मिल्न्याछ पुण्यै पनि ।
तस्मात् आज अवश्य हान शरले ❀ जावस् पतीथ्यैं भनी॥६०
येती बात् अघि रामसीत गरि फेर् ❀ सुग्रीवलाई पनि ।
भन्छिन् लौ गर राज्य आज खुशिले ❀ मित्ले दियाको भनी ॥
ताराका इ वचन् सुनीकन बहुत् ❀ आयो प्रभूमा दया ।
तारालाइ बुझाउनाकन तहाँ ❀ एक् तत्त्व भन्दा भया ॥६१

रामले तारालाई बुझाउनु, सुग्रीवले राज्य पाउनु–३ ( २ )

हे ताराजि विचार् नराखि तिमिले ❀ शोकै कती गर्दछ्यौ ।
यो मेरो पति हो भनेर नबुझी ❀ व्यर्थै शरीर् हर्दछ्यौ॥
जीवै हो पति भन्दछ्यौ यदि भन्या ❀ मर्दैन जीव् ता कहीं ।
देहै हो पति भन्दछ्यौ त किन शोक् ❀ गर्छ्यौं छ ऊ ता यहीं ॥६२
श्री राम्का इ वचन् सुनीकन तहाँ ❀ ताराजि चुप् भै रहिन् ।
जुन् सन्देह पर्‍यो तहाँ मनमहाँ ❀ सो मात्र सोध्दी भइन् ॥
हे नाथ् ! मर्जि भयो सुन्याँ सब कुरा ❀ बुझ्दैन मन् तैपनि ।
सन्देहै मनमा रह्यो मकन ता ❀ को गर्छ यो भोग् भनी॥६३
देहै गर्दछ भोग् भनूँ पनि भन्या ❀ जड् पो छ यो देह ता ।
ईश्वर् हो उहि गर्छ भोग् भनुँ भन्या ❀ सक्तीनँ भन्नै म ता ॥
साह्रै मोह भयाँ म ता हजुरको ❀ एकै वचन्ले गरी ।
माया राखि बुझाइ-बक्सनु-हवस् ❀ अज्ञान मेरो हरी ॥६४
ताराका यि वचन् सुनीकन बहुत् ❀ माया मनैमा धरी ।
तत्त्वज्ञान् सब ताहिँ बक्सनुभयो ❀ खोलेर विस्तार् गरी ॥
हे ताराजि ! नरोउ आज मनले ❀ संसार् छ झूटो भनी ।
झूटो कुन् रितले छ यो भनि भन्या ❀ भन्छू म विस्तार् पनि ॥६५

म ता नित्यै पो हूँ यहि शरिरमा लागि म गयाँ ।
शरीर् मर्दा आफै मइँ मरिगयाँ झैं पनि भयाँ ॥
अहो ! अज्ञान् मेरो भनिकन जहाँतक् मनमहाँ ।
लिदैनन् ताहींतक् फजिति पनि छन् सब् जनमहाँ ॥६६॥
स्फटिक् जस्तो जीव् हो, शरिरहरु लाहा बुझिलिनू ।
स्फटिक् लाहाका सङ् धरिकन त दृष्टान्त छ दिनू ॥
लाहाका सङ्बस्ता स्फटिक म छु लाल् भन्छ जसरी ।
शरीर् मर्दा मर्छू म पनि भनि जीव् भन्छ तसरी ॥६७॥
स्फटिक्ले रातो छू भनिकन सुहावस् त उ पनि ।
सुहावस् यस् जीव्ले शरिर सँगमा मर्छु म भनी ॥
न ता जीव् मर्न्या हो शरिरसँग लागेर जनको ।
न रातो हून्या हो स्फटिक सब खेल् जान मनको ॥६८॥
मनैका खेल्ले जीव् शरिर मइ हूँ भन्दछ भनी ।
जहाँतक् जान्दैनन् फजिति तहिंतक् मिल्दछ पनि ॥
मनैको खेल् यो हो भनिकन त जान्या तरिगया ।
नजान्या जीव् जो हुन् उति त सब फन्दा परिगया ॥६९॥
शरीर् मै हूँ, मैरै धनजनहरू हुन् भनि जसै ।
पऱ्यो मन्का खेल्मा तब फजिति मिल्छन् बुझ यसै ॥
बिना सत्का सङ्ले, विनु गुरु-कृपाले इ फजिती ।
अवश्यै छुट्तैनन् सकल मनका खेल नजिती ॥७०॥
म नित्यै आत्मा हूँ शरिरहरु हुन् चार घरिका ।
विचार्मा टिक्तैनन् विषय पनि छन् स्वप्नसरिका ॥

भनी जान्न्या जन्ले दृढ गरिलिया भक्तिरसले ।
नबिर्स्या ई मैले यति कहिदियाँ प्रीति-वशले ॥७१॥
उस् जन्ममा अधिक भक्ति गर्‍यौ र ऐह्ले ।
दर्शन् दियाँ नतर झट्ट म मिल्छु कैह्ले ॥
मेरो स्वरूप् र इ वचन् अब सम्झिलीया ।
छुट्नन् ति दुःख तिमिलाइ जती त थीया ॥७२॥
लेखै हवैन अब कर्म पनी गरीन्या ।
रस्ता कह्याँ भवसमुद्र सहज् तरीन्या ॥
मेरो स्वरूप् र इ वचन् जति सम्झिलिन्छन् ।
सब् कर्मपाश् ति सहजैसित काटिदिन्छन् ॥७३॥
यस्ता वचन् प्रभुजिको सुनि खूशि मन्ले ।
छोडिन् जती छ अभिमान् पनि ताहिं तिन्ले ॥
सुग्रीवको पनि गयो अभिमान ताहाँ ।
राम्को कृपा हुन गयापछि टिक्छ काहाँ ॥७४॥
हूकूम् भयो प्रभुजिको तहिँ मित्रलाई ।
हे मित्र सुग्रिव ! जलाउ इ बालिलाई ॥
क्रीया गरीकन शरीर् गर शुद्ध ऐह्ले ।
सब् काम छोडिकन यै गर आज पैह्ले ॥७५॥
हूकूम् भयो र तब बालि लगी जलाया ।
क्रीया गरीसकि ति सुग्रिव ताहिँ आया ॥
अर्पण् गरी सकल राज् प्रभुका चरण्मा ।
सेवक् बनीकन म बस्छु भन्या शरण्मा ॥७६॥

सुग्रीव्लाइ हुकूम् भयो प्रभुजिको ❀ जो हौ तिमी सो म हुँ।
जाऊ आज र गादिमा बस म ता ❀ याहीं वनैमा रहूँ ॥
गाऊँमा घरमा बसोइनँ भनी ❀ मेरो प्रतिज्ञा छ यो।
जानन् लक्ष्मण ता सँगै घर पनी ❀ भाई गया भैगयो ॥७७
वर्षा काल् बितिसक्छ यो जब तसै ❀ सीताजिको खोज् गऱ्या ।
येती मर्जि भयो र सुग्रिव बहुत् ❀ आनन्द-सागर् पऱ्या ॥
लक्ष्मण्जी पनि रामका हुकुमले ❀ सुग्रीवका साथ् गया ।
सुग्रीव् गादिविषे बस्यापछि फिरी ❀ दाखिल् प्रभूथ्यैं भया ॥७८

भगवान् रामले लक्ष्मणसँग क्रियायोगको वर्णन गर्नु-४

राम्ले ताहिँ थियो प्रवर्षण गिरी ❀ तेस्का शिखर्मा चढी ।
देख्या सुन्दर एक् गुफा स्फटिकको ❀ ताहीँ गराया मढी ॥
फल्फूल् ताहिँ खचित्थियोनजिकमै ❀ थीयो तलाऊ पनि ।
देख्या मन् खुशि भो तहाँ प्रभुजिको ❀ बस्न्यै जगा हो भनी ॥७९॥
वर्षाकालतलक् रह्या प्रभु तहाँ ❀ पर्थ्यो बखत्मा झरी ।
जन्तू पुष्ट थिया सबै ति वनका ❀ खाएर घाँस् पेट्भरि ॥
बस्थ्या श्रीरघुनाथका वरिपरी ❀ खुप् ध्यान् प्रभूमा धरी ।
ध्यान् जन्तूहरुको विचार् गरि तहाँ ❀ खूशी रहन्थ्या हरि ॥८०
लक्ष्मण्ले तहिँ बिन्ति एक् दिन गऱ्या ❀ हे नाथ् ! पुजाको विधान् ।
पाऊँ सुन्न हुकूम् हवस् खुशि भई ❀ कुन् हो करूणानिधान् ॥
ब्रह्मा व्यास् अरु नारदादिहरु सब् ❀ भन्छन् पुजाले सरी ।
आर्को तर्न उपाय छैन जनको ❀ खुश् छन् पुजैमा हरि ॥८१
यस्तो सूनि गऱ्याँ र मन् चरणमा ❀ सोध्याँ पुजाको विधान् ।
साँचो तत्त्व बताउन्या हजुर झैं ❀ को छन् दयाका निधान् ॥

यस्ता लक्ष्मणका वचन् सुनि तहाँ ❀ पूजा-विधी हो जति ।
सब् संक्षेप् रितले कह्या प्रभुजिले ❀ लक्ष्मण् भया खुश् अति ॥८२

रामको शोक र लक्ष्मण किष्किन्धामा जानु—५

वर्षाकाल् यहि रीतले तहिँ बित्यो ❀ वार्ता कथाको गरी ।
संझ्या झट्ट सिताजिलाइ र विलाप् ❀ फेर् गर्न लाग्या हरि ॥
किष्किन्धा पुरिमा यसै-बिचमहाँ ❀ मन्त्री . हनूमानले ।
सुग्रीव्-सीत सिताजि खोज् गर भनी ❀ बिन्ती गऱ्या ज्ञानले ॥८३
हे राजन् ! रघुनाथले त उपकार् ❀ ठूलो हजूर्को गरी ।
यो राज् बक्सनुभो हजूर्कन, ठुलो ❀ वीर् बालिलाई हरी ॥
सो बिर्स्या झइँ मान्दछू हजुरले ❀ सीताजिको खोज् खबर् ।
गर्न्या हो अब ता बखत् पनि भयो ❀ सब् काम छोडी अव़र् ॥८४
यादै छैन हजूरलाइ त सिता ❀ खोज् गर्नुपर्ला भनी ।
बालीको गति जुन् भयो उहि गती ❀ होला हजुर्को पनि ॥
यो बिन्ती हनुमानको सुनि तहाँ ❀ साँचो भन्या यो भनी ।
सुग्रिव्लेतहिँझट् हुकूम् अनि दिया ❀ लश्कर् पठाऊ पनि ॥८५
दश् हज्जार् विर जाइ सात द्विपमा ❀ वानर् जती छन् सबै ।
खोजी आज खबर् दिउन् र सब वीर्❀ जम्मा हऊन् झट् अबै ॥
जो आव़ैन हुकूम् बदर् गरि यहाँ ❀ ई पन्ध्र दिन्-भित्रमा ।
तेस्कोप्राण्मलिन्याछुनिश्चय भनी ❀ ठानून् सबै चित्तमा ॥८६
यस्तो सुग्रिवको हुकूम् हुन गयो ❀ सोही-बमोजिम् गरी ।
दश्हज्जार् विरको खटन् पनि गऱ्या❀ लागेन बेर् एक् घरि॥
दश् हज्जार्विरदश्दिशातिरछिटी ❀ खुश् भै हनूमान् रह्या ।
ती वीर् दश्तिरगैखबर् दिइअनेक् ❀ सेना बटुल्दा भया ॥८७

लाग्या गर्न विलाप् अनेक् तरहले ❀ लीला गरी राम् पनि ।
भन्छन् छन् ति सिता कहाँ अझ पनी ❀ लागेन पत्ता भनी ॥
याहाँ छन् ति सिता भनीकन खबर् ❀ पाऊँ त जाऊँ तहाँ ।
ल्याऊँ अमृत झैं सिताकन यहाँ ❀ पाऊँ समाचार् कहाँ ॥८८

हे भाई ! सुन जो छ आज इ सिता ❀ हर्न्या म तेस्को सबै ।
कूलै भस्म गराउन्याछु करुणा ❀ राख्वैन उस्मा कबै ॥
येती बात् तहिँ भाइसीत गरि फेर् ❀ सीताजिको शोक् गरी ।
लाग्या गर्न विलाप् अनेक् तरहले ❀ त्रैलोक्यका नाथ् हरि ॥८९

हे सीते ! कसरी मदेखि पर भै ❀ बस्छचौ तिमी छ्यौ कहाँ ।
प्राणै थाम्न कठिन् भयो म बिनु ता ❀ आपत् भया हुन् तहाँ ॥
तिम्रै भेट नपाउँदा मकन ता ❀ ई चन्द्र सूर्यै बन्या ।
तिम्रोतागरुँक्याबखान् तिमि त झन् ❀ छौ दुष्टका पास् भन्या ॥९०

सुग्रीव् आज कृतघ्न झैं हुन गया ❀ आयो शरद् काल् पनि ।
सुर्तै छैन सिताजिलाइ अझतक् ❀ खोज् गर्नुपर्ला भनी ॥
मार्छू सुग्रिव दुष्टलाइ पनि फेर् ❀ बाली सरीको गरी ।
लक्ष्मण्ले प्रभुका वचन् सुनि गन्या ❀ बिन्ती अगाडी सरी ॥९१

हे नाथ् ! आज मलाइ बक्सनुहवस् ❀ हूकूम् म मार्छू गई ।
लक्ष्मण्का इ वचन् सुनेर रघुनाथ् ❀ अत्यन्त खूशी भई ॥
भन्छन् भाइ ! नमार आज बहुतै ❀ हप्काउ जाऊ तहाँ ।
मारीहाल्न त योग्य छैन तर खुप् ❀ चेताइ आऊ यहाँ ॥९२

हूकूम् यो प्रभुको सुनीकन तहाँ ❀ लक्ष्मण्जि जल्दी गया ।
सीतानाथ् नरको लिला गरि विलाप् ❀ खुप् गर्न लाग्दा भया ॥

किष्किन्धापुरि पौंचि लक्ष्मणजिले ❀ टङ्कार् धनूको गऱ्या।
पत्थर् वृक्ष उठाइ वानरहरू ❀ कोही अगाडी सऱ्या ॥९३
सब् वानर्कन नष्ट गर्दछु भनी ❀ लक्ष्मण्जिले बाण् धऱ्या।
अङ्गद् आइ हटाइ वानरहरू ❀ जल्दी चरण्मा पऱ्या ॥
अङ्गद्सीत बहुत् प्रसन्न भइ झट् ❀ ताहाँ अह्राया पनि।
जाऊ देउ खबर् अगाडि तिमिले ❀ लक्ष्मण्जि आया भनी॥९४

सीताको खोज, वानरहरूको गुहाप्रवेश र स्वयंप्रभा चरित्र–६

अङ्गद् गैकन त्यो खबर् जब दिया ❀ सुग्रीवलाई तहाँ।
जल्दी सुग्रिवले हुकूम् पनि दिया ❀ लौ जाउ ल्याऊ यहाँ ॥
अङ्गद्लाइ सँगै लिएर हनुमान् ❀ चाँडै चरण्मा परी।
लक्ष्मण्लाइ बुझाइ ल्याउ तिमिले ❀ सब् क्रोध शान्ती गरी ॥९५
यस्तो सुग्रिवको वचन् सुनि तहाँ ❀ सोही-बमोजिम् गरी।
पाऊमा परि बाहुमा धरिलिया ❀ ल्याया बहुत् खुश् गरी ॥
हूकूम् सुग्रिवको सुनीकन तहाँ ❀ ताराजि चाँडै गइन्।
लक्ष्मण्लाइ बुझाइ खुश् गरुँ भनी ❀ खुप् बिन्ति गर्दी भइन् ॥९६
लक्ष्मण् सुग्रिवको भयो जब त भेट् ❀ सुग्रीव् चरण्मा पऱ्या।
लक्ष्मण्ले पनि ताहिँ सुग्रिवजिको ❀ सातो कुराले हऱ्या ॥
बाली झैँ हुन मन् छ की भनि जसै ❀ लक्ष्मण्जिले बात् गऱ्या।
लक्ष्मण्लाइ बुझाउनाकन तहाँ ❀ जल्दीहनूमान् सऱ्या ॥९७
लक्ष्मण्जी पनि कामले बुझिगया ❀ बात्चित् खुशीका गरी।
फिर्नाको मतलब् गऱ्या प्रभु थिया ❀ जाहाँ जगन्नाथ् हरि ॥
लक्ष्मण्का सँग लागि सैन्य पनि ली ❀ सुग्रीव खुश् भै गया।
जाहाँ श्रीरघुनाथ् थिया तहिँ सबै ❀ दाखिल्क्षणैमा भया ॥९८

देख्या श्री रघुनाथलाइ र परै ❀ रथ्देखि उत्रेर फेर् ।
लक्ष्मण् सुग्रिव पाउमा परिगया ❀ लागेन एक्छीन बेर् ॥
राम्ले सुग्रिवलाइ मित्र ! भनि खुप् ❀ आलिङ्गनादी गरी ।
सोध्पूछ् गर्नुभयो बहुत् खुशि हुँदै ❀ आफै अगाडी सरी ॥९९
लाग्या सुग्रिव बिन्ति गर्न रघुनाथ् ❀ मैले त सेना पनि ।
ल्यायाँ वीर्हरु छन् अनेक् तरहका ❀ छन् इन्द्र तुल्यै पनि ॥
ई सब् ख्वामितका निमित्त खुशि भै ❀ प्राणै दिन्याछन्, जसो ।
आज्ञा हुन्छ हवस् यहाँ हजुरको ❀ गर्छन् ति ऐह्ले तसो ॥१००
खूशी भै रघुनाथको हुकुम भो ❀ हर्षाश्रुधारा गरी ।
हे सुग्रीव सखे ! इ वानरहरू ❀ जाऊन् दिशा दश्भरि ॥
जाहाँ छन् ति सिता तहीँ पुगि खबर् ❀ ल्याऊन् भनी रामको ।
हूकूम् पाइ पठाइ वानरहरू ❀ उर्दी दिया कामको ॥१०१
जाओ वीरहरू दिशा दशविषे ❀ सीताजि मिल्छिन् जहाँ ।
पत्ता लाइ सिताजिको खबर ली ❀ फर्केर आओ यहाँ ॥
मैह्ना दीन बिताइ एक्रति खबर् ❀ केही नपाई त जो ।
ढील् गर्ला तसलाइ ता म सहजै ❀ मार्न्याछुमर्न्याछ त्यो ॥१०२
यस्तो झट्ट हुकूम् गरी अरु दिशा ❀ वानर् पठाया अवर् ।
दक्षिण्तर्फ बडा बडा विरहरू ❀ छानी पठाया जबर् ॥
अङ्गद्लाइ र जाम्बवान् र हनुमान् ❀ वीर् नल् सुषेण् फेर् शरभ् ।
मन्द, द्वीविद आठ् पठाइ प्रभुका ❀ पास्मारह्याएक्फगत् ॥१०३
हूकूम् पाइ ति आठ वीर्हरु पनी ❀ झट् जान लाग्या जसै ।
हात्मा औंठि लिएर एक् हुकुम भो ❀ राम्चन्द्रजीको तसै ॥

जाऊ काम्पनि साधिआउ हनुमान् ❀ ली जाउ औंठी पनि ।
मेरो नाम् यहि औंठिमा छ र दियाँ ❀ सीताजि चिन्लिन् भनी ॥१०४
यो काम्सिद्धगराउन्यात तिमिछौ ❀ तिम्रो छ यो बल् भनी ।
चीन्याको छु तबै त भन्छु म शुभै ❀ हून्याछ रस्ता पनि ॥
येती श्रीरघुनाथको पनि हुकूम् ❀ पाया र औंठी लिया ।
खुशी भै हनुमानले प्रभुजिमा ❀ सम्पूर्ण तन्मन् दिया ॥१०५
अङ्गद् वीर् हनुमान्हरू हुकुमले ❀ दक्षिण् दिंशामा गया ।
सर्वत्रै पृथिवी ढुँडी ढुँडि सबै ❀ घुम्दै ति जाँदा भया॥
एक् दिन् विन्ध्य गिरीविषे वनमहाँ ❀ देख्या र राक्षस् जसै ।
रावण् हो कि भनी मुठी कसि कसी ❀ मार्‍या कसैले तसै ॥१०६
रावण् होइन यो त जाउँ भनि फेर् ❀ अर्का वनैमा गई ।
ढुड्थ्या प्यास बढ्यो र जल् पनि ढुँडी ❀ हिड्थ्या ति आकुल् भई ॥
गूफादेखि त प्वाँख् चिसा गरि गरी ❀ हाँस् निस्कँदा देखि तेस् ।
गूफाभित्र पस्या सबै विरहरू ❀ देख्याबहुत् बस्तिबेस्॥१०७
ठण्डा जल्सितका तलाउ पनि धेर् ❀ सब् वृक्ष फल्-फूल् भरी ।
धेर् छन्, घर्-घरमा छ चीज्पनिअनेक् ❀ हीरा जवारात् धरी ॥
गुल्जार् देख्नु भन्या मनुष्यहरु ता ❀ एक् देख्नु नाहीँ कहीँ ।
एक् योगीनि स्वयंप्रभाकनक्रगत् ❀ ध्यान् गर्दि देख्यातहीँ ॥१०८

स्वयंप्रभाचरित्र–६ (२)

सोधिन् योगिनिले प्रणाम् तब गर्‍या ❀ कुन् काम आयौ यहाँ।
क्या मन्सुब् छ बताउ फेर् अब उपर् ❀ जानू छ इच्छा कहाँ ॥
यस्ता योगिनिका वचन् सुनि तहाँ ❀ बोल्या हनूमानले ।
आयौँ आज यहाँ सबै यति जना ❀ केवल् जलै खानले ॥१०९

काम् यै हो, यति काम गर्नु छ भनी ❀ विस्तार् सुनाया जसै ।
साह्रै खुश् हनुमानका वचनले ❀ हूँदी भइन् ती तसै ॥
बोलिन् फल् फुल खाउ जल् पनि पिई ❀ फर्केर आऊ यहाँ ।
मेरो नाम बताइ आज त म ता ❀ जान्छू प्रभू छन् जहाँ॥११०



(५७. योगिनी स्वयंप्रभाका गुफामा वानरहरू पसेको ।)

यस्ता योगिनिका वचन् सुनि गया ❀ जल् पान् गरी फेर् पनि ।
आया योगिनिले गरिन् सब कुरा ❀ राम्का इ दूत् हुन् भनी ॥
हेमाकी सखि हूँ सखी गइगइन् ❀ उन्का वचन्ले यहाँ ।
धेरै वर्ष बसी प्रभू भजिलिँदा ❀ ऐह्ले कृतार्थै भयाँ ॥१११
भन्थिन् राम् अवतार् हुन्याछ हरिको ❀ हर्न्याछ रावण् सिता ।
खोज्न्यावानरआउनन्तहिँतलक् ❀ याहीँ रहू तीमि ता ॥
वानर्को रघुनाथको गरि पुजा ❀ यै ब्रह्मलोक् पाउली ।
जान्छू आज म ता तिमी बसिरहू ❀ क्यैकाल्पछीआउली ॥११२
यस्तो अर्ति दिई गइन् सङ्गिनिज्यू ❀ जुन् ब्रह्मलोक् हो उहाँ ।
नाच्तैमा शिव खुश् हुँदा अघि दिया ❀ यो स्थान बस्ती यहाँ ॥

पुत्री हुन् उ त विश्वकर्मकि, म हूँ ❀ गन्धर्व-कन्या सबै ।
विस्तार् आज कह्याँ म जान्छुखुशिभै ❀ जाहाँ प्रभू छन् अबै ॥११३
आँखा चिम्ल पुऱ्याइदिन्छु सहजै ❀ रस्ता विषे क्षण्महाँ ।
जाओ तीमिहरू पनी भनि सहज् ❀ पौँचाइ रस्तामहाँ ॥
श्रीराम्चन्द्रजिथ्यैँ ति योगिनि गइन् ❀ वानर् पुग्या रस्तिमा ।
पौँचिन् योगिनि रामको कुटि जहाँ ❀ थीयो उसै बस्तिमा॥११४
राम्को स्तूति गरिन् र वर् दिनुभयो ❀ जाऊ र बद्रीमहाँ ।
मेरो ध्यान् गरि यो बिताउ र शरीर् ❀ पाउ्ली परम्धाम् तहाँ ॥
जो तिम्रा मनमा छ त्यो सब पुगोस् ❀ यस्तो त वर् ली गइन् ।
बद्रीमा गइ रामका वचनले ❀ संसार तर्दी भइन् ॥११५

वानरहरूले मर्न निश्चय गर्नु र सम्पातिसँग भेट–७

सीता खोज्न भनेर वानरहरू ❀ फिर्थ्या सबै वन्महाँ ।
सीतालाइ नपाउँदा बितिगयो ❀ धेर्काल, एक् दिन् तहाँ ॥
अङ्गद्लेअतिशोक्गऱ्याअबसहज् ❀ मार्छन् सबैको गयो ।
प्यारो प्राण, गरौँ कसो अब मऱ्यौँ ❀ बाँच्नू यहीँतक् भयो ॥११६
सुग्रीव्ले त मलाइ मार्नु छ सहज् ❀ पाया निहूँ यो पनि ।
मार्छन् निश्चिय शत्रु जानि अहिले ❀ यो शत्रुको बीज् भनी ॥
केवल् राम-कृपा हुँदा अघि बच्याँ ❀ ऐहले त राम्ले पनि ।
दिन्छन् निश्चय मार्नलाइ मतलब् ❀ खोजेन सीता भनी ॥११७
अङ्गद्का इ वचन् सुनीकन तहाँ ❀ क्वै बिन्ति यो पार्दछन् ।
हे साहेब ! यहीँ बसौँ यहिँ बस्या ❀ कुन् पाठले मार्दछन् ॥
अंगद्का अरु वानरादिहरुका ❀ सून्या र कूरा तहाँ ।
बोल्या श्रीहनुमानले किन बहुत् ❀ छोटो गऱ्यौ बात् यहाँ॥११८

सुग्रीव्का प्रिय छौ अवश्य भगवान् ❀ राम्चन्द्रजीका पनि ।
साँचो भन्छु म बेस् कुरा हजुरमा ❀ यस्तो छ कारण् भनी ॥
भूभार् हर्न भनेर राम-अवतार् ❀ आदीपुरुष्को भयो ।
कस्ले सक्छ सिताजि हर्न नहिँ ता ❀ इच्छा प्रभूकै छ यो ॥११९
मानिस्को अवतार् भयो प्रभुजिको ❀ सेवक् त वानर् भई ।
गर्छौं सेवन भक्तिले प्रभुजिको ❀ केवल् हुकूम्मा रही ॥
जान्याछौं पछि धाममा पनि सँगै ❀ यो जान मन्ले यहाँ ।
क्या गर्छौं मनमा कुतर्क हरिको ❀ रिस् छैन कस्सैमहाँ ॥१२०
यस्ता बात् हनुमानका सुनि बुझ्या ❀ अंगद् र खूशी भई ।
विन्ध्याचल् गिरिका कुनाकुनिसमेत् ❀ सम्पूर्ण खोज्दै गई ॥
पौँच्या क्षारसमुद्रका तिरमहाँ ❀ पर्वत् थियो एक् तहाँ ।
तेस्को नाम महेन्द्र हो नजिकमा ❀ देखिन्छ सागर् जहाँ ॥१२१
पृथ्वीमा न मिलिन् सिता, न जलमा ❀ जान्याछ बाटो कतै ।
खोजौँजाउँ भन्यासक्यौँपृथिविसब् ❀ पायौँन सीता कसै ॥
फर्की जाउँ भन्या पनी अब सहज् ❀ मार्छन् त चाहीं यहीं ।
मर्नू आज निको भनेर तिरमा ❀ बाँदर् बस्या सब् तहीँ॥१२२
सम्पाती अति वृद्ध गिद्ध वनमा ❀ थीया ति निस्क्या जसै ।
हेर्‍या दृष्टि फिराइ तेस् तिरमहाँ ❀ देख्या ति वानर् तसै ॥
बोल्या वाक्य पनी म भर्छु अब पेट् ❀ पायाँ अहारा भनी ।
अङ्गद् वीर्हरुले सुन्या र इ वचन् ❀ साह्रै डराया पनि ॥१२३
लाग्या भन्न सबै ति वानरहरू ❀ आयेछ हाम्रो त काल् ।
मर्छौं आज अवश्य मार्छ यसले ❀ यो गिद्धको हेर चाल् ॥

क्याबात् भाग्य जटायुको प्रभुजिको ❀ प्यारो हुन्या काम् गरी ।
ठाकुर्लाइ रिझाइ पार् पनि गया ❀ संसार सागर् तरी ॥१२४



(५८. वानरहरूले जटायु गिद्धलाई भेटेको ।)

व्यर्थै हामि त गिद्धका मुखविषे ❀ सब् पर्न आँट्यौं यहाँ ।
येती वानरका वचन् सुनि तसै ❀ सम्पाति बोल्या तहाँ ॥
हे वीर् हो, नडराउ आज तिमिले ❀ प्यारो सुनायौ कुरा ।
मेरै भाइ जटायु हो, कहु खबर् ❀ तेस्का त सप्पै पुरा ॥१२५
अङ्गद् वीर्हरुलाइ निर्भय दिई ❀ येती भन्याथ्या जसै ।
सब् वृत्तान्त बताइ अङ्गदजिले ❀ विस्तार् सुनाया तसै ॥
सम्पाती तहिं भन्दछन् मकन लौ ❀ लैजाउ सागर्महाँ ।
दिन्छू आज जटायुलाइ जलदान् ❀ चाँडो म ऐह्ले तहाँ ॥१२६
सीताको म बताउँला सब खबर् ❀ स्नान् अञ्जलीदान् गरी ।
ई बात् सूनि उचालि झट् लगिदिया ❀ सम्पातिले स्नान् गरी ॥
दीया अञ्जलिदान् जसै फिरि उहीं ❀ ल्यायेर राखीदिया ।
सम्पाती खुशि भै सबै कहिदिया ❀ आपत्तिदेख्तै थिया ॥१२७

सम्पातिको आत्मकथा–८

हे वीर् हो ! म त गिद्ध हूँ र म सिता ❀ देख्छू नजर्ले पनि ।
याहीँ छन् यहि भेष् छ येति सँग छन् ❀ यस्तो छ चाला भनी ॥
भन्छू सब् तिमिलाइ चार सय कोश् ❀ जो कुद्न सक्छौ यहाँ ।
सो लंका पनि पुग्दछौ उति कुद्या ❀ पौंचिन्छ लंकामहाँ ॥१२८
लंकामा ति सिताजि छन् तहिँ गया ❀ मिल्छिन् सिताजी तहिँ ।
गाह्रो चार् सय कोश कुद्न छ तहीँ ❀ जाऊ नजाऊ कहिँ ॥
रावण्ले लगि भित्रि गुप्ति वनमा ❀ राख्याकि छन् बेस् गरी ।
पौंची भेट् गर, जान सक्छ तिमिमा ❀ को यो समुद्रै तरी ॥१२९
अश्शोक्को वनभित्र वृक्ष छ असल् ❀ एक् शिंशपाको तहीँ ।
सीता छन् उहिँ भेट् हुन्याछ तहिँ लौ ❀ जाऊ, गयो काल् यहीँ ॥
क्यारूँ रावणलाइ मार्न म सहज् ❀ मार्न्या थियाँ हो र को ।
साक्षात् सूर्यजिका कठोर् किरणले ❀ प्वाँखै डढ्या सब् र पो ॥१३०
जाऊ चार् सय कोश कुद्न सकन्या ❀ कुन् वीर् छ सागर्महाँ ।
सीताको समचार् खबर् बुझि सहज् ❀ फर्केर आऊ यहाँ ॥
यो सम्चार बताइ फेर् खुशि भई ❀ आफ्नू हवाल् सब् कह्या ।
जुन् रीत्ले अघि प्वाँख् डढ्या र विपती ❀ पाई अनेक्ताप्सह्या ॥१३१
सम्पाती र जटायु भाइ दुइ हौँ ❀ हाम्रो बुझौँ बल् भनी ।
बल् जान्नाकन दूइ भाइ उडि गै ❀ श्रीसूर्यबिम्बै-मनि ॥
पुग्दामा ति जटायुले त अति ताप् ❀ मान्या र छोप्याँ जसै ।
बाँच्या भाइ जटायु क्यारूँ म गिर्याँ ❀ मेरो डढ्या प्वाँख्तसै ॥१३२
उच्चादेखि गिर्याँ म विन्ध्यगिरिमा ❀ तीन् दिन् त मूर्छा भयाँ ।
ब्यूत्याथ्याँजबचन्द्रमा मुनि मिल्या ❀ तिन्का नजीक्मा गयाँ ॥

सोध्या ती ऋषिले र सब् जब भन्याँ ❀ आफ्ना विपत्‌को गति ।
मेरो चित्त बुझाउनाकन भन्या ❀ सब् दुःख हुन्छन् जति॥१३३
यस्तो हुन्छ विपत्ति गर्भ रहँदा ❀ यो हुन्छ यौवन्‌महाँ ।
यस्तो हुन्छ बुढो हुँदा त भनुँ क्या ❀ थाहै छ सब् मन्‌महाँ ॥
जाहाँ देह छ ताहिँ दुःख छ भनी ❀ पर्दैन भन्नू पनि ।
जाहाँ देह बन्यो र दुःख छ चिह्न्या ❀ साँचो कुरा हो भनी ॥१३४
तस्मात् दुःख नमान देह छ त रोग् ❀ दुःखादि सारा सही ।
श्रीराम्‌को अवतार् हुन्या बखततक् ❀ यस्सै जगामा रही ॥
केही काल बिताउ राम अवतार् ❀ होला र सीता पनि ।
हर्ला रावणले र तेस् बखतमा ❀ सीताजि खोज्नै भनी॥१३५
वीर् वानर्‌हरु आउनन् तिसँग भेट् ❀ होला उ वेलामहाँ ।
सीताको समचार् जसै त कहुला ❀ प्वाँख् उम्रनन् फेर् तहाँ ॥
भन्थ्या सोहि कुरा सबै पुगिगया ❀ ईः प्वाँख उम्र्या पनि ।
प्वाँख् देखाइ बिदा भई उडिगया ❀ जाऊ तिमी लौ भनी ॥१३६

समुद्र तर्ने सल्लाह–९

अंगद् वीर्‌हरुखुश्‌भया अबमिलिन् ❀ सीता भनी सब् जसै ।
लाग्या गम्न समुद्रलाइ र गमन् ❀ गर्नै नसक्नू कसै ॥
फेरी ताप् मनमा पर्‍यो र अतिशोक् ❀ अंगद्‌जि गर्दा भया ।
अंगद्‌लाइ बुझाउनाकन अघी ❀ श्रीजाम्बवान्‌जी गया ॥१३७
साहेब्! शोक् रतिभर्‌कदापिनहवस् ❀ जाऊन् हनूमान् भनी ।
अंगद्‌लाइ बुझाइ झट्ट हनुमान्- ❀ जीका नजीक्‌मा पनि ॥
पौँची बेस् स्तुति गर्दछन् किन यहाँ ❀ चूप्‌चाप् भई दूर् रह्यौ ।
राम्‌का काम निमित्त मात्र हनुमान् ❀ यो जन्म लीदा भयौ ॥१३८

क्या वर्णन् बलको गरूँ जब तिमी ❀ जन्म्यौ उसै फल् भनी ।
पाक्याको फल ठानि सूर्यकन ता ❀ हात्ले म टिप्छू भनी ॥
आकाश्मा जब ता कुद्यौ दुइ हजार् ❀ कोश्तक् पुगीफेर् झर्‍यौ ।
यस्ता बालकमै थियौ किन यहाँ ❀ कोश्चार्सयैमाडर्‍यौ॥१३९
सून्या सब् हनुमानले स्तुति तहाँ ❀ जो जाम्बवान्ले गर्‍या ।
साह्रै खुश् हनुमान् भया र खुशिले ❀ खुप् गर्जना पो गर्‍या ॥
पर्वत् तुल्य बडो स्वरूप् धरि वचन् ❀ बोल्या म सागर् तरी ।
लंका भस्म गराइ रावण समेत् ❀ सब् सैन्य चूर्णै गरी ॥१४०



(५९. हनुमान्जी समुद्र तर्न तंसेको ।)

सीता लीकन आउँछू कि रिसले ❀ झुण्ड्याइ रावण् पनि ।
ज्यूँदै दाखिल गर्छु रामचरणमा ❀ खूनी हजूर्को भनी ॥
की ता छन् ति सिता यहाँ भनि खबर् ❀ मात्रै सिताको लिई ।
फिर्छू श्रीरघुनाथका चरणमा ❀ तन् मन् वचन् सब् दिई॥१४१
श्रीराम्का चरणारविन्द मनमा ❀ धार्‍या र ऊठ्या जसै।
बोल्या श्रीहनुमानले यति कुरा, ❀ श्री जाम्बवान्ले तसै ॥

भन्छन् श्री हनुमानलाइ तिमिले ❀ भेट् मात्र ऐह्ले गरी ।
फर्की आउ सिताजिको खबर ली ❀ एक्लै नलड्न्या गरी ॥१४२
ख्वामित्का सँग लागि गैकन पछी ❀ सक्भर् लडौंला भनी ।
भन्दा खूशि भई बिदा भइलिया ❀ झट् कुद्न मन्सुब् पनि ॥
लाल्मुख्पीतशरीर् गरी गिरिउपर् ❀ जल्दी हनूमान् गया ।
सब् प्राणीहरुले तहाँ ति हनुमान्- ❀ जीलाई हेर्दा भया ॥१४३

## ❀ इति किष्किन्धाकाण्ड समाप्त ❀

( बाली हेमाब्जमाली गुणनिधिरिपुणा निर्मितो दक्षिणेर्मा )







# आठकाण्ड रामायण सुन्दरकाण्ड



हनुमान्ले समुद्र तर्नु र लङ्कामा प्रवेश गर्नु–१

तर्छू क्षार समुद्र आज सहजै ❀ भन्न्या इरादा धरी ।
श्रीराम्का चरणारविन्द मनले ❀ अत्यन्त चिन्तन् गरी ॥
भन्छन् वीर्हरुलाइ ताहिँ हनुमान् ,❀ हे वीर हो ! पार् तरी ।
सीताजीकन भेट्तछू म अहिले ❀ जान्छू बडो बेग् गरी ॥१
पापी जन् पनि रामका स्मरणले ❀ संसार पार् तर्छ ता ।
राम्कै काम निमत्त औंठि सँग ली ❀ जान्छू दुतै हूँ म ता ॥
क्या डर् क्षार समुद्र तर्न सहजै ❀ पौँचन्छु लंका भनी ।
चारै पाउ जमिन्विषे धसि कुद्या ❀ हेर्दैं तामाशा पनि ॥२

दक्षिण् तरफ् मुख गरीकन कुद्न बस्ता ।
ऊपर् नजर् दि अघिका दुइ पाउ धस्ता ॥
सोझो गराइकन घाँटि कुद्या जसै ता ।
वायू सरी हुन गया हनुमान् तसै ता ॥३॥

आकाश् मार्ग गरी कुद्या र हनुमान् ❀ उड्थ्या ति आकाशमा ।
सीताजीकन भेटि फर्किकन फेर् ❀ राम्चन्द्रका पासमा ॥
पुग्न्या अक्कल बल् छ छैन इनको ❀ बूझौँ सबै बल् भनी ।
इन्द्रादीहरुले खटाइ सुरसा ❀ जल्दी पठाया पनि ॥४
जल्दी गै सुरसा अघिल्तिर बसिन् ❀ साम्ने हनूमानका ।
क्या भन्छन् हनुमान् भनेर खुशि भै ❀ कूरा गरिन् खानका ॥
भोकीधेर् दिनकी म खोजिहिँडथ्याँ ❀ क्या खाँ अहारा भनी ।
पायाँ बल्ल यहाँ मिल्यौ तिमि त एक् ❀ साह्रै भयाँ खुश् पनि ॥५

आऊ लौ पस मूखमा जब भनिन् ❀ बोल्या हनूमान् तसै ।
भन्छन् आज सिता नभेटिकन ता ❀ पस्तीनँ मुख्मा कसै ॥
सीता भेटि म फर्कुँला र रघुनाथ्- ❀ ज्यूका हजूर्मा गई ।
विस्तार् बिन्ति गरेर आइ पसुँला ❀ तिम्रो अहारा भई ॥६
यस्ता बात् सुनि भन्दछिन् ति सुरसा ❀ मेरा मुखैमा पसी ।
निस्की जाउ नहीँ भन्या म बलले ❀ पक्रेर दाह्रा धसी ॥
मार्छू येति भनिन् र लौ तब यहाँ ❀ मुख् बाउ चाँडो भनी ।
चार् कोश्को त शरीर् गरीकन बस्या ❀ आफू हनूमान् पनि ॥७
चार् कोश्का हनुमान देखि सुरसा ❀ बीस् कोशको मुख् गरिन्।
चालीस्कोश्हनुमान् भयारअसिकोश् ❀ मुख् फेरि जल्दी धरिन् ॥
जल्दी फेर् हुनमानले छबिस कोश्- ❀ को रूप् गराई बस्या ।
फेर् दूइ सय कोश मुख् जब गरिन् ❀ अंगुष्ठ झैं भै पस्या ॥८



(६०. हनुमान्जी समुद्रमा सुरसाका फेला परेको ।)

निस्क्याजल्दिरभन्दछन्तिहनुमान् ❀ हे देवि ! मुख्मा पसी ।
निस्क्याँ जान्छु म ता अवश्य अब ता ❀ बन्दैन काम् ता बसी ॥

अक्कल्‌बल्‌सितकावचन्‌जबसुनिन्‌ ❀ यस्ता हनूमानका ।
आफ्नू सत्य कुरा तसै सब कहिन्‌ ❀ छाडिन्‌ कुरा खानका ॥९
सक्छौ काम्‌तिमिसाधिआउ हनुमान्‌ ❀ यो बल्‌ छ तिम्रो भनी ।
चीह्न्याँ भन्छु म इन्द्रका हजुरमा ❀ तिम्रो पराक्रम्‌ पनि ॥
बल्‌ बुझ्नै भनि इन्द्रका हुकुमले ❀ आया कि ता हूँ भनी ।
खुश्‌ भै स्वर्गविषे गइन्‌ ति सुरसा ❀ कूद्या हनूमान्‌ पनि ॥१०



(६१. सुरसाले आफ्नू रूप धारी इन्द्रको सन्देश हनुमान्लाई सुनाएको ।)

जस्ले सागर नाम्‌ धर्‍या मकन सो ❀ राजा सगर्‌ जो गया ।
तिन्का वंशमहाँ विभूषण सरी ❀ श्री राम राजा भया ॥
तिन्का काम-निमित्त आज हनुमान्‌ ❀ जान्छन्‌ इ लंकामहाँ ।
मैनाक्‌ पर्वत ! निस्कि जाउ तिमि गै ❀ विश्राम्‌ गराऊ तहाँ ॥११
थाक्या हुन्‌ हनुमान्‌ बिसाइ फलफूल्‌ ❀ खाऊन्‌ र जाऊन्‌ भनी ।
भन्दा सागरका वचन्‌ सुनि तहाँ ❀ निस्क्या ति मैनाक्‌ पनि ॥
अर्को एक मनुष्यको स्वरुप ली ❀ हात्‌ जोरि बिन्ती गर्‍या ।
आई फल्‌फुल खाइ जाउ हनुमान्‌ ❀ भन्दै अगाडी सर्‍या ॥१२

आज्ञा सागरको हुँदा चरणमा ❀ आयाँ म ऐह्ले भनी ।
मैनाक्ले यति बिन्ति बात् जब गऱ्या ❀ बोल्या हनूमान् पनि ॥
राम्को काम् नगरी बसेर कसरी ❀ खान्छू म, जान्छू यसै ।
हात्ले छुन्छु म लौ भनेर खुशि भै ❀ छोएर कूद्या तसै ॥१३



(६२. हनुमान्ले समुद्रभित्र मैनाक पर्वतलाई छोएको ।)

केही दूर् हनुमान् पुग्यापछि तहाँ ❀ एक् सिंहिका राक्षसी ।
छाया पक्रि उ जन्तु खैँचि बलले ❀ खान्थी जलैमा बसी ॥
छाया पक्रि उ तान्न लागि हनुमान्- ❀ ज्यूको गती बन्द भो ।
कस्ले बन्द गऱ्यो गती भनि दिशा ❀ दश्मा तसै दृष्टि गो ॥१४
देख्या तल्तिर दृष्टि दीकन तहाँ ❀ जस्सै नजर्मा परी ।
एकै चोट् दुइ लात् दिया र सहजै ❀ घुस्तुक्क ताहीँ मरी ॥
ताहाँदेखि कुदी गया र हनुमान् ❀ पौँच्या जसै तीरमा ।
लंकापूरि तहाँ त्रिकूट गिरिका ❀ देख्या उपर् शीरमा ॥१५

वरिपरि तहिँ तीर्मा छन् भरी वृक्ष फल्फूल् ।
जउन वनमहाँ धेर् गर्दछन् पक्षिले गुल् ॥

भ्रमरहरु लताका फूलमा हल्लि-हल्ली ।
घुनुनु घुनुनु गर्दै हिड्दछन् वल्लि-वल्ली ॥१६
नजर वरिपरीको जो छ शोभा नजर् भो ।
त्रिकुट गिरि उपर्का पूरिमा फेर् नजर् गो ॥
वरिपरि परखाल् छन् बीच- बीच्मा छ खावा ।
सहजसँग अरूले गर्न को सक्छ दावा ॥१७
अति तखत पच्याको खुप् अगम् देखि लंका ।
यहि घडि पसि जाँ की राति जाँ येति शंका ॥
गरिकन ठहराया याहिँ बस्छू र राती ।
सहजसित म जाँला जान ता राति जाती ॥१८
तहिँ बसि यति गम्ले बाँकि दिन् सब् बिताया ।
दिन बिति जब रात् भो जान पाऊ चलाया ॥
स्वरुप पनि त सानू ली पस्याथ्या जसै ता ।
दगुरि नजिक आइन् लंकिनी पो तसै ता ॥१९

को हो आज मलाइ केहि नगनी ❀ यो भित्र जान्या भनी ।
चोरै हो भनि लात् उठाइ रिसले ❀ एक् चोट् त हानिन् पनि॥
जल्दी वाम मुठी उठाइ सहजै ❀ ठोक्ता जमीन्मा परिन् ।
छाद्दै ताहिँ रगत् गिराइ झटपट् ❀ ऊठेर बिन्ती गरिन् ॥२०
लंकापूरि त हुन् ति राक्षसि भई ❀ बस्थिन् सदा द्वारमा ।
जानिन् श्रीहनुमान् भनेर जब चोट् ❀ पाइन् चलिन् सारमा ॥
लंकीनी हुँ मलाइ ता जितिगयौ ❀ यस्ले सक्यो राज् गरी ।
रावण्को त मरण् हुन्या बखत भो ❀ आयो मरण्को घरि ॥२१

ब्रह्माजी अघि भन्दथ्या प्रभुजिको ❀ हून्याछ रामावतार् ।
हर्ला रावणले सिता र रघुनाथ् ❀ सुग्रीवथ्यैँ मित्रचार् ॥
गर्नन् सुग्रिवले पनी दश दिशा ❀ सीताजिको खोज् खबर् ।
गर्नालाइ पठाउनन् विरहरू ❀ छानेर खुप्-खुप्जबर् ॥२२
तिन्मा एक् विर आउला र तिमिले ❀ लात् मारिद्यौली जसै ।
हान्ला वाम मुठी उठाइ र रगत् ❀ छाद्दै गिरौली तसै ॥
रावण्को तहिँसम्म आयु छ भनी ❀ भन्थ्या र सो बात् सुनी ।
ब्रह्माको त वचन् प्रमाण्गरि भन्याँ ❀ त्यो मर्छ रावण् पनि ॥२३
जाऊ भेट सिताजिलाइ ति अगम् ❀ भित्री बगैचामहाँ ।
अशोक्का वनमा छ वृक्ष बढिया ❀ एक् शिंशपाको तहाँ ॥
ताहीँ छन् प्रभुकी प्रिया वरिपरी ❀ छन् राक्षसीगण् पनि ।
भेटी गै रघुनाथथ्यैँ भन तिमी ❀ यस्ता विपत् छन् भनी ॥२४

धन्यै भयाँ म अहिले प्रभुको स्मरण् भो ।
संसारको भय छ जो उ त आज दूर् भो ॥
जस्तो मिल्यो मकन संग र भक्ति ऐह्ले ।
यस्तै रहोस् यहि म पाउँ नबिर्सुँ कैह्ले ॥२५

जस्सै श्री हनुमान् पुग्या सहजमा ❀ लंका समुद्रै तरी ।
तस्सै जानकिको फुर्‍यो नजर वाम् ❀ हातै समेत् खुप् गरी ॥
रावण्को पनि वाम हात्, नजर वाम् ❀ फूर्‍यो, रघूनाथको ।
दक्षिण् अङ्ग फुर्‍यो तसै बखतमा ❀ खुश् मन् भयो नाथको॥२६
सानू रूप लिई पस्या सब शहर् ❀ हेर्दै विचार् खुप् गरी।
रावण्को दरबार् विशेष् गरि ढुंड्या ❀ चोटा र कोठ गरी ॥



(६३. हनुमान्ले रावणको दरबार चहारेको ।)

पायानन् र कता म जाँ भनि तहाँ ❀ मन्मा विचार् भो जसै ।
सम्झ्या लंकिनिका वचन् र ति गया ❀ अश्शोक वन्मा तसै।।२७

हनुमान् बगैचामा जानु तथा रावणले सीतालाई डर देखाउनु-२

जो जो वृक्ष त इन्द्रका नगरिमा ❀ सो सो त सब् छन् यहीँ ।
रत्नैका सिँढि साफ् असल् जल पनी ❀ यस्ता तलाऊ कहीँ ।।
फल्फूल्ले अति भार् भयेर रुखका ❀ सब्का ति हाँगा पनि ।
लच्क्याका भ्रमरा र पन्छि बहुतै ❀ रूख्मा बस्याकाअनि ।।२८
बिच्बीच्मा सुनका हवेलि पनि छन् ❀ उच्चा मणीको छ थाम् ।
जस्मा छन् कति गर्नु वर्णन जहाँ ❀ हेर्‍यो तहाँ पक्कि काम्।।
यस्तो सुन्दर वन् नजर् गरि सबै ❀ डुल्दै हनूमान् गया ।
देख्या सुन्दर शिंशपा र खुशि भै ❀ ताहीँ ति दाखिल् भया।।२९

अधिक गभिर छाया सूर्यको ताप् नपस्न्या ।
उपर अति पहेँला बेस् चरा मात्र बस्न्या ।।
वरिपरि पनि नाना राक्षसीको छ घेरा ।
रुखमनि तहिँ सीता देखिइन् फेद-नेरा ।।३०।।

भोकी मैलि निनाउरी न त कपाल् ❀ कोच्याकि सब् केश् उसै।
लट्टा मात्र गऱ्याकि खालि भुमिमा ❀ रूँदै बस्याकी यसै ॥
राम्-राम्-राम् यति मात्र बोलिरहदी ❀ देख्या र साना भई ।
पात्का अन्तरमा लुक्या ति हनुमान् ❀ रूखका उपर्मा गई ॥३१
भन्छन् श्रीहनुमान् तहाँ मनमनै ❀ ऐह्ले कृतार्थै भयाँ ।
जो सीताकन देखि आज खुशिले ❀ सीता-समीप्मा रह्याँ ॥
साध्याँ काम् पनि रामको भनि तहाँ ❀ खूशी भयाथ्या जसै ।
फेर् अन्तःपुरमा भयो र खलबल् ❀ त्यो शब्द सून्या तसै ॥३२
क्याको शब्द भयो भनेर हनुमान् ❀ लूक्या ति झन् पातमा ।
आयो रावण जल्दि ताहिँ नजिकै ❀ सब् स्त्री लिई साथमा ॥
कैह्ले मर्छु म रामदेखि अझतक् ❀ सीता हऱ्याँ तापनि ।
आयानन् रघुनाथ् भनेर रहँदा ❀ देखेछ स्वप्ना पनि ॥३३
राम्को दूत् अतिवीर वानर अशोक् ❀ वन्-भित्र आई पसी ।
सीताजीकन देखिन्या गरि तहाँ ❀ पात्-भित्र लूकी बसी॥
हेर्दो सुर् सब कामको खुशि भई ❀ स्वप्ना मिलेथ्यो जसै ।
साँच्चै हो कि भनेर दौडिकन झट् ❀ आयो नजीक्मा तसै ॥३४
साँच्चै पो यदि हो भन्या असल भो ❀ दुर्वाच्य बोल्छू जसै ।
सीतालाइ यहाँ, सुनेर रिसले ❀ जाला त भन्ला तसै ॥
मेरा दुष्ट वचन् सुनेर रघुनाथ् ❀ आएर मार्नन् भनी ।
यस्तो निश्चय मन् गरी नजिक गै ❀ दुर्वाच्य बोल्यो पनि ॥३५
सीताजी पनि दुष्टलाइ नजिकै ❀ देखी अधोमुख् गरिन् ।
श्रीराम्का चरणारविन्द मनले ❀ अन्तःकरण्मा धरिन् ॥

चुप् लागी जननी रहिन् जब तहाँ ❀ सो देखि रावण् पनि ।
लाग्यो भन्न मलाइ देखि किन लौ ❀ लायौ अधोमुख् भनी ॥३६

रावणले सीतालाई डर देखाउनु-२ ( २ )

राम् मेरा पति हुन् भनेर तिमि पो ❀ भन्छ्यौ, उ भन्छन् कहाँ ।
मेरी हो यदि भन्दथ्या पनि भन्या ❀ आऊनुपर्थ्यो यहाँ ॥
माया छैन तिमी-उपर् नबुझि क्या ❀ शोक् मात्र गर्छ्यौ उसै ।
यौवन् व्यर्थ गयो विचार, किन यो ❀ यौवन् अफाल्छ्यौ यसै ॥३७
यौवन् व्यर्थ नफाल, व्यर्थ मनमा ❀ शोक् गर्दछ्यौ यो कति ।
मैलाइ पति मान आज तिमिले ❀ हुन्छू म तिम्रो पति ॥
मेरी पत्नि भयौ भन्या त सबकी ❀ मालिक् हुन्याछौ म ता ।
साह्रै प्रेम्गरि राखुँला बुझ अधिक् ❀ बैगूनि छन् राम ता ॥३८
मानिस् मूर्ख कृतघ्न मानुषमहाँ ❀ साह्रै अधम् जो त छन् ।
शक्तीका पनि कम् उ राम् पनि यहाँ ❀ आऊन क्या सक्तछन् ॥
तस्मात् छोड नराख रामतिर मन् ❀ यस्तो भनेथ्यो जसै ।
लाल् लाल् नेत्र गराइ पूर्ण रिसले ❀ बोलिन् सिताजी तसै ॥३९
पाजी रावण ! बोल्दछस् कति बहुत् ❀ दुर्वाच्य बक्-बक् गरी ।
राघव्देखि डराइ छल्न भनि एक् ❀ संन्यासिको रूप् धरी ॥
जस्तै यज्ञविषे हविष् कुकुरले ❀ हर्छन् उसै चालले ।
राम् लक्ष्मण् नहुँदा हरिस् तँ बुझिले ❀ मर्लास् यसै कालले ॥४०
सागर् शोषि कि साँघुलाइ रघुनाथ् ❀ आयेर घेरा दिई ।
तेरो वंश विनाश् गरेर पछि फेर् ❀ प्राण् खैंचि तेरो लिई ॥
लैजानन् रघुनाथ् मलाइ भनि झट् ❀ दीइन् जवाफ् यो जसै ।
लाल्लाल् नेत्र गराइ खड्ग पनि ली ❀ काट्नै तयार् भो तसै ॥४१

मन्दोदरी विनति गर्न अगाडि सर्दी ।
यो खड्ग टारुँ कसरी भनि चित्त धर्दी ॥
पाऊ परीकन बहुत् गरि बिन्ति लाइन् ।
सब् रिस् शमन् पनि गरायर खड्ग टारिन् ॥४२

हूकूम् रावणले तहाँ यति दियो ❀ हे राक्षसी ! ई सिता।
मैह्ना दूइ यंसै बसून् तब-उपर् ❀ मेरा शयन्मा कि ता॥
बस्निन् बस्तिन पो पनी भनि भन्या ❀ काटेर टुक्-टुक् गरी ।
तर्कारी भुटुवा बनाउनु असल् ❀ मीठा मसाला धरी ॥४३
मासू खाइ म छाडुँला अझ पनी ❀ चेताउ येती भनी।
रावण् फर्कि गयो, ति राक्षसिहरू ❀ एक्मुख् भया फेर् अनि ॥
एक् भन्छे किन व्यर्थ यौवन सक्यौ ❀ रावण् गराऊ पति।
दोस्त्री क्या भनि उठ्तछे कि कति वार् ❀ भन्छेस् तँ थाक्छेस् कति ॥४४
काट्नैपर्छ नकाटि हुन्न भनि बात् ❀ गर्दै थिई अर्कि ता।
हात्मा ली तरवार दौडि पनि गै ❀ भन्दै म काट्छू सिता॥
अर्की घोर् मुख बाइ डर् दिन नजीक् ❀ धाई सिताथ्यैं जसै।
बूढी राक्षसि एक् थिई र त्रिजटा ❀ तेस्ले हटाई तसै ॥४५
लागी भन्न अभागि दुष्टहरु हो ! ❀ क्या दुष्टको झैं मति ।
गर्छौ छोड विरोध् नराख गर खूप् ❀ सीताजिको ता स्तुति ॥
पाऊमा परि दण्डवत् गर सबै ❀ मालिक् इनै हुन् भनी ।
मेरा आज वचन् लियौ यदि भन्या ❀ खुप् हीत होला पनि ॥४६
स्वप्नाको सुन भन्छु लक्षण यहाँ ❀ श्रीराम् सिताका पति ।
ऐरावत् उपरै चढेर सँगमा ❀ भाई लिई वीर् अति ॥

याहाँ आइ रिसाइ भस्म सब यो ❀ लंकै गराईदिया ।
रावण् मारि सिता लियेर सँगमा ❀ पर्वत् उपर् पो थिया ॥४७
रावण् गोमय-कुण्डमा कुल समेत् ❀ खुप् तेल मर्दन् गरी ।
बुड्थ्यो सब् मुडआफना उनि उसै ❀ मुड्को त माला धरी ॥
श्रीराम्का नजिकै विभीषण थिया ❀ भक्ती प्रभूको गरी ।
गर्थ्या खूब टहल् बहुत् खुशि हुँदै ❀ तन्मन् वचन्ले गरी ॥४८
राम्ले रावणलाइ आइ सहजै ❀ मार्छन् कुलै साफ् गरी ।
रावण्को अब वृद्धि छैन, यसको ❀ आयो मरण्को घरि ॥
राम्का भक्त विभीषणै अब उपर् ❀ बस्नन् यहाँ राज् गरी ।
जस्तो हुन्छ हुकूम् सितापतिजिको ❀ सोही शिरोपर् धरी ॥४९



(६४. सीतालाई त्रिजटाले आफ्नू सपना सुनाएको ।)

जस्तो स्वप्न भयो उ सब् भनिसक्याँ ❀ येती भनी चुप् जसै ।
लागीथी त्रिजटा ति बात् सुनि डऱ्या ❀ सब् राक्षसीगण् तसै ॥
निद्राका वशमा सबै परिगया ❀ सीता बहूतै रुँदी ।
आधार् कोहि नपाउँदी अधिक ताप् ❀ मानेर विह्वल् हुँदी ॥५०

भोकी शोक् गरि भन्दछिन् अब यहाँ ❀ ऐह्ले कसोरी मरूँ ।
इन्का हात परेर मर्नु ननिको ❀ आफै म मर्छू बरु ॥
ताप्ले पूर्ण हुँदी उपाय अरु थोक् ❀ केही नजान्दी कबै ।
मन्मा शान्ति नपाउँदा विरहले ❀ देख्ती अँध्यारो सबै ॥५१
राम्मा चित्त दियेर मर्नु बढिया ❀ मानेर सीता तहाँ ।
झुण्डीन्या मतलब् लिई खडि भइन् ❀ पक्रेर हाँगामहाँ ॥
राक्षस्का बिचमा बसी जिउनु धिक् ❀ मर्नू निको, मर्दछु ।
चुल्ठो लामु छ झुण्डिनाकन यहाँ ❀ डोरी त यै गर्दछु ॥५२

सीतालाई भेट्नु, बगैचा ध्वस्त पार्नु, ब्रह्मपाशले बाँधिनु–३

यस्तो निश्चय सूर् गरीकन सिता ❀ झुण्डीन आँटिन् जसै ।
काम् बित्ला भनि सानु बोलि झटपट् ❀ बोल्या हनूमान् तसै ॥
भारत्वर्षविषे मणी मुकुट झैँ ❀ नाम् ता अयोध्या भनी ।
ठूलो एक शहर् थियो मणिमयी ❀ सुन्दर् बन्याको पनि ॥५३
इक्ष्वाकूका कुलैमा अति बलि दशरथ् वीर् महाराज् रह्याछन् ।
तिन्का तीन्रानिमध्ये गुणिगुणि अति वीर् चार छोरा भयाछन् ॥
जेठा राम्जी ति चार्मा उहिपछि त भरत्जी र लक्ष्मण् इ तीनै ।
भन्दा शत्रुघ्न कान्छा सकल गुणमहाँ कम्ति छैनन् ति कूनै ॥५४
जेठा राम पिताजिका हुकुमले ❀ सब् राज्य छाडीदिई ।
वन्मा बस्न चल्या बहुत् खुशि हुँदै ❀ सीता र लक्ष्मण् लिई ॥
एक् दिन् पञ्चवटी गया प्रभु तहीँ ❀ डेरा प्रभूको पऱ्यो ।
रावण्ले अति छल् गरीकन तहाँ ❀ सीताजिलाई हऱ्यो ॥५५
राम्लक्ष्मण् नहुँदा सिता पनि तहाँ ❀ चोरी जसै ता हऱ्यो ।
चोरी आज सिता हऱ्यो भनि बहूत् ❀ खेद् रामलाई पऱ्यो ॥

जान्थ्या खोजि सिताजिलाइ वनमा ❀ फेला जटायू पऱ्या ।
तिन्माथी करुणा भयो प्रभुजिको ❀ ताहीँ जटायू तऱ्या ॥५६
भेट् सुग्रीव्सित भो पछी प्रभुजिको ❀ लाया मित्यारी पनि ।
बाली मारि रजाइँ बक्सनुभयो ❀ मित् हुन् इ मेरा भनी ॥
वीर् वीर् वानर छानि सुग्रिवजिले ❀ सीताजि खोज्नै भनी ।
हूकूम् बक्सनुभो र वीर्हरु गया ❀ सीताजि खोज्नै पनि ॥५७
तिन्मा एक् विर ता म हूँ, म त यहाँ ❀ आयाँ समुद्रै तरी ।
सम्पाती-सित भेट् हुँदा खबर भै ❀ उन्का वचन्ले गरी ॥
लंका दाखिल भैगयाँ छिनमहाँ ❀ राम्का प्रताप्ले गरी ।
फूल्क्याँ लंकिनिदेखि निर्भय भई ❀ अश्शोक वन्मा परी ॥५८
देख्याँ सुन्दर वाटिका वरिपरी ❀ रूख् बेस् लताले गरी ।
बेह्र्याका चहुँओर रत्न सरिका ❀ फल्फूल् फल्याका भरी ॥
देख्याँ आज सिताजिलाइ र यहाँ ❀ आनन्द पायाँ भनी ।
येती बिन्ति गरेर चुप् भइ रह्या ❀ ताहाँ हनूमान् पनि ॥५९

सीताजिले जब इ बात् क्रमले सुनीथिन् ।
आश्चर्य भैकन वरीपरि हेरि एक्छिन् ॥
कोही नदेखि ति सिता अरुलाइ ताहाँ ।
भन्छिन् कुरा इ कहन्या जन को छ याहाँ ॥६०॥
भ्रम् हो भनूँ पनि भन्या सब चेत् छ मेरा ।
स्वप्ना कसोगरि भनूँ निँद छैन मेरा ॥
जो हो इ बात कहन्या उ अगाडि आई ।
अमृत् वचन् इ अति आज भनोस् मलाई ॥६१॥

सीताजिको यति वचन् जब सुन्न पाया ।
सानू स्वरूप् लि हनुमान्जि अगाडि आया ॥
दर्शन् प्रणाम् पनि गऱ्या र सिताजिलाई ।
ताही खडा भइ रह्या अति हर्ष पाई ॥६२॥

लाल्मुख् पीत शरीर्, शरीर् पनि अधिक् ❀ सानू भङेरा सरी।
धाऱ्याका हनुमान देखि मनले ❀ आफै ति शंका परी ॥
रावण्को छल हो कि यो भनि तहाँ ❀ लाइन् अधोमुख् जसै।
शंका भो अब माइलाइ भनि झट् ❀ बोल्या हनूमान् तसै ॥६३

हे माता ! म त दास हूँ हजुरको ❀ राम्का हुकूम्ले गरी ।
आयाको छु हजूरको खबरमा ❀ गम्भीर् समुद्रै तरी ॥
राजा सुग्रिवको म मन्त्रि पनि हूँ ❀ वायू पिता हुन् पनि ।
येती बिन्ति गरेर चुप् भइ रह्या ❀ क्या हुन्छ मर्जी भनी ॥६४

सीताजी पनि भन्दछिन् कसरि यो ❀ जानूँ म मानिस् पनि।
वानर्सीत मित्यारि लाउँछ कतै ❀ क्या हुन् कुराको जनी॥
येती बोलि सिताजि चुप् भइरहिन् ❀ साँचो नमानी जसै।
फेर् वृत्तान्त गरी सुनाइ सब बात् ❀ औंठी दिया पो तसै ॥६५

औंठी दीकन फेर् प्रणाम् पनि गरी ❀ जस्सै हनूमान् बस्या।
देखिन् औंठि जसै, तसै बखतमा ❀ हर्षाश्रु धारा खस्या ॥
बर्बर् आँसु खसाउँदै प्रभुजिको ❀ औंठी शिरोपर् धरिन् ।
साह्रै खुश् हनुमान् उपर् भइ तहाँ ❀ प्राण् झैं पियारो गरिन्॥६६

हित गरि हनुमान्जी-लाइ भन्छिन् ति माता ।
मकन तिमि भयौ खुप् प्राणका आज दाता ॥

तिमिसित रघुनाथ्ले खूब विश्वास मान्या ।
तब मसित पठाया येहि काम्ले त जान्याँ ॥६७॥
अब त तिमि हनूमान् जल्दि गै रामलाई ।
भन विपति पऱ्याकी देखिहाल्यौ मलाई ॥
जति गरि म-उपर् श्रीरामको हुन्छ माया ।
तति गरि तिमिले खुप् युक्तिले बिन्ति लाया ॥६८॥
जिन्तिन् शरीर महिना दुइ ता म धर्छु ।
ताहाँपछी त तिमि निश्चय जान मर्छु ॥
खान्याछ दुष्ट तरकारि बनाइ जान ।
छैनन् यहाँ अरु सहाय मलाइ ठान ॥६९॥
तस्मात् अवश्य इ दुई महिना नजाई ।
सुग्रीव् समेत् सकल सैन्य लिएर आई ॥
यस् दुष्टलाइ सब वंश समेत मारून् ।
यो दुःख-सागर पऱ्याकि मलाइ तारून् ॥७०॥
सिपसित गरि बिन्ती खुप् दयालू बनाया ।
जति छ फजिति मेरो यो सबै थोक् जनाया ॥
यति विनति गऱ्या लौ पाउला, धर्म धेरै ।
सकल भनिसक्याँ बात् क्या भनूँ बेरबैरै ॥७१॥
बिन्ती श्रीहनुमानले पनि गऱ्या ❀ माता म सेवक् त हूँ।
ख्वामित्का इ विपत् सबै म कहुँला ❀ धेर् बात् यहाँ क्या कहूँ ॥
राम्-लक्ष्मण् दुइ भाइ सुग्रिव समेत् ❀ वानर् कि सेना लिई ।
आई रावणवंश नाश् गरिदिनन् ❀ घेरा शहर्मा दिई ॥७२

ख्वामित्लाइ लिएर फेरि रघुनाथ् ❀ जानन् अयोध्यामहाँ ।
आवैनन् रघुनाथ् भनेर मनमा ❀ शंका नलागोस् यहाँ ॥
यो बिन्ती सुनि भन्दछिन् तहिँ सिता ❀ राम्चन्द्रजी क्या गरी ।
सेना लीकन आउनन् अति गभीर् ❀ यस्तो समुद्रै तरी ॥७३

जननिकन बुझाया यो हुकूम् सूनि ताहाँ ।
मइ छु प्रभुजिको दास् बोकुँला पीठमाहाँ ॥
रघुपति गुड़ भाईलाइ क्या दुःख पर्छन् ।
सकल अरु र सुग्रीव् कूदि आफै ति तर्छन् ॥७४॥

जननि ! म त बिदा झट् पाउँ मर्जी त सून्याँ ।
अब त उहिँ गया पो हुन्छ काम् जल्दि हून्या ॥
जउन चिज दिदामा राम विश्वास मान्छन् ।
उहि चिज [illegible] पाऊँ जान्छु दिन् मात्र जान्छन् ॥७५॥

यति सुनि अघिदेखिन् केशपाश्मा धन्याको ।
मणि झिकि दिइहालिन् रामको मन् पऱ्याको ॥
मणि दिइ फिरि भन्छिन् चित्रकूट्मा भयाको ।
शरण परि नजर् दी काग बाँची गयाको ॥७६॥

एक् दिन् हे हनुमान् ! म चित्रकुटमा ❀ राम्का नजीक्मा थियाँ।
मेरा काखमहाँ सुत्या र रघुनाथ् ❀ हात्को तकीया दियाँ ॥
मेरा लाल् दुइ पाउ देखिकन काग् ❀ आयो र ठूँग्यो जसै ।
मेरा ई दुइ पाउदेखि बहुतै ❀ आयो रगत् पो तसै ॥७७
ऊठी श्रीरघुनाथको नजर भो ❀ व्हाहीँ थियो काग् पनि ।
फ्याँक्या एक् तृण ली तहाँ प्रभुजिले ❀ यो काग मार्छू भनी ॥



(६५. चित्रकूटमा बस्ता एक दिन कागले सीताको पयरमा ठुङेको वृत्तान्त सीताले हनुमान्‌लाई सुनाएको।)

त्यो काग् चौध भुवन् डुल्यो कहिँ पनी ❀ पाएन आधार् जसै ।
फेरी आइ शरण् परीकन तहाँ ❀ माफ् माग्न लाग्यो तसै ॥७८
मेरो आज शरण् पऱ्यो भनि दया ❀ आयो उ काग्‌मा पनि ।
मै-माथी त दया कसो हुन गयो ❀ भन्थिन् भन्या यो पनि ॥
हात् जोरीकन बिन्ति फेरि हनुमान् ❀ वीर् गर्न लाग्या तहाँ ।
याहाँ छन् भनि यो खबर् नभइ पो ❀ आऊन ढील् भो यहाँ॥७९
रावण्‌ले हरि लीगयो भनि खबर् ❀ हुन्थ्यो त बाँच्थ्यो कहाँ ।
पाजी रावणको कुलै प्रभुजिले ❀ सब् भस्म पार्थ्या यहाँ ॥
हे वीर् रूप त देख्छु सानु भङिरा ❀ जत्रो कसोरी लडी ।
राक्षस् नाश् तिमि गर्दछौ तिमि ठुला ❀ हुन्छौ स्वरूप् की बढी ॥८०
तिम्रो रूप् अतिसानु देख्छु अरु ता ❀ कत्रा हुनन् झन् भनी ।
संझन्छू मनले र गम्छु मनमा ❀ आश्चर्य मान्छू पनि ॥
यस्तो मर्जि सिताजिको सुनि तहाँ ❀ पर्वत् सरीका भया ।
मेरू तुल्य स्वरूप् गरेर हनुमान् ❀ साम्ने खडा भै रह्या ॥८१



(६६. ठुङ्गुवा काग चौधै भुवन उडी हैरान भएर आई रामका शरण परेको ।)

जब त ति हनुमान्को रूप् ठुलो देखिलीइन् ।
खुशि भइ तहिँ बीदा माइले जल्दि दीइन् ॥
अब त तिमि हनूमान् धृष्ट चाला छिपाऊ ।
इनिहरु सब देख्छन् कूदि फेर् जाइजाऊ ॥८२॥
यति सुनि हनुमान्ले फेरि बिन्ती लगाया ।
सहजसित म जान्थ्याँ केहि फल् खान पाया ॥
वरिपरि फल-फूल् छन् मर्जि मात्रै म पाऊँ ।
हुकुम बिनु कसोरी आज आफै म खाऊँ ॥८३॥
यति विनति गर्‍याथ्या खानको मर्जि पाई ।
खुशि भइ फल खाई माइथ्यैँ जल्दि आई ॥
चरण परि बिदा भै क्यै गया दूर् जसै ता ।
अलिकति कछु काम् फेर् गर्न आँट्या तसै ता ॥८४॥

आफ्नै मन्मन भन्दछन् ति हनुमान् ❀ जुन् वीर दूत् भै गई ।
जत्ती ख्वामितको हुकूम् छ उतिमा ❀ मात्रै चनाखो भई ॥

उत्ती काम् गरि फिर्छ पो पनि भन्या ❀ त्यो दूत् अधम् हो भनी ।
भन्छन् सब् दुनियाँ त भेटिकन जाँ ❀ कस्तो छ रावण् पनि ।।८५

बगैँचा ध्वस्त पार्नु र ब्रह्मपाशले बाँधिनु–३ ( २ )

यति गमि ति बघैँचा नाश्न मन्सुब् चलाई ।
खुशि भइ ति महावीर् जल्दि फेर् फर्कि आई ।।
सकल वन उखेल्दै चौकि सम्पूर्ण मान्या ।
फगत जननि बस्न्या एक् सिसौ शेष पान्या ।।८६।।
जब त वन बिनाश्या राक्षसी जल्दि आई ।
पुगि नजिक सिताका सोधि सीताजिलाई ।।
भन-न तिमि सिताजी ! वीर् क्व हो क्यान आयो ?
अति असल बघैँचा मासि मैदान् बनायो ।।८७।।
यति सुनि तर्हि सीता भन्दछिन् क्या म जानुँ ।
विपत परि रह्याकी छू म ता चानुमानू ।।
तिमि बुझ-न सबै बात् कौन हो क्यान आयो ।
अति असल बघैँचा क्यान मैदान् बनायो ।।८८।।
सकल छल त हो यो राक्षसै गर्छ माया ।
जब त यति भनीथिन् राक्षसी सब् डराया ।।
कहन भनि गया सब् रावणैका हजूर्मा ।
पुगि कहन ति लाग्या वन् गयो जो बिसूर्मा ।।८९।।

ऐह्ले हे महराज् ! अधीक बलियो ❀ आयो र वानर् यहाँ ।
सीताजीसँग केहि बात्चित गरी ❀ कूद्यो बघैँचामहाँ ।।
सब् ती रूख् सहजै उखेलिकन साफ् ❀ मैदान् बनाईदियो ।
चौकी चूर्ण गरी हबेलि पनि सब् ❀ नाशीबस्याको थियो ।।९०

आयौँ हामि त बिन्ति गर्न भनि यो ❀ बिन्ती गऱ्याथ्या जसै।
सून्यो जल्दि उठेर पक्रन भनी ❀ लश्कर् पठायो तसै ॥
हूकूम् पायर लाख लश्कर गयो ❀ पक्रेर ल्याऊँ भनी।
एक् लाख् लश्करलाइ देखि हनुमान् ❀ अत्यन्त गर्ज्या पनि ॥९१
त्यो शब्दै सुनि मोह लश्कर भया ❀ छोड्या हतीयार् पनि।
सब् माऱ्या हनुमानले क्षणमहाँ ❀ ई हुन् भुसूना भनी ॥
लौहस्तम्भ उठाइ साफ् सब गऱ्या ❀ सम्चार् पुगेथ्यो जसै।
रावण् खूब रिसाइ फेर् पनि ठुलो ❀ सेना पठायो तसै ॥९२
सेनाका पति पाँच् गया हुकुमले ❀ ठूलै थियो तापनि।
त्यो सेना पनि साफ् तहाँ गरिदिया ❀ उस्तै भुसूना गनी ॥
फेर् मन्त्री-सुत सात् गया हुकुमले ❀ खुप् भारि लश्कर् लिई।
लौहस्तम्भ उठाइ साफ् फिरि गऱ्या ❀ सब्लाइ ठक्कर् दिई ॥९३
सात् मन्त्रीसुतलाइ सैन्य-सहितै ❀ मारी सक्याथ्या जसै।
कान्छो रावणपुत्र अक्षयकुमार् ❀ पो लड्न आयो तसै ॥
भारी फौज लियेर त्यो पुतलि झैँ ❀ आई जसै ता पऱ्यो।
आकाशमा कुदि लौहदण्ड शिरमा ❀ ठोक्या सहज्मा मऱ्यो ॥९४
पैह्ले अक्ष्यकुमार मारि अरु सब् ❀ सेना समेत् नाश् गऱ्या।
आउँदैमा तहिँ बत्तिका पुतलि झैँ ❀ ज्यूँदै अनेक् वीर् मऱ्या ॥
सब् राक्षस्हरुलाइ मारिकन फेर् ❀ आऊँछ कुन् वीर् भनी।
लौहस्तम्भ लिई खडा भइ रह्या ❀ ताहाँ हनूमान् पनि ॥९५

जब त अति पियारो पुत्र कान्छो मऱ्याको।
खबर कहन आया फौज्-समेत् नाश् गऱ्याको ॥

तब त अधिक ताप् भै भन्छ रावण् रिसाई ।
अब त गइ म आफै मार्दछू तेसलाई ॥९६॥
की मार्छू कि त बाँधि ल्याउँछु यहाँ ❀ तेरा नजीक्मा भनी ।
रावण्ले यति इन्द्रजित्-सित भन्यो ❀ तेस् इन्द्रजित्ले पनि ॥
हात् जोरीकन बिन्ति गर्छ म छँदै ❀ आफै हजूर्ले तहाँ ।
जानूपर्छ कतै म गै सहजमा ❀ ल्याऊँछु बाँधी यहाँ ॥९७
येती बिन्ति गरी चढ्यो रथमहाँ ❀ क्यै फौज् पनी साथ् लिई।
आयो श्री हनुमान् भयातिर गयो ❀ साम्ने मुहूडा दिई ॥
देख्या श्रीहनुमानले पनि र खुप् ❀ गर्ज्या ति साम्ने भई ।
लोहस्तम्भ लिई कुदीकन उपर् ❀ आकाश-बीच्मा गई ॥९८
लौहस्तम्भ उचालि घुम्न बिचमा ❀ लाग्या गरुड् झैं जसै।
पाँच्वाण्छोडि लगाइ आठ्अनिथपी ❀ फेरी लगायो तसै ॥
वाण् लाग्यो भनि इन्द्रजित् खुशिभई ❀ गर्ज्यो जसै ता तहाँ ।
घोडा सूत् रथ चूर्ण पारि हनुमान् ❀ कूद्या ति आकाश्महाँ॥९९
फेर् अर्को रथमा चढेर अब ता ❀ बाँध्छू म ऐल्हे भनी ।
फाँक्यो जल्दि र ब्रह्मपाश्तिहनुमान्- ❀ जीलाइ बाँध्यो पनि ॥
फेरि श्रीहनुमानलाइ सँग ली ❀ फर्क्यो र दरबार् गयो ।
बाँध्याका हनुमान देखि शहरै ❀ सम्पूर्ण खूशी भयो ॥१००
जुन् राम्का चरणै स्मरण् गरि सहज् ❀ अज्ञान पाश् नाश् गरी।
वैकुण्ठै सब पुग्दछन् भनि भन्या ❀ तेस् ब्रह्मपाश्मा परी ॥
बाँधिन्थ्या हनुमान् कहाँ तरपनी ❀ बन्धन् पर्न्याझैं भया।
रावण् भेटि त जाँ भनेर हनुमान् ❀ चुप्चाप लागी गया॥१०१

बाँध्याका हनुमानलाइ लिइ साथ् ❀ त्यो इन्द्रजित् वीर् तहाँ।
लागेथ्यो घर जाँ भनी तब तहीं ❀ आयेर रास्तामहाँ ॥
रिस् फेऱ्या पुरवासिले पनि मुठी ❀ ऊठाइ हान्दा भया।
रिस् फेर्छन् भुसुना भनेर हनुमान् ❀ चुप्चाप लागी गया॥१०२
पैह्ले ता ब्रह्मपाशमा परिकन क्षणभर् बाँधिनू काम थीयो।
ब्रह्माको वाक्य साँचो गरिकन पछि ता पाशले छाडिदीयो ॥
बन्धन्देखी त खुस्क्या तरपनि हनुमान् भेट्न मन्सुब् धऱ्याका।
पौँच्या रावण् छ जाहाँ खुशि भइ अरु ता मान्दछन् कर् पऱ्याका ॥१०३

हनुमान् र रावणको संवाद तथा लंका खाक पार्नु-४

रावण् वीर् पनि मन्त्रिवर्ग सँग ली ❀ भारी सभामा थियो।
पौँच्यो ताहिँ र इन्द्रजित् ति हनुमान्- ❀ जीलाइ सुम्पीदियो ॥
हात् जोरी विनती गऱ्यो अति हरीप् ❀ वानर् छ, सेना पनि।
धैरै नाश गरेछ आज म गई ❀ ल्यायाँ खुनी हो भनी॥१०४



(६७. इन्द्रजित्ले हनुमान्लाई बाँधेर रावणका सामु ल्याएको।)

जो गर्नू अब पर्छ मन्त्रिसँगको ❀ सल्लाह बात्चित् गरी।
यस्को आज ठिकान् लगाउनुहवस् ❀ मन्मा विचार् खुप् गरी॥

येती बिन्ति सुन्यो र इन्द्रजितको ❀ हेऱ्यो नजर्ले पनि ।
लायो सोध्न प्रहस्तलाइ किन यो ❀ आएछलौसोध्भनी ॥१०५
अस्सल्मा पनि क्या भनूँ अति असल् ❀ मेरो बघैँचा पनि ।
नास्यो वीर् पनि नाश् गऱ्यो मकन ता ❀ मानू भुसूना गनी ॥
हूकूम् यो सुनि त्यो प्रहस्त हनुमान्- ❀ जीका अगाडी गई ।
लाग्यो सोध्न सबै कुरा पनि बहुत् ❀ आधार दीन्या भई ॥१०६
यै बीच्मा नडराइ रावणतरफ् ❀ साम्ने नजर् दी तहाँ ।
बोल्या श्री हनुमानले तँ बुझिले ❀ काम्ले त आयाँ यहाँ॥
भार्या जस्कि हरिस् उनै जगतनाथ् ❀ राम्को म दास् हूँ अति।
तेरो बुद्धि सपार्न अर्ति दिन पो ❀ आयाँ नले यो मति ॥१०७
आया राम मतङ्ग पर्वतविषे ❀ लक्ष्मण् सहित् भै जसै ।
लाया सुग्रिवले मित्यारि खुशि भै ❀ राम्चन्द्रजीथ्यै तसै ॥
बाली मारि रजाइँ बक्सनुभयो ❀ सुग्रीव राजा भया ।
सीता खोज्न हुकूम् हुँदा विरहरू ❀ फेर् दश् दिशामा गया ॥१०८
एक् वीर् ता मइ हूँ हुकूम् शिरउपर् ❀ लीएर आयाँ यहाँ ।
पायाँ देख्न सिताजिलाइ दुत हूँ ❀ राम्को म जान्थ्याँ कहाँ॥
वानर् हूँ र उखेलि साफ् गरिदियाँ ❀ तेरो बघैँचा पनि ।
आया मार्न मलाइ जो अगि सरी ❀ उन्लाइ माऱ्याँ पनि ॥१०९

यो इन्द्रजित् गइ यसै बिचमा मलाई ।
बाँधेर ल्याइकन आज दियो तँलाई ॥
बन्धन् पऱ्यो भनि नठान् तँ दियाँ जनाई ।
खूला छु अर्ति पनि दिन्छु म सुन् तँलाई ॥११०॥

लोक्को गती सब विचार् गरि आज तैंले ।
यो राक्षसी मति नले हित भन्छु मैले ॥
ब्राह्मण् तँ होस् ऋषि पुलस्त्यजिको त नाति ।
राक्षस् कसोगरि तँ होस् बुझिले न भाँती ॥१११॥
आत्मा–स्वरूप उ त छन् छ स्वरूप काहाँ ।
जाती र वर्ण लिइ भन्न सकिन्छ यांहाँ ॥
सो आत्मरूप भनि नित्य विचार गर्नू ।
आनन्दमा रहुँ भन्या मति येहि धर्नू ॥११२॥

जो यो लोकविषे प्रपंच छ सबै ❀ जान् स्वप्न जस्तो भनी ।
सूतुन्च्याल् सपना छ सत्य उठि ता ❀ लाग्दैन साँचो पनि ॥
तस्तै ज्ञान् त भयो भन्या त्रिभुवनै ❀ एक् देख्छ आत्मा फगत् ।
अज्ञान्रूप् निदमा पऱ्यो पनि भन्या ❀ देखिन्छ नाना जगत् ॥११३
आत्मा सत्य म हूँ भनेर बुझिले ❀ यस् देहलाई पनि ।
झूटो जान् पृथिवी र जल्हरु मिली ❀ झूटै बन्याको भनी ॥
तर्लास् यो मनमा लिइस् पनि भन्या ❀ तार्न्या उनै विष्णु हुन् ।
जो हुन् विष्णु उ राम हुन् शरण पर् ❀ रिस् उठ्छ तेरा त झन्॥११४
यस्तो मूर्खपना नली अब सिता ❀ सुम्पी शरण्मा तँ पर् ।
खुश् हूनन् रघुनाथ् शरण् परिगया ❀ यो दुष्ट चाला नगर् ॥
राम्को भक्ति गरैन ता कसरि यो ❀ संसार तर्ला उसै ।
पर्ला जन्मनु मर्नु यै फजितिमा ❀ छुट्तैन यो ता कसै॥११५
यो जानीकन भक्ति गर् शरण पर् ❀ राम्को हजूर्मा गई ।
आफ्नू आत्म नरक्विषे नलइजा ❀ यस्तो तँ जान्या भई ॥

सीताराम्-सितको विरोध् गरि तँ हेर् ❀ गिर्लास् नरक्मा जबै ।
फेर् उत्तीर्ण हुनू कठिन् छ बुझिले ❀ अर्ती दियाँ यो सबै ॥११६
यस्ता बात् हनुमानका जब सुन्यो ❀ रावण् रिसायो तहाँ ।
लाल्-लाल् नेत्र गराइ भन्छ रिसले ❀ सूनाई साभामहाँ ॥
मेरो डर् रतिभर् नराखि बहुतै ❀ क्या बोल्दछस् रे यहाँ ।
राम् लक्ष्मण् दुइ भाइलाइ सहजै ❀ मार्छू म छोड्छू कहाँ॥११७
सुग्रीव्लाइ तँलाइ मार्छु पछि फेर् ❀ मार्छू सिताजी पनि ।
राम् लक्ष्मण्सित क्या डराउँछु र की ❀ मार्नन् मलाई भनी ॥
तिन्का वानर सैन्यको पनि विनाश् ❀ गर्न्याछु येती जसै ।
बोल्यो रावणले इ बात् सुनि तहाँ ❀ बोल्या हनूमान् तसै ॥११८

यसरि किन बहूतै गर्दछस् सेखि धेरै ।
प्रभुकन त परै राख् जोरि छैनस् तँ मेरै ॥
अधि सरुँ त तँ जस्ता कोटि रावण् म मारूँ ।
हुकुम त नभयाको मार्न पो आज क्यारूँ ॥११९

यस्ता बात् हनुमानका सुनि तहाँ ❀ रावण् रिसायो अति ।
साँचा हुन् इ कुरा हुनाकन त हो ❀ लिन्थ्यो कहाँ दुर्मति ॥
यो वानर्कन काटि टुक् गर भनी ❀ यस्तो हुकूम् पो दियो ।
हात्मा बेस्हतियार् लिई अगि सर्‍यो ❀ जुन्वीर् नजीक्माथियो॥१२०
यस् बीच्मा त विभीषणै अगि सरी ❀ हात् जोरि बिन्ती गर्‍या ।
दूत् हो यो महराज् ! कुरा पनि वहाँ ❀ लैजान्छ को यो मर्‍या ॥
चिह्नू केहि लगाइ छोड्दिनुहवस् ❀ जावस् र विस्तार् गरोस् ।
येसै वानरका कुरा सुनि यहाँ ❀ आउन् ति संग्राम् परोस् ॥१२१

साँचो भन्या भनि बुझी कपडा मगायो।
तेल् घीउले मुछि पुछर्-भरि बेर्न लायो ॥
हुकूम् दियो अब जलायर बाँधिलेऊ।
सारा शहर्-भरि घुमायर छाडिदेऊ ॥१२२॥



(६८. राक्षसहरूले हनुमान्को पुच्छरलाई लुगैलुगाले कसी त्यसमा तेल-घिउ खन्याएको।)

जावस् ठुटो पुछर लीकन फर्कि वाहीँ।
पुच्छर् डढी नसकि छोड्नु त छैन काहीँ ॥
यस्तो हुकूम् जब दियो तब बाँधिलीया।
आगो पनी पुछरमा त लगाइदीया ॥१२३॥
बाँध्याका हनुमान् लिएर खुशि भै ❀ कर्नाल् अगाडी फुकी।
लाग्या घुम्न शहर् ति राक्षसहरू ❀ चोर् हो भनी खुप् भुकी ॥
चुप् लागी हनुमान् पनी खुरुखुरू ❀ गम् हेरि हिड्दै गया।
ढोका पश्चिममा पुगी शहरको ❀ ताहीँ ति साना भया ॥१२४
बन्धन्देखि त खुस्कि सूक्ष्मरुपले ❀ पर्वत् सरीका भया।
ठूलो स्तम्भ उठाइ राक्षस अनेक् ❀ माऱ्या र कुद्दै गया ॥

बल्दो लामु पुछर् लियेर घर-घर् ❀ कुद्दै शहर्मा डुली ।
पोल्या सब् शहरै छुटेन कहिँ घर् ❀ बाँकी कतै एक् भुली॥१२५
लाग्यो बल्न शहर् जल्या र सब घर् ❀ सब् बन्द रस्ता भई ।
भागी जान नपाउँदा हुँदि अनेक् ❀ राक्षस् अटाली गई ॥
फाल् हालीकन अग्निमा परि मऱ्या ❀ यो चाल् शहर्मा भयो।
पोल्यानन् घर एक् विभीषणजिको ❀ त्यो मात्र बाँकी रह्यो ॥१२६



(६९. त्यसरी पुच्छरमा आगो लगाइएका हनुमान्ले लङ्काका अटालीहरूमा उफ्री उफ्री नगरै जलाइदिएको ।)

येती काम गरीसकी पुछरको ❀ आगो निभाऊँ भनी।
कूद्या जल्दि समुद्रमा पुगि पुछर् ❀ चोभी निभाया पनि ॥
अग्नीले पनि मित्र-पुत्र भनि ताप् ❀ केही गऱ्यानन् तहाँ ।
सीताको पनि प्रार्थना हुन गयो ❀ डढ्थ्या हनूमान् कहाँ ॥१२७

रामको फगत् स्मरणले पनि दुःख छुट्छन् ।
आध्यात्मिकादिहरु ताप् पनि जल्दि हट्छन् ॥
साक्षात् उनै प्रभुजिका दुत भै गयाका ।
डढ्थ्या कहाँ ति हनुमान् अति हित् भयाका ॥१२८॥

हनुमानले सीतासँग बिदा हुनु र वारि आई रामलाई उनको सन्देश सुनाउनु–५

फिर्न्या मन्सुब ली बिदा हुन सिता- ❀ जीथ्यैं हनूमान् गया ।
बीदा खूशि भएर बक्सनुहवस् ❀ जान्छू म भन्दा भया ॥
आऊँछन् रघुनाथ् अवश्य भनि यो ❀ बिन्ती गर्याथ्या जसै ।
साह्रै शोक् मनमा गरीकन सिता ❀ क्यै भन्न लागिन् तसै ॥१२९

तिमिकन नजिकैमा देखि खुप् खूशि हुन्थ्याँ ।
घरि–घरि रघुनाथ्का मिष्ट वार्ता म सुन्थ्याँ ॥
अब कसरि म यस्तो दुःखले प्राण धर्छु ।
तिमि पनि फिरि जान्या फेरि ताप्मा म पर्छु ॥१३०॥

सीताका इ वचन् सुनेर झटपट् ❀ हात् जोरि बिन्ती गर्न्या ।
यस्तो शोक् अब छाडिबक्सनुहवस् ❀ आपत्ति साह्रै पर्न्या ॥
ऐह्ले दाखिल गर्छु राम्–चरणमा ❀ बोकी हुकूम् लौ हवस् ।
धैरे शोक् किन गर्नुहुन्छ मनमा ❀ यो शोक् दुरैमा रहोस् ॥१३१
सीताजी पनि भन्दछिन् म त नजाँ ❀ जाऊ तिमी मात्र गै ।
विस्तार् बिन्ति गरेर जल्दि रघुनाथ् ❀ लीयेर आऊ सँगै ॥
राम् आईकन दुष्टलाइ सहजै ❀ मारी मलाई सँगै ।
लैजानन् रघुनाथ् त कीर्ति रहला ❀ क्या हुन्छ येसै म गै ॥१३२
सीताको जब यो हुकूम् हुन गयो ❀ बीदा हनूमान् भया ।
तीन् बार् जल्दि परिक्रमा गरि प्रणाम् ❀ गर्दा छँदा ती गया ॥
पर्वत्माथि चढेर रूप् पनि ठुलो ❀ पर्वत् सरीको धर्न्या ।
आकाश् मार्ग लिई कुदेर खुशिले ❀ खुप्शब्दठूलोगर्न्या ॥१३३

वारि आई रामलाई उनको सन्देश सुनाउनु–५ (२)

सून्या शब्द ति अङ्गदादिहरुले ❀ बोल्या परस्पर् पनि ।
शब्दैले बुझियो अवश्य सहजै ❀ भेटेर आया भनी ॥

यस्ता बात् तिरमा बसेर सब वीर् ❀ गर्दै थिया खुश् भई ।
पौंच्या श्रीहनुमान् तहाँ तिरमहाँ ❀ आनन्द खूशी रही ॥१३४
भेट् भो अङ्गद वीर्हरूसित तहाँ ❀ विस्तार् कुरा सब् भया।
अङ्गद् वीर्हरु खुश् भई पुछरमा ❀ पक्रेर चुम्बन् गऱ्या॥
नाच्या कोहि खुशी भयेर यहि रीत् ❀ गर्दै ति राम्थ्यैं गया।
सुग्रीव्को मधुवन् मिल्यो नजिकमा ❀ साह्रै खुशी ती भया ॥१३५
बिन्ती अङ्गदथ्यैं गऱ्या पनि तहाँ ❀ खाऊँ इ फल्फूल् भनी ।
अङ्गद्ले पनि खाउ जाइ हनुमान्- ❀ जीका प्रसाद्ले भनी ॥
दीया मर्जि र खाउँ फल्फुल भनी ❀ वानर् गयाथ्या जसै ।
चौकी वानर जो थिया तब तहाँ ❀ आया र रोक्या तसै ॥१३६
रोक्न्या वानरलाइ लात् दिइ पिया ❀ मीठो मधू-रस् तहाँ ।
यो चुक्ली दधिमूखले लिइ गया ❀ सुग्रीवजी छन् जहाँ ॥
सब् विस्तार् दधिमूखले जब गऱ्या ❀ लूट्या मधूवन् भनी ।
लूट्पीट्को समचार् सुन्या र पनि रिस् ❀ ऊठेन कत्ती पनि ॥१३७
भेट्याछन् बुझियो सिताकन न ता ❀ लुट्थ्या मधूवन् कहाँ ।
यी बात् सुग्रिव गर्दथ्या प्रभुजिले ❀ सून्या र सोध्या तहाँ ॥
सीताको पनि नाम् लिएर तिमिले ❀ क्या बोल्दछौ बात् भनी ।
सोधीबक्सनुभो र सुग्रिवजिले ❀ बिन्ती गऱ्या बात् पनि ॥१३८
हे नाथ् ! जो मधुवन् थियो अति असल् ❀ मेरो बधैँचा तहाँ ।
ऐल्हे ता हनुमान्हरू बलजफत् ❀ आएर एक् क्षण्महाँ ॥
लूट्याछन् मधुरस् अनेक् तरहका ❀ चौकी कुट्याछन् पनि ।
आया आज फिराद गर्न मधुवन् ❀ लूट्या र कूट्या भनी ॥१३९

सोही बात म गर्दछू रघुपते ! ❀इन्ले सिताजी पनि ।
भेट्याछन् तब पो लुट्या र मधुवन् ❀रोक्ता चुट्याको भनी ॥
यो बिन्ती गरि जल्दि सुग्रिवजिले ❀ती चौकिलाई तहाँ ।
दीया हूकुम जल्दि फर्किकन गै ❀चाँडै पठाऊ यहाँ॥१४०
आऊन् श्रीहनुमान्हरू अब यहीँ ❀चाँडो भनी यो जसै ।
दीया निर्भय दी हुकूम् उहि बखत् ❀फर्क्या र दौड्या तसै ॥
मामा सुग्रिवका गया र दधिमुख् ❀हूकूम् सुनाईदिया ।
खूशी भै हनुमान्हरू पनि गया ❀जाहाँ रघूनाथ् थिया ॥१४१
राम् सुग्रीव्कन दण्डवत् गरिलिया❀साम्ने जमीन्मा परी।
सब् विस्तार् हनुमानले तहिँ गर्‍या ❀वृत्तान्त एक् एक् गरी ॥
भेट्याँ आज सिताजिलाइ रघुनाथ् ! ❀लङ्का पुरीमा गई ।
जस्सै देखिलियाँ सिताकन तसै ❀सानू स्वरूप्को भई ॥१४२



(७०. हनुमान्‌ले वारि आई रामलाई लङ्कामा रहेकी सीताको समाचार सुनाएको ।)

पात्का अन्तरमा लुकी जननिका ❀साम्ने नजीक्मा रह्याँ।
जो वृत्तान्त थियो सबै हजुरको ❀त्यै सूक्ष्मरूप्ले कह्याँ ॥

भोकी दुब्लि हजूर दूर रहँदा❀संझेर साह्रै रुँदी ।
राम्-राम् बोल्दि अनाथ् भईकन बहुत्❀विह्वल् निरन्तर् हुँदी ॥१४३
अश्शोक्का वनमा सिसौ पनि छ एक्❀त्यै वृक्षका बीचमा ।
झुण्डीन्या मतलब् लिई खडि भइन्❀सूनिन् उसै बीचमा ॥
यो वृत्तान्त सुनी हुकूम् पनि भयो❀को होस् तँ बोल्छस् कहाँ ।
क्या लूकीकन बोल्दछस् अब नलुक्❀आईज साम्नेमहाँ ॥१४४
पायाँ येति हुकूम् जसै जननिको❀वानर् स्वरूप्ले गयाँ ।
को होस् भन् भनि सोधिबक्सनुभयो❀फेर् बिन्ति गर्दो भयाँ ॥
सब् वृत्तान्त कहीसकी हजुरको❀औंठी दियाथ्याँ जसै ।
बर्-बर् आँसु खसालनू पनि भयो❀विश्वास लाग्यो तसै ॥१४५
आफ्नू दुःखहवाल् सबै कहनुभो❀यस्ता विपत् छन् भनी ।
आऊँछन् रघुनाथ् भनेर बहुतै❀मैले बुझायाँ पनि ॥
आज्ञा भो रघुनाथका हजुरमा❀सब् दुःख मेरो कही ।
लंकामा प्रभुको सवारि तिमिले❀चाँडो गराऊ गई ॥१४६

बत्चीत् गरी जब यतातिर फिर्न लाग्याँ ।
विश्वास पार्न जननी-सित चीज माग्याँ ॥
चूडामणी दिनुभयो शिरमा रह्याको ।
काग्को कुरा कहनुभो अघि जो भयाको ॥१४७॥

लक्ष्मण्लाइ अवाच्य बात् भनि बहुत्❀बोल्याकि छू तापनि ।
त्यो रिस् लक्ष्मणले कदापि नलिऊन्❀येसो भनीथिन् भनी ॥
हात् जोरीकन बिन्ति खुप् गरिदिया❀येती हुकूम् भो जसै ।
सब् वृत्तान्त सुनी बिदा पनि भयाँ❀फर्केर आयाँ तसै ॥१४८

भारी हल्चल मच्चन गो लषणका ❀ फौजैमहाँ तेस् घरि ।
राम्राम्राम्भनिविष्णुलोकबिचमा ❀ जान्थे पटापट् मरी ॥
यो हाल् देखि ति भक्तलक्ष्मणजिले ❀ ठूलो प्रतिज्ञा गरे ।
गर्छू प्रण् यसलाइ मार्न अहिले ❀ भन्ने इरादा धरे ॥५
भक्तैवत्सल राम हुन् यदि भन्या ❀ यो कष्ट टारीदिनू ।
शक्ती यो मेघनादको यस घरी ❀ खैँची प्रभूले लिनू ॥
येती बात् भनि बाण् चढाइ धनुमा ❀ हान्दा त बेग्ले गयो ।
काटी इद्रजितैको शिर् अनि भुजा ❀ ऊडेर आकाश् गयो ॥६
बस्थिन् रानि सुलोचना महलमा ❀ साथ्मा सखी ली तहाँ ।
आई गिर्न गयो श्रीइन्द्रजितको ❀ बाहू अगाडीमहाँ ॥
देखी झट् पतिका कोमल् कर तहाँ ❀ सूलोचनाले जसै ।
कोलाहल् गरि चित्तलाइ तिनले ❀ व्याकुल् गराइन् तसै ॥७
राम्राम् के गति भैगयो पतिजिको ❀ साह्रै अभागी भयाँ ।
जस्को छैन पती ति हुन्छ विगती ❀ सोही गती भैगयाँ ॥
ताज्जुब् हो तर ती पती रणमहाँ ❀ गिर्नूभयो हो भनी ।
विश्वास् छैन मलाइ कत्ति अहिले ❀ वर्दान् विफल् भो भनी ॥८
जस्ले बाह्र बरष्तलक् वनमहाँ ❀ सुत्तै नसुती रती ।
जस्ले इन्द्रियलाइ वश् गरि लिनन् ❀ तपस् गरी खुब् अति ॥
जस्ले लोभ र मोह त्याग् गरि सबै ❀ भोक् प्यास् नमानी रती ।
तेस्तै कोहि मिलेछ लौ यदि भन्या ❀ मार्नेछ मेरा पति ॥९
वर्दान् यस्रितको हुदाँ शिवजिको, ❀ पर्दैन विश्वास् यहाँ ।
तेस्ता त्यागि पुरुष् म यस् बखतमा ❀ देख्दीनँ संसार्महाँ ॥

केही दृढ् मनमा लियेर उ बखत् ❀ यो बात भन्छिन् तहाँ ।
प्यारी हूँ प्रभुकी पतिव्रत भने ❀ मेरा अगाडीमहाँ ।।१०
खूलस्ता सब हाल भङ्ग भुजले ❀ लेखी जमीनैमहाँ ।
एकाग्रै मनलाइ पारिदिनुहोस् ❀ सब्का अगाडीमहाँ ।।
येती बिन्ति गरी ति चुप् भइगइन् ❀ साम्ने अगाडी तहाँ ।
थर्थर् काँपि उठ्यो ति इन्द्रजितको ❀ बाहू उसै बीच्महाँ ।।११
पञ्जा खूब फिजारि भङ्ग करले ❀ माग्यो इशारा गरी ।
लेख्नै हो भनि एक् सखी उठि गई ❀ ल्याई दिइन् झट् खरी ।।
पाई तेस् करले खरी उस घरी ❀ लेखीदियो खर्खरी ।
लेख्यो आफ्नु गती पढिन् जब सती ❀ रूँदी भइन् धर्धरी ।।१२
राम्का भाइ लषन् बलिष्ठ बलवान् ❀ आई लडे रण्महाँ ।
काटी हात गिऱ्यो तिमी नजिकमा ❀ शिर् पूग्यो राम्पाउमा ।।
यो वाणी जब लेखियो जमिनमा ❀ पल्टीगयो कर् जसै ।
थालिन् रून सुलोचना उस बखत् ❀ छाती पिटी खुब् तसै ।।१३

अहो, संसार् लोप् भो विनुपति हुने हो कुन गति ।
दुखी हुन्छन् नारी विपति अति भारी विनु-पति ।।
जउन् बाहू-बल्ले त्रिलोक वश भो हे प्रियपति ।
जउन् बाहू-बल्ले कुबेर वश भो लौ धनपति ।।१४।।
जउन् बाहू-बल्ले यमपुरि सहज् वश् गरिलियो ।
जउन् बाहू-बल्ले सकल रिपुको नाश् गरिदियो ।।
जउन् बाहू-बल्ले नरपति सहज् वश् गरिलियो ।
सोही बाहू ऐल्ले कटित हुनगै यो गति भयो ।।१५।।

यस्तारीत्सितधेर् विलाप् गरि गरी ❀ सूलोचना फेर् तहाँ ।
भन्छिन् हे पतिजी ! मलाइ अहिले ❀ लैजानुहोस् सङ्महाँ ॥
रोई रोइ फुकालि सब् ति गहना ❀ सूलोचनाले तहाँ ।
दूखी ब्राह्मणलाइ दान् गरिदिइन् ❀ फेरी उसै बीच्महाँ ॥१६
सर्वस्वै सब दान् गरीवरि सकी ❀ डोली मगाऊ भनी ।
आज्ञा भो सखिलाइ फेरि उ बखत् ❀ आये ति डोले पनि ॥
बाहू श्रीपतिको लिई सँगमहाँ ❀ चढिन् ति डोलीमहाँ ।
रुन्थे सब् पुरवासि आइ नजिकै ❀ सुर्ता लिई मन्महाँ ॥१७
विस्मात्चाल्सँगपुग्नगो डोलि जसै ❀ लंकापुरीमा तहाँ ।
साह्रै कंकल स्वर् गऱ्यो महलका ❀ चौतर्फ फाटक् महाँ ॥
आवाज् यस् रितको हुँदा दशदिशै ❀ कुर्लेर ऊठ्यो तहाँ ।
हे वीर् हो ! पुरवासि आइ नजिकै ❀ सुर्ता लिई मन्महाँ ॥१८
लौ लौ लौ अब के भयो कसो गरौँ ❀ हे ! वीर हो सब् यहाँ ।
शस्त्रै अस्त्र लियेर आउ अहिले ❀ मेरा अगाडीमहाँ ॥
मार्छू काट्छु निभाउँछू रिपुकनै ❀ भन्दै अगाडी सऱ्यो ।
खूँडा हातमहाँ लियेर दशशिश् ❀ फाटक्महाँ झट्झऱ्यो ॥१९
क्रोध्ले पूर्णभयेर लाल्गेडिसमान् ❀ आँखो बनाई गयो ।
देख्यो सामुमहाँ बुहारि उसले ❀ लाज्ले भुतुक्कै भयो ॥
सोध्यो रावणले बुहारि अहिले ❀ कुन् कारणैले यहाँ ।
आयौ आफ्नु महल् छोडेर तिमिले ❀ मेरा अगाडीमहाँ ॥२०
आज्ञा यो ससुराज्युको हुन गई ❀ क्यै घुम्टो हाली तहाँ ।
हात् जोडी विनतीगरीन् ति सतिले ❀ सबका अगाडीमहाँ ॥

सुलोचनाले भनिन्–

ठुलो नाम् लंकाका पति भनि हजुर्को भुवनमा ।
रहेको यो दासी विपति भुगती रुन्छु जगमा ॥२१॥
हरे ! तिन्कै ब्वारी पति बिछुड भै रुन्छु धर्धरी ।
हजुर्को कीर्तिले भुवन तिन लोक् काँप्छ थर्थरी ॥
प्रबल्-शक्ती राम्का लषण भनि नाम् भाइ जसका ।
तिनैले यो हालत् गिरिदिया हजुर्की बुहारिका ॥२२॥
अकस्मात् आयो हात् महल-बिचका आँगनमहाँ ।
खरी दीदा हात्मा खुरु-खुरु लेख्यो भूमितलमा ॥
अहो ! प्यारी जान्छू शिर कर अलग् भैगो रणमा ।
यो हात् आयो याहाँ शिर उडि पुग्यो राम्चरणमा ॥२३॥
सुन्यौ प्यारी ! भारी पृथिवि भइ गो पाप हुनगो ।
सोही तारण्-कारण् भुवनपति औतार लिनुभो ॥
जउन् वीर्ले मेरो गतिमति नराखी मार्‍यो पहिले ।
उनै दूई वीर्ले दशशिश बुवा मार्छ अहिले ॥२४॥
यही रीत्का धेरै लेखनि लेखिदी हस्त पतिले ।
सोही बाहू साथ्मा लिइकन चल्याँ याहि गतिले ॥
म पाऊँ शिर् नाथ्का विनति प्रभुमा गर्छु अहिले ।
लिई इज्जत् नाथ्का कुन रित तहाँ जानु मइले ॥२५॥
यस्तो बिन्ति सुनी ति पुत्रवधुको ❀ क्रोध्ले नयन् लाल् गरी ।
हात्को खड्ग उठाइ भन्छ दशशिश् ❀ सुर्ता नल्यौ ब्वाहरी ॥
सुर्ता धेर् तिमिले नलेउ यसरी ❀ मार्नेछु खड्गै लिई ।
एक् शिर्को दुइ शिर् लिनेछु बदला ❀ राम् लक्ष्मणैको गई ॥२६

माछ्र्छू नल्‌निल फेर् विभीषण पनी ❀ सुग्रीव् हनूमान् अनि ।
अङ्गद्द्वीविदजाम्बवान् ति जतिछन् ❀ सम्पूर्णलाई पनि ॥
बीस् हात्माबिसशस्त्रलिन्छु म अनी ❀ काट्छू रिपूदल् सबै ।
धन्दा पुत्रवधू, नमान तिमिले ❀ केही कुराको कबै ॥२७
यस्ता रीत्‌सित धेर् कुरा गरिसक्या ❀ बुहारिका मन्महाँ ।
पत्यार् क्यै नपरी भनिन् उस घरी ❀ हात् जोरि सामूमहाँ ॥
हे नाथ् मानुष ठानिबक्सनुभयो ❀ भाई दुवै वीरलाइ ।
मानिस् हुन् कसरी भनूँ म अहिले ❀ श्रीराम् धनुर्धारिलाइ ॥२८
जस्ले तार्नुभयो जटायु खगराज् ❀ नारी अहिल्या पनि ।
जस्ले सागर पार् गराइ सुनको ❀ लंका फुकाया पनि ॥
जस्ले एक् शरले अनेक् विरहरू ❀ मुक्ती गराईदिया ।
जस्ले पूर्ण कृपा हुँदा श्रीपतिका ❀ शीरै चरण्‌मा लिया ॥२९
जस्ले मानुष रूप् धरी पृथिविको ❀ भार् हर्छु ऐह्ले भनी ।
आयाका सब जान्दछन् पृथिविमा ❀ साक्षात् जगत्‌का धनी ॥
यस्ता श्रीरघुनाथ राम् प्रभुजिका ❀ दुश्मन् हजुर्ले बनी ।
माछ्र्छू काट्छुनिभाउँछू इ जति बात् ❀ के हुन्छ बेथैं भनी ॥३०
जुन् सीता हरि ल्याइबक्सनुभयो ❀ साक्षात् ति हुन् भग्वती ।
राक्षस्‌काकुलकोविनाश् ति गरनिन् ❀ आयो हुँदै यो गति ॥
तेस्ता श्रीभगवानका गुण-कथा ❀ शेष् शारदाले पनि ।
सक्तैनन् वरणन् बताउन यहाँ ❀ के सक्तथें मै भनी ॥३१
जुन् पाऊ परि अन्त्यमा त पतिका ❀ शिर्ले नमस्कार् गऱ्यो ।
तेस्ता श्रीप्रभुका चरण्‌कमलमा ❀ आफै म जानू पऱ्यो ॥

माग्छू शिर् धरि रामका चरणमा ❀ दिन्छन् बहुत् खुश् भई ।
सोही शिर् लिइ काखमा पतिसँगै ❀ जान्छू सती मै भई ॥३२
तस्मात् हे करुणानिधान् ! हजुरले ❀ आज्ञा दिनूहोस् यहाँ ।
आफै गै लिइ आउँछू शिर् पतिको ❀ ऐह्ले अगाडी महाँ ॥
येती बिन्ति गरिन् अनी तिनि गइन् ❀ मन्दोदरी छन् जहाँ ।
हात् जोरी विनती गरिन् उस बखत् ❀ पर्स्तेर पाऊमहाँ ॥३३
हे माता ! सुत इन्द्रजित् हजुरको ❀ लक्ष्मण् विरैले तहाँ ।
मार्‍या शिर् कर काटि तीक्ष्ण शरले ❀ ठूलो समर्- भूमिमा ॥
यस्ता वाणि सुनी ती मन्दोदरि झट् ❀ मूर्छा जमिन्मा परिन् ।
चेत् पाई केहि बेरमा ति जननी ❀ रूदन् बहूतै गरिन् ॥३४
दश्मास् गर्भमहाँ लिएँ कठिनले ❀ ठूलो तपस्या गरी ।
जस्को भर् लिइ बस्तथेँ भवनमा ❀ हा दैव ! गैगो मरी ॥
संसार्मा जति शोक् छ जीव नरमा ❀ पुत्रै छ शोक् धेर् अति ।
हा हा ! दैव लुटीलियो यस घरी ❀ यो देहका सब् गति ॥३५
यस्तै धेर अनेक् बिलाप गरदै ❀ रुन्थिन् ति मन्दोदरी ।
सम्झिन् नारदका भविष्यफल त्यो ❀ आईगयो सो घरि ॥
भन्थे नारदले सिताकन हरी ❀ लानेछ रावण् जसै ।
सोही कारण वंश नाश् हुन गई ❀ मर्नेछ रावण् तसै ॥३६
साँचो सब् हुन जान्छ की त अहिले ❀ भन्ने विचार् गर्दछु ।
कूलक्षण् सब देख्छु मै घरि घरी ❀ कायर् भई डर्दछु ॥
लाज्डर् केहि नमानि जाउ तिमिले ❀ श्रीरामजी छन् जहाँ ।
मागी निज् पतिको शिरै यस घरी ❀ लीयेर आऊ यहाँ ॥३७

सोही शिर् सँगमा लियेर तिमिले ❀ शास्त्रै विधान्ले गरी ।
जाऊ खूशि भई सती यस घरी ❀ संसार सागर् तरी ॥
स्वामीका सँगमा सती हुन गये ❀ भोग् मिल्छ स्वर्गैमहाँ ।
ठूलो नाम् जगमा सुलोचन सती ❀ हूनेछ संसार्महाँ ॥३८
सासूका इ वचन् सुनी जब लिइन् ❀ सूलोचनाले तहाँ ।
स्वामीका शिर माग्न जान्छु म भनी ❀ फेरी उसै बीच्महाँ ॥
फर्की डोलिमहाँ चढी जब लिइन् ❀ बाहू लिई सङ्महाँ ।
बढाये अति चाल् ति डोलेहरुले ❀ श्रीरामजी छन् जहाँ ॥३९
देखी डोलि ती भालु वीर कपिले ❀ मन्मा बिचारीलिये ।
डर् मानी दशशीशले प्रभुजिमा ❀ सीता पठाईदिये ॥
यस्तै तर्क-वितर्क ती विरहरू ❀ गर्थे विचार् धेर् तहाँ ।
जाऊँ लौ विर हो ! सीता लिन भनी ❀ उठ्थे झटाझट् तहाँ ॥४०
पूग्यो डोलि जसै ति वीर बिचमा ❀ श्रीरामजी छन् जहाँ ।
डोलीदेखि झरेर झट् प्रभुजिका ❀ पर्दी भइन् पाउमहाँ ॥
यो देखी प्रभुले सुध्याउनुभयो ❀ को हुन् विभीषण् ! यिनी ।
यस्ता बात् प्रभुका सुनी ति विरले ❀ भन्दा भया फेर् अनि ॥४१
हे राम् ! हे करुणानिधान् ! हुन इ ता ❀ लंकापतीकी पनि ।
छोरा इन्द्रजितैकि पत्नि इनि हुन् ❀ नाम् हो सुलोचन् पनि ॥
छोरी वासुकि नागकी पनि इ हुन् ❀ ब्वारी त दशशीशको ।
साह्रै सत्यवती थियिन् यस घरी ❀ आइन् शरण् नाथको ॥४२
मेरो ता मनमा छ हे रघुपते ! ❀ जुन् कारणैले यहाँ ।
आयाकी इनि छन् प्रभो हजुरको ❀ नीगाह होस् लौ यहाँ ॥

बिन्ती यो बिभीषण्‌जिले गरिदिया ❀ हात् जोडि चुप् भैगइन् ।
हूकूम् भो प्रभुबाट यो विभीषणै ! ❀ तिम्रै बुहारी भइन् ।।४३
हे बाले ! कति कारणै हुन गई ❀ आयौ तिमी लौ यहाँ ।
सुन्नाको मन भो ब ताउ अहिले ❀ मेरा अगाडीमहाँ ।।
हुकूम् यो प्रभुको मिली जब गयो ❀ सूलोचनाले तहाँ ।
हात् जुन् हो पतिको लियेर उ बखत् ❀ भन्छिन् मधुर् स्वर्महाँ ।।४४
शिर् मेरा पतिको कृपा हुन गए ❀ सो शिर् लिई सङ्‌महाँ ।
हूनेछू सति हे रघूकुलपती ! ❀ यो बिन्ति लागोस् यहाँ ।।
यस्तो बिन्ति श्रीरामले सुनिलिया ❀ सूलोचनाको तहाँ ।
आज्ञा भो प्रभुबाट हे सति भनी ❀ नरोउ दिन्छू यहाँ ।।४५
हे पुत्री ! तिमिदेखि खूशि म भएँ ❀ दिन्छू म शिर् यै घरि ।
स्वामी नै यदि माग्दछ्यौपनिभन्या ❀ गर्छू खडा यै घरि ।।
मागील्यौ पति माग हे सति तिमी ❀ दिन्छू म सत्यै पनि ।
लंकामा गइ एक् सये वरषतक् ❀ बसौलि रानी बनी ।।४६
हूकूम् यो प्रभुको हुँदा उस घरी ❀ बाँदर् मुखामुख् गरी ।
आँट्यो लौ यसले के गर्न अहिले ❀ भन्दै अगाडी सरी ।।
यस्को मन् नउनी सरी छ कमलो ❀ मेघ्‌नाद् जिलाये अनि ।
लौ लौ कुन् गतिले श्रीराम पतिले ❀ प्रण् पूर्ण गर्ने पनि ।।४७
आफ्नू कार्य कता कता छ अहिले ❀ मेघ्‌नाद्‌बचाउँछू भनी ।
दिन्छन् यस् रितले वचन् सतिमहाँ ❀ मूर्खै भये राम् पनि ।।
यस्तै तर्क कुतर्क बात् मनमहाँ ❀ सोच्थे ति वानर् तहाँ ।
हात् जोरीकन बिन्ति गर्छिन सती ❀ पस्त्रेर आऊमहाँ ।।४८

हे नाथ् ! लौ सबभन्दछन् भुवनमा ❀ श्रीराम् दयालू भनी ।
देखें लक्षण सोहि आज मङ्गले ❀ साँच्चै कुरा हुन् भनी ॥
हे नाथ् ! यो क्षणभङ्गुरै शरिर ली ❀ के सुख् मलाई यहाँ ।
अन्त्येमा जिवधारि प्राणिहरुले ❀ जानू छ सब्‌ले वहाँ ॥४९
सम्मर्मा पतिले प्रभू-चरणमा ❀ अर्पण् शिरैको गऱ्या ।
भिक्षा तेहि म पाउँ हे रघुपते ! ❀ लीनेछु दीनू भया ॥
घट्‌घट्‌माप्रभुकोछ वास् सकलका ❀ के भन्नुपर्थ्यो यहाँ ।
दासीका दिलमा पतीसँग सती ❀ जानेछ इच्छा जहाँ ॥५०
काख्मा यी पतिको मृतक्‌शिर लिई ❀ चीता सजाईवरी ।
हूकूम् पाउँ दया-निधान् हजुरको ❀ जान्छू सती यस् घरि ॥
यस्ता धार्मिक वाणि राम प्रभुले ❀ सूनीलिनूभो तहाँ ।
आज्ञा बक्सनुभो ति सुग्रिवजिमा ❀ शिर् लीइ आऊ यहाँ ॥५१
आज्ञा श्रीरघुनाथको सुनिलिया ❀ सुग्रीव्‌जिले फेर् जसै ।
काखीमा शिर च्यापि त्यै बिचमहाँ ❀ ल्याईदिया झट् तसै ॥
हे माता ! शिर लेउ आफ्नु पतिको ❀ जाऊ लिई सङ्गमहाँ ।
इच्छा हो यदि लौ भने सति हुने ❀ जाऊ परम्पद्‌महाँ ॥५२
आज्ञा यो प्रभुको हुँदा ति सतिले ❀ शिर् थामि हात्मा लिइन् ।
आँचल्ले शिरको रगत् जति थियो ❀ रूँदै र पुछ्‌तै गरिन् ॥
यै बीच्मा प्रभुमित्र सुग्रिवजिले ❀ मानी अचम्भै तहाँ ।
हात् जोरी बिनती गऱ्या प्रभुजिथ्यैं ❀ हे नाथ ! ऐह्ले यहाँ ॥५३
भन्छिन् ई सतिले इ कट्ट-करले ❀ लेख्यो समर्-हाल् भनी ।
विश्वास् पर्न गएन यो मनमहाँ ❀ लेखीदियो हो भनी ॥

साँच्चै होयदिहाल्लेख्योपनिभन्या ❀ हाँसोस् त शिर् यो घरि ।
साँचो हो सतिका कुरा म भनुँला ❀ विश्वास मन्मा परी ॥५४
मित्रैको इ वचन् सुनी रघुपती ❀ क्यै मन्द हास्यै गरी ।
भन्नूभो मुरखै सरी किन यहाँ ❀ सोध्छौ कुरा यो घरि ॥
जो नारी पतिवर्त भारि जगमा ❀ हुन्छन् यदी लौ यहाँ ।
ईश्वर्ले वश पर्नुपर्छ उसको ❀ सेवक् समान् भै तहाँ ॥५५
यस्ता बात् दुइ मित्रको हुन गयो ❀ विश्वास पारूँ भनी ।
भन्छिन्ती सतिहाँस्नुहोस् पतियहीँ ❀ सब्का अगाडी पनि ॥
लेख्नूभो जुन हातले जुन कुरा ❀ लेखी दिनूहोस् यहाँ ।
झुट्टो हो भनि वानरादि जति छन् ❀ भन्छन् मलाई यहाँ ॥५६
सत्ती सत्यवती छु लौ यदि भन्या ❀ हाँस्नूहवस् हे पति ।
गिल्ला धेर् गरछन् प्रभूकन यहाँ ❀ वीर् छन् यहाँ जो जति ॥
यस्ता धेर् छेडको ति बात्भइसकी ❀ शिर् मेघनाद्को तहाँ ।
हाः हाः हाः खितका छोडेर बहुतै ❀ हाँस्यो सोही बीच्महाँ ॥५७
त्यस्तो अद्भुत दृश्य देखि बहुतै ❀ आश्चर्य मानीकन ।
सारा छक्क परेर पक्क परि ती ❀ थालेर टोह्लाउन ॥
शिर् नीचा गरि सुन्दथे ति जति छन् ❀ चार्खुट्टे जन्तूहरू ।
डर् मानी मनमा उसै बखतमा ❀ भन्छन् ति बाँदर्हरू ॥५८
हे नाथ् सब् भनिठान्दथ्यौँ रणमहाँ ❀ मेघ्नाद् मरेको भनी ।
मुर्कट्टा भइ हाँस्दछन् अझ भन्या ❀ के भन्नु मोऱ्यो भनी ॥
के कारण् परि हाँस्न गो शिर प्रभू ❀ यस् राक्षसैको यहाँ ।
शंका दूर् गरिबक्सनू अब पऱ्यो ❀ हामी सबैको यहाँ ॥५९

हे वीर् हो ! सतिका गती जति सबै ❀ छन् पंक्तिमा सब् भन्या ।
भो भो लौ सति ता कुनै तरहको ❀ गर्छिन् नहून् हुन्या ॥
भन्छिन् फेरि सुलोचना प्रभुमहाँ ❀ हे नाथ ! ऐह्ले यहाँ ।
संग्राम्क्यैछिनलाइ थामिलिनुहोस् ❀ बिन्ती छ मेरो यहाँ ॥६०
कान्छा ती ससुरा विभीषणमहाँ ❀ हात् जोरि बिन्ती गरिन् ।
पूलस्त्यै ऋषिका ति कूल-बिचका ❀ दीपक् समान् हौ भनिन् ॥
आत्मा स्वच्छ गराइबक्सनुभयो ❀ ज्ञानी मुनीका सरी ।
जस्ले नाम् प्रभुको लिनेछ जगमा ❀ जानेछ पाप् सब् जरी ॥६१
लंकाको अधिराज् मिलोस्प्रभुमहाँ ❀ अटल् सदा खुब् गरी ।
यै आशिष् सतिको छ लौ स्वसुरजी ❀ लिनू मनैमा धरी ॥
पाई आशिष झट् विभीणजिले ❀ क्यै भन्न लागे तहाँ ।
मेरी पुत्रवधू ! चरित्र प्रभुको ❀ अपार् छ संसार्महाँ ॥६२
कर्मैको गति भोग्नुपर्छ सबले ❀ सो कर्मका धर्मले ।
सत्ती कर्म गति प्रबल् छ जगमा ❀ भोग् गर्छ फेर् कर्मले ॥
कर्मैले ऋषि मूनि ज्ञानि बनने ❀ कर्मै छ जस् पाउने ।
कर्मै छन् सब कार्य सिद्ध गरने ❀ कर्मै छ गाल् पारने ॥६३
शास्त्रैका विधिका चिता रचि सती ❀ लौ जानु स्वर्गैमहाँ ।
लौ झट् जाउ सती ! भनूँ अब कती ❀ सुर्ता नल्यौ मन्महाँ ॥
डोलीमा चढि ती सती शिर-पती ❀ लीई खुशी भै अति ।
हे नारीहरुहो ! सुन्यौ जगतमा ❀ यै हो सतीको गति ॥६४
यै रीत्ले जब डोलिमा चढिलिइन् ❀ डोली उड्यो तेस् घरि ।
प्रस्थान् भो प्रभुको भजन् गरि गरी ❀ राम्मा अती प्रेम् धरी ॥

श्रीराम्का भजनामृतै रस पिइन् ❀ पीइन् पिइन् खुब् पिइन् ।
सव्वारी पुगिगैगयो ति सतिको ❀ मन्दोदरी जाँ थिइन् ॥६५
भेट् भो सासुजिथ्यैँ ति मन्दोदरिले ❀ प्रेम्ले अँगालो धरिन् ।
श्रीराम्माजति बात् भया ति सतिले ❀ एक् एक् गरी सब् कहिन् ॥
ब्वारीलाइ बसाइ मन्दोदरी फेर् ❀ रावण् भयामा गइन् ।
हूकूम् ली सब राक्षसी दलसहित् ❀ फर्केर आउँदी भइन् ॥६६
ताहाँदेखि उठाइ डोलि नदि औ ❀ सागर् किनारामहाँ ।
पुग्दो भो सतिको उसै बखतमा ❀ उत्री गइन् झट् तहाँ ॥
पूजाका सरजाम् अनेक् तरहका ❀ शास्त्रै विधान्ले गरी ।
चन्दन्को समिधा अतीशय यहाँ ❀ ल्याईदिया खुब् धरी ॥६७
रैती राक्षसि सब् पुग्या उस घरी ❀ घेरीलिया खुब् तहाँ ।
चीताका सरजाम् दुरुस्त सब काम् ❀ पारे उसै बीच्महाँ ॥
स्वामीको शिर काखिच्यापिसतिले ❀ चढिन् चितामा जसै ।
कोलाहल् परिगैगयो तस घरी ❀ रैतीहरूमा तसै ॥६८
सम्झाइन् सबलाइ तेस् बखतमा ❀ सूलोचनाले तहाँ ।
एक्दिन् सब्जलिजान्छअग्निबिचमा ❀ रून् छ के काम् यहाँ ॥
तत्पश्चात् सतिले मृदू वचनले ❀ मन्दोदरीमा तहाँ ।
भन्छिन्अग्नि म पाउँ सासु ! अहिले ❀ जान्छू सती भै यहाँ ॥६९
धेरै दिन् भइगो मलाइ पतिले ❀ खोज्दा हुनन् धाम्महाँ ।
चीतामा सुलगाइ अग्नि दिनुहोस् ❀ कृपा गरी खुब् यहाँ ॥
चीतामा बसि धेर् बिलाप गरदै ❀ सूलोचना खुब् अनि ।
ऊता दूत् गइगो र रावणकहाँ ❀ सम्चार् बताऊँ भनी ॥७०

पूग्यो दूत् भवनैमहाँ उस बखत् ❀ रावण् बसेकै थियो ।
सोद्धो भो कुन कारणै लिइ यहाँ ❀ आईस दूत् ! भन्दियो ॥
तेही औसर पारि दूत विरले ❀ हात् जोरि बिन्ती गर्‍यो ।
हे नाथ् ! हाजिर छू सवारि प्रभुको ❀ लौ जानु ताहाँ पर्‍यो ॥७१
सिन्दूर् भालमहाँ लगाइ सब साज् ❀ साजी चिंतामा बसी ।
पतीको शिर काखि च्यापि खुशिले ❀ जल्नै कमर् खुब्कसी ॥
बाटो लौ प्रभुको नजर् गरि गरी ❀ आउन् ससूरा भनी ।
बसेकी हुँदि ती सती-गुणवती ❀ पाऊँ म आगो भनी ॥७२
हे नाथ् ! पाल्नुहवस् ति पुत्रवधुको ❀ मन्सा पुरा गर्नुहोस् ।
पुत्रै पुत्र-वधू चिता उपरमा ❀ आगो लगाईदिनोस् ॥
यस्ताबात् सुनि क्रोधले ति दशशिर् ❀ नय्यन् बहुत् लाल् गरी ।
भन्छन् पाजि गधा तँलाइ अरती ❀ कस्ले दियो यस् घरि ॥७३
क्या हो धर्म कउन् छ गर्नु जगमा ❀ क्याहोबहुत् काम् दिने ।
क्याहो सुक्ख र भोग यो भुवनमा ❀ अन्त्ये परम्पद् हुने ॥
सानू मूर्ख भई ठुलो बात् गरछस् ❀ बुझ्दै नबूझी रती ।
संसार्मा जनमन्छ मर्छ जिव सब् ❀ यै हो सबैको गति ॥७४
संसार्मा कसलाइ भन्नु सुत फेर् ❀ कस्लाइ भन्नू पिता ।
शरीर्को भर छैन जीव सबको ❀ छिन्भर्को नाता ति ता ॥
आत्मा छन् जबसम्म यो शरिरमा ❀ हो आफ्नु जानीलिनू ।
आत्मा भिन्न भयो जहाँ शरिर यो ❀ मट्टी हो ठानीलिनू ॥७५
माटोमा गइ आगो फुक्नु मइले ❀ बेथैं भनी ठान्दछु ।
हाँस्छन्सब्मुनि ज्ञानि यस् जगतमा ❀ भन्ने म यो ठान्दछु ॥

मैना जब् उडिजान्छ जंगलमहाँ ❀ खाली पिँजाडा भयो ।
काम् के ही पिँजडाकि छैन बुझिले ❀ तेस्तै मृतक्जीव यो ॥७६
मैनारूप् भइ हंस यस् शरिरमा ❀ वास् गर्छ क्यै छिन् तहाँ ।
ऊडी त्यो परवेरु गई जब गयो ❀ के भन्नु मेरो यहाँ ॥
मत्लब्को दुनियाँ छ पाजि बुझिले ❀ मत्लब् छ शत्रू पनि ।
मत्लब्ले मइले सिता हरिलियाँ ❀ मत्लब्पुन्याउँलाभनी ॥७७
माता मत्लबि यो जगत् बिचमहाँ ❀ पीता र बान्धव् सबै ।
नानी मत्लबको छ पाजि तइँले ❀ भुल्दै नभूलेस् कबै ॥
मत्लब् कारण मेघनाद्कि पतनी ❀ जान्छे सती भै यहाँ ।
संसार्मा कोहि कार्य मत्लब विना ❀ छैनन् बुझीले तहाँ ॥७८
यस्तो वीर् मतलब् ढुँडी म अहिले ❀ जाऊँ जलाऊँ तहाँ ।
के भन्नन् दुनियाँ मलाइ अहिले ❀ लाज् लाग्छधेर् मन्महाँ ॥
त्यागीका सरि तेस् घरी ति दशशिश् ❀ दूत्लाइ अर्ती दियो ।
ऊठी झट् अब जान्छु लड्न भनिती ❀ धन्नूष हात्मा लियो ॥७९
त्यो औसर्कन पारि मन्त्रि विरले ❀ हात् जोरि बिन्ती गऱ्यो ।
हे नाथ् ! औसर छैन लड्नु अहिले ❀ भन्दै अगाडी सऱ्यो ॥
जानूपर्छ नगै त हुन्न प्रभुले ❀ चीता सती छिन् जहाँ ।
त्यागीका सरि बात् गरी भुवनमा ❀ चल्दैन बेभार् तहाँ ॥८०
अन्यायै प्रभुकै हुँदा यस बखत् ❀ भारी लडाईं पऱ्यो ।
पक्षै भै प्रभुकै लडी यस घडी ❀ ज्यू मेघनाद्को गयो ॥
सीतालाइ हरण् गरी किन यहाँ ❀ ल्याउनूभयो तेस् घरि ।
जस्-जस्का गृह-सुन्दरीहरु थिये ❀ गर्नूभयो मन्परी ॥८१

आफ्नू चाल् अति पाप् गरेर अहिले ❀ सूवर्ण लंका पनि ।
भस्मै भो सब नष्ट भो विरहरू ❀ के हुन्छ वीर् हूँ भनी ॥
पाल्नूहोस् गइ अग्नि दीइ सुतको ❀ संस्कार् क्रिया सब् पनि ।
गर्नूपर्छ गई धरम् मति लिई ❀ हुन् पुत्र मेरा भनी ॥८२
मेघ्नाद्कोशिरकाखिच्यापिसतिले ❀ नाथ्को ति बाटो हेरी ।
चीतामा छ चढेकि पुत्र-वधु फेर् ❀ सत्ती हुने मन् गरी ॥
यस्तो बिन्ति सुनेर मन्त्रि विरको ❀ दिक् मानि बोल्यो तहाँ ।
हे मन्त्री ! हिड जाउँ झट्ट अहिले ❀ चीताछ जुन्तीर्महाँ ॥८३
फूकाली शिरदेखि टोपि दशशिश् ❀ भैगो मुडूलो तहाँ ।
नाङ्गा पाउ लियो हिडी पइदलै ❀ रावण् पुग्यो तीर्महाँ ॥
श्रृङ्गार् पारि बुहारि शीश पतिको ❀ लीई चिता बीच्महाँ ।
थीयो ठूलो कठोर मन् तरपनी ❀ रोयो उ रावण् तहाँ ॥८४
हे बाबू ! तइँले मलाइ अहिले ❀ छोडी मृत्यूलोक्महाँ ।
निर्मोही भइ गैगइस् यस घरी ❀ लैजा तँ जान्छस् जहाँ ॥
तेरै खातिर राज-पाठ धन जन् ❀ थीएँ रचेको पनि ।
त्यागीकै सरि भैगइस् तँ अहिले ❀ साह्रै निठूरी बनी ॥८५
त्यो पीता जगमा छ भाग्यहिनको ❀ जस्को छोरा मर्न गो ।
टूहुरो सरि भैगयाँ म अहिले ❀ आपत् ठुलो पर्न गो ॥
यस्तै धेर् विलना गरी ति दशशिश् ❀ हात्मा अगुल्टो लियो ।
जैजै होस् युगल्को भनी अनि तहाँ ❀ आगो लगाईदियो ॥८६
हुर् हुर् हुर्र गरी बल्यो अगनि ता ❀ चौतर्फ ढाकीलियो ।
छिन्मा लाश् सतिको जली उसघरी ❀ खाग् पारिदीदो भयो ॥

आयो पुष्पविमान् उसै बखतमा ❀ चढी दुवैले तहाँ ।
पुष्पै वृष्टि हुँदै गगन्-गगनमै ❀ पौंचे परम्पद्महाँ ॥८७

## ॥ इतिश्रीसुलोचना क्षेपक कथा समाप्त ॥



# अब नारान्तक-वध

( क्षेपक )

संस्कार् म्रीतकको गरेर दशशिश् ❀ पुग्दा भए घर्महाँ ।
मन्त्रीलाइ बुलाइ फेर् रणविषे ❀ क्यै भन्न लागे तहाँ ।।
हे मन्त्री ! बलवान् जती-जति थिया ❀ यो भारि रण्मा परी ।
बीदा भै ति गया कउन् रित गरी ❀ जित्नू 'अगाडी सरी ।।१
मेघ्नाद् कुम्भकरण् सरी विरहरू ❀ भाई र छोरा गयो ।
यौटा पाजि विभीषणै अति डरी ❀ राम्को भगत् भैगयो ।।
लंका शून्य भयो सबै मरि मरी ❀ हे मन्त्रि ! सब् यो घरि ।
एक्लो छू तर लड्छु खुब् समरमा ❀ आउ्ला जसो लौ परी ।।२
सीता क्या मइँले ह्ऱ्याँ सब मरण् ❀ मैरै भयो यस् घरि ।
अलच्छिन् जुन दिन् पसीथि पुरमा ❀ आउँदै छ आपत् परी ।।
तस्मात्योकुलच्छिन्निभाउँछुपहिले ❀ भन्ने इरादा गऱ्यो ।
मन्त्री सिन्दुरले उठाइ कर झट् ❀ हात्जोरिबिन्तीगऱ्यो ।।३
हे राजन् ! किन रिस् गरेर मनमा ❀ यो कार्य गर्नू यहाँ ।
ठीक् छैन: विर धेर छन् प्रभुजिका ❀ शूरा लडाका यहाँ ।।
कोही एक् दिन पुत्र भो हजुरको ❀ मूल्मा परी तेस् घरि ।
सागर्बीचमहाँ बगाइदिनुभो ❀ ज्यूँदै छ काल्ले गरी ।।४
तेस्ले शंकरको तपस् अति गऱ्यो ❀ वर्दान् मिल्यो तेस् घरि ।
राजा भो बेहवाल् नगर् बिचमहाँ ❀ नारान्तकै नाम् धरी ।।
लावा लश्कर धेर् छँदै छ उसको ❀ शूरा लडाकाहरू ।
छोरो हो प्रभुको बखत्-बखतमा ❀ देला मदत् त्यै बरु ।।५

मन्त्रीका इ वचन् सुनीवरि सकी ❀ रावण् विरैले उहाँ ।
बोलाऊ धुमकेतुलाइ अहिले ❀ भन्ने हुकूम् भो तहाँ ॥
त्यो दूत् ताहिँथियोअगाडिसरिझट् ❀ हात् जोरि बिन्ती गर्‍यो ।
हाजिर् छू प्रभु दास सेवक यहाँ ❀ के गर्नु मैले पर्‍यो ॥६
लेखी पत्र म दिन्छु जाउ तिमिले ❀ बेह्वाल राज्यैमहाँ ।
छोरालाइ बुलाइ डाकि तिमिले ❀ लीएर आऊ यहाँ ॥
हूकूम् पाइ ति धूम्रकेतु विरले ❀ गर्दै सलामै तहाँ ।
जाँदो भो अति वेग् गरेर नउरथ् ❀ बेह्वाल राज्यैमहाँ ॥७
श्रीमान्कै कुलका चरित्र प्रभुका ❀ खग्राज् गरुड्ले तहाँ ।
सोध्नूभो अरु फेर् चरित्र प्रभुका ❀ श्रीकाग्भुसुण्डीमहाँ ॥
हेखग्राज् ! सुन भन्छु एक् समयमा ❀ लंकापुरी हो जहाँ ।
राजा रावण भै रहन्थ्यो दशशिश् ❀ बीसै भुजाका तहाँ ॥८
दस् हज्जार् सुत रावणैको हुनगो ❀ खूशी भयो खुब् जसै ।
गूरूलाइ बुलाइ कर्म सबको ❀ सोद्धो भयो झट् तसै ॥
आज्ञा रावणको हुँदा उस घरी ❀ थेच्ची धुलौटो धरी ।
खरी हातमहाँ लिएर गणना ❀ गर्थे बहुत् बेस् गरी ॥९
नक्षत्रै मुलको पर्‍यो उस घरी ❀ च्यूँडोमहाँ हात् धरी ।
भन्छन् ती गुरुजी फलादि जति छन् ❀ डर् क्यै नली खर्खरी ॥
नारान्तक् जुन पुत्र छन् हजुरको ❀ मूल्मा परे यस् घरि ।
पीतालाइ पिरेर धन्-जन सबै ❀ गर्नेछ नाश् बेस् गरी ॥१०
तस्मात् यो सुतलाइ सागरमहाँ ❀ लगी बगाईदिनू ।
पिर्नेछैन कदापि त्याग् हुनगए ❀ यै कार्य मन्मा लिनू ॥

शास्त्रैका रितले जसै गुरुजिको ❀ आज्ञा भएथ्यो अनि ।
रावण्ले मनमा विचार् गरिलियो ❀ साँच्चै कुरा हुन् भनी ॥११
आज्ञा रावणले दियो सचिवमा ❀ मेरो मुलुक् भर्महाँ ।
नक्षत्रै मुल पारि बालख जउन् ❀ जन्मन्छ सोई यहाँ ॥
तेस्ता बालखलाइ पक्रि दुतले ❀ ल्याउन् सबै यो घरि ।
जाऊ झ्यालि पिटाइदेउ अहिले ❀ सब्ले त सुन्ने गरी ॥१२
रावण्का इ वचन् सुनी सचिवले ❀ फेरी उसै बीच्महाँ ।
झ्याली पिट्न हुकूम् दियो उस घरी ❀ लंकापुरी भर्महाँ ॥
हूकूम् यो सुनि रैतिले अनिपछी ❀ मूल्मा परेका जति ।
बालख् सौंपिदिया ति दूतहरुमा ❀ सुर्ता गरी धेर् अति ॥१३
भ्यागूता सरि ल्याइ बालखहरू ❀ चोक्मा लडाईदियो ।
रावण्ले उ बखत् ति दूतहरुमा ❀ निर्मोह हूकूम् दियो ॥
हाली डालिमहाँ इ बालक सबै ❀ माया नली मन्महाँ ।
लैजाऊ अहिले समुद्र-तिरमा ❀ दीनू बगाई तहाँ ॥१४
हूकूम् पाइ ति दूतले जति थिया ❀ बालख्हरू सब् लगी ।
मक्कैका सरि पानिमा छरिदिए ❀ बालख् गए सब् बगी ॥
घासैका सरि सब् बगेर जलमा ❀ क्यै दूर् पुगेथे जसै ।
जर्रा खूब् जलमा फिजारि बररूख् ❀ मील्यो बसेको तसै ॥१५
नालैका सरि त्यो जरो हुन गयो ❀ बालख् पसे सब् तहाँ ।
च्वाप्च्वाप्च्वाप्गरिचुस्नथालेशिशुले ❀ बर्को जरो खुब् तहाँ ॥
धारो लौ दुधको बग्यो तस घरी ❀ बर्का जरादेखि ता ।
हृष्ट पुष्ट भए अलिक् दिनमहाँ ❀ सम्पूर्ण बालख् ति ता ॥१६

आठै वर्ष बित्यो यही रित गरी ❀ बर्के पिई दूध् तहाँ ।
थाले हिड्न ति अन्न जल्फलहरू ❀ खोज्दै बनै-बन्महाँ ॥
छोरो रावणको नरान्तक तहाँ ❀ बल्वान् सबैमा थियो ।
दश् हज्जार् सँगि ती लिएर सँगमा ❀ पूर्वै तरफ् त्यो गयो ॥१७
चार् सौ कोश् सफरै गरीसकि तहाँ ❀ एक् टापु देख्यो जसै ।
ऊकालो चढि टापुका थलिमहाँ ❀ पुग्दा भया सब् तसै ॥
देखे एक कुटी उही थलिमहाँ ❀ लौ जाउँ साथी ! भनी ।
शुक्रार्यजिका पुगी नजिकमा ❀ हाँसे ति बालख् पनि ॥१८
शुक्राचार्यजिले बसाउनुभयो ❀ हे छोकडा हो ! बस ।
सारा हाल् उ बखत् सुनाउनुभयो ❀ ती जन्मिएको तब ॥
आफ्ना उत्पति सब् सुनी जब लिया ❀ घोर्ले शिशू सब् तहाँ ।
शुक्राचार्यजिले नरान्तककनै ❀ क्यै मन्त्र दीए उहाँ ॥१९
शुक्राचार्यजिले नरान्तक भनी ❀ बोलाउनूभो उहाँ ।
ढोगी पाउमहाँ नरान्तक गयो ❀ साथी लिई सब् तहाँ ॥
वन्मा शंकरको अती तप गर्‍यो ❀ एकाग्र भै मन्महाँ ।
ठूलो तप् त्यसले गर्‍यो वनमहाँ ❀ शंकर् रिझाऊँनमा ॥२०
बालक् साथि सबै मिली वरिपरी ❀ गर्थे तपस् खुप् गरी ।
ब्रह्माजी बहुतै खुशी हुनगई ❀ पाल्नूभयो तेस् घरि ॥
नारान्तक् ! वर माग् म दिन्छु अहिले ❀ भन्दा विधीले तहाँ ।
कृपा हुन्छ यदी भन्या अमर वर् ❀ पाऊँ हजुर् लौ यहाँ ॥२१
अस्त्रैले नमरूँ न शस्त्रहरुले ❀ खड्गै खुँडा वज्रले ।
दैत्यै राक्षसले कदापि नमरूँ ❀ न मै मरूँ कालले ॥

दैत्यै राक्षसलाइ मार्न म सकूँ ❀ मारौँ रिपू सब् तहाँ ।
यै वर्को अभिलाष् छ हेविधि प्रभु ! ❀ ऐह्ले मलाई यहाँ ॥२२
जुन् वर् माँगिलियौतिमीले अहिले ❀ हे भक्त ! बालक् यहाँ ।
दिन्छू सब् वर ठीक् तथापि मइले ❀ भन्छू सुनील्यौ यहाँ ॥
नाऊँ एक् दधिबल् छ वीर जगमा ❀ तिन्को अगाडी परी ।
लड्नै मन्सुब क्यै नगर्नु तिमिले ❀ मार्नेछ माखो सरी ॥२३
ताहाँदेखि गएर बालकहरू ❀ तप् गर्दथे धेर् जहाँ ।
हूकूम् यो विधिले दीनू पनि भयो ❀ वर् मागिल्यौ सब् यहाँ ॥
वाणी यै विधिको सुनी ति सबले ❀ हात् जोरि बिन्ती गरी ।
भन्छन् सब् शिशु रीपु कारणमहाँ ❀ जीतूँ सबै तेस्घरि ॥२४
बालक्को विनती सबै सुनिलिया ❀ ब्रह्माजिले फेर् तहाँ ।
हूकूम्भोकपिभालु छाडि सबजीव् ❀ जीतीलिए रण्महाँ ॥
येती वर् सबलाइ दीवरिसकी ❀ ब्रह्मा गए धाम्महाँ ।
अध्कल्टो वरले के गर्नु अहिले ❀ फेर् तप् गरे वन्महाँ ॥२५
एक् पाऊ कतिले शिरैका भरले ❀ टेकी जमीनैमहाँ ।
गर्थे तप् शिवको ठुलो वर लिने ❀ इच्छा गरी मन्महाँ ॥
यै रीत्ले तप धेर् गरेर सबले ❀ क्यै दिन् बिताईलिया ।
साँढे वाहन गौरि शंकर प्रभू ❀ आएर दर्शन् दिया ॥२६
हे बालक् ! तिमिदेखि खूशि म भयाँ ❀ वर्दान लेऊ भनी ।
आज्ञा भो शिवको उसै बखतमा ❀ ध्यान्छाडिहेऱ्या पनि ॥
जट्टाजूटभभूत्त्रिपुण्ड्रकरमा ❀ त्रिशूल् लिएका पनि ।
चन्द्रै भाल त्रिलोचनै शिरमहाँ ❀ गङ्गा बगेकी पनि ॥२७

कम्मर्मा मृगचर्म डम्बरु अनी ❀ काँध्मा बघम्बर् पनि ।
पाल्नूभो तप देखि खूशि हुनगै ❀ गौरी-सहित्ले अनि ॥
गौरी-शंकरको परी चरणमा ❀ नारान्तकैले तहाँ ।
माग्यो वर् शिवजी ! मलाइ जुन काम् ❀ लाग्नेछ संकट्महाँ ॥२८
हे शंकर् ! पुर एक यै वनमहाँ ❀ छीपीरहेको तहाँ ।
आधार् क्यै नरहोस् कुनै बइरीले ❀ देख्दै नदेख्ने उहाँ ॥
पाऊँ यै वर हामिलाइ अहिले ❀ गर्छौं गई राज् तहाँ ।
यै इच्छा छ र हामिमा यस घरी ❀ कृपा हवोस् लौ यहाँ ॥२९
'तथास्तु' वर त्वं भनेर शिवले ❀ हूकूम् भएथ्यो जसै ।
इच्छा माफिक एक् नगर् गगनका ❀ बिच्मा तयार् भो तसै ॥
वृषभ्माथि चढेर गौरि शिवजी ❀ आकाश मार्गै गरी ।
पाल्नूभो खुशिले उसै बखतमा ❀ कैलास लौ त्यै घरि ॥३०
सुन्दर् बेस् बढिया क्यै छैन घटिया ❀ किल्ला तयारी भयो ।
त्यै कारण् भइ नाम तेस् नगरको ❀ बेह्वाल पुर्भै रह्यो ॥
हात्ती रथ् हय जन् प्रशस्त भइ धन् ❀ स्वर्गै समान्को पनि ।
शंकर्को करुणा हुँदा नगर त्यो ❀ अत्यन्त राम्रो बनी ॥३१
राज्यै भोग् गरि खुब् बस्यो चयनले ❀ क्यै दिन् नरान्तक् तहाँ।
अच्चानक् दधिबल् पुग्यो उस घरी ❀ बेह्वाल राज्यैमहाँ ॥
सुन्दर् त्यो नगरी अती मन परी ❀ देखेर सोही घरि ।
राक्षस्का सँगि साथि भै त्यो दधिबल् ❀ बस्तो भयो खुब् गरी ॥३२
पढ्थे सङ्-सङ्मा गई गुरुकहाँ ❀ एक् दिन् गुरूले पनि ।
भन्नूभो गुरुले दीधबल् तइँले ❀ मार्लास् गुरूभाइ पनि ॥





ा इ वचन् सुनेर दधिबल् ❀ क्रोध्ले फिलुङ्गो भयो ।
ने के पढाउनन् भनिकनै ❀ छाडी नगर् त्यो गयो ॥३३

जंगलमा मधुर् स्वर गरी ❀ गायन् गरी खुब् तहाँ ।
नारदलाइ वृक्षमुनि ती ❀ बसीरहेका उहाँ ॥
ले पूर्ण भएर ठम्ठम परी ❀ जाँदै थियो त्यो जसै ।
ा नारदले दधीबल तिमी ❀ काँ जान लाग्यौ यसै ॥३४

्मा त श्रीरामका भजनले ❀ संसार पार् तर्छ ता ।
ो भज नाम् यही छ ठुलोकाम् ❀ जान्छौ दगुर्दै कता ॥
रूनु कराउनु इ बेवहार् ❀ जो छन् इ संसार्महाँ ।
ा सब् जनले छ जानु बुझिल्यौ ❀ काम् दिन्न अन्तैमहाँ ॥३५

न्मा बसनू खरानि घसनू ❀ तप् गर्नु राम्कै पनि ।
ा ज्ञान् दधिबल्जिलाइदिइफेर् ❀ गाउँदै गये ती मुनि ॥
ा बात् मुनिको सुनेर दधिबल् ❀ ज्ञान्ले मगन् भैरह्यो ।
ागीरि शिखर्विषे उ दधिबल् ❀ तप् गर्न जाँदो भयो ॥३६

ी खर् उसले बनाइ कुटिया ❀ पद्मासनै झट् लिई ।
ि जप् अनि तप् एकाग्र मनले ❀ श्रीराममा मन् दिई ॥
नारद ब्रह्मलोक् पुगिगया ❀ ब्रह्मा बस्याका जहाँ ।
हाल् दधिबल्जिका कहिदिया ❀ खूशी भया मन्महाँ ॥३७

्का कुलमा प्रतापि जगमा ❀ नाम् बिन्दु राक्षस् थियो ।
मा गइ इन्द्रलाइ त्यसले ❀ आ लड् भनी हाँक् दियो ॥
वर्षैतक खुब् लडाइँ भइगो ❀ द्यौता र दानव्महाँ ।
ैमा गइ इन्द्रले ति सबको ❀ नाश् गर्दिए छिन्महाँ ॥३८



राक्षस् बिन्दु थियो उसै नगरिमा ❀ डर् मानि रण्देखि ता ।
कन्या बिन्दु भनी थिइन् रुपवती ❀ विद्वान् पनी खुब् ति ता ॥
नारान्तक् विरलाइ छोरि अहिले ❀ दिन्छू भनी झट् उहाँ ।
कन्यादान् सब शास्त्र माफिक गरी ❀ छोरी दियो लौ तहाँ ॥३९
सुन्दर् नारि पतिव्रता अति थिइन् ❀ शोभा शिलैकी पनि ।
बस्थिन् ती पतिका सँगै चयनले ❀ बेह्वाल्की रानी बनी ॥
आज्ञा भो ति सबै सुनी बुझिलियाँ ❀ बेह्वाल राज्को पनि ।
भन्नूहोस् धुमकेतुले चिठि लिई ❀ काहाँ पुग्यो लौ अनि ॥४०
रावण्ले जसलाइ पत्र लिइ झट् ❀ बेह्वाल पुर् जा भनी ।
भन्दो भो विरपुत्रलाइ लिइ आ ❀ साथ् फौजईका पनि ॥
सो वीर् धूमकेतू पुग्यो नगरिमा ❀ नारान्तकै छन् जहाँ ।
सुन्दर् राजमहल् बहुत् बेस अचल् ❀ चहल्पहल् खुब्तहाँ ॥४१
त्यो देखी धुमकेतु छक्क परिगो ❀ पक्कै पर्‍यो झन् अनि ।
हाजिर् राजमहल्विषे ति विरले ❀ पौचाउँदो भो पनि ॥
फाटक्का दुत एक् गई महलमा ❀ हाजिर् दिएथ्यो जसै ।
ली आऊ अहिल्यै भनेर नृपले ❀ आज्ञा दिए लौ तसै ॥४२
देखी त्यो दुतलाइ पत्र सँगमा ❀ लिई आएको पनि ।
कस्को पत्र लिएर आज तिमिले ❀ आयौ यहाँ लौ भनी ॥
सोधी पत्र लिई पढ्यो जब तहाँ ❀ ऊठी महल्मा गयो ।
रानी बिन्दुमतीजिका नजिकमा ❀ सब् हाल भन्दो भयो ॥४३
लंकाको सब हाल् सुनी ति सतिले ❀ हात् जोरि सोही घरि ।
हे नाथ् ! क्यै बिनती म गर्छु अहिले ❀ भन्दै चरण्मा परी ॥

अयोध्यापतिका शरण् लिनुभया ❀ आनन्दले राज् गरी ।
बस्नेछौँ दुइ हामि यस् नगरिमा ❀ यै चालले हर्षरि ॥४४
ब्रह्मा विष्णु महेश नाम् फरक छन् ❀ हुन् तीन एकै सरी ।
जस्का पूर्ण कृपा हुँदा यस घरी ❀ बस्छौँ चयन् खुब् गरी ॥
तस्मात् कारण वैरभाव तिनमा ❀ गर्नू असल् हो कहाँ ।
पीता राक्षसका विरोध बढिया ❀ यो अन्त्यसंग्राम्महाँ ॥४५
रानीका इ वचन् विषै सरि भयो ❀ ऊठेर गिह्ला गऱ्यो ।
मन्त्रीलाइ बुलाइ क्रुद्ध मुखले ❀ यो हुक्म दीदो भयो ॥
हे मन्त्री ! तिमिले त झट्ट अहिले ❀ सामग्रि रण्को पनि ।
शस्त्रै अस्त्र सहीतको गर तयार् ❀ पैदल् फउज् सब् गनी ॥४६
हूकुम् यो सुनि मन्त्रिले उस घरी ❀ रण्भेरि नाद्ले गरी ।
तैयार् सब् चिजको गराइ सहजै ❀ बिन्ती गऱ्यो तेस् घरि ॥
मन्त्रीको बिनती सुनेर नृपले ❀ शस्त्रै लिई हात्महाँ ।
नारान्तक् विर चल्दियो उस घरी ❀ लंकापुरी हो जहाँ ॥४७
त्यै औसर्कन हेरि बिन्दुमतिले ❀ सोचिन् मनैमन्महाँ ।
मेरो यो शुभ बिन्ति केहि नसुनी ❀ हीडे इ लंकामहाँ ॥
कुन् रीत्ले एकलै बसी पुरमहाँ ❀ दिन् काट्नु मैले भनी ।
दग्गुर्दै गइ स्वामिका नगिचमा ❀ यो बिन्ति लाइन् पनि ॥४८
पत्रैमा सब हाल् सुनी जब लियाँ ❀ मन् भो मलाई पनि ।
दर्शन् सासुजिको म पाउँ प्रभुनाथ् ❀ जान्छू म लंका भनी ॥
आएकी छु शरण् लिई हजुरले ❀ दासी लिई सङ्महाँ ।
जान्छू साथमहाँ प्रभूकन यहाँ ❀ लंकापुरी हो जहाँ ॥४९

नारीका इ वचन् सुनेर विरले ❀ क्यै मन्द हास्यै गरी ।
पाल्कीमाथि बसालि साथि सँगिनी ❀ लीएर गो तेस् घरि ॥
धेरै काल् परदेश् हिडी जब सक्या ❀ क्यै दूर बाँकी थियो ।
भारी चौरमहाँ बसेर सब फौज् ❀ आरामि लीदो भयो ॥५०
आकाश् निर्मल अन्धकार्सरि भयो ❀ हिड्दा फउज्ले तहाँ ।
क्या हो यो भनि रामको सोधनिभो ❀ भक्तै विभीषण्महाँ ॥
यो आज्ञा विभीषण्जिले सुनिसकी ❀ हात् जोरि बिन्ती गरे ।
हेनाथ् ! यो निशिचर्नरान्तकफउज् ❀ आएर वास् ता गरे ॥५१
हूकूम् रावणको हुँदा इ विर सब् ❀ जानै ति लंकामहाँ ।
पक्षै रावणको गरेर यसले ❀ लड्नेछ संग्राम्महाँ ॥
छोरो रावणको नरान्तक मुल्या ❀ प्रख्यात् छ लोक्भर्महाँ ।
पाल्की बिन्दुमतीजिको छ बिचमा ❀ लाज्ले रहेकी तहाँ ॥५२
हास्यैरस् विभीषण्जिको सुनिलिई ❀ खुब् हाँस्नुभो राम् तहाँ ।
महावीर् हनुमान् उठेर विनती ❀ गर्दा भए राम्महाँ ॥
हे नाथ् ! हे करुणानिधान् ! हजुरको ❀ सेवक् चरण्को यहाँ ।
हूकूम् पाउँ सहज् गई म अहिले ❀ बूझेर आऊँ तहाँ ॥५३
श्रीराम्को चरणारविन्द मनले ❀ हूकूम् शिरोपर् धरी ।
आकाश् मार्ग गरी कुदेर हनुमान् ❀ पाल्नूभयो तेस् घरि ॥
फौज्का ऊपर रूप् धरी गिरि सरी ❀ गर्जन् बहूतै गर्‍या ।
खल्बल् राक्षस फौजमा परिगयो ❀ हा हा गरी सब् डर्‍या ॥५४
आश्चर्यै हुन गो र सोहि घरिमा ❀ मन्त्री बुलाई तहाँ ।
सोद्धो भो बेहवालको नृपतिले ❀ फेरी उसै बीच्महाँ ॥

हे मंत्री ! अति छक् पर्‍याँ यस घरी ❀ को हो यो वीर् यस्तरी ।
भाद्रै मासमहाँ गगन्-बिचमहाँ ❀ गर्जन्छ मेघ्कै सरी ॥५५
वायूका सुत हुन् बलिष्ठ हनुमान् ❀ श्रीरामका फौज्महाँ ।
हाम्रो तागत हेर्नलाइ अहिले ❀ आए फउज्-बीच्महाँ ॥
जस्ले सागर पार् तरेर सुनको ❀ लंका जलाईदिया ।
जस्ले अक्षकुमार मारि रणमा ❀ काल्नेमि धूलो गऱ्या ॥५६
जस्ले सेतु बनाइ सागरमहाँ ❀ राम्को फउज् तार्दिया ।
आकाश् मार्ग गरेर औंठि जसले ❀ लगी सितामा दिया ॥
यिन्को बल् पुरुषार्थ पृथ्वितलमा ❀ शेष् शारदाले पनि ।
वर्णन् गर्न कठिन् छ यस् भुवनमा ❀ यस्ता ति हुन् वीर् भनी ॥५७
यो बिन्ती जब मंत्रिले गरिलिया ❀ दाह्रा किटी खुब् उहाँ ।
नारान्तक् अति क्रोधले धनुषवाण् ❀ लीई उठाई तहाँ ॥
मार्छू यस्कन हेर्छु तागत यहाँ ❀ भन्ने इरादा गरी ।
खैँची वाण लियो उसै बखतमा ❀ आए हनूमान् सरी ॥५८
छाड्नैलाइ नपाइ वाण् सहजमा ❀ हन्मान्जिले तेस् घरि ।
गेमारो उखुकै सरी गरि गरी ❀ भाँचीदिया तेस् घरि ॥
यै रीत्ले बिस पाँच् धनुष् सहजमा ❀ टुक्-टुक् गराईदियो ।
लाछीका सरि भै नरान्तक तहाँ ❀ क्यै भन्न लाग्दो भयो ॥५९
तेरो तागत हेर्नलाइ मइले ❀ लीएँथेँ सानू धनू ।
भैगो जा बनदर् घमण्ड गरछस् ❀ लौ आ तँ कुश्ती लडूँ ॥
यस्तै रीत् अति धेर् कुरा गरि गरी ❀ झुक्क्याइ तेस्ले तहाँ ।
ठाडो मुड्कि उज्याइ तेस् असुरले ❀ हान्यो कठोर् छातिमा ॥६०

हाः हाः हाः गरि हाँस्नुभो हनुमते ❀ ठट्टा गरी खुब् अनि ।
भन्नूभो तइँ लड्नलाइ अहिले ❀ आएको होस् लौ भनी ॥
पाजी रावणको त पक्ष हुनको ❀ जान्छस् त लौ जा तहाँ ।
एक् मुड्की सहिले लौ मेरि पनि ले ❀ जा फेरि लंकामहाँ ॥६१
येती बात भनी महाविरजिले ❀ मुड्की उज्याई तहाँ ।
हान्नूभो उसलाइ तेस् घरिमहाँ ❀ ताकेर नाक्कैमहाँ ॥
मुड्कीकै भइगो पहाड गिरिगो ❀ मानू कपालैमहाँ ।
थच्चक्कै बसिगो त्यो नाक धसिगो ❀ लोकै सरीको उहाँ ॥६२
यस्तो चाल् नृपको देखेर सब फौज् ❀ राक्षस् भएका जति ।
हात्मा खड्ग लिएर तेस् बखतमा ❀ आए दुगुर्दै अति ॥
हन्मान्ले किन बेर् गरे यस घरी ❀ बुझ्नै गएका थिए ।
हूकूम् भो रघुनाथले पनि तहाँ ❀ अङ्गद् बुलाईलिए ॥६३
हे अङ्गद् ! तिमि जाउ बूझिकन झट् ❀ आऊ गई लौ तहाँ ।
के कारण् भइ बेर् गरे भगतले ❀ राक्षस्का फौजैमहाँ ॥
हूकूम् यो प्रभुको लिएर केहि फौज् ❀ अंगद् गए लौ तहाँ ।
शीला पत्थर बोकि बोकि सबले ❀ राक्षस्सका दल्महाँ ॥६४
असीना सरि अंगदादि विरले ❀ वर्षाए पत्थर् जसै ।
चोट् खाई सब राक्षसादि जति छन् ❀ गिर्दा भए खुप् तसै ॥
मार्काट् खुब् भइगो समर्भुमिमहाँ ❀ बाँदर्हरूमा पनि ।
लागी चोट् तरवारको जमिनमा ❀ गिर्थे बितायो भनी ॥६५
माहावीर् हनुमानले उस घरी ❀ अङ्गद् बुलाई तहाँ ।
भन्नूभो हिड़ पाजिलाइ अहिले ❀ मारौँ निमोठौँ यहाँ ॥

सागैका सरि फौजलाइ दुइले ❀ थाले निमोठ्नै जसै ।
हा हा पर्न गयो ति राक्षसमहाँ ❀ भाग्दा भए सब् तसै ॥६६
यै रीत्ले सब फौज् लिएर हनुमान् ❀ आए श्रीराम्-पाउमा ।
चेप्टे नाक् लिइगो नरान्तक पनी ❀ लंकापती छन् जहाँ ॥
अङ्गद् श्रीहनुमान् गई चरणको ❀ दर्शन् गरे लौ तहाँ ।
बाबू रावणको नरान्तक पनी ❀ पर्दो भयो पाउमहाँ ॥६७
आदी अन्त्य सबै बताइ दशशिश् ❀ नारान्तकैमा त्यहाँ ।
वीर् वीर् जो रणमा परे उस घरी ❀ एक् एक् गरी सब् वहाँ ॥
पीताका दुखका वचन् सुनिसकी ❀ नारान्तकैले तहाँ ।
हे पीता ! अब डर् नमानि प्रभुले ❀ राज् गर्नुहोस् लौ यहाँ ॥६८
लड्डूँला रिपुदल् निभाइ अहिले ❀ भन्ने इरादा गरी ।
आएको हुँ चरण्विषे प्रभुजिका ❀ एकाग्र चित्तै धरी ॥
भोली रामफउज् रणस्थलमहाँ ❀ मार्नेछु एक् एक् गरी ।
मार्नेछू दुइ भइलाइ मइले ❀ मूसो सरीकै गरी ॥६९
काका हो तर मार्छु फेर् विभिषणै ❀ बैमान् दगाबाजलाई ।
धन्दा क्यै मनमा नलीं हजुरले ❀ आशिष् दिनूहोस् मलाई ॥
रावण्ले यति बात् सुनी जब लियो ❀ नारान्तकै वीरको ।
धन्ये पुत्र भनेर गद्गद भई ❀ चुम्बन् लियो शीरको ॥७०
रानी बिन्दुमती गई चरणमा ❀ श्री सासुजीको परिन् ।
सासू मन्दोदरीजिले उस घरी ❀ आशिष् बहूतै दिइन् ॥
मन्त्रीलाइ बोलाइ तेस् बखतमा ❀ लंकापतीले तहाँ ।
नाच् गान्लौ हुनुपर्छ हे सचिव हो ! ❀ भेट् पुत्र प्रेमैमहाँ ॥७१

यस्तो रावणको हुकूम् सुनिलिई ❀ छानेर कस्बीहरू ।
ल्याई गान-बजान नाच् हुन गयो ❀ धेरै बयान् क्या गरूँ ॥
पाउ्नाको खुब मान दान् गरिसकी ❀ दिन् बीति रात् पर्न गो ।
खूशी भै दशशिश् शयन् गृहमहाँ ❀ सुत्नै भनी पुग्न गो ॥७२
त्यै औसर्कन पारि मन्दोदरिले ❀ भन्दै चरण्मा परिन् ।
सीता सौंपिदिनूहवस् हजुरले ❀ बिन्ती चरण्मा गरिन् ॥
यस्को कारण इन्द्रजित् मरिगयो ❀ धेर् वीर् मरे रण्महाँ ।
सीता यै घरमा रहिन् यदि भन्या ❀ सुख् छैन राज्यैमहाँ ॥७३
यस्ता रीत्सित रानि मन्दोदरिले ❀ सम्झाउँदा झन् तहाँ ।
व़ास्ता केहि गरेन मन्दोदरिको ❀ क्रोधै गरी मन्महाँ ॥
रीसाई झटका दिई उठिगयो ❀ सुत्तीनँ याहाँ भनी ।
त्यो रात् अन्त बिताइ खुब् चयनले ❀ उठ्तो भयो फेर् अनि ॥७४
प्रातःकालमहाँ उठीकन छिटै ❀ श्रीराम् रमाका पति ।
भन्नूभो सबलाइ जाग विर हो ❀ भैगो उज्यालो अति ॥
स्नान् औ ध्यान् सब कर्म धर्म सबले ❀ गर्रीसक्या फेर् पनि ।
अमृत् पान् सबले गरे उस घरी ❀ लड्नै तयार् फेर् बनी ॥७५
शीला शैल उठाइ फौजहरुको ❀ कोयर् बँध्यो फेर् तहाँ ।
हूकूम् खातिर बाँदरादि विर सब् ❀ हेर्थे श्रीराम् मुख्महाँ ॥
राम्-लक्ष्मण् दुइ भाइले करमहाँ ❀ लीए धनुष् वाण् पनि ।
आज्ञा भो प्रभुबाट हीड विरहो ❀ लड्नै तयारी बनी ॥७६
कूँच् भो राम्दलको समर्-भूमिविषे ❀ भारी तयारी पनि ।
सम्चार् राक्षसले सुनी जब लियो ❀ तैय्यार् भए ती पनि ॥

आए फौजहरू चिंटी सरि भई ❀ साथ्मा नरान्तक् पनि ।
खूँडाढाल् तरबार् धनुष् लिइ लिई ❀ अत्यन्त बल्वान् बनी ॥७७
नारान्तक् रथमा चढी गगनमा ❀ उड्थ्यो चिलैका सरी ।
राम्दल्मा मोहनास्त्र छाडि तसले ❀ मूर्छा भयो फौज् लडी ॥
पारी मूर्छित तेस् घरी असुरले ❀ हा हा मचाईदियो ।
राम्लाई उस पापि दुष्टमतिले ❀ खुब् गालि दीदो भयो ॥७८
माता कैकइले लगारि वनमा ❀ घुम्छस् तँ योगी बनी ।
सीताको पछि लागि कुक्कुर सरी ❀ आइस् तँ लड्नै भनी ॥
भूभार् हर्छु म लौ भनेर सब धाक् ❀ लाइस् जगत् भर्महाँ ।
यस्तो रीत्सित गालि खूब् असुरले ❀ दीयो उसै बीच्महाँ ॥७९
दुर्वाच्यै प्रभुमा हुँदा उस घरी ❀ कान् थुन्थे सब्ले तहाँ ।
जाम्बूवान् अति क्रोधले तस घरी ❀ गर्थ्यो अघोर् स्वर् वहाँ ॥
त्यै बीच्मा अनि दुष्टले अति ठुलो ❀ लीयो त्रिशूलै तहाँ ।
हान्दो भो प्रभुको कृपा हुन गई ❀ पक्रीलिये झट् वहाँ ॥८०
पक्री सोहि त्रिशूल् असुर्कन तहाँ ❀ श्रीजाम्बवान् वीरले ।
हान्नूभो अति वेगले असुर त्यो ❀ गिर्दो भयो पीरले ॥
त्यै बीच्मा कर थापि पक्रिकन फेर् ❀ घूमाइ फाल्दा महाँ ।
डल्लैका सरि पुग्नगो असुर त्यो ❀ रावण् रहन्थ्यो जहाँ ॥८१
यस्तो चाल्कन देखि रावण उठ्यो ❀ काँप्दै र रूँदै तहाँ ।
हा हा मच्च गयो चऊतरफ सब् ❀ लंका-पुरीभर्महाँ ॥
लाज्ले छक्क पर्‍यो नरान्तक अती ❀ धेरै बताऊँ कति ।
मर्रे तुल्य सरी नरान्तक तहाँ ❀ भैगो असुर् खुब् अति ॥८२

क्रोध्ले पूर्ण भई अदृश्य रुप ली ❀ आयो श्रीराम् दल्महाँ ।
बीस् वाण् हातमहाँ लिएर उसले ❀ प्रहार् गऱ्यो खुब् तहाँ ॥
सोही वाण् गइ वानरादिहरुमा ❀ लाग्दा अनेक् वीर् गिरे ।
अदृश्यै शर आइ चोट परदा ❀ छक्कै सबै वीर् परे ॥८३
हेरे फेरि यताउती वरिपरी ❀ लाग्दैन पत्ता कहीँ ।
हे नाथ् ! हे करुणानिधे ! भनि भनी ❀ गिर्थे जमीन्मा तहीँ ॥
यस्ता रीत्सित अङ्गदादिहरुमा ❀ धेर् बाण छोड्यो तहाँ ।
शत्रू सामुमहाँ नदेखि विर सब् ❀ पूगे ति लंका तहाँ ॥८४
क्रोध्ले पूर्ण भएर बाँदरहरू ❀ जो मिल्थे बाटामहाँ ।
हानी मुड्कि घुसुक्क पारि बहुतै ❀ हिड्थ्या ति रस्तामहाँ ॥
घर्-घर्मा निशिचर् लगाइ आगलो ❀ गर्थे ति बन्दै पनि ।
शहर्भित्र पसी उपद्रव गरे ❀ आएर बाँदर् भनी ॥८५
नारी राक्षसका जती जति मिले ❀ पस्सेर कोठामहाँ ।
च्याती सब् कपडा बनाइ चिथडा ❀ यै हाल गर्थे तहाँ ॥
यस्तै रीत्सित बाँदरादि विरले ❀ धुम्धाम् मचाईदिया ।
हा हा मच्च गयो सबै शहरमा ❀ यै रीत्ले हुर्मत् लिया ॥८६
कोलाहल् परदा नरान्तक पनी ❀ ऊडेर लङ्कामहाँ ।
दाखिल् भो कति कारणै हुन गई ❀ हा हा पऱ्यो लौ तहाँ ॥
नारान्तक् विरले तसै बखतमा ❀ हप्काउँदो भो तहाँ ।
लाच्छी बाँदर भागि आइ अहिले ❀ उत्पात् मचायौ यहाँ ॥८७
यस्तो घुर्कि सुनी ति बाँदरहरू ❀ पत्थर् लिई झट् तहाँ ।
वर्षाका सरि सब् मिली उस घरी ❀ ठोके ति वीरैमहाँ ॥

धन्नुष्मा सर सौ चढाइ उ बखत् ❀ नारान्तकैले पनि ।
छोड्यो बाण् कपि भालुका उपरमा ❀ मार्छू सहज्मा भनी ॥८८
उफ्री सुग्रिवले ति वाणहरु झट् ❀ पक्रेर भाँचीदिया ।
कस्सी मुड्कि निधारमा उस बखत् ❀ ताकेर हानीदिया ॥
दुग्गुर्दै गइ लात्ति अङ्गदजिले ❀ हान्नूभएथ्यो जसै ।
कन्याक्कै भइ भूमिमा उस बखत् ❀ रथ् चूर्ण भैगो तसै ॥८९
उफ्री झट् हनुमानले उस घरी ❀ ताकेर छातीमहाँ ।
हान्दा सारथि मूख बाइ सहजै ❀ गैगो परम्धाम्महाँ ॥
यै रीत्ले दिन बित्नगो निशि भयो ❀ श्रीरामका दल्हरू ।
फर्के क्याम्पमहाँ खुशी भइ भई ❀ राज् हुन्थ्यो जाहाँ प्रभु ॥९०
कोमल् पाउमहाँ टेकाइ शिर वीर् ❀ हट्थे पछाडी अनि ।
पीठ्मा रामजिले हातै फेरिदिदा ❀ मिट्थ्यो थकाई पनि ॥
नीशी गो जब प्रात भो विरहरू ❀ ऊठेर स्नानै गरे ।
राजा राम् प्रभुका चरण् कमलमा ❀ दर्शन् सबैले गरे ॥९१
फल् फूल् खाइ रमाइ बाँदरहरू ❀ टुन्नै गरी पेट् तहाँ ।
हात् जोरी विनती गरे प्रभुजिमा ❀ जानै लडाईंमहाँ ॥
मूर्छा खुल्न गयो बिहानिपख फेर् ❀ नारान्तकैको पनि ।
फौज्लाई त बुलाइ तत्पर भयो ❀ गर्छू लडाईं भनी ॥९२
जालीका सरि कीर्त्यरूप् धरिधरी ❀ मायावि जाल् खुब् छरी ।
लड्थ्यो पाजि अती रणस्थलमहाँ ❀ चिन्नै नसक्ने गरी ॥
आँधीका सरि अन्धकार् गरिदियो ❀ भारी रणस्थल्महाँ ।
हाहाकार् परि बाँदरादि सब दल् ❀ भागीगए राम्कहाँ ॥९३

यस्तो आपत देखि राम् प्रभुजिले ❀ एक् वाण् भुजामा लिया ।
हानी त्यस् अँधियारिलाइ सहजै ❀ छर्लङ्ग पारीदिया ॥
अन्धैकार् जब बित्न गो विरहरू ❀ फेरी समर्मा सरी ।
पुट् पाए जब रामका ति सब वीर् ❀ लड्थे बहुत् बेस् गरी ॥९४
क्रोध्ले पूर्ण भएर बाँदरहरू ❀ घुर्की बहूतै दिई ।
गर्धन् राक्षसका चिचिण्डो सरि खुब् ❀ भाँच्थ्या अती रिस् लिई ॥
त्यस्तो उग्र कुचाल देखि सब हाल् ❀ नारान्तकै वीर् तहाँ ।
मोहैनास्त्र चढाइ ताँदो बिचमा ❀ हान्दो भयो फौज्महाँ ॥९५
त्यो वाण् बाँदरका फउज् बिचमहाँ ❀ डोरी समान्को तहाँ ।
जाई बाँदरलाइ बाँधि उसले ❀ फाल्थ्यो छ रावण् जहाँ ॥
आफ्नू सामु महाँ ति बाँदरहरू ❀ बन्धन् र मूर्छा जति ।
देखी रावणले प्रसन्न हुनगो ❀ पापी अधम् त्यो अति ॥९६
दुश्मन्का सब चाल देखि रघुवीर् ❀ हन्मान्जिलाई उहाँ ।
हूकूम् गर्नुभयो ति बाँदरहरू ❀ जाऊ छुटाऊ तहाँ ॥
श्रीराम्का इ वचन् सुनी जब लिया ❀ हन्मान्जिले त्यै घरि ।
शीला हातमहाँ लिएर झटपट् ❀ कूदे अती वेग् गरी ॥९७
लंका टापुमहाँ पुगेर विरले ❀ राक्षस्का फौजैमहाँ ।
थाले छोड्न शिला झरी सरि गरी ❀ हाँसेर खूब् मौजमा ॥
हाँसो श्रीहनुमानको सुनि तहाँ ❀ मूर्छीत बाँदर्हरू ।
जाग्या नैन उघारि तेस् बिचमहाँ ❀ तोड्या ति बन्धन्हरू ॥९८
फेरी तेस् बिचमा ति बाँदरहरू ❀ सबले एकै स्वर् गरी ।
थाले गर्जन गर्न सोहि घरिमा ❀ ठीक् भाद्रको मेघ् सरी ॥

थिच्नु कुट्नु निमोठि प्राण लुटनू ❀ गर्थे मिली काम् सबै ।
रीपूका दल मार्नलाई तिनले ❀ लागेन धेर् बेर् कबै ॥९९
यस्ता रीत्सित मारि राक्षसहरू ❀ अंगद् हनूमान् तहाँ ।
फर्के सब् दल साथमा लिइवरी ❀ राम्चन्द्रजी छन् जहाँ ॥
हूकुम् पाइ रमाइ श्रीप्रभुजिका ❀ भाई ती लक्ष्मण् पनि ।
हात्मा वीर धनुष् लिई अघि सऱ्या ❀ जान्छू समर्मा भनी ॥१००
वर्षाका सरि वाण् चलाइ रिपुका ❀ दल्मा श्रीलक्ष्मण्जिले ।
मार्थ्या रावण पक्षका सब फउज् ❀ श्रीरामका शक्तिले ॥
धैरै फौज् जब मर्नगो बइरिका ❀ देखी नरान्तक् पनि ।
थाल्यो भन्न हे क्षुद्र ! आज तइँले ❀ मारिस् बहुत् वीर् भनी ॥१०१
मार्छू मूसो सरी तँलाइ यो घरी ❀ गर्छस् बहुत् मन्परी ।
बाँच्नाको मनसुब् नले तँ बुझिले ❀ आयो मरन्को घरि ॥
यस्ता रीत्सित धेर् वचन् असुरले ❀ लक्ष्मण्जिलाई यहाँ ।
धनुष्मा एक वाण् चढाइ उसले ❀ ताकेर हान्यो उहाँ ॥१०२
त्यो बाण् वज्र समानको भइगयो ❀ लक्ष्मण्जिलाई जसै ।
लाग्यो गै लषनै उसै क्षणमहाँ ❀ मूर्छित् भया झट् तसै ॥
राक्षस्को बल बढ्न गो उस घरी ❀ त्यो क्षुद्र खोला सरी ।
थाले बाँदर पक्रि खान तिनले ❀ भक्काभकी पेट् भरी ॥१०३
हा हा पर्न गयो र राम्दलमहाँ ❀ भागे ति बाँदर्हरू ।
त्यै बीच्मा मुरछा खुल्यो लषणको ❀ उत्स्हा बढाई अरू ॥
भागी ज्यान बचाउने जति थिए ❀ फर्के ति बाँदर् पनि ।
सायंकाल् हुनगो गएति सब फौज् ❀ विश्राम गर्नै भनी ॥१०४

मूर्छित् लक्ष्मणको लडाइँ बिचको ❀ लंकापतीमा गई ।
भन्दो भो यति भो अनी उति भयो ❀ नारान्तक् वीरै भई ॥
राम्का कोमल पाउमा लषणले ❀ बिन्ती चढाया पनि ।
शंकर्को वरदान् हुँदा समरमा ❀ मर्दैन यो वीर् भनी ॥१०५
भाई लक्ष्मणको सुनी विनति यो ❀ श्रीरामजीले तहाँ ।
आज्ञा भो सुन भाइ पृथ्वितलमा ❀ भेद् छैन राम् शिव्महाँ ॥
जान्नू गौरिपती उनैसित पनी ❀ सीयेपती शिव् भनी ।
ब्रह्मा विष्णु महेश तीन देवमा ❀ भेद् छैन केही पनि ॥१०६
श्रीराम्का भजनै गऱ्यो यदि भन्या ❀ गऱ्यो भजन् शीवको ।
शंकर्को भजनै गऱ्यो यदि भन्या ❀ भक्तै बन्यो रामको ॥
यस्तै रीत्सँग भाइलाइ प्रभुले ❀ आज्ञा भयो फेर् व्हाँ ।
तेसै औसरमा ति नारद मुनी ❀ आईपुगे बीच्महाँ ॥१०७
देखी नारदलाइ आसन दिई ❀ श्रीराम् जगत्का धनी ।
हात् जोरी बिनती गऱ्या प्रभुजिले ❀ मानिस् सरीका बनी ॥
स्वस्ती ! त्यै बिचमा भनी ति मुनिले ❀ बिन्ती गऱ्या फेर् पनि ।
हूकुम् ली विधिको प्रभू-चरणमा ❀ हाजिर् भयाको भनी ॥१०८
नारान्तक् अब मार्नुपर्छ प्रभुले ❀ दधीबलैले गरी ।
धौलागीरि पहाडमा ऋषि सरी ❀ बस्छन् तपस्या गरी ॥
कोही वीर पठाइबक्सनुहवस् ❀ लीएर आओस् यहाँ ।
नारान्तक् अनि मार्छ मर्छ सहजै ❀ लड्डी समर्भूमिमा ॥१०९
येती बिन्ति गरेर नारद गया ❀ स्वर्गै पुरीमा जसै ।
हूकूम् श्रीहनुमानलाइ दिइ झट् ❀ भेज्नूभयो लौ तसै ॥

वायूका सरि रूप् धरेर हनुमान् ❀ धौलागिरीमा गया ।
हात् जोरी दधिबल्जिका चरणमा ❀ यो बिन्ति गर्दा भया ॥११०
जस्को नाममहाँ सुकाइ सब तन् ❀ एकाग्र मन्ले यहाँ ।
जस्को ध्यानमहाँ बिताइ सब दिन् ❀ खूशी भई मन्महाँ ॥
सोही राम् भगवान् जनार्दनजिको ❀ हूकुम् हुनाले गरी ।
आयाको छु सवारि होस् हे दधिबल् ❀ राम्कोचरण्प्रेम् गरी ॥१११
ओहो ! धन्य भयाँ, तरी अब गयाँ ❀ जान्छू भनी झट् तहाँ ।
आसन् काँधमहाँ धरेर दधिबल् ❀ जाँदा भया राम्महाँ ॥
देखी रामजि भक्तलाइ अति प्रेम् ❀ सम्मान् सहित्ले गरी ।
आजानू भुजले मुसारिकन शिर् ❀ भन्नूभयो श्रीहरि ॥११२
हे अङ्गद् ! तिमि जाउ सुग्रिवजिको ❀ पूगेर क्याम्पामहाँ ।
लीई आउ गएर झट्ट अहिले ❀ यो प्रेम-मन्दिर्-महाँ ॥
हूकूम् श्रीहरिको शिरोपर गरी ❀ अङ्गद्जिले त्यै घरि ।
सुग्रीव्लाइ लिएर राम्चरणमा ❀ आईपुगे त्यै घरि ॥११३
पीता सुग्रिव वीर, पुत्र दधिबल् ❀ प्रेम्ले अँगालो गरी ।
हर्षाश्रू वरषा सरी हुन गयो ❀ प्रेम्को मिलन् सो घरि ॥
यै रीत्ले दिन बित्लगो निशि भयो ❀ क्याम्पामहाँ सब् गया ।
प्रातःकालमहाँ उठेर सबले ❀ राम्का चरण् गैपऱ्या ॥११४
स्नान् औ ध्यान् सबशास्त्रपाठ्गरिव्री ❀ जल्पान् भईगो जसै ।
नारान्तक् सब सैन्य ली रणमहाँ ❀ पूग्यो पुकार्नै तसै ॥
देखी श्रीगुरुभाइलाइ तिनले ❀ खुशी भई मन्महाँ ।
अङ्गालो धरि खुब् दधीबलजिले ❀ भन्दा भए लौ वहाँ ॥११५

सुन्यौ भाइ संसार्मा शरिर अति प्रेमी छ जनको ।
सदा प्रेम्का पास्मा रहिरहि विकार् त्याग्छ मनको ॥
सबैभन्दा ठूलो जगतभरमा प्रेम बुझनू ।
छ प्रेमैको सारा वश जगत यो सत्य बुझनू ॥११६
सदा प्रेम्ले ईश्वर् रघुपति जनम्भर् वश परी ।
सदा प्रेम्ले इच्छा-फल छ भवमा मिल्छ उसरी ॥
सदा प्रेम्ले गर्दा गुरु-घर गई पढ्थ्युँ जसरी ।
सोही प्रेम्का वशमा परि परि बुझौँछू यस घरि ॥११७
मैले जो अहिले तिमीकन भनेँ ❀ हित्का वचन् छन् जति ।
सम्झी यी सब बात भित्र मनमा ❀ हूनेछ कल्याण् अति ॥
रावण्का कुलमा जनम् लिन गई ❀ विद्वान् तपस्वी भयौ ।
ब्रह्मा विष्णु महेश तीन देवमा ❀ भेद् मात्र केलाइ् लियौ ॥११८
रावण्ले जुन काम् गर्‍यो गरन द्यौ ❀ भोग्ने छ पाप् सो पनि ।
त्याग्द्यौ रामजिका विरुद्ध मन यो ❀ हित्का कुरा हुन् भनी ॥
रावण् दुष्ट अधर्मि पापि खलको ❀ मद्दत् म गर्छू भनी ।
पाप्को डर् रतिभर् नराखि तिमिले ❀ आयौ लडाका बनी॥११९
छीः छीः छीः तिमिलाइ दिन्छु अहिले ❀ धिक्कार् बहूतै यहाँ ।
हित्का बात् यदि मान्दछौ पनि भन्या ❀ जाऊ श्रीराम् पाउमा ॥
यस्ता बात् गरुभाइको सुनिसकी ❀ नारान्तकैले पनि ।
सोही माफिक क्रोधले उस घरी ❀ उत्तर् दियो धेर् अनि॥१२०
हे पाजी ! कति बक्दछस् तँ अहिले ❀ दुर्वाच्य बक् बक् गरी ।
राम्को पक्ष भएर मैकन यहाँ ❀ मानू कमीलो सरी ॥

जान्नू बुझ्नु कता, विषैसरि तँ ता ❀ बक्बक् गरी बक्दछस् ।
बाँदर् साथि लिई रहन्छ जसले ❀ ईश्वर् भनी भन्दछस् ॥१२१
धिक्कार् दिन्छु बरू तँलाइ बहुतै ❀ लाछी भइस् लौ तँ ता ।
सम्मर्मा यदि डर्दछस् पनि भन्या ❀ जान्छस् तँ लौ जा जता ॥
यस्ता बात् भनि दुर्मती उस घरी ❀ ठस्केर जाँदो भयो ।
पुच्छर्ले उसका शरीर-बिचमा ❀ बाँधेर रोक्दो भयो ॥१२२
हट् नादान् गुरुभाइ जानि मइले ❀ बक्सिस् दिएँ ज्यान् यहाँ ।
भन्दा क्रोधित पूर्ण भै ति दधिबल् ❀ पक्री करेलीमहाँ ॥
लात्तीले मुखमा नरान्तककनै ❀ हानी पछारे जसै ।
ऊठी झट् दधबल्जिको हृदयमा ❀ एक् लात् जमायो तसै॥१२३
मुक्कामुक्कि पऱ्यो अती कठिनको ❀ भैगो लडन्तै तहाँ ।
औसर् पारि पछारि पृथ्वितलमा ❀ गीडे नरान्तक् तहाँ ॥
नारान्तक् जब मर्न गो त उसका ❀ राक्षस् फउज्मा गई ।
अङ्गद् श्रीहनुमान् मिलेर सब फौज् ❀ मारे अती क्रोध् गरी ॥१२४
सोही औसरमा गगन्-बिचमहाँ ❀ पुष्पै विमान्मा चढी ।
पुष्पैका वरषा दधीबल-उपर् ❀ गर्थे ति द्यौता बढी ॥
अशीर्वाद् सबका लिएर दधिबल् ❀ खूशी भई मन्महाँ ।
श्रीराम्को करुणा बुझेर बहुतै ❀ आनन्द भैगो तहाँ ॥१२५

## ॥ इति क्षेपक कथामा नारान्तक-वध वर्णन समाप्त ॥

# अहिरावण-वध

क्षेपक

सून्यो रावणले नरान्तक मऱ्यो ❀ भन्ने समाचार र ।
साह्रै खिन्न भयो र दूत चतुरा ❀ भेज्यो सुतैको घर ।।
छोरो वीर पराक्रमी अति बली ❀ थीयो अहीरावण ।
बस्थ्यो राज्य गरेर मोजसँगले ❀ पातालमा त्यो जन ।।१
पूग्यो दूत उहाँ भन्यो खबर त्यो ❀ विस्तारपूर्वक् सब ।
लंकामा कपि भालुले अति पिरे ❀ नाशे ठुलो गौरव ।।
पाल्नोस् झट्ट हजूर नत्र त उहाँ ❀ साह्रै विपत्ती पऱ्यो ।
बाबाको गति ठीक छैन बुझ्नोस् ❀ राम्‌ले त गर्नूगऱ्यो ।।२
यस्ता बात सुनेर तत्क्षण चल्यो ❀ लंकापुरीतर्फ त्यो ।
साष्टांगै सित दण्डवत् गरि बुवा- ❀ मा बिन्ति गर्दो भयो ।।
के हो काम, बताउनोस् म अहिले ❀ योद्धा खडा छू यहाँ ।
आज्ञा मात्र हओस् गएर सहजै ❀ गर्ने म गर्छू उहाँ ।।३
यस्तो बात सुन्यो र रावण तहाँ ❀ अत्यन्त खूशी भयो ।
अर्थ्यायो सब बात राम खलले ❀ गर्नू नगर्नू गऱ्यो ।।
भाइ ती खर-दूषणादि उसले ❀ नाश्यो जनस्थानमा ।
बैनी शूर्पणखा बुची हुन गई ❀ त्यस्कै छुल्याईमहाँ ।।४
साह्रै रीस उठ्यो मलाइ उसका ❀ त्यस् कामले त्यो घरि ।
हर्दीएँ उसकी सती प्रियतमा ❀ सीताजिलाई छली ।।
त्यै ईबी मनमा लिएर उसले ❀ आएर लंकामहाँ ।
हाँक्यो लड्न मलाइ वानरहरू- ❀ का फौजका साथमा ।।५

भीडे वानरसाथ राक्षसहरू ❀ ठूलो लडाईँ भयो ।
मारीए सुत फौज भाइ-भतिजा ❀ मेरो सबै सिद्धियो ॥
ठूलो आपतमा परेँ अब कसो ❀ गर्नू भनी सोचियो ।
यस्तैमा तिमिलाइ झट्ट मनमा ❀ संझेर बोलाइयो ॥६
तस्मात् जाउ गएर झट्ट अहिल्यै ❀ त्यो राम पाजीकन ।
पक्री ल्याउ जसोरि हुन्छ तसरी ❀ खूशी हओस् यो मन ॥
बाबू रावण वीरका यति कुरा ❀ सूनी अहीरावण ।
भन्दो भो दृढ शब्दले उस घरी ❀ सोची विचारीकन ॥७
सूनेँ तात ! सबै मरेछन खुपै ❀ हाम्रा ति योद्धाहरू ।
साह्रै वीर रहेछ राम बुझियो ❀ लड्नू छ व्यर्थै बरु ॥
त्यस्कारण् छलले म गर्छु वशमा ❀ त्यो वीरलाई अब ।
लाग्यो घाम भने त रातबिचमा ❀ भो काम फत्ते सब ॥८
जान्छू ती दुइ भाइलाइ सहजै ❀ लैजान्छु पातालमा ।
देवीलाइ म दिन्छु भोग तिकनै ❀ रेटेर घाँटीमहाँ ॥
मन्त्रैका बलले लगेँ यदि भनेँ ❀ ती वीरलाई तहाँ ।
लाग्ला झल्मल घाम रात्रिबिचमा ❀ चम्केर आकाशमा ॥९
येती बात गरी झुकी विनयले ❀ चल्दो भयो वीर त्यो ।
पौँच्यो त्यै थलमा जहाँ प्रभु दुवै ❀ सुक्ला भएको थियो ॥
देख्यो ती हनुमानलाइ सहसा ❀ पालो बसेको तहाँ ।
सोच्यो जुक्ति गरेर पौँचनुपर्‍यो ❀ छन् ती सुतेका जहाँ ॥१०
यस्तो सोच गरी विभीषण सरी ❀ भै पुग्न गो द्वारमा ।
सोद्धा मारुतिले विभीषमहाँ ❀ भन्दो भयो खासमा ॥

सन्ध्यावन्दन गर्न-खातिर अघी ❀ गा को थिएँ बाहिर ।
बस्छू रक्षक भै गएर प्रभुका ❀ पासै म छू हाजिर ॥११
यस्तो बात गरी छलीकन चली ❀ पुग्दो भयो पासमा ।
मंत्री मन्त्र वरीपरी सब फुकी ❀ माया फिजायो उहाँ ॥
मायाका वशमा परी सब मरे- ❀ जस्ता भएथे जब ।
राम् लक्ष्मण् दुइ भाइलाइ सहजै ❀ उस्ले उडायो तब ॥१२
जस्सै ती दुइलाइ लीकन उडे- ❀ थ्यो त्यो अहीरावण ।
देखीए तब घाम रात-बिचमै ❀ खूशी भयो रावण ॥
पक्का लेर गएछ ती दुइकनै ❀ आनन्द भो यो मन ।
देवीका बलि बन्दछन् खल दुवै ❀ पातालमा तत्क्षण ॥१३
पौंचायो दुइ भाइलाइ उसले ❀ त्यो दिव्य पातालमा ।
थुन्दो भो निजकै ठुलो महलमा ❀ तत्काल छूट्यो टुना ॥
छोडेथ्यो जब मन्त्रले सब उठे ❀ सेना यता रामका ।
देखेनन् दुइ भाइलाइ र गरे ❀ धेरै बिलौना निका ॥१४
थाले रून उहाँ विभीषण पनी ❀ छाती ठटाई अति ।
सूने श्री हनुमानले अति ठुलो ❀ डाँको गरेको गति ॥
भर्खर् मात्र पस्यौ तिमी प्रभुकहाँ ❀ थाहै नहूनू कसो ।
यस्तो बात सुनी विभीषणजिले ❀ बूझे भएथ्यो जसो ॥१५
रावण्को अहिरावणे सुत छ एक् ❀ जो बस्छ पातालमा ।
मायावी छ अती उ गर्छ छल ती ❀ आएछ लौ त्यै यहाँ ॥
सक्छौ उस्कन मार्न जो जन उहाँ ❀ गै मार त्यल्लाइ र ।
ल्याऊ ती दुइ भाइलाइ सहजै ❀ बोकेर, झट्टै गर ॥१६

यस्ता बात सुनी सबै मिलि मतो ❀गर्दा भए तत्क्षण ।
फुर्क्याए हनुमानलाइ र भने ❀जाऊ तिमी नै सुन ॥
साराको मतले हिडे र हनुमान् ❀जान्थे ति पातालमा ।
बाटामा रुखका मनी पुगि सुने ❀क्वै दम्पतीका कुरा ॥१७
थीए दम्पति गिद्ध गिद्धिनि उहाँ ❀गर्थे कुरा आफुमा ।
भन्थी गिद्धिनि मासु खान्छु मनुवा-❀को तिर्सना भो ममा ॥
तिम्रो गर्भिणि तिर्सना रछ बुझेँ ❀भोली म ल्याईकन ।
दीनेछू तिमिलाइ सुन्दरि ! भन्यो ❀त्यो गिद्धले त्यै छिन ॥१८
छोरो रावणको छ एक बलियो ❀त्यो हो अहीरावण ।
पाताल्मा गइ राज्य गर्छ उसले ❀गर्दै कडा शासन ॥
बाबूका हितका निमित्त छलले ❀ती राम लक्ष्मण्कन ।
पौंचायो निज देशमा बलि दिना-❀का निम्ति देवीकन ॥१९
भोली नै बलि दिन्छ लाश दुइटै ❀फ्याँक्ला चउर्मा लगी।
त्यै ल्याई तिमिलाइ दिन्छु म प्रिये ! ❀धोको तजी खाउली ॥
त्यो वार्ता सुनि दम्पती ति दुइको ❀पौंचे हनूमान् उहीँ ।
पाले वानरले त छिर्न नदिई ❀रोक्यो ठुलो द्वारमै ॥२०
पालेलाइ नसोधि भित्र सहजै ❀जाने तँ को होस्, किन?
जान्छस् भन् सब बात् म वीरहनुमान्-❀को पुत्र हूँ लौ चिन ॥
मै हूँ श्रीहनुमान् कसोगरि भइस् ❀छोरो तँ मेरो सुना ।
सोद्धा मारुतिले, कह्यो सब कुरो ❀त्यो पुत्र भा' को बुँदा ॥२१
लंका खाक गरेर वीर हनुमान् ❀फिर्थे स्वदेशै तिर ।
फिर्दा केहि चुहेछ बिन्दु पसिना-❀का सिन्धुमा तल्तिर ॥

माछीका मुखमा परेछ र भई- ❀ छे गर्भिणी त्यै घरि ।
उस्कै पुत्र म हूँ डटी असुरको ❀ गर्दो छु लौ चाकरी ॥२२
नाऊँ हो मकरध्वज प्रबल छू ❀ सोध्नू छ के सोध्नुहोस् ।
भन्छू, जान म दिन्नँ, छू निमकको ❀ सोझो कुरो बुझ्नुहोस् ॥
आयौ के तिमि राम लक्ष्मण लिना- ❀ का निम्ति याहाँतक ।
पाउन्नौ तिमि, भोलि हुन्छन बली ❀ देवीजिमा छप्छप ॥२३
पाले वानरलाइ हेपि हनुमान् ❀ पस्नै तयारी भए ।
ठोक्यो मुड्कि बटारि वीर चपरा- ❀ सीले थला ती परे ॥
फर्काए हनुमानले पनि मुठी ❀ धक्का दिई बेसरी ।
मुड्कामुड्कि गरे समान बलका ❀ बा-पुत्र दूवै थरी ॥२४
थाकेथ्यो जब पुत्र बाँधि हनुमान् ❀ त्यस्लाइ भित्रै गए ।
सानू रूप धरेर होम-गृहमा ❀ चौतर्फि हेर्दा भए ॥
देखेनन् जब राम लक्ष्मण तहाँ ❀ धैरै थिए राक्षस ।
गर्थे होम वृथा पिएर मदिरा ❀ भै कालका ती वश ॥२५
ल्याए फूलहरू चढाउन भनी ❀ ती देविका सामुमा ।
सानू रूप धरी पसे कपि पनी ❀ त्यै फूलका बीचमा ॥
सोही फूल ति देविका चरणमा ❀ तिन्ले चढाए जब ।
देखाए हनुमानले डर दिने ❀ त्यो रूप आफ्नो तब ॥२६
देवी लोप भइन् त्यहीँ जमिनमा ❀ देखी हनूमान्कन ।
देवीकै पुगि स्थानमा कपि बसे ❀ त्यो देखि ती दुर्जन ॥
भन्छन् देवि भइन् प्रसन्न बुझियो ❀ नैवेद्य ल्याओ सब ।
गर्नूपर्दछ पूर्ण लौ बलि दिई ❀ सम्पूर्ण पूजा अब ॥२७

ल्याए राक्षसले अनेक थरिका ❀ नैवेद्य बोकीकन ।
गाग्राहेरु पनी धरे रगतका ❀ ल्याएर सोही क्षण ॥
गर्दै पूजन देविको खलहरू ❀ नैवेद्य राख्थे जति ।
खान्थे त्यो हनुमानले सहजमा ❀ बाँकी नराखी रती ॥२८
केही बेरपछी भयो समय लौ ❀ ल्याओ भनेको सुनी ।
ल्याए पक्रि ति राम लक्ष्मण दुवै- ❀ लाई छिटो हिड् भनी ॥
देवीका नगिचै उभ्याइकन क्वै ❀ यौटा अगाडी सरी ।
लाग्यो भन्न लिएर खड्ग करमा ❀ काट्ने इरादा धरी ॥२९
आयो काल विलम्ब छैन अब लौ ❀ कोही हितैषी भए ।
चाँडै डाक ति सैन्य- वानर अरू ❀ भालू कता गैगए ॥
आफ्नो काल पनी नचिन्न सकि ती ❀ उन्मत्त भै त्यो घरि ।
बोल्थे मूढ वृथा असंभव कुरा ❀ हेलाँ गरी बेसरी ॥३०
हेरे आपसमा मुखामुख गरी ❀ श्रीराम औ लक्ष्मण ।
लीला हो प्रभुको तथापि मनमा ❀ सोच्नूभयो त्यै क्षण ॥
मैरै नाम जपेर सिद्ध र मुनी ❀ जान्छन् अनेकौँ तरी ।
व्यर्थै कष्ट पऱ्यो बनौँ कसरि लौ ❀ मैले स्वयं नै बलि ॥३१
जान्नूभो प्रभुले तुरुन्त हनुमान् ❀ देवी बनेका जब ।
हाँसी भन्नुभयो सबै खलहरू ❀ मर्छौं तुरुन्तै अब ॥
देवीको गरि पूजनादि मनमा ❀ जो ठान्दथ्यौ राक्षस ।
ती देवी अहिले रिसाउन गई ❀ बन्दी भइन् भक्षक ॥३२
यस्ता बात सुनेर शस्त्र करमा ❀ ली काट्न आँटे जब ।
त्यो देखी हनुमानले स्वर ठुलो ❀ पारेर गर्जे तब ॥

भन्छन् दुष्टहरू मुखामुख गरी ❀ देवी रिसाइन् अब ।
देख्छू क्रोधमुखी र राक्षस जती ❀ मार्छिन् यिनैले सब ॥३३
तिन्का बात सुनेर फेरि हनुमान् ❀ झन् वेगले गर्जिए ।
आफ्नो उग्र स्वरूप घोर खलका ❀ साम्ने प्रकट् गर्दिए ॥
भूमी कम्प भयो डराइकन ती ❀ काँपीरहेका थिए ।
धेरै राक्षसलाइ मारि कति ता ❀ पक्रेर होमीदिए ॥३४
लागे भाग्न कती अनी पुछरको ❀ घेरा बनाईकन ।
मारे बन्धनमा कसीकन तहीँ ❀ सम्पूर्ण ती दुर्जन ॥
सारा सैन्य मरे भनीकन स्वयं ❀ आयो अहीरावण ।
लाग्यो भन्न घमण्ड हे कपि, वृथा ❀ गर्छस् तँ के कारण ॥३५
मारेको अघि कालनेमि बिचरा ❀ त्यो जाम्बुमाली अनि ।
छोरो रावणको त इन्द्रजित झैँ ❀ ठान्छस् मलाई पनि ॥
तेरो तोड्छु घमण्ड आज रणमा ❀ उम्केर जालास् कहाँ ।
भन्दै खड्ग गर्‍यो प्रहार हनुमान्- ❀ को तानि छातीमहाँ ॥३६
त्यस्को खड्ग समाति वज्र शिरमा ❀ ताकेर हानी-दिए ।
काटीयो शिर दुष्टको र बिचमै ❀ पक्रेर होम्दा भए ॥
बाँचेको जतिको पनी गरिदिए ❀ पूर्णाहुती अग्निमा ।
ढोगी ती दुइ भाइलाइ खुशिले ❀ बोकीलिए काँधमा ॥३७
देख्यो त्यो मकरध्वज प्रबलले ❀ ती बाबुको पौरुष ।
पस्री पाउमहाँ गर्‍यो विनयले ❀ दण्डोत खुप् भै खुश ॥
बाबूले उहि राज्य पुत्रकन दी ❀ धेरै अह्राई वरी ।
फर्के राम र लक्ष्मणैकन लिई ❀ लंका पुगे त्यै घरि ॥३८

सेनाले जयकार बोलि प्रभुको ❀ पाए जसै दर्शन ।
पाएको अघि दुःख जो जति सबै ❀ बिर्से, खुशी भो मन ॥
तिन्को प्रेम बुझेर राम प्रभुको ❀ आज्ञा भयो लौ अब ।
इच्छा पूर्ण हुनेछ वीरहरुको ❀ जानेछ चिन्ता सब ॥३९

आज्ञा राम्रो गरि दलमहाँ रामले शान्ति दीए ।
साराको दुःखपीडा भय सहज हरे, शान्तिको सास लीए ॥
द्यौता देवी नभचरहरू त्यो तमाशा निहारी ।
थाले वर्षा गरन प्रभुमा फूलका राश भारी ॥४०॥

## ॥ इति क्षेपक कथामा अहिरावण-वध समाप्त ॥

: क्षेपक सकियो :



( २१४ वाँ श्लोकपछिको )

रावणको यज्ञविध्वंस तथा उसले मन्दोदरीलाई सम्झाउनु–१०

मूर्छादेखि उठी बिलाप् अति गरी ❀ फौज् लइन पेल्यो पनि ।
हात्मा एक् तलवार् लिएर रिसले ❀ सीता म काट्छू भनी ॥
दौड्योत्यो र सुपार्श्व मन्त्रि नजिकै ❀ थीयो अगाडी सऱ्यो ।
स्त्रीघात् गर्नु अवश्य छैन महराज् ! ❀ यो जल्दि बिन्ती गऱ्यो ॥२१५

सुपार्श्वको बिन्ति सुन्यो र ताहाँ ।
फर्क्यो फरक्कै दरबारमाहाँ ॥
शोक्ले बुहुत् मूर्ख समान भैगो ।
फेरी सभा गर्छु भनेर गैगो ॥२१६

सब् मन्त्रिले सँग बसेर विचार गर्दा ।
हीतै हुन्या ठहरियो र अगाडि सर्दा ॥
जो बाँकि राक्षस थिया सब साथ लीयो ।
खुप् लड्नलाइ रघुनाथ्तिर चित्त दीयो ॥२१७

त्यो अग्निमा सलह झैँ जब पर्न आयो ।
सक्थ्यो कहाँ अधिक ठक्कर फेरि पायो ॥
धेर् वीर् मऱ्या हृदयमा पनि बाण लाग्यो ।
टिक्नै तहाँ नसकि जल्दि फिरेर भाग्यो ॥२१८

सम्झ्यो गुरूकन विपत्ति पऱ्यो र ताहाँ ।
चाँडै गुरूसित गई शिर पाउमाहाँ ॥
राखी गऱ्यो विनति दुःख बहूत पायाँ ।
यै दुःखको विनति गर्न त आज आयाँ ॥२१९

हे नाथ् ! हजुर् गुरु भई पनि दुःख पर्न्या ।
क्या भो मलाइ कसरी अब चित्त धर्न्या ॥
यस् रामले सकल बन्धु र पुत्र मार्‍यो ।
शूरा अनेक् विरहरू पनि छुट्टि पार्‍यो ॥२२०

रावण्को विनती सुन्या र गुरुले ❀ पाएछ आपत् भनी ।
गर्नूसम्म गरोस् भनेर उपदेश् ❀ दीया गुरूले पनि ॥
हे रावण् ! सुन मन्त्र दिन्छु अब गै ❀ होम् गर्नु खुप् ध्यान् धरी ।
होम् संपूर्ण गर्‍यौ भन्या त हतियार् ❀ मिल्नन् तिनैले गरी ॥२२१

जित्न्याछौ सब वीरलाइ भनि यो ❀ आज्ञा गुरूको जसै ।
पाएथ्यो खुशि भै उठी घर गई ❀ होम् गर्न आँट्यो तसै ॥
पाताल् तुल्य गुफा खनी तहिँ बस्यो ❀ होम् गर्नलाई पनि ।
ढोका बन्द गर्‍यो सबै शहरको ❀ कोही नआऊन् भनी ॥२२२

लूक्यो रावण येहि रित्सित अनी ❀ होम् गर्न लाग्यो तहाँ ।
लूक्यो रावण तापनी तर धुवाँ ❀ लूकी रहन्थ्यो कहाँ ॥
देख्या तेहि धुवाँ विभीषणजिले ❀ होम् गर्न लाग्यो भनी ।
पायाँ भेद् भनि रामका हजुरमा ❀ गै बिन्ति पार्‍या पनि ॥२२३

लाग्यो रावण होम गर्न रघुनाथ् ! ❀ होम् सिद्ध पार्‍यो भन्या ।
साँचो बिन्ति म गर्दछू हजुरमा ❀ ई सब् अजेयै बन्या ॥
हूकूम् वानरलाइ बक्सनुहवस् ❀ वीर् वीर् अगाडी सरी ।
जल्दी गैकन यज्ञ नाश् गरिदिऊन् ❀ हूकूम् शिरोपर् धरी ॥२२४

बिन्ती येति गर्‍या विभीषणजिले ❀ हूकूम् प्रभूको भयो ।
अङ्गद् वीर् हनुमान् दुवै इ खटिया ❀ दश् कोटिको फौज् गयो ॥

पर्खाल् नाघि गया र तेस् शहरमा ❀ दर्बार् पुग्याथ्या जसै ।
चौकी रावणका थिया जति तहाँ ❀ तिन्लाइ मान्या तसै ॥२२५
रानी हुन् सरभी विभीषणजिकी ❀ लंकै शहर्मा थिइन् ।
रावण् लूकिरहेछ ताहिँ छ भनी ❀ तिन्ले इशारा दिइन् ॥
गूफाका मुखमा त पत्थर ठुलो ❀ लाएर पक्का गरी ।
होम् गर्थ्यो तहिँ भित्र रावण उहीँ ❀ प्रौँच्या ठुलो वेग् गरी ॥२२६
त्यो पत्थर्कन लात्ति अङ्गदजिले ❀ दीया धुलो भै खस्यो ।
होम्को विघ्न गराउनाकन तहाँ ❀ क्यै फौज भित्रै पस्यो ॥
रावण् येति हुँदा पनी दृढ भई ❀ ध्यान् गर्न लाग्यो जसै ।
वीर् वीर् वानरले अनेक् तरहले ❀ त्यो यज्ञ नाश्या तसै ॥२२७
रावण्ले तहिँ होम गर्न भनि एक् ❀ सूरो लियाको पनि ।
खोस्या श्रीहनुमानले र रिसले ❀ हान्या उठोस् यो भनी ॥
ध्यानैमा दृढ मन् गरी अचल भै ❀ रावण् बसेथ्यो जसै ।
ल्याया अङ्गदले त खैंचि नजिकै ❀ मन्दोदरी पो तसै ॥२२८
ती मन्दोदरिलाइ रावण नजीक् ❀ पौँचाइ हुर्मत् लिया ।
चोली खोलि अफालि फेरि कटिको ❀ सारी खसाली-दिया ॥
लायाका गहना समेत् शरिरको ❀ वस्त्रै अफाल्या जसै ।
रूँदै रावणका नजीक रहँदी ❀ बिन्ती गरिन् यो तसै ॥२२९
हे नाथ् ! आज कता गयो हजुरको ❀ लज्जा, अनाथ् के गरूँ ।
पत्नीका इ विलाप् सुनी जिउनु धिक् ❀ मर्नू निको हो बरु ॥
येती बिन्ति गरिन् र पुत्रकन खुप् ❀ संझेर लागिन् रुनै ।
अर्को कोहि थिएन ताहिँ तिनको ❀ साहाय हून्या कुनै ॥२३०

भर्ताले पनि बाँचुला भनि यहाँ ❀ लज्जैसमेत् त्याग् गऱ्या ।
तेरो ज्यान् अधि गैगयो गरुँ कसो ❀ ऐह्ले विपत्ती पऱ्या ॥
ती मन्दोदरि रानिको अतिविलाप् ❀ साम्ने सुनेथ्यो जसै ।
ऊठ्यो खड्ग लिएर अङ्गदजिका ❀ हान्यो कटीमा तसै ॥२३१
होम्को नाश गराइ अङ्गदहरू ❀ दौडेर राम्थ्यैं गया ।
ती मन्दोदरि रानि रावण यिनै- ❀ का बात् तहाँ खुप् भया ॥
लाग्यो रावण भन्न रानि ! अहिले ❀ बाँच्नू असल् हो भनी ।
बाँच्नै खातिर ता म चूप् भइरह्याँ ❀ येती हुँदामा पनि ॥२३२

रावणले मन्दोदरीलाई सम्झाउनु–१० ( २ )

बाँचेदेखि त देखिइन्छ सब थोक् ❀ यस्तो बुझी ज्ञानले ।
यो शोक् दूर् गरिहाल हुन्छ अब क्या ❀ यस्ता असत् ध्यानले ॥
अज्ञानै छ भुलाउन्या शरिरमा ❀ यो देह मै हूँ भनी ।
त्यै अज्ञान् बलवान् भयो पनि भन्या ❀ फैलिन्छ संसार् पनि ॥२३३
आत्मज्ञान स्वरूप् बुझेर मनले ❀ अज्ञानको नाश् गरी ।
स्वस्थै भैरहु शोक् नमानि तिमिले ❀ क्या हुन्छ यो शोक् गरी ॥
हे मन्दोदरि ! मार्छु राम्कन सहज् ❀ संग्राम ठूलो गरी ।
रामैले यदि मार्दछन् तपनि बेस् ❀ जान्याछु संसार् तरी ॥२३४
संग्राम्मा मरिगैगयाँ पनि भन्या ❀ मार्नू र सीता यहाँ ।
अग्नीमा तिमिले प्रवेश् तब गरी ❀ आया म जान्छू जहाँ ॥
रावण्का इ वचन् सुनेर अति ताप् ❀ मान्दी ति मन्दोदरी ।
साँचो बिन्ति म गर्छु आज अधिराज् ❀ भन्दै अगाडी सरी ॥२३५
बिन्ती रावणथ्यैं गरिन् पनि तहाँ ❀ राम् हुन् जगन्नाथ् हरि ।
जीती सक्नु कदापि छैन अरुले ❀ कस्तै लडाइँ गरी ॥

वैवस्वत् मनुलाइ मत्स्यरुपले ❀ जस्ले त रक्षा गऱ्या ।
फेरी कूर्म भएर मन्दर पनी ❀ जस्ले पिठैमा धऱ्या ॥२३६
प्राण् खैँचेर लिया वराह रुपले ❀ जस्ले हिरण्याक्षको ।
बाँची कोहि फिरेन लड्दछु भनी ❀ साम्ने गयाको छ जो ॥
ठूलो दैत्य थियो हिरण्यकशिपू ❀ माऱ्या नृसिंहै भई ।
राज्यै खैंचिलिया छलेर बलिको ❀ वांमन् स्वरूप्ले गई ॥२३७
थीया क्षत्रिय पृथ्विमा परशुराम् ❀ भै नाश् सबैको गऱ्या ।
तिम्रो प्राण् लिनलाइ आजपनिनाथ् ❀ राम् भै अगाडी सऱ्या ॥
सीता हर्नु थिएन हेलन गरी ❀ सीताजि हर्नूभयो ।
यै काम्ले इ विपत् पऱ्या हजुरमा ❀ ज्यान्इन्द्रजित्को गयो ॥२३८
सीता सुम्पनुपर्छ आज अधिराज् ❀ राम्चन्द्रजीथ्यैँ गई ।
लंकामा पनि राज् विभीषण गरून् ❀ राम्का पियारा भई ॥



(८१. रावणको पाउ परी मन्दोदरीले बिन्ती गरेकी ।)

सब् छोडीकन आज जाउँ वनमा ❀ येती भनीथिन् जसै ।
रावण्लेपनि ई वचन् सुनि जवाफ् ❀ खुप् दीन लाग्यो तसै ॥२३९

हे मन्दोदरि ! इन्द्रजित् पनि मऱ्यो ❀ ठूला ठुला वीर् मऱ्या ।
कुम्भैकर्ण मऱ्यो अनेक् अरु पनी ❀ संग्राममा वीर् पऱ्या ॥
येतीसम्म भएपछी कसरि फेर् ❀ लत्रेर पाऊ परूँ ।
शुत्रूथ्यैँ गइ लत्रि बाँच्नु ननिको ❀ प्राण् आज जावस् बरु ॥२४०
विष्णू हुन् रघुनाथ् सिता पनि यिनै ❀ लक्ष्मी भनी जान्दछु ।
जानी जानि सिता हरेँ त म उसै ❀ क्या आज डर् मान्दछु ॥
राम्का हात परी मरूँ भनि तहाँ ❀ सीताजिलाई हऱ्याँ ।
राम्का हात परी मरेँ पनि भन्या ❀ संसार् सहज्मा तऱ्याँ ॥२४१

फेरी तुरुन्त रघुनाथ्सित लड्न जान्छु ।
मार्नन् मलाइ रघुनाथ् तब खूशि मान्छु ॥
संसारका सकल ताप्हरुलाइ तोडी ।
जान्याछु पारि तिमिलाइ त वारि छोडी ॥२४२॥

राग् द्वेष्का भेल चल्छन् भँवरि सरि यि युग् घुम्दछन् बीचमाहाँ ।
पुत्रादी मत्स्य झैँ छन्, रिस पनि वडवानल् सरीको छ ताहाँ ॥
कामैको जाल् छ ठूलो तरपनि बलियो तेहि जाल्लाइ फारी ।
संसार्-सागर् सहज्मा तरिकन हरिथ्यैँ बस्न जान्याछु पारि ॥२४३

राम-रावण-संग्राम र रावणको वध-११

मन्दोदरी- सित यती भनि लड्नलाई ।
कम्मर् कसेर बलियो रथ एक् मगाई ॥
रथ्मा चढेर रघुनाथ्- सित लड्न आयो ।
राम्चन्द्रको सकल वानर फौज् डरायो ॥२४४॥

त्यो रावण् रणभूमिमा जब पुग्यो ❀ साम्ने हनूमान् गया ।
मूर्छा पारि गिराउँ यस्कन भनी ❀ एक् मुड्कि हान्दा भया ॥

छातीमा जब मुड्कि बज्रन गयो ❀ खुप् वज्र तुल्यै गरी ।
घूँडा टेकि गिऱ्यो तहाँ दुइ घडी ❀ मूर्छा तुरुन्तै परी ॥२४५



(८२. हनुमान्ले रावणका छातीमा मुड्की हान्दा रावण ढुन्मुनाएर पच्छारिई मूर्च्छा परेको ।)

मूर्छादेखि उठ्यो र रावण तहाँ ❀ स्याबास् तँ होस् वीर् भनी ।
ठूलो वीर् हनुमानलाइ बुझि खुप् ❀ निक्कै सह्रायो पनि ॥
रावण्ले हनुमानको सह्रनि खुप् ❀ ताहाँ गरेथ्यो जसै ।
रावण्का सब सेखि तोड्न हनुमान् ❀ वीर् बोल्न लाग्या तसै ॥२४६
हे रावण् ! किन गर्दछस् सह्रनि यो ❀ धिक्कार् म मान्छू बरु ।
मेरो मुड्कि पऱ्यापछी पनि बचिस् ❀ बोल्छस् यहाँ क्या गरूँ ॥
एक् चोट् हान् तँ पनी तँलाइ म पनी ❀ फेर् हान्छु छातीमहाँ ।
एक् मुड्की अब हानुँला त नमरी ❀ उम्केर जालास् कहाँ ॥२४७
ई बात् श्री हनुमानले जब गऱ्या ❀ बेसै भन्यो यो भनी ।
एक् चोट् श्रीहनुमानका हृदयमा ❀ ताकेर हान्यो पनि ॥
फेरी श्रीहनुमान् सऱ्या अघि तहाँ ❀ मुड्की उठाई जसै ।
रावण् टिक्न सकेन एक् क्षण पनी ❀ अन्यत्र भाग्यो तसै ॥२४८

रावण्का सँग चार् जना विर थिया ❀ मन्त्री लडाका पनि ।
ई चार् वीर्कन चार् जना अघि सऱ्या ❀ ऐह्ले निभाऊँ भनी ॥
अङ्गद् श्रीहनुमान नील नल यी ❀ चार् वीर कूदी गया ।
रावण्का सँगका ति चार् विर सहज् ❀ मारेर फिर्दा भया ॥२४९

ती चार् जना जब मऱ्या तब झन् रिसायो ।
राम्का उपर् अघि सरीकन वाण् खसायो ॥
बाक्ला बुँदै सरि ति शर् जब खस्न आया ।
खुप् वानरादि विरले पनि दुःख पाया ॥२५०॥

यो चाल् वानरको बुझी रघुपती ❀ साम्ने अगाडी सरी ।
लाग्या लड्न तहाँ अनेक् तरहले ❀ त्रैलोक्यका नाथ् हरि ॥
त्यो रावण् रथमा थियो रघुपती ❀ खाली जमीन्मा थिया ।
राम्का खातिर इन्द्रले अति असल् ❀ एक् रथ् पठाईदिया ॥२५१



(८३. इन्द्रले पठाइदिएको रथ लिएर रामभाठौँ मातलि आएको ।)

जल्दी मातलि सारथी रथ लिई ❀ राम्का हजूर्मा गया ।
हात् जोरीकन रामका हजुरमा ❀ यो बिन्ति गर्दा भया ॥

हे नाथ् ! रथ् लिइ इन्द्रका हुकुमले ❀ आयाँ खडा छू पनि ।
यै रथ्मा चढिबक्सियोस् हजुरले ❀ बेस्‌बिन्ति पार्‍यो भनी ॥२५२
यो बिन्ती गरि मातली अघि सरे ❀ स्वामित् सितानाथ् पनि ।
तेस् रथ्‌लाइ परिक्रमा गरि चढ्या ❀ चढ्नै उचित् हो भनी ॥
ताहाँदेखि त मच्चियो अधिक झन् ❀ संग्राम् निरन्तर् गरी ।
जुन् बाण् रावणले त छोड्‌छउहिवाण् ❀ काट्छन् रमानाथ् हरि ॥२५३
यस्ता रीत्‌सित अस्त्रशस्त्र सब थोक् ❀ काट्या प्रभूले जसै ।
रावण्‌ले पनि राक्षसास्त्र लिइ खुप् ❀ फेर् हान्न लाग्यो तसै ॥
रावण् हान्दछ वाण् जती जति तहाँ ❀ सब् सर्प रूप् भै खस्या ।
हान्या वाण् रघुनाथले पनि र ती ❀ वाण्‌तागरुड्‌भैखस्या ॥२५४
काट्या सर्प पनी सबै गरुडले ❀ पक्रेर टुक् टुक् गरी ।
तेस् बीच्मा शरवृष्टि खुप्‌सित गर्‍यो ❀ राम्‌का अगाडी सरी ॥
धक्का केहि दियो प्रभूकन तहाँ ❀ फेरी गिराऊँ भनी ।
हान्यो मातलिलाइ वाण पछि फेर् ❀ केतू खसाल्यो पनि ॥।२५५
घोडैलाइ पनी अनेक शरले ❀ खुप् हान्न लाग्यो जसै ।
आश्चर्यै भइ देव पितृ ऋषिगण् ❀ खेद् मान्न लाग्या तसै ॥
लीलाले रघुनाथ् पनी जब तहाँ ❀ दुःखी सरीका भया ।
वानर्‌को सब फौज् विभीषणसमेत् ❀ साह्रै डराई गया ॥२५६
बीस् बाहू दशशिर् भयंकर स्वरूप् ❀ मैनाक् सरीको भई ।
लड्थ्यो रावण रामका हजुरमा ❀ साम्‌ने नजीकै गई ॥
उठ्थ्यो रिस् प्रभुको र तेहि बिचमा ❀ कालाग्नि जस्ता बनी ।
रावण्‌का दश शिर् गिराउन लिया ❀ जल्दी धनुर्बाण् पनि ॥२५७

कालाग्नी सरिको भयंकर स्वरूप् ❀ राम्को बनेथ्यो जसै ।
कामिन् पृथ्वि पनी भयंकर स्वरूप्❀देखिन् र राम्को तसै ॥
रावण्को पनि चित्तमा भय पर्‍यो ❀ उल्का बहूतै भया ।
क्या गर्छन् प्रभुले यहाँ भनि तहाँ ❀ सब् लोक् डराईगया ॥२५८
आकाश्मा बसि हेर्दथ्या जति थिया ❀ सब् देवतागण् पनि ।
कस्ता रीत्सित मर्छ रावण यहाँ ❀ हेरौँ तमाशा भनी ॥
राम्को रावणको परस्पर तहाँ ❀ खुप् युद्ध ठूलो भयो ।
रात्रीको दिनको प्रकाश् नभइ काल् ❀ धेर् युद्ध हूँदा गयो ॥२५९
रावण्को शिर काट्नलाइ जब वाण् ❀ फेक्या प्रभूले तहाँ ।
तालैका फल झैँ गिरे तपनि शिर् ❀ गीरेन पृथ्वीमहाँ ॥
एकोत्तर् शय शिर् गिरे जति गिरून् ❀ सब् बन्न लाग्या तसै ।
क्या भो आज भनी प्रभूकन पनी ❀ आश्चर्य लाग्यो तसै ॥२६०
ठूला दैत्य बडा बडा विर पनी ❀ जुन् वाणले मारिया ।
सोही वाण् पनि आज रावणउपर् ❀ ताकेर खुप् हानिया ॥
काट्छन् सब् शिर वाणले र दशशिर् ❀ भैँमा खसाल्छन् पनि ।
फेर् ज्यूँका तिउँ शिर् हुन्या गरुँकसो ❀ क्या भो यहाँ को जनि ॥२६१
यो चिन्ता रघुनाथमा जब पर्‍यो ❀ साम्ने विभीषण् गया ।
यो हेतू छ भनेर हेतु जति हो ❀ सब् बिन्ति गर्दा भया ॥
ब्रह्माको वरदान् छ शिर् खसिगया ❀ फेर् उम्रनन् शिर् भनी ।
त्यो अमृत् पनि नाभिमा छ तब यो ❀ मर्दैन काटे पनि ॥२६२
सो अमृत् सब शोषिबक्सनुहवस् ❀ सब् सुक्छ अमृत् जसै ।
चाँडै त्यो मरिजान्छ तेस् बखतमा ❀ उठ्तैन फेरी कसै ॥

हात् जोरेर जसै विभीषणजिले ❀ यो गुह्य खोलीदिया ।
ठाकुर्ले पनि अग्निवाण झटपट् ❀ हानेर शोषीलिया ॥२६३
त्यो अमृत् जब शोषिबक्सनुभयो ❀ यो दिन्छ अर्ती भनी ।
रिस्ले शक्ति लिई विभीषण-उपर् ❀ ताकेर हान्यो पनि ॥
राम्ले शक्ति र शिर् दसै छिनिदिया ❀ फेर् एक शिर्को भई ।
नानाशस्त्र लिएर खुप्सित लड्यो ❀ राम्का अगाडी गई ॥२६४
तेस् बीच्मा पनि मातली अघि सरी ❀ हात् जोरि बिन्ती गऱ्या ।
हेनाथ् ! रावण लड्छ यो अझ भन्या ❀ फेर् शस्त्र हान्नै पऱ्या ॥
ब्रह्मास्त्रै अब छोडिबक्सनुहवस् ❀ खुप् मर्म तोड्न्या गरी ।
माऱ्या युक्ति त एक् यही छ नहिँ ता ❀ मर्दैन काट्या पनि ॥२६५
बिन्ती मातलिको सुनी प्रभुजिले ❀ एक् बाण् तुरुन्तै लिया ।
जस्मा अग्नि र वायु सूर्य इ समेत् ❀ लोक्पाल् बस्याका थिया ॥



(८४. रामले रावणका दशै टाउका काटेको ।)

मन्त्री वेदविधानले र धनुमा ❀ त्यै वाण् लगाया जसै ।
प्राणीलाइ पनी बहुत् भय भयो ❀ खुप् भूमि कामिन्तसै ॥२६६

रावण्को तर्हिं छाति ताकिकन वाण् ❀ छोड्या मरोस् यो भनी ।
तेस् वाण्ले त तहाँ सहज् मरिगयो ❀ घूमेर लोट्यो पनि ॥
बाँकी राक्षस जो थिया ति पनि सब् ❀ दौडेर भागीगया ।
जित् भो श्रीरघुनाथको भनि तहाँ ❀ सम्पूर्ण खूशी भया ॥२६७
त्यै बीच्मा नगरा बज्या,प्रभु-उपर् ❀ खुप् पुष्पवृष्टी भयो ।
नाच्या अप्सरगण,ऋषी खुशिभया ❀ सम्पूर्णको ताप् गयो ॥
रावण्को पनि देहदेखि तर्हिं तेज् ❀ निस्क्यो र सूर्यै सरि ।
श्रीराम्चन्द्रजिमा मिली पनि गयो ❀ संसार-सागर् तरी ॥२६८
विष्णुद्वेषि परस्त्रिमा रत हुन्या ❀ यो ब्रह्मघाती पनि ।
श्रीराम्चन्द्रजिमा मिल्यो कसरि यो ❀ आश्चर्य लाग्यो भनी ॥
गर्थ्या बात् सब देवतागणहरू ❀ नारद्जि ताहीं गया ।
जेले रावण राममा मिलिगयो ❀ त्यो ताहिं भन्दा भया ॥२६९
साँचो भन्छु म आज देवगण हो !❀ यस्ले बहुत् ध्यान् गर्‍यो ।
सीतानाथ् प्रभुको र यो तब सहज् ❀ संसार-सागर् तर्‍यो ॥
भक्तीले भयले अवर् तरहले ❀ कौनै प्रकार्ले गरी ।
ध्यान्सीतापतिकोगर्‍योपनिभन्या ❀ जाइन्छ संसार् तरी ॥२७०
रावण् मारि धनू उतारि करको ❀ एक् शर् लिनाले गरी ।
चारौँतर्फ घुमाउँदा शरिरमा ❀ धेर् वाणको खत् परी ॥
कोटी सूर्य्य सरी त तेज् छ जसका ❀ यस्ता जगन्नाथ् हरि ।
हाम्रा दुःख पनी सबै हरिदिऊन् ❀ संपूर्ण पाप् नाश् गरी ॥२७१
रावण् मारि उतारि भारि भुमिको ❀ सुग्रीव् विभीषण्हरू ।
लक्ष्मण् अङ्गदजाम्बवान् र हनुमान् ❀ जो जो थिया वीर् अरू ॥

ती सब्लाइ हुकूम् भयो प्रभुजिको ❀ तिम्रै कृपाले गरी ।
मार्‍याँ रावणलाइ कीर्ति रहला ❀ तिम्रो तिनै लोक्भरी ॥२७२
रावण्का सब रानि आयर विलाप् ❀ खुप् गर्न लाग्या तहाँ ।
पृथ्वीमा लडि खूप् विभीषण पनी ❀ रोया रहन्थ्या कहाँ ॥
बीत्या दाजु भनी विभीषण पनी ❀ खुप् रून लाग्या जसै ।
लक्ष्मण्लाइ हुकूम् भयोप्रभुजिको ❀ संझाउ भन्न्या तसै ॥२७३



(८५. नाभिको अमृत शोषिएपछि मरेको रावणको नजीक बसी उसका रानीहरूले विलाप गरेको ।)

दाज्यूको किरिया गरून् सब हरून् ❀ ती रानिका शोक् पनि ।
हूकूम् येति मिल्यो र लक्ष्मण गया ❀ जल्दी बुझाऊँ भनी ॥
लाग्या भन्न अहो विभीषण ! तिमी ❀ क्या यो नजान्न्या सरि ।
लाग्यौ गर्न विलाप् अनेक् तरहले ❀ खालीजमीन्मा परी ॥२७४
तिम्रो यो अघि जम्ममा कउन हो ❀ ऐह्ले त दाज्यू भयो ।
फेरी क्या हुनलाइ रावण यहाँ ❀ छोडेर काहाँ गयो ॥
जम्मा भैकन बालुवा जसरि फेर् ❀ फिर्छन् ति गङ्गामहाँ ।
उस्तै रीत्सित फिर्दछन् इ दुनियाँ ❀ क्वै छैन आफ्नू यहाँ॥२७५

अज्ञान्को मति यो नलेउ तिमिले ❀ झूठो जगत् हो भनी ।
जानी श्री रघुनाथका चरणमा ❀ खुप् ध्यान् लगाऊ पनि ॥
प्रारब्धै बलवान् बुझेर सब यो ❀ राज्यादि गर्दै रहू ।
जो पर्छन् परिआउन्या सब कुरा ❀ नीका ननीका सहू ॥२७६

दाज्यूको गरिहाल आज तिमिले ❀ क्रीया विधान्ले गरी ।
रुन्छन् रानिहरू बुझाउ अहिले ❀ चाँडै अगाडी सरी ॥
यस्ता ठाकुरको हुकूम् छ भनि बेस् ❀ रीत्ले बुझाया जसै ।
विस्तार् लक्ष्मणको सुन्या र झटपट् ❀ ऊठ्या विभीषण् तसै ॥२७७

बिन्ती गर्न भनी जहाँ प्रभु थिया ❀ ताहाँ तुरुन्तै गया ।
हात् जोरीकन रामका हजुरमा ❀ क्यै बिन्ति गर्दा भया ॥
हेनाथ् मर्जि भयो, कबूल् गरिलियाँ ❀ आज्ञा शिरोपर् धरी ।
बिन्ती गर्छु तथापि सत्य भगवन्! ❀ एक् भारि शंका परी ॥२७८

यो क्रूर हो अति, परस्त्रि पनी त हर्न्या ।
यस्को क्रिया कसरि योग्य भनेर गर्न्या ॥
बिन्ती गर्‍या यति विभीषणले र ताहाँ ।
खूशी भई हुकुम भो उहि बीचमाहाँ ॥२७९॥

बाचुन्ज्याल् रिस हुन्छ शत्रुसितको ❀ ऐह्ले मरी यो गयो ।
यस्को रिस् अब गर्नु छैन अब ता ❀ मेरो त रिस् दूर् भयो ॥
रुन्छन् रानिहरू बुझाउ, गर लौ ❀ क्रीया विधान्ले गरी ।
पैह्ले यै नगरी हुँदैन तिमिले ❀ यै हो क्रियाको घरि ॥२८०

हूकूम् येति सुन्या जसै प्रभुजिको ❀ योग्यै हुकूम् भो भनी ।
रानीलाइ बुझाउनाकन गया ❀ चाँडै विभीषण् पनि ॥

रानीलाइ बुझाइ सब् गरिसक्या ❀ क्रीया विधान्ले गरी ।
रानी सब् घरमा पठायर गया ❀ जाहाँ थिया राम् हरि ॥२८१
खूशी खुप् रघुनाथ् पनी हुनुभयो ❀ सम्पूर्ण खूशी भया ।
बीदा भैकन मातली पनि तहाँ ❀ फेर् इन्द्रथ्यैँ गैगया ॥
लक्ष्मण्लाइ हुकूम् दिया प्रभुजिले ❀ पैह्ले दियाँ तापनि ।
गादीमा लगि फेर् विभीषण- उपर् ❀ ऐह्ले तिमीले पनि ॥२८२

विभीषणको राज्याभिषेक र सीताजीको अग्निपरीक्षा—१२ ( १ )

देऊ लौ अभिषेक् भनी प्रभुजिको ❀ हूकूम् भएथ्यो जसै ।
लक्ष्मण्लेलगि गादिमाथि धरि फेर् ❀ दीया अभीषेक् तसै ॥
गादीमाथि बसाइ, साथ लिइ फेर् ❀ राम्चन्द्रजीथ्यैँ गया ।
लक्ष्मण्ले रघुनाथका हजुरमा ❀ सब् बिन्ति गर्दा भया ॥२८३
तेस् बीच्मा रघुनाथ् प्रसन्न हुनुभो ❀ पूग्यो प्रतिज्ञा पनि ।
सुग्रीव्लाइ पनी सह्लाउनुभयो ❀ तिम्रो कृपा हो भनी ॥
ऐह्ले हे हनुमान् ! विभीषणजिको ❀ मत्ले सिताथ्यैँ गई ।
सब् सम्चार बताउ जाउ अहिल्यै ❀ सूनुन् बहुत् खुश् भई ॥२८४
जो भन्छिन् ति कुरा बताउन यहाँ ❀ फेर् जल्दि आऊ भनी ।
हूकूम् पाइ गया विभीणजिका ❀ मत्ले हनूमान् पनि ॥
सीताथ्यैँ हनुमान् पुग्या रुखमनी ❀ सीता बस्याकी थिइन् ।
पाऊमा हनुमान् पऱ्या जननिले ❀ चुप्भैनजर् खुप्दिइन् ॥२८५
चीह्नीन् ई हनुमान हुन् भनि र खुप् ❀ खूशी भईथिन् जसै ।
विस्तार् बिन्ति गऱ्या सबै जननिथ्यैँ ❀ श्रीरामजीका तसै ॥
झन् खूशी जननी भइन् खुशि हुँदा ❀ क्यै बोल्न लागिन् तहाँ ।
क्या दीन्या तिमिलाइ चीज हनुमान् ❀ खूशी गरायौ यहाँ ॥२८६

तिम्रो यो प्रिय वाक्यतुल्य त अनेक् ❀ रत्नादिका हार् पनि ।
लाग्दैनन् अरु चीजदेखिन् ठुलो ❀ यो चीज् दिन्या हो भनी ॥
बोले ती अरु चीजदेखि त ठुलो ❀ श्रीराम् जगत्का पति ।
खूशी खुप् हुनुहुन्छ ता खुशि म छू ❀ चाहिन्न दौलथ् रती ॥२८७
यो बिन्ती सुनि खूशि भैकन तहाँ ❀ फेरी अह्राइन् पनि ।
राम्को दर्शन गर्छु बिन्ति गर गै ❀ भेट् गर्न खोज्छिन् भनी ॥
सीताका इ वचन् सुनेर हनुमान् ❀ राम्का हजूर्मा गया ।
दर्शन्को मतलब् थियो जननिको ❀ सोबिन्ति गर्दा भया ॥२८८
त्यो बिन्ती हनुमानले हजुरमा ❀ ताहाँ गर्न्याथ्या जसै ।
मर्जी भो प्रभुको विभीषणजिका ❀ साथ् लागि आया तसै ॥
जाऊ ल्याउ सिताजिलाइ तिमिले ❀ सब् देह निर्मल् गरी ।
आऊन् भेट्न सिता अनेक् तरहका ❀ भूषण् शरीर्मा धरी ॥२८९
हूकूम्ले हनुमानलाइ सँगमा ❀ लीई विभीषण् गया ।
जल्दी स्नान गराउनाकन तहाँ ❀ खुप् यत्न गर्दा भया ॥
पैह्ले स्नान गराइ शुद्ध कपडा ❀ पैह्राइ भूषण् पनि ।
थीया सुन्दर जुन् दिया खुशि हुँदै ❀ पैरून् सिताजी भनी ॥२९०
डोलीमाथि सिता चढाइ खुशि भै ❀ हींड्या विभीषण् जसै ।
दर्शन् गर्न भनेर वानरहरू ❀ आया र घेऱ्या तसै ॥
चौकी गर्न भनेर डोलि नजिकै ❀ जो ती रह्याका थिया ।
सब्वानर्हरुलाइ तेस् बखतमा ❀ तिन्ले हटाईदिया ॥२९१
कोलाहल् अधिकै भयो प्रभुजिले ❀ सून्या नजर् भो पनि ।
हूकूम् भो रघुनाथको किन तहाँ ❀ वानर् हटायो भनी ॥

आमा जानि ति हेर्दछन् सब जना ❀ हेरून् ति वानर्हरू ।
डोलीमा किन चढ्दछिन् अब सिता ❀ पैदल् ति आउन् बरु ॥२९२
सूनिन् ख्वामितको हुकूम् र जननी ❀ जल्दी जमीन्मा झरिन् ।
पाऊ पर्छु भनेर खुप् खुशि हुँदै ❀ साम्ने अगाडी सरिन् ॥
काम्को सिद्ध गराउनाकन सिता ❀ माया- स्वरूपी थिइन् ।
काम् हो रावण मार्नको कुल समेत् ❀ सब् सिद्ध पारीदिइन् ॥२९३
अग्नीमा अघि राखियाकिकन फेर् ❀ लीन्या तहाँ सूर् गरी ।
दोष् दीया रघुनाथले किन यहाँ ❀ आयौ अगाडी सरी ॥
अर्काका घरमा बस्याकि भनि यो ❀ दोषै दिनूभो जसै ।
लक्ष्मण्लाइ हुकूम् दिइन् जननिले ❀ विश्वासखातिर् तसै ॥२९४
हेलक्ष्मण् ! तिमि अग्नि बाल अहिले ❀ ताहीँ प्रवेश् गर्दछु ।
साँचै छू त म बाचुँली झुटि भया ❀ ऐह्ले तहीँ मर्दछु ॥
हूकूम् लक्ष्मणले तहाँ जननिको ❀ सून्या र राम्को पनि ।
मत् पाईकन अग्नि खुप् गरि ठुलो ❀ बालीदिया बेस् भनी ॥२९५
सीताजी पनि खुप् प्रदक्षिण गरिन् ❀ राम्को र भक्ती गरी ।
अग्नीको नजिकै खडा पनि भइन् ❀ केही अगाडी सरी ॥
द्यौता ब्राह्मण संझि राम्-चरणको ❀ ध्यान् भित्रिमन्मा धरिन् ।
सब्का साक्षि भनेर अग्निसित हात् ❀ जोरी पुकारा गरिन् ॥२९६
जस्ता रीत्सित रामको चरणमा ❀ ध्यान्मा रह्याकी म छु ।
तस्तै रीत्सित अग्नि शीतल हऊन् ❀ तापै नलागोस् कछु ॥
बोलिन् येति र अग्निमा पसिगइन् ❀ ताहाँ सिताजी जसै ।
सब्को ताप् मनमा भयो विरहका ❀ बात् गर्न लाग्या तसै ॥२९७



(८६. लङ्कामा सीताले सुग्रीवादिका सामु अग्निप्रवेश गरेर आफूलाई चोखी साबित गरेको ।)

सीता अग्निविषे जहाँ त पसिथिन् ❀ इन्द्रादि लोक्पाल्हरू ।
ब्रह्मा रुद्र समेत् सबै तहिँ गया ❀ जो देवता छन् अरू ॥
जम्मा भै रघुनाथको स्तुति गऱ्या ❀ सब् देवगण्ले पनि ।
ब्रह्माले पनि खुप् गऱ्या स्तुति तहाँ ❀ मालिक्र्यिनैहुन्भनी ॥२९८
अग्नीले पनि खुप् गरे स्तुति तहाँ ❀ राम्का चरण्मा परी ।
भूषण् वस्त्र अनेक् धऱ्याकि जननी ❀ सीता अगाडी धरी ॥
सीताजीकन आजसम्म त यहाँ ❀ राखीदियाको थियाँ ।
काम्को सिद्ध भयो लिनू अब हवस् ❀ सीता हजूरमा दियाँ ॥२९९
अग्नीले पनि बिन्ति बात् गरि तहाँ ❀ सीता जसै ता दिया ।
खूशी मन् रघुनाथको हुन गयो ❀ सीताजिलाई लिया ॥
सीताजीकन काखमा लिइ तहाँ ❀ ठाकुर् बस्याथ्या जसै ।
भक्तीले स्तुति इन्द्रले पनि गऱ्या ❀ खूशी भया सब् तसै ॥३००

देवताहरूले रामको स्तुति गर्नु, सीताजीसहित अग्निदेव प्रकट हुनु, अयोध्याका लागि प्रस्थान–१३

फेर् बिन्ती शिवले खुशी भइ गऱ्या ❀ राम्का हजूर्मा तहाँ ।
सीतानाथ ! म आउन्याछु पछि फेर् ❀ व्हाहीँ अयोध्यामहाँ ॥

ऐह्ले ई दशरथ् पिता हजुरका ❀ मिल्ला कि दर्शन् भनी ।
आया दर्शन आज बक्सनुहवस् ❀ ख्वामित् प्रभूले पनि ॥३०१

यो बिन्ती शिवको सुनेर दशरथ्- ❀ जीका हजूर्मा गई ।
पाऊमा शिर राखिबक्सनुभयो ❀ अत्यन्त खूशी भई ॥
आलिङ्गन् दशरथ्जिले पनि गऱ्या ❀ ताऱ्यौ मलाई भनी ।
बीदा भै दशरथ्जिले पनि गया ❀ फेर् स्वर्ग लोक्मा पनि ॥३०२

वानर्को जति फौज् मऱ्यो रण हुँदा ❀ ती सब् बचाऊ भनी ।
अमृत् वृष्टि गराउनाकन हूकूम् ❀ भो इन्द्रलाई अनि ॥
हूकूम् पाइ ति इन्द्रले पनि तहाँ ❀ अमृत् गिराया जसै ।
वानर्का सब फौज् खडा पनि भया ❀ राम्का कृपाले तसै ॥३०३

बिन्ती ताहिँ गऱ्या विभीषणजिले ❀ राम्का चरण्मा परी ।
मंगल् स्नान् गरिबक्सियोस्हजुरले ❀ यो स्नानको हो घरि ॥



(८७. रामका आज्ञाले इन्द्रले अमृत छर्किई मरेका वानरहरूलाई बाँचेका बनाएको ।)

मंगल् स्नान् गरि वस्त्र भूषण धरी ❀ राज् आज याहीँ हवस् ।
सेवक् हूँ करुणानिधान् ! हजुरको ❀ प्रीती ममाथी रहोस् ॥३०४

बिन्ती सूनि हुकूम् भयो हुन त हो ❀ जान्या त हो स्नान् गरी ।
क्यारूँ आज घरै छ भाइ त भरत् ❀ मै झैं जटाजूट् धरी ॥
त्यो भाई पर राखि आज म यहाँ ❀ कुन् रीतले स्नान् गरूँ ।
सुग्रीव् वीर्हरु छन् इ देउ तिमिले ❀ यिन्लाइ खिल्लत् बरु ॥३०५
हूकूम् येति हुँदा विभीषणजिले ❀ रत्नादि वृष्टी गऱ्या ।
जस्ले जुन् चिज खोज्छ सो चिज दिई ❀ सब् फौजको ताप् हऱ्या ॥
सब् फौज्लाइ बिदा पनी दिनुभयो ❀ राम्ले कृपा खुप् गरी ।
फौज् वानर्हरुको पनी तरिगयो ❀ आनन्दमा खुप् परी ॥३०६

अयोध्याका लागि प्रस्थान–१३ (३)

काम् सब् सिद्ध भयो यहाँ किन बसूँ ❀ जान्छू अयोध्या भनी ।
सीता लक्ष्मण साथमा लिइ चढ्या ❀ श्रीराम् विमान्मा पनि ॥
सुग्रीव् अङ्गदजी विभीषणसमेत् ❀ राम्का हजूरमा थिया ।
तिन्लाई पनि जाउ राज् गर भनी ❀ बीदा प्रभूले दिया ॥३०७
ती सब्ले तहिँबिन्ति खुप् सित गऱ्या ❀ जान्छौं अयोध्यै भनी ।
सब्को आग्रह देखि खूशि हुनुभो ❀ ताहाँ रमानाथ् पनि ॥
पुष्पक्मा चढ आज झट्ट सब लौ ❀ भन्न्या हूकूम् भो जसै ।
सुग्रीव् श्रीहनुमान अङ्गद चढ्या ❀ पुष्पक् विमान्मा तसै ॥३०८
आफ्ना मन्त्रि लिई विभीषण पनी ❀ तेसै विमान्मा बस्या ।
सेना सुग्रिवका पनी हुकुमले ❀ सम्पूर्ण ताहीँ पस्या ॥
सीतानाथहरू सबै बसि रही ❀ शोभा अधिक् गर्दथ्या ।
सो शोभाकन वानरादि विरले ❀ देखेर छक् पर्दथ्या ॥३०९

सेना समेत् सब विमान उपर् चढाई ।
हूकूम् दिया प्रभुजिले जब जानलाई ॥

आकाश मार्ग गरि जान विमान लाग्यो ।
शोभा अपूर्व रघुनाथ चढ्या र पायो ॥३१०॥

अयोध्यायात्रा, भरद्वाजमुनिको आतिथ्य तथा भरत- मिलाप–१४

ऊड्यो पुष्प विमान् जसै हुकुमले ❀ आकाश बीच्मा पसी ।
पृथ्वीको पनि याद् सबै हुन गयो ❀ तेसै विमान्मा बसी ॥
जुन्जुन् काम जहाँ जहाँ अघि भयो ❀ यांहाँ गर्‍याँ यो भनी ।
सीतालाइ नजर् गराउनुभयो ❀ खुश् भै प्रभूले पनि ॥३११
त्यो लङ्कापुरि हो अगम् छ बलले ❀ को जान सक्छन् अरू ।
त्यो भूमी रणभूमि हो तहिँ मर्‍या ❀ ठूला ठुला वीर्हरू ॥
ताहीँ रावण कुम्भकर्ण त मर्‍या ❀ भारी लडाईँ गरी ।
लक्ष्मण्ले तहिँ इन्द्रजित्कन जित्या ❀ साम्ने अगाडी सरी ॥३१२
सागर्मा पनि हेर सेतु बलियो ❀ बाँध्याँ र सागर् तर्‍याँ ।
रामेश्वर् भनि नाम राखि शिवको ❀ स्थापन् किनार्मा गर्‍याँ ॥
चार् मन्त्रीसँग ली विभीषण तहाँ ❀ आई शरण्मा पर्‍या ।
किष्किन्धा यहि हो यसै नगरिमा ❀ सुग्रीव राजा भया ॥३१३
वार्ता येति गरी सीतासित र फेर् ❀ तारा झिकाऊँ भनी ।
सुग्रीव्लाइ हुकूम् भयो प्रभुजिको ❀ तारा झिकाऊ भनी ॥
तारा रानिहरू समेत् चढिसक्या ❀ ताहाँ विमान्मा जसै ।
सीतालाइ नजर् गराउनुभयो ❀ बाली गिर्‍याको तसै ॥३१४
सीता ! हेर अगाडि पञ्चवटि बेस् ❀ राक्षस् तहाँ धेर् मर्‍या ।
त्यो आश्रम् पनि हो अगस्ति ऋषिको ❀ जस्ले कृपा खुप् गर्‍या ॥
तेसै पल्तिरको सुतीक्ष्ण ऋषिको ❀ धेरै ऋषी छन् तहाँ ।
त्यो हो पर्वत चित्रकूट् भरतले ❀ भेट्नै त आया यहाँ ॥३१५

जो आश्रम् यमुनाजिको छ तिरमा ❀ ताहाँ भरद्वाज छन् ।
गङ्गा हुन् इ अगाडिकी नजरले ❀ देख्नै खुशी हुन्छ मन् ॥
जो देख्छ्यौ अझझन् परै सरयु हुन् ❀ ती हुन् अयोध्या पुरी ।
हे सीता ! गर लौ प्रणाम तिमिले ❀ भक्ती मनैमा धरी ॥३१६
सीताजीकन येहि रीत्सित सबै ❀ खोलेर विस्तार् गरी ।
भारद्वाज्कन गै प्रणाम् पनि गऱ्या ❀ जल्दी जमीन्मा झरी ॥
हात् जोरीकन सोध्नुभो अनि तहाँ ❀ सब् जन् कुशल्छन्भनी ।
वृद्धै हुन् महतारिको छ गति क्या ❀ ज्यूँदै तिछन् की भनी ॥३१७



(८८. श्रीरामहरू भरद्वाजको आश्रममा ओर्ली भरद्वाजलाई ढोगेको ।)

क्याबात् भाइ ठुलाभरत् पनि भया ❀ सब्का उपर् काम् गरी ।
चौधै वर्ष रह्या व्रती भइ ति झन् ❀ चिन्ता म-माथी धरी ॥
भारद्वाज् ऋषिले पनी सब कुशल् ❀ थीया बताईदिया ।
हे नाथ् ! छन् कुशलै सबै भरतका ❀ मात्रै विपत्ती थिया ॥३१८
हजुर पर हुनाले रोज् फलै मात्र खान्छन् ।
हजुर सरि खराऊ गादिमा राखि मान्छन् ॥

शिरभरि छ जटाजूट् वल्कलै छन् धऱ्याका ।
फगत हजुरमा छन् प्राण अर्पण् गऱ्याका ॥३१९॥
सब् जान्दछू हजुरले पनि काम् गऱ्याको ।
राक्षस् विनाश गरि भार् भुमिको हऱ्याको ॥
हो सब् प्रसाद् हजुरको सब तत्त्व जान्याँ ।
जो ब्रह्म हो उ त हजुरकन आज मान्याँ ॥३२०॥
लीला गरी हजुरले अवतार् धऱ्याको ।
ब्रह्मादि देवगणको पनि ताप् हऱ्याको ॥
जो ई चरित्रकन खुश् भइ गान गर्छन् ।
संसार्-समुद्र सहजै-सित पार तर्छन् ॥३२१॥
ब्रह्माजिका वचनले यहि रूप धारी ।
भार् हर्नुभो सकल राक्षसलाइ मारी ॥
सब् लोकको हित हुन्या अरु काम् गरीनन् ।
चौधै भुवन् हजुरका यशले भरीनन् ॥३२२॥

भरद्वाज मुनिको आतिथ्य–१४ ( २ ) भरत मिलाप–१४ ( ३ )

मेरो आज पवित्र घर् पनि हवस् ❀ एक् रात् यहाँ राज् गरी ।
भोली जानु असल् हुन्याछ पुरिमा ❀ बिन्ती छ पाऊ परी ॥
भारद्वाज् ऋषिले यती हजुरमा ❀ बिन्ती गऱ्या राज् भयो ।
सन्मान् सैन्य समेतको गरिलिया ❀ संपूर्णको ताप् गयो ॥३२३
हूकूम् भो हनुमानलाइ हनुमान् ! ❀ लौ शृङ्गबेर्मा गई ।
मेरा खुप् प्रिय छन् सखा गुह तहाँ ❀ तिन्थ्यैं समाचार् कही ॥
नन्दीग्राम् गइ भाइलाइ गरि भेट् ❀ श्रीराम आया भनी ।
मेरो लक्ष्मणको सिताजिहरुको ❀ सम्चार् बताऊ पनि ॥३२४

मैले काम जती गर्‍याँ भरतथ्यैँ ❀ सम्पूर्ण विस्तार् गरी ।
व़ाहाँको समचार् लिईकन फिर्‍या ❀ सन्ताप् सबैको हरी ॥
हूकूम् यो हनुमानले जब सुन्या ❀ मानिस् सरीका बनी ।
जल्दी गै गुहलाइ सब् कहिदिया ❀ आया सिताराम् भनी ॥३२५
फेर् जल्दी सरयू तरीकन गया ❀ देख्या अयोध्या पनि ।
नन्दीग्राम् जब देखियो तहिँ गया ❀ जान्या यहीँ हो भनी ॥
व़ैलाई रहँदा जउन् तरहले ❀ फूल् सुक्छ फुस्रो भई ।
त्यस्तै रैयतको दशा उस बखत् ❀ देख्या हनूमान् गई ॥३२६

देख्या तहाँ भरतलाइ जटा धर्‍याका ।
श्रीरामका चरण-चिन्तन खुप् गर्‍याका ॥
राम्का खराउकन मालिक जानि मानी ।
हूकूम् दिदा पनि त सेवक आफू जानी ॥३२७॥
सब् गेरुवा पहिरि मन्त्रि पनी बस्याका ।
राम्को भजन्तिर त कम्मर खुप् कस्याका ॥
देख्या भरत्कन र खुश् भइ हात जोडी ।
बिन्ती गर्‍या भरतका सब ताप तोडी ॥३२८॥

जस्को चिन्तन गर्नुहुन्छ महराज् ❀ सो नाथ् सिताराम् पनि ।
आईपुग्नुभयो मलाइ अघि जा ❀ भेट् भाइलाई भनी ॥
हूकूम् भो रघुनाथको र म यहाँ ❀ आयाँ हुकूम्ले गरी ।
सीता लक्ष्मणले सहित् कुशल छन् ❀ त्रैलोक्यका नाथ् हरि ॥३२९
येती वीर्हरु साथ छन् भनि कुशल् ❀ विस्तार् सुनाया जसै ।
खूशी भैकन अंकमाल् पनि गर्‍या ❀ ताहाँ भरत्ले तसै ॥

राम्को सुग्रिवको कहाँ हुन गयो ❀ भेद् सब् बताऊ भनी ।
सोध्या ताहिँ भरत्जिले र हनुमान्- ❀ ले सब् बताया पनि ॥३३०



(८९. भरतलाई राम आएको समाचार सुनाउन गएका हनुमान्‌को र भरतको अङ्कमाल ।)

सुग्रीव् सीत मित्यारि गर्नु पनि भो ❀ साहाय सुग्रीव् भया ।
लंकामा रहिछन् सिता र रघुनाथ्- ❀ ज्यूका सँगै ती गया ॥
सीता रावणले हरेछ र बहुत् ❀ दुःखी सरीका भई ।
सीताजीकन खोजि खोजि रघुनाथ् ❀ फेर् ऋष्यमूक्मा गई ॥३३१
लंकामा गइ भारि युद्ध गरियो ❀ सब् रावणादी मन्या ।
लंकामा अधिराज् विभीषण गरी ❀ श्रीराम् अयोध्या फिन्या ॥
सब् विस्तार् हनुमानदेखि रघुनाथ्- ❀ ज्यूका सुन्याथ्या जसै ।
भाईलाइ हुकूम् दिया नगरिको ❀ संस्कार-खातिर् तसै ॥३३२
हे शत्रुघ्न ! गराउ सब् नगरिको ❀ संस्कार् अगाडी सरी ।
सब् देवालयमा पुजा अब गरून् ❀ नाना विधान्ले गरी ॥
सुत् वैतालिक बन्दि जन्हरु समेत् ❀ निस्कून् ति कस्वीहरू ।
सब् जाउन् रघुनाथका हजुरमा ❀ जो जो यहाँ छन् अरू ॥३३३

भारी फौज लियेर मन्त्रिहरुले ❀ सब् राजपत्नी लिया ।
ब्राह्मण्लाइ अगाडि लायर हिडून् ❀ सब्लाइ ऊर्दी दिया ॥
हूकूम् येति दिया तहाँ भरतले ❀ हूकूम् बमोजिम् गरी ।
हात्मा भेटि लियेर लश्कर चल्यो ❀ खुप् हर्ष भो तेस् घरि ॥३३४
श्रीराम्चन्द्रजिका खराउ शिरमा ❀ राखी तयारी भया ।
भाई साथ लिई भरत् प्रभुजिथ्यैँ ❀ हीडेर पैदल् गया ॥
आयो श्रीरघुनाथको पनि विमान् ❀ चन्द्रै सरीको बनी ।
देखाया हनुमानले प्रभुजिको ❀ तेही विमान् हो भनी ॥३३५
देख्या श्रीरघुनाथको जब विमान् ❀ कीर्तन् सबैले गऱ्या ।
घोडामा रथमा जती विर थिया ❀ ती सब् जमीन्मा झऱ्या ॥
पृथ्वीमा नझरीकनै प्रभुजिको ❀ दर्शन् मिलेथ्यो जसै ।
टाढैबाट गऱ्या प्रणाम् भरतले ❀ खुप् हर्ष मान्या तसै ॥३३६
भाईलाइ विमानमा लिनुभयो ❀ ताहीँ जमीन्मा झरी ।
फेरी जल्दि पऱ्या भरत् चरणमा ❀ साष्टाङ्ग सेवा गरी ॥
काखैमा पनि राखिबक्सनुभयो ❀ राम्ले भरत् खुश् भया ।
सीताजीकन दण्डवत् गरुँ भनी ❀ साम्ने अगाडी गया ॥३३७
स्वामित् ! हूँ म भरत् परेँ चरणमा ❀ यस्तो पुकारा गरी ।
सीताका पनि पाउमा परिगया ❀ आनन्द सागर् परी ॥
लक्ष्मण्लाइ पनी प्रणाम् तहिँ गऱ्या ❀ काम्ले बडा छन् भनी ।
आलिंगन् गरि सुग्रिवादि विरको ❀ दिल् खुश् गराया पनि ॥३३८
सुग्रीवादि जती त वानर थिया ❀ ती मानिसै झैँ भई ।
सोध्या प्रश्न कुशल् सबै भरतको ❀ आफ्नू कुशल् सब् कही ॥

मर्जी सुग्रिवलाइ तेस् बखतमा ❀ यस्तो भरत्को भयो ।
याहींबाट दया भई प्रभुजिका ❀ सब् शत्रुको ज्यान् गयो ॥३३९



(९०. मानिसको रूप धारेका सुग्रीवादिहरूका साथ भरत शत्रुघ्नहरूको मेलमिलाप ।)

चारै भाइ थियौं अगाडि अहिले ❀ पाँचौं हुनूभो यहाँ ।
भाईका झइँ यो सहाय नभया ❀ राक्षस् जितिन्थ्या कहाँ ॥
यस्ता प्रेम्सित बात् गऱ्या भरतले ❀ सुग्रीवजीथ्यै गई ।
श्रीराम्चन्द्रजिका पऱ्या चरणमा ❀ शत्रुघ्न खूशी भई ॥३४०
लक्ष्मण्जीकन दण्डवत् गरि सिता- ❀ ज्यूका चरण्मा पऱ्या ।
सेवक् हूँ करुणानिधान् ! हजुरको ❀ यो ताहिँ बिन्ती गऱ्या ॥
श्रीराम्चन्द्रजिका खराउ शिरमा ❀ राखी गयाका थिया ।
वेला भो भनि पाउमा भरतले ❀ ताहीँ लगाईदिया ॥३४१
हात् जोरी विनती गऱ्या पनि तहाँ ❀ नासो लियाको थियाँ ।
यो गादी लिइबक्सियोस् हजुरले ❀ ऐह्ले हजूरमा दियाँ ॥
सब् कोश्मा पनि अन्नको र धनको ❀ दश् खण्ड बढ्ता गरी ।
राख्याको छु दयानिधान् ! हजुरको ❀ सेवाविषे मन् धरी ॥३४२

श्रीरामको राज्याभिषेक–१५

यो बिन्ती खुशिले तहाँ भरतले ❀ साम्ने गऱ्याथ्या जसै ।
देख्या भक्ति भरत्‌जिको खुशि भई ❀ सम्पूर्ण रोया तसै ॥
नन्दीग्राम् पुगि उत्रिबक्सनुभयो ❀ ठाकुर् जमीन्‌मा पनि ।
पुष्पक्‌लाइ बिदा पनी दिनुभयो ❀ कूबेरथ्यैं जा भनी ॥३४३
फेरि श्रीरघुनाथ् वशिष्ठ गुरुका ❀ पाऊ नमस्कार् गरी ।
याहाँराज्‌गरिबक्सियोस् भनि असल् ❀ आसन् अगाडी धरी ॥
आसन्‌मा गुरुलाइ राखि नजिकै ❀ आसन् विषे राज् भयो ।
पाया दर्शन रामको र सबको ❀ सम्पूर्णसन्ताप् गयो ॥३४४



(९१. राम लक्ष्मणले गुरु वसिष्ठलाई ढोगेको ।)

कैकेयी र भरत् मिलेर रघुनाथ्- ❀ ज्यूका चरण्‌मा परी ।
हात् जोरीकन राज्य अर्पण गऱ्या ❀ बिन्ती बहूतै गरी ॥
जस्ले एक कटाक्षले सहज यो ❀ ब्रह्माण्ड सब् हर्दछन् ।
जो ऐश्वर्य छ इन्द्रको उ पनि एक् ❀ क्षण्‌मा तयार् गर्दछन् ॥३४५
यस्ता शुद्ध अनन्त पूर्ण सुखरूप् ❀ ब्रह्म-स्वरूप्‌ले पनि ।
क्या राज् गर्नुथियो तथापि लिनुभो ❀ खूशी हऊन् ई भनी ॥

पैह्ले स्नान् भरतादिले जब गऱ्या ❀ क्षौर्ले जटा साफ् गरी ।
स्नान् सीतापतिको पछी तहिँ भयो ❀ तेस्तै प्रकार्ले गरी ॥३४६
माला चन्दन वस्त्र हार पहिरी ❀ आसन्विषे राज् भयो ।
राम्को स्नान् र सिताजिकोतहिँ सँगै ❀ हूँदा सबै ताप् गयो ॥
सीताराम् रथमा सवार् हुनुभयो ❀ सुग्रीव् विभीषण्हरू ।
हात्तीमा रथमा सवार् हुन गया ❀ घोडैमहाँ क्वै अरू ॥३४७
राम्का सारथि ता भरत् हुन गया ❀ सेवा म गर्छू भनी ।
सेतो छत्र लिया बहुत् खुशि हुँदै ❀ शत्रुघ्नजीले पनि ॥
पंखा लक्ष्मणले लिया प्रभुजिको ❀ सुग्रीवले ता चँवर् ।
अर्को चामर एक् विभीषणजिले ❀ खूशी भया सब् अवर् ॥३४८
मानिस्को त बखान् कहाँतक गरूँ ❀ सब् देवताले पनि ।
राम्को कीर्तन खुप् गऱ्या र सुनियो ❀ मीठो मधूरो ध्वनि ॥
भेरी शङ्ख मृदङ्ग आदि नगरा ❀ खूप् बज्न लाग्या पनि ।
श्रीराम्को पनि कुच् भयो रथ चढी ❀ जाऊँ अयोध्या भनी ॥३४९
श्रीराम्को पुरिमा प्रवेश् जब भयो ❀ सब् पौरवासी पनि ।
निस्क्या बालक वृद्ध दर्शन गरौँ ❀ हेरौँ तमाशा भनी ॥
देख्या श्रीरघुनाथलाइ रथमा ❀ थीया पिताम्बर् धरी ।
श्याम्सुन्दर् छ शरीर् किरीट शिरमा ❀ भूषण् शरीर्मा भरी ॥३५०
लाल् छन् नेत्र विशाल खुप् हृदयबेस् ❀ बेस् मोतिका हार छन् ।
शोभा चन्दन-पुष्पको पनि छ बेस् ❀ देख्तै भयो खूशि मन् ॥
सून्या स्त्रीहरुले पनी शहरमा ❀ आया सिताराम् भनी ।
सब्को चञ्चल चित्त भो र बहुतै ❀ हेरौँ सिताराम् भनी ॥३५१

छाड्या काम् घरको चढ्या गृह-उपर् ❀ सब् स्त्री अटाली गई ।
लावा पुष्प गिराउँदै प्रभुजिको ❀ दर्शन् गर्‍या खूश् भई ॥



(९२.पुरनारीहरूले अटालीहरूमा उभिएर राम सीता लक्ष्मण आएका हेरेको ।)

राम्को मोहनमूर्तिमा जब नजर् ❀ सब् स्त्रीहरूका पर्‍या ।
खूशी भैकन अंकमाल मनले ❀ सब् स्त्रीहरूले गर्‍या ॥३५२



(९३. राम लक्ष्मणले आमाहरूलाई ढोगेको ।)

ईषत् हास्य गरी प्रजाकन नजर् ❀ दीँदा रमानाथ् पनि ।
दर्‌वार् पौँचनुभो जहाँ त दशरथ् ❀ बस्थ्या उहीँ जाँ भनी ॥

कौसल्याहरुलाइ योग्य रितले ❀ ताहाँ नमस्कार् गरी ।
सुग्रीव्को पनि वास् खटाउनुभयो ❀ साह्रै पियारो गरी ॥३५३



(९२. विभीषण र सुग्रीवले राजमाताहरूलाई ढोगेको ।)

सुग्रीव्जीकन राख भाइ तिमिले ❀ पैह्ले म बस्थ्याँ जहाँ ।
सब्लाई तिमिले खटाउ बढिया ❀ घर् बस्नलाई यहाँ ॥
हूकूम् येति हुँदा तहाँ भरतले ❀ सोही बमोजिम् गऱ्या ।
सब्को वास खटन् भयो सब तहाँ ❀ आनन्दसागर् पऱ्या ॥३५४
आफै श्रीरघुनाथ् हुकूम् अब गरून् ❀ यो मन् भरत्ले गरी ।
सुग्रीव्लाइ अह्राउनू पनि भयो ❀ खुश् भै अगाडी सरी ॥
हे सुग्रीव ! खटाउनू अब पऱ्यो ❀ वीर् वीर् विचार् खुप् गरी ।
चारैतर्फ गई समुद्र पुगि जल् ❀ ल्याऊन् कलशमा भरी ॥३५५
श्रीराम्चन्द्रजिलाइ राज्यअभिषेक् ❀ गर्न्या बखत् भो भनी ।
मर्जी भो र भरत्जिको उहि बखत् ❀ ल्याईदिया जल् पनि ॥
जल् लीनाकन जाम्बवान् र हनुमान् ❀ अङ्गद् सुषेण् चार् गया ।
पौंच्या जल्दि समुद्रमा सहज जल् ❀ लीएर दाखिल् भया ॥३५६

त्यो जल् साथ लिई वशिष्ठ गुरुका ❀ साम्ने भरत्जी गया ।
यो हो चार समुद्रको जल भनी ❀ यो बिन्ति गर्दा भया ॥
फेर् बिन्ती कर जोरि खुप्सित गऱ्या ❀ यै जल् हजुर्ले छरी ।
श्रीराम्चन्द्रजिलाइ राज्यअभिषेक् ❀ दिनूहवस् यस् घरि ॥३५७



(९४. गुरु वसिष्ठले रामलाई राजतिलक लाइदिएको ।)

यस्तो बिन्ति सुनी वशिष्ठ गुरुले ❀ बेस् बिन्ति गर्छौं भनी ।
श्रीराम्चन्द्रजिलाइ राखनुभयो ❀ सिंहासनैमा पनि ॥
गौतम् वाल्मिकि वामदेव इ समेत् ❀ जाबालि ताहीँ थिया ।
ती सब्ले सँग भै वशिष्ठ गुरुले ❀ जल्दी अभीषेक् दिया ॥३५८
कन्या ब्राह्मणले पनी तुलसिदल् ❀ हालेर कुश्ले असल् ।
मन्त्रै-पूर्वक खूशि भैकन छऱ्या ❀ राम्का उपर् शुद्ध जल् ॥
सेतो छत्र लिया तहाँ प्रभुजिको ❀ शत्रुघ्नजीले गई ।
सुग्रीव्ले र तहाँ विभीषणजिले ❀ हाँक्या चमर् खुश् भई ॥३५९
माला काञ्चन वायुले पनि दिया ❀ हार् इन्द्रजीले पनि ।
नाना रत्न खजित् गरायर दिया ❀ पैरून् सिताराम् भनी ॥

गाऊँछन् तहिँ देवतागणहरू ❀ सब् अप्सरा नाच्तछन् ।
वर्ष्यो खुप्‌सित पुष्पवृष्टि नगरा ❀ बज्दा भयो खूशि मन् ॥३६०
गम्भीर् श्यामशरीर् किरीट शिरमा ❀ माला पिताम्बर् धरी ।
कोटी कामसमान सुन्दर स्वरूप् ❀ वाम्‌तर्फ सीता धरी ॥
सिंहासन् बसि सब् प्रजातिर नजर् ❀ दीनूभयाथ्यो जसै ।
दर्शन् गर्न भनेर पार्वति समेत् ❀ आया सदाशिव् तसै ॥३६१
डिम् डिम् शब्द भयो तहाँ डमरुको ❀ नन्दी र भृङ्गी पनि ।
ताल् वेताल्‌हरु नाच्न लागि त गया ❀ आया सदाशिव् भनी ॥
शम्भूका पछि देवगण् सब तहाँ ❀ आया र हाजिर् भया ।
श्रीराम्‌को स्तुति खुप् गर्‍या र खुशि भै ❀ सब् जल्दि फर्कीगया ॥३६२
बाजा खुप् शब्द गर्छन्, स्तुति गरि ॠषिगण्, देवगण् पाउ पर्छन् ।
वर्षन्छन् पुष्पवृष्टि प्रभु-उपर अनेक् प्राणिले सौख्य गर्छन् ॥



(९५. राम र सीता राजसिंहासनमा बस्नुभएको ।)

सिंहासन्‌मा विराज्मान् सकल गुणनिधान् राम् हुनूभो जसै ता ।
सीता लक्ष्मण् सँगै भै प्रभुकन हुनगो पूर्ण शोभा तसै ता ॥३६३

राजा श्रीरघुनाथ् हुँदा पृथिविमा ❀ शश्यादि खूबै बढ्यो ।
थीयानन् अति गन्ध जौन फुलमा ❀ तिन्मा सुगन्धी चढ्यो ॥
धेनूदान् वृषदान् गऱ्या प्रभुजिले ❀ तीस्कोटि सुन् दान् गरी ।
वस्त्राभूषण रत्न दान् पनि गऱ्या ❀ दारिद्र्य सब्को हरी ॥३६४
दान्ले ब्राह्मण खुश् गराइ रघुनाथ् ❀ सुग्रीवलाई पनि ।
माला सूर्य समानको दिनुभयो ❀ दीनू उचित् हो भनी ॥
मर्याद् खुप् गरि बाजुबन्द दिनुभो ❀ अङ्गद्जिलाई पनि ।
ताहीँ एक अमूल्य हार दिनुभो ❀ सीताजिलाई पनि ॥३६५

बाँदरहरू बिदा हुनु तथा ग्रन्थ-प्रशंसा–१६

सीताले हनुमानलाइ दिन सूर् ❀ बाँधेर हात्मा लिइन् ।
कस्तो हुन्छ हुकूम् भनीकन नजर् ❀ ख्वामित् तरफ् खुप् दिइन् ॥
जस्लाई दिन मन् छ देउ भनि यो ❀ हूकूम् भयाथ्यो जसै ।
प्यारा श्रीहनुमान् थिया तहिँ दिइन् ❀ त्यो हार् सिताले तसै ॥३६६
झन् दर्जा हनुमानको तहिँ बढ्यो ❀ फेरी प्रभूले पनि ।
के माँग्छौ वरदान माँग तिमिले ❀ दिन्छू म त्यो वर् भनी ॥
हूकूम् बक्सनुभो तहाँ र हनुमान् ❀ खुश् भै अगाडी सऱ्या ।
जे इच्छा मनमा थियो हजुरमा ❀ हात् जोरि बिन्तीगऱ्या ॥३६७
ख्वामित् ! नाम हजूरको जबतलक् ❀ लीनन् जगत्मा बडा ।
ताहींसिम्म शरीर् रहोस् हजुरको ❀ नाम् सुन्नलाई खडा ॥
ख्वामित् ! नाम हजूरको स्मरणमा ❀ आनन्द जो पाउँछु ।
त्यो आनन्द कतै मिलेन रघुनाथ् ❀ तेही नछूटोस् कछु ॥३६८
यो बिन्ती सुनि लौ भनी हुकुम भै ❀ फेरी कृपा भो पनि ।
बित्ला कल्प र यो बित्यापछि भन्या ❀ मुक्त हुन्याछौ भनी ॥

हूकूम् यो रघुनाथको हुन गयो ❀ फेर् जानकीले पनि ।
जो जो हुन् सुखभोग् सबै वश रहून् ❀ तिम्रा हनूमान् ! भनी ॥३६९
आशीर्वाद् यति बक्सनू जब भयो ❀ बीदा हुनूमान् भया ।
आनन्दाश्रु गिराइ तप् गरूँ भनी ❀ हीमालयैमा गया ॥
फेर् ठाकुर् गुहका अगाडि गइ यो ❀ हूकूम् कृपाले गऱ्या ।
जाऊ लौ घरमै बसीरहु फगत् ❀ मन्मात्र मैमा धऱ्या ॥३७०
यो प्रारब्ध ठुलो छ भोग नगरी ❀ टर्दैन कस्तै गरी ।
हून्यैछौ तिमि मुक्त-देह पछि ता ❀ संसार् सहज्मा तरी ॥
हूकूम् यो गरि मुख्य भक्त गुहका ❀ साम्ने अगाडी सरी ।
आलिंगन् गरि भूषणादि दिनुभो ❀ राज्यै समेत् थप् गरी ॥३७१
तत्त्वै ज्ञान् पनि बक्सनू तहिँ भयो ❀ आनन्द-सागर् परी ।
बीदा भै गुहजी गया घरमहाँ ❀ मन् राम्-चरण्मा धरी ॥
यस्तै रीत्सित सब् बिदा तहिँ हुँदै ❀ सुग्रीव् विभीषण् गया ।
लक्ष्मण् सेवक छन् सदा हजुरमा ❀ राम् राज्य गर्दा भया ॥३७२
आत्मारूप् सब कर्मका अधिपती ❀ निर्मल् अकर्ता पनि ।
कर्ता भैकन लोकलाइ उपदेश् ❀ गर्नू, उचित् हो भनी ॥
गर्नालायक अश्वमेधहरु जो ❀ ठूला ठुला यज्ञ हुन् ।
ती सब् यज्ञ पनी गऱ्या प्रभुजिले ❀ बाँकी रहन्थ्यो कउन् ॥३७३
राजा राम् भइबक्सनू जब भयो ❀ प्राणी प्रजा खुश् भया ।
जो पर्थ्या अघि ताप् अनेक् तरहका ❀ ती सब् प्रजाका गया ॥
गर्दैनन् विधवा विलाप् मुलुकमा ❀ लाग्दैन रोग्व्याध् पनि ।
सब् डाकू दबिया परेन कहिँ ताप् ❀ यो चीज् हरायो भनी ॥३७४

बूढो बाँचि मरेन बालक कहीँ ❀ यस्तो मुलुक्मा भयो ।
छोरा झैँ गरि पालिबक्सनुहुँदा ❀ सब् ताप् प्रजाको गयो ॥
गर्छन् राघवको भजन् जनहरू ❀ वर्षन्छ मेघ् कालमा ।
वर्णाश्रम् सब धर्म छन्, दिन बित्या ❀ सब्का सुखै चालमा ॥३७५

अयुत वर्ष त राज् प्रभुको भयो ।
सकल ताप् दुनियाँहरुको गयो ॥
शिवजिले यति पार्वतिथ्यैँ कह्या ।
सकल पाप् छुटिजान्छ सुनी रह्या ॥३७६॥

श्रीरामका यति कथाकन जो कहन्छन् ।
सब् थोकले ति परिपूर्ण भई रहन्छन् ॥
धन् पुत्र राज्यहरु कम्ति हुँदैन केही ।
पाप् हर्नलाइ पनि मुख्य छ धर्म येही ॥३७७॥

जन्मन्छन् तर मर्दछन् पनि सबै ❀ जस्का त छोराहरू ।
तेस्ता स्त्रीहरुले सुन्या यति भन्या ❀ बाँच्छन् पछीका अरू ॥
बन्ध्या स्त्री पनि पाउँछे सुत असल् ❀ गर्छन् कृपा राम् धनी ।
आधिव्याधि अनेक दुःखभय ताप् ❀ पर्दैन कैल्यै पनि ॥३७८

श्रीरामको यति कथा जतिले त सुन्छन् ।
सब् देवता तिसँग खुप्सित खूशि हुन्छन् ॥
जो विघ्न हुन् ति सब नष्ट भएर जान्छन् ।
सम्पूर्ण जन् पनि तिनैकन आइ मान्छन् ॥३७९॥

आधिव्याधि त छुट्तछन् अरुउपर् ❀ धन्धान्य सन्तान् पनि ।
बढ्छन् इष्ट कुटुम्ब मित्रहरुका ❀ मान्या ति हुन्छन् भनी ॥

यस्ताको त बखान् कहाँतक गरूँ, ❀ जो मन् प्रभूमा धरी ।
गर्छन् राम-भजन् त मुक्त पनि भै ❀ जान्छन् ति संसार् तरी ॥३८०
शम्भूले सब वेद मन्थन गर्‍या ❀ श्रीरामको नाम् सरी ।
अर्को तत्त्व मिलेन केहि र लिया ❀ साहै पियारो गरी ॥
सोही तत्त्व त पार्वतीकन दिया ❀ अध्यात्म रूप्ले गरी ।
जस्ले प्रेम् गरि सुन्छ यो, सहज त्यो ❀ उत्रन्छ संसार् तरी ॥३८१

## ❀ इति युद्धकाण्ड समाप्त ❀

शुक र शुकका साथीहरूबाट समुद्रमा पुल बाँधी सैन्यसहित रामचन्द्र लङ्का आएको समाचार सुनी आत्तिएको रावणले दशै मुखबाट दश प्रकारका शब्द एकै चोटि बोलेको-



श्रुत्वा सागरबन्धनं दशशिराः सर्वैर्मुखैरेकदा
तूर्णं पृच्छति वार्तिकान् सचकितोभीत्या परं संभ्रमात् ।
बद्धः सेतुरपां निधिर्जलनिधिःकीलालधिस्तोयधिः
पाथोधिर्जलधिः पयोधिरुदधिर्वारां निधिर्वारिधिः ॥



# आठकाण्ड रामायण उत्तरकाण्ड



भगवान् रामकहाँ अगस्ति आदि मुनीश्वरहरू आउनु र रावणादि राक्षसहरूको पूर्वचरित्र सुनाउनु–१

शम्भूका मुखदेखि राज्य–अभिषेक् ❀ राम्को सुनीथिन् जसै ।
सोधिन् पार्वतिले सदाशिवजिथ्यैं ❀ लीला पछीका तसै ॥
पृथ्वीमा कति वर्ष राज् हुन गयो ❀ लीला तहाँ कुन् भया ।
कस्ता रीत्सित राज्य छोडि रघुनाथ् ❀ वैकुण्ठ धाम्मा गया ॥१
शम्भो ! श्रीरघुनाथका जति त छन् ❀ लीला कृपाले गरी ।
आज्ञा आज हवस् म सुन्छु भगवन् ❀ बिन्ती छ पाऊ परी ॥
यो बिन्ती जब शम्भुका चरणमा ❀ श्रीपार्वतीले गरिन् ।
सब् लीला प्रभुका कह्या शिवजिले ❀ खुप् हर्षमा ती परिन् ॥२
रावण् मारि उतारि भारि भुमिको ❀ राम् राज्य गर्छन् भनी ।
जानी एक्दिन ता गया ऋषिअनेक् ❀ भेटौँ सिताराम् भनी ॥
दुर्वासा भृगु अङ्गिरा इ पनि छन् ❀ कश्यप् र वाम्देव् भया ।
विश्वामित्र असित् र कण्व सहितै ❀ सप्तर्षि अत्री गया ॥३
सब् शिष्यै सहितै अगस्तिजि गया ❀ द्वार्मा पुग्याथ्या जसै ।
हाजिर् जल्दि पठाइ मर्जि भइ सब् ❀ पौँच्या हजुर्मा तसै ॥
पूजा सब् ऋषिको गऱ्या प्रभुजिले ❀ सब्लाइ आसन् दिया ।
खूशी सब् ऋषिगण् भया हजुरमा ❀ जो जो गयाका थिया ॥४
पैले प्रश्न गऱ्या तहाँ कुशलको ❀ राम्ले र आदर् गरी ।
सोध्या सब् ऋषिले पनी कुशलको ❀ विस्तार् बडो प्रेम् धरी ॥

बिन्ती सब् ऋषिले गऱ्या हजुरमा ❀ख्वामित् ! ठुलो काम् भयो।
पृथ्वीको अति भार इन्द्रजित हो, ❀भार् तेहि जाँदा गयो ॥५

रावणादि राक्षसहरूको पूर्वचरित्र–१ (२)

वीर् हुन् रावण कुम्भकर्ण तपनी ❀यो इन्द्रजित् झन् जबर् ।
वीर् हो त्यो पनि मारिबक्सनुभयो ❀को जित्न सक्थ्यो अवर्॥
लङ्कामा यिनि दुष्टको मरण भो ❀साँचा विभीषण् थिया ।
पाया राज्य कनक् झई र खुशिले ❀चाकर् सदाका भया ॥६

जो दक्षिणा अभयको अघि हो दियाको ।
सो पूर्ण गर्नकन दुष्ट हरी-लियाको ॥
देख्याँ कृतार्थ हुनुभो रघुनाथ ऐह्ले ।
मर्थ्या ति राक्षसहरू अरुदेखि कैह्ले ॥७॥

यो बिन्ती ऋषिको सुन्या प्रभुजिले ❀आश्चर्य मान्या पनि ।
क्याले रावणदेखि झन् अति ठुलो ❀भो इन्द्रजित् वीर् भनी ॥
सोध्या सब् ऋषिका अगाडि र तहाँ ❀साम्ने अगस्ती थिया ।
यस्तो त्यो विर हो भनी सब कुरो ❀विस्तार् बताई-दिया ॥८
ब्रह्माका सुत हुन् पुलस्त्य तपका ❀खातिर् सुमेरू गया ।
राजर्षी तृणबिन्दुका नगिचमा ❀आश्रम् ति गर्दा भया ॥
तप् गर्थ्या तहिँ देवपुत्रिहरु सब् ❀आएर खुप् गान् गरी ।
नाच्थ्या हास्यकला अनेक् तरहका ❀गर्दै नजर्मा परी ॥९
तप्को विघ्न हुन्या पुलस्त्य ऋषिले ❀बूझ्या बडा धीर् थिया ।
जुन् स्त्री देख्छु म गर्भिणी उहि हवस् ❀भन्न्या सराप् पो दिया ॥
भाग्या सब् तृणबिन्दुपुत्रि त सुनी ❀साम्ने नजीक्मा गइन् ।
देख्या तहिँ पुलस्त्यले र ति उसै ❀झट् गर्भिणी पो भइन् ॥१०

कामिन् खुप् डरले पितासित गइन् ❀ जान्या पिताले पनि ।
छोरी गर्भिणि भैछ आज ऋषिका ❀ साँचा वचन्ले भनी ॥
जानी छोरि पुलस्त्यजीकन दिया ❀ जल्दी नजीक्मा गई ।
ती कन्या ति पुलस्त्यले पनि लिया ❀ अत्यन्त खूशी भई ॥११
तिन्का पुत्र ति विश्रवा हुन गया ❀ खुप् ब्रह्म जान्न्या मुनि ।
भारद्वाज् ऋषिले तिनैकन दिया ❀ छोरी बडा गुण् सुनी ॥
तिन्का पुत्र कुबेर् भया गुणनिधान् ❀ तिन्ले तपस्या गरी ।
ब्रह्मालाइ रिझाउँदा ति धनका ❀ मालिक् भया तेस् घरि ॥१२
मालिक् दौलथका गरायर गरून् ❀ यस्मा सयल् खुप् भनी ।
ब्रह्माले तहिँ फेरि पुष्पक विमान् ❀ तिन्लाइ दीया पनि ॥
तेसै-माथि चढी पितासित गई ❀ तप्को सबै फल् कह्या ।
सब् पायाँ, तर वास् त पाइनँ कता ❀ जाऊँ म भन्दा भया ॥१३
सून्या बिन्ति कुबेरको र खुशि भै ❀ ती विश्रवाले पनि ।
लंका खालि थियो र तेहि दिनुभो ❀ लौ राज्य गर् जा भनी ॥
लङ्कामा अघि राज्य राक्षसहरू ❀ गर्थ्या बडा वीर् थिया ।
तिन्कै खातिर विश्वकर्म खुशि भै ❀ लङ्का बनाई दिया ॥१४
आज्कल् राक्षस विष्णुले जितिलिदा ❀ भागेर पातालमा ।
लुक्ना-खातिर गै-गया र शहरै ❀ खाली छ यस् कालमा ॥
आज्ञा येति दिया कुबेर्कन तहाँ ❀ ती विश्रवाले जसै ।
लङ्कामा ति कुबेर् गईकन बस्या ❀ राज् गर्न लाग्या तसै ॥१५
एक् दिन् कैकसि छोरि लीकन ठुलो ❀ राक्षस् सुमाली पनि ।
डुल्थ्यो यस् पृथिवीविषे सब घुमी ❀ हेरूँ तमाशा भनी ॥

पाताल्बाट सयल् गरूँ भनि यहाँ ❀ आएर डुल्दा तहाँ ।
पुष्पक्माथि चढेर खुप्सित सयल् ❀ गर्थ्या कुबेर्जी जहाँ ॥१६
लाग्यो दृष्टि सुमालिको र मनले ❀ मान्यो बडा हुन् भनी ।
यस्तो वीर् कुलमा कसो गरि हुनन् ❀ यस्तो चितायो पनि ॥
लाग्यो कैकसिलाइ भन्न त्यसले ❀ पुत्री ! यती काल् गयो ।
कोही वर् पनि आउँदैन गरुँ क्या ❀ यौवन् त तिम्रो भयो ॥१७
तस्मात् आज त विश्रवा ऋषिजिथ्यैं ❀ जाऊ र साम्ने गई ।
हात् जोरी ऋतुदान माग तिमिले ❀ दासी चरण्की भई ॥
यस्तै पुत्र हुनन् अवश्य इ उनै- ❀ का पुत्र हुन् वीर् भनी ।
छोरीलाइ त विश्रवासित तहाँ ❀ तेस्ले पठायो पनि ॥१८
जल्दी कैकसि विश्रवासित गई ❀ साम्ने खडा भै रहिन् ।
पृथ्वीतर्फ नजर् दिई चरणले ❀ लेख्ती जमीन्मा भइन् ॥
चेष्टा कैकसिका नजर् गरि तहाँ ❀ ती विश्रवाले पनि ।
कन्या कस्कि तँ होस् बता किन यहाँ ❀ आइस् अगाडी भनी ॥१९
सोध्या कैकसिलाइ लाज् हुनगयो ❀ लाज्का सकस्मा परिन् ।
ध्यानैले सब जानिबक्सनुहवस् ❀ यस्तो त बिन्ती गरिन् ॥
सून्या बिन्ति र झट् विचार् पनि गर्‍या ❀ मालुम् भयो सब् जसै ।
छोरा पाउन आइछस् भनि तहाँ ❀ बोल्या ऋषीले तसै ॥२०
बेला दारुण पारि आज ऋतुदान् ❀ माँगिस् म दिन्छू पनि ।
दोटा पुत्र हुनन् भयङ्कर स्वरूप् ❀ बेला सरीका भनी ॥
यस्ता बात् गरि दान् दिया र ऋतुको ❀ ती बात् जसै ता सुनिन् ।
कुन् रीत्ले अब पाउँ पुत्र बढिया ❀ यस्तो बहूतै गुनिन् ॥२१

बिन्ती कैकसिले गरिन् उहि बखत्❀ख्वामित् पती भै पनि ।
तेस्ता पुत्र बुझाउँ लौ म कसरी ❀यो झन् कठिन् भो भनी ॥
सून्या बिन्ति तहाँ दया पनि उठ्यो❀ती विश्रवाको अनि ।
तेस्रो पुत्र हुन्याछ राम्चरणको ❀दास् बुद्धिमान् खुप् भनी ॥२२
पत्नी कैकसिलाइ येति ऋषिले ❀दीया कृपा खूप् गरी ।
खूशी कैकसि भै गइन् ऋषि रह्या ❀ध्यान्मा बहुत् मन् धरी ॥
जन्म्यो रावण पूर्ण गर्भ जब भो ❀शिर् दश् भुजा बीस्धरी ।
उल्का आदि भया अनेक् तरहका ❀कामिन् भुमी खुप् गरी ॥२३
रावण्का पछि कुम्भकर्ण अतिवीर्❀जन्म्यो उसैको मनि ।
जन्मी शूर्पणखा पछी, गुणनिधान् ❀जन्म्या विभीषण् पनि ॥
शान्तात्मा बढिया विभीषण भया❀बस्थ्या ति शास्त्रै सुनी ।
दुष्टात्मा अति कुम्भकर्ण हुनगो❀डूलेर खान्थ्यो मुनि ॥२४
बैह्नी शूर्पणखा भई जगतमा❀दुष्टात्म भै डुल्दथी ।
नक्कट्टी भइ गै पछी हजुरका❀तेज्ले कहाँ बाँच्दथी ॥
रावण्को त बखान् कहाँतक गरौँ❀सब् लोकको रोग् सरी ।
लाग्यो रावण बद्न रोज् भय दिदै ❀तीन् लोक् वशैमा गरी ॥२५

सर्वान्तर्यामि साक्षी हृदय-हृदयमा आत्मरूप्ले रह्याका ।
निर्मल् सर्वज्ञ पूर्ण प्रभु पनि नरको रूप ऐह्ले भयाका ॥
सोध्नूभो आज लीला गरिकन त सबै रावणादीहरूको ।
विस्तार् बिन्ती म गर्छू अरु पनि भगवन् ! तेज् हर्‍यो जो अरूको ॥२६॥

ब्रह्मस्वरूप् प्रभु भनेर हजूरलाई ।
जानेर डुल्छु म अनुग्रह केहि पाई ॥

यस्तो अगस्ति ऋषिले जब बिन्ति लाया।
साँचा कुरा प्रभुजिले ऋषिथ्यैं बताया ॥२७॥
माया छ यो सब जगत् भनि नित्य जानी।
आनन्द यस् विषयमा रतिभर् नमानी ॥
मेरो भजन् गरिरहोस् सब पाप हर्न्या।
येती उपाय छ सहज्-सित पार तर्न्या ॥२८॥

एक्दिन् पुष्पकमा चढीकन कुबेर् ❀ आया पिताथ्यैं जसै ।
देखिन् कैकसिले र पुत्रसित गै ❀ क्यै भन्न लागिन् तसै ॥
देख्यौ पुत्र ! कुबेरलाइ तिमिले ❀ सब् द्रव्यका छन् धनी ।
गर्छन् पुष्पकमा सयल् खुशि हुँदै ❀ तेजस्वि देख्तै पनि ॥२९
जस्तो यत्न गरेर हुन्छ तिमिले ❀ सो यत्न ऐल्हे गरी ।
सब्को मालिक भै सयल् गर अनेक् ❀ यस्तै यिनैले सरि ॥
रावण्ले इ वचन् सुनी जननिकै ❀ साम्ने प्रतिज्ञा गर्‍यो ।
हे माता ! म बडै भएर रहुँला ❀ क्याआज चिन्तापर्‍यो ॥३०
यस्तो बात् तहिँ कैकसीसित गरी ❀ तप् गर्न रावण् गयो ।
गोकर्णेश्वरमा गई दृढ भई ❀ तप् गर्न लाग्दो भयो ॥
रावण्कै सँग कुम्भकर्ण विभिषण् ❀ भाई दुवै ती गया ।
ईश्वर्लाइ गरौं प्रसन्न भनि खुप् ❀ तिन्ले पनी मन् दिया ॥३१
तप् गर्दा हुँदि कुम्भकर्ण विरको ❀ ताहाँ अयुत् वर्ष गो ।
टेकी एक चरण् विभीषणजिको ❀ पाँचै हजार् मात्र भो ॥
रावण्को त बखान् कहाँतक गरौं ❀ ठूलो तपस्या गर्‍यो ।
खुप् एकाग्र भएर रोज् प्रभुजिका ❀ ध्यान्मा बहुत् मन्धर्‍यो ॥३२

# रामाश्वमेध यज्ञ





भूयो भूयो भाविनो भूमिपालान्,
नत्वा नत्वा याचते रामचन्द्रः।
सामान्योऽयं धर्मसेतुर्नराणाम्,
काले काले पालनीयो भवद्भिः।



( डिकाङ्कं तु सहस्राय तद्घाताङ्कं शतं स्मृतम् )



# आठकाण्ड रामायण





## रामाश्मेध काण्ड



ठूलो कीर्ति छ आजसम्म भवमा ❀ जुन् नैमिषारण्यको
गर्थे यज्ञ अनेक विज्ञ ऋषिले ❀ आराधना ब्रह्मको ।
तिन्लाई मनमा थिएन अरु क्यै ❀ इच्छा कुनै वस्तुको
गर्थे चिन्तन ध्यान-मग्न दिनहूँ ❀ आनन्दले ईशको ॥१॥

आए क्वै दिन व्यास-शिष्य सुगुणी ❀ श्री सूत पौराणिक
देखी तिन्कन खूब हर्षित भए ❀ सारा ऋषी, शौनक ।
ती अट्ठासि हजार विज्ञ ऋषिले ❀ पाऊ परी सादर
राखे आसनमा लगेर खुशिले ❀ साक्षात् बुझी ईश्वर ॥२॥

तिन्को आदर भावदेखि बहुतै ❀ हर्षित् भई सूतले
इच्छा के अब सुन्नको छ मनमा ❀ भन्नूहवस् प्रेमले ।
यस्तो बात सुनेर शौनकहरू ❀ अत्यन्त हर्षित् भए
जे सुन्ने मनमा थियो त्यहि कुरा ❀ बिन्ती चढ़ाईलिए ॥३॥

पैह्ले भन्नुभयो जती हजुरले ❀ हामीहरूले सुन्यौँ
सारा शास्त्र सुनी पुराण र कथा ❀ सन्तुष्ट हामी भयौँ ।
जो वात्स्यायनलाइ शेष प्रभुले ❀ विस्तारले भन्नुभो
सोही दिव्य कथा सुनाउनुहवस् ❀ हाम्रो यही बिन्ति हो ॥४॥

तिन्को भाव बुझेर चिन्तन गरे ❀ क्यै बेर श्री सूतले
सम्झी ईश्वरलाइ शुद्ध मनले ❀ बोले ति आनन्दले ।
भन्छू सोहि कथा प्रसन्न मनले ❀ हे शौनकादी सुन
सुन्नाले पनि पाप ताप मनको ❀ काटिन्छ भन्ने गुन ।।५।।
श्री वात्स्यायनजी कुनै समयमा ❀ श्री शेष-भाठौँ गए
जे इच्छा मनमा थियो सब कुरा ❀ विस्तार गर्दा भए ।
आज्ञा गर्नुभयो जती हजुरले ❀ त्यो सृष्टिको वर्णन
ब्रह्माको रचना पनी प्रलयका ❀ होला सबै खण्डन ।।६।।
जो-जो भूपहरू भए पृथिविमा ❀ एकेक विस्तारले
आज्ञा गर्नुभयो सुन्यौँ सब कथा ❀ हे नाथ ! आनन्दले ।
त्रैलोक्याधिपति प्रधान नृपती ❀ सत्कीर्तिका मालिक
राजा राम थिए सबै तरहले ❀ आफ्ना प्रजा-पालक ।।७।।
लायो दोष वृथा कुनै रजकले ❀ भन्ने मनैमा गुनी
सीता त्याग्नुभयो कठोर मनले ❀ दोषी स्वयं नै बनी ।
सर्यूमा गइ अश्वमेध गरनू ❀ के हेतु यस्मा थियो
सीताको रचना गरेर सुनकी ❀ के-के त्यहाँ गर्नुभो ।।८।।
यो सुन्ने सहसा विचार मनमा ❀ आयो त्यसै कारण
मेरो भाग्य ठुलो रहेछ र यहाँ ❀ आई मिल्यो दर्शन ।
आज्ञा गर्नुहवस् म सुन्दछु प्रभो ❀ त्यो यज्ञको वर्णन
गर्नूभो रघुनाथले किन स्वयं ❀ त्यो यज्ञ आयोजन ।।९।।
यस्को गर्नुहवस् निवारण प्रभो ❀ शंका, दयालू बनी
यस्तो प्रश्न सुनी विचार मनमा ❀ क्यै बेर आयो, अनि ।
सम्झी श्रीरघुनाथलाइ मनले ❀ आँखा दुवै चिम्लिई
श्रीवात्स्यायन-तर्फ हेर्नु पनि भो ❀ तत्काल दृष्टी दिई ।।१०।।

इच्छा पूर्ण गराउँछू सुन तिमी ❀ हे विज्ञ वात्स्यायन !
मैले सक्तिनँ यी हजार मुखले ❀ सारा गरी वर्णन ।
भन्छू तैपनि लौ सके जति सबै ❀ श्री रामकीर्ती अब
हे वात्स्यायन ! ध्यानपूर्वक कथा ❀ सुन्दै रहू त्यो सब ॥११॥
सीता-त्याग सुनेर शेष प्रभुले ❀ क्यै बेर चिन्तन् गरी
आज्ञा गर्नुभयो-म भन्दछु सबै ❀ विस्तारले राम्ररी ।
त्रेतामा अघि वीर रावण भयो ❀ सानन्द लंकापति
त्यस्ले खूब गऱ्यो रजाइँ, करमा ❀ वृद्धी गऱ्यो झन् अति ॥१२॥
त्यस्को नाश गराउनाकन पुगे ❀ देवर्षि कोही दिन
तिन्ले रावणलाइ सादर भने ❀ मैले भनेको सुन ।
बस्छन् जो ऋषिहेरु घोर वनमा ❀ दिन्नन् कुनैले कर
यस्मा जे छ उचित् स्वयं अब तिमी ❀ आफै विचारी गर ॥१३॥
यस्ता बात भनी गए निजपुरी ❀ देवर्षि फर्कीकन
केही बेर गरी विचार मनमा ❀ चिन्तित् भयो रावण ।
के गर्दा हित हुन्छ यो विषयमा ❀ सल्लाह गर्दो भयो
निद्रा लाग्न सकेन घोर निशिमा ❀ त्यो वीर जागै रह्यो ॥१४॥
भोलीपल्ट गएर दूत वनमा ❀ मागे तुरुन्तै कर
केही छैन दिने कुरा कुटिमहाँ ❀ तिन्ले भनेथे, तर ।
देओ आफ्नु रगत् भने ति चरले ❀ मान्दै नमानी जब
लेओ काटि रगत् भने ति ऋषिले ❀ पापी बुझी दानव ॥१५॥
काटी रक्त लिए, घडा भरिगयो ❀ क्यै बेरमा त्यो जब
मर्ला रावण भस्म हुन्छ पुरि नै ❀ यै रक्तद्वारा सब ।
यस्तो श्राप सुनेर विज्ञ ऋषिको ❀ विस्तार गर्दा भए
लैजाओ घट यो नराख पुरमा ❀ भन्दा लिई ती गए ॥१६॥

त्यो गाग्रो लगि भूपती जनकको ❀ गाडीदिए राज्यमा
जानेनन् जनले सबै हुन गयो ❀ त्यो काम त्यै रातमा ।
लंका फर्किगए सबै चरहरू ❀ गाडेर गाग्रो जब
वर्षा बन्द भएर राज्यभरिमा ❀ हा-हा परेथ्यो तब ॥१७॥
गर्छू यज्ञ भनेर भूमि नृपले ❀ पैह्ले गरे शोधन
जोतेथे सुनको हलो लगि स्वयं ❀ त्यै भूमिमा गैकन ।
निस्क्यो एक घडा समस्त सुनको ❀ आश्चर्य मान्दा भए
राजाको लगि सामुमा उहि घडा ❀ तत्काल राखीदिए ॥१८॥
के हो खोल भनेर श्रीजनकले ❀ आज्ञा दिएथे जब
कन्या एक अनिन्द्य उत्तम त्यहीं ❀ देखेर झस्के सब ।
मेरी पुत्रि भइन् भनी जनकले ❀ स्वीकार गर्दा भए
वर्षा खूब भयो उसै बखतमा ❀ सन्ताप सारा गए ॥१९॥
फालीबाट भइन् भनेर कतिले ❀ तिन्लाइ सीता भने
छोरी भूपतिकी भनेर कतिले ❀ हुन् जानकी यी भने ।
भूमीबाट भइन् भनी जन कती ❀ भूमी-सुता भन्दथे
यिन्का नाम अरू अनेक थरि छन् ❀ भन्ने कती मान्दथे ॥२०॥
छैनन् सृष्टिभरी तिनै भुवनमा ❀ सीता सरी सुन्दरी
लागिन् बढ्न ति चन्द्र झैं दिनदिनै ❀ हेर्थे सबै छक्क परी ।
राजाको दरबारकै नगिचमा ❀ अत्यन्त नै सुन्दर
सीता बाग थियो ठुलो जनकको ❀ फैलेर चारैतिर ॥२१॥

सारा छ फूल-फलले लटरम्म ताहाँ
बास्ना चलेर खुशि पार्दछ चित्तमाहाँ ।
त्यो स्वर्गको असल नन्दन-बाग-भन्दा
कम्ती थिएन नृपको सबतर्फ हेर्दा ॥२२॥

आफ्ना लिएर सँगिनी सब जानकीले
क्यै बेर डुल्दछु भनी सहसा खुशीले।
त्यो बागमा गइ बसिन् सँगिनी लिएर
हावा चल्यो मधुर शान्ति निकै दिएर ॥२३॥
क्यै बेरमा डुलिसकेर थकाइ लाग्यो
क्वै वृक्षका मनि बसिन् सब कष्ट भाग्यो।
जुन् वृक्षका मनि बसिन् तिनि केहि बेर
त्यै वृक्षमाथि सुँगिनी र सुँगा बसेर ॥२४॥
गर्थे परस्पर कुरा दुइ हर्ष मानी
सुन्थिन् सिता त्यहिँ बसी अति चाख मानी।
होला विवाह जब राम र जानकीको
कीर्ती हुनेछ भवमा अनि ती दुवैको ॥२५॥
आफ्ना प्रजा सुजनमा यश वृद्धि गर्ने
श्रीराम शासक हुनन् सब न्याय गर्ने।
कोही दुखी र अति दीन दरिद्र व्यक्ति
होवैन त्यो बखतमा गरि राम-भक्ति ॥२६॥
यस्तो सुनिन् जब कुरा शुक-दम्पतीका
देखिन् तुरुन्त रुखमाथि दुवै बसेका।
श्रीरामको शुभ कथा सब सुन्न पाए
हुन्थ्यो, उपाय दुइबाट छिटै समाए ॥२७॥
डाकिन् तुरुन्त सँगिनी र भनिन् बुझाई
ल्याऊ सुँगा र सुँगिनी तिमिले समाई।
सीताजिको सुनि हुकुम् सँगिनी गएर
ल्याइन् समाइ ति दुवैकन उत्लिखेर ॥२८॥

मन्मा डराइ शुक-दम्पति काम्न थाले
शान्ती दिइन् ति दुइलाइ मिठा कुराले ।
श्रीरामको शुभ कथा तिमि दम्पतीले
जान्यौ कहाँ र कसरी भन बात पैह्ले ॥२९॥
पंछी भएर तिमिले कहिले सुनेका ?
आश्चर्य लाग्छ सुनि यो तिमिले कहेका ।
बस्थ्यौ कहाँ तिमिहरू पहिले बताऊ
आयौ यहाँ किन र के गरि ? त्यो सुनाऊ ॥३०॥
छोरी म हूँ जनककी बुझ नाम सीता
भन्छन् मलाइ बुझिल्यौ शुक-दम्पती ता ।
यस्ता कुराहरु सुने जब जानकीको
भन्छन् सुँगा र सुँगिनी सब बात् सुनेको ॥३१॥
त्यो दिव्य आश्रम ति वाल्मिकिको जहाँ छ
बस्छौं त्यहीं, वरिपरी अति रम्यता छ ।
देखेर स्वर्ग पुरिको सरि दिव्य स्थान
विश्राम गर्न भनि आइपुग्यौं अजान ॥३२॥

देख्यौं उत्तम बाग फूल-फलको ❀ खायौं र पानी पियौं
केही बेर बसेर हेरुँ रमिता ❀ भन्ने विचार्मा थियौं ।
वाल्मीकि ऋषिबाट राम-महिमा ❀ पैह्ले सुनेका हुँदा
त्यस्कै वर्णन गर्न आज मनमा ❀ इच्छा उठेको हुँदा ॥३३॥
चेलालाइ पढाउँदा ति मुनिले ❀ हामी दुवैले पनि
जान्यौं राम-चरित्र केहि दिनमा ❀ होला अवश्यै भनी ।
हे सीते ! अब छाडिदेउ खुशिले ❀ जान्छौं भनेथ्ये जब
तिन्मा स्नेह बढेर बात मनको ❀ तिन्ले सुध्याइन् तब ॥३४॥

होला जुन् दिन भेट रामसित लौ ❀ छाड्नेछु सोही दिन
राख्नेछू सुनको बनाइ पिँजरा ❀ आनन्द मानीकन ।
यस्ता बात सुनी सुँगा र सुँगिनी ❀ निक्कै भए व्याकुल
सीतालाइ भने विनम्र स्वरमा ❀ बिन्ती छ यो केवल ॥३५॥
राख्दै छ्यौ थुनि हामिलाइ यसरी ❀ सीते ! वृथामा किन
जान्छौं हामि उडेर यो बखतमा ❀ दुःखी छ साह्है मन ।
ऐह्ले गर्भवती छ पत्नि सुँगिनी ❀ मेरी त्यसै कारण
बच्चा पार्न रहेन धेर अब त्यो ❀ आयो नगीचै दिन ॥३६॥
आफ्नू त्यो गुँडमा गएर खुशिले ❀ पर्नेछ बस्नू अब
बस्ने हो कसरी बनेर थुनुवा ❀ त्यागेर आफ्ना सब ।
पंछीलाइ हुँदैन शान्ति घरमा ❀ डुल्ने वनैमा हुँदा
जान्छौं हामि दुवै प्रसन्न मनले ❀ तत्काल देऊ बिदा ॥३७॥
सीताले सुनि यो कुरा ति दुइको ❀ फेरी भनिन् यो अनि
एक्लै जाउ सुँगा, म यो सुँगिनि ता ❀ राख्छू यहीँ नै थुनी ।
भेट्नेछू जब रामलाइ अनि पो ❀ छाडीदिनेछू सुन
पाल्नेछू म यहाँ सबै सुख दिई ❀ ऐह्ले कसै छाड्दिनँ ॥३८॥
सीताको सुनि बात व्याकुल भई ❀ बिन्ती सुँगाले गर्‍यो
व्यर्थैमा तिमिले वियोग यसरी ❀ के काम पार्नूपर्‍यो ।
मेरो प्राण रहन्न जान तिमिले ❀ एक्लो म जाऊँ कहाँ ?
दुःखी खूब हुनेछ यो सुँगिनि झन् ❀ एक्ली थुनामा यहाँ ॥३९॥
छाडीदेउ तिमी प्रसन्न मनले ❀ जाओ उडी लौ भनी
दिन्छौं आशिष हामिले सुख हुने ❀ कल्याण होला अनि।
मिल्ने दम्पति छुट्टिएर रहँदा ❀ के-के विपत् पर्दछन्
त्यस्मा गर्भिणि पत्नि साथ नरहे ❀ सन्ताप के भोग्दछन् ॥४०॥

हे सीते ! तिमिलाइ ज्ञात नभए ❀ यस्तो गरेकी किन ?
हाम्रो पारि वियोग बाँच्नु कसरी ❀ भन्ने स्वयं नै गुन ।
बारम्बार कराइ रोइ दुइले ❀ बिन्ती गरे तापनि
छाडीनन् जब त्यो रिसाइ सुँगिनी ❀ लौ श्राप दिन्छू भनी ॥४१॥
पार्दै छौ जसरी वियोग तिमिले ❀ हामी दुवैमा यहाँ
त्यस्तै नै तिमिलाइ गर्भिणि हुँदा ❀ पर्ला विपत्ती उहाँ ।
त्याग्नेछन् अनि रामले र वनमा ❀ एक्लै बसौली जब
होला ज्ञान वियोगका दुखहरू ❀ ती भोग्नुपर्दा सब ॥४२॥
मर्दी भै भनि 'राम, राम' सुँगिनी ❀ त्यै पिंजरामा जब
आयो दिव्य विमान, स्वर्ग पुरिमा ❀ जाँदी भई त्यो तब ।
पत्नीले जब प्राण छाडि त्यसरी ❀ रोयो सुँगा बेसरी
सर्यूका तटमा गयो हृदयमा ❀ श्रीरामको ध्यान् धरी ॥४३॥
पाऊँ जन्म अवश्य फेरि म यहीँ ❀ राम्री अयोध्या पुरी
सीतालाइ त्यजून् म श्राप यहि नै ❀ दिन्छू र जान्छू मरी ।
यस्ता बात भनी सुँगा जब मऱ्यो ❀ स्वर्गै गयो त्यो पनि
आज्ञा भो ऋषिलाइ शेष प्रभुले ❀ हेतू यही हो भनी ॥४४॥
जन्मेथे पछि ती सुँगा र सुँगिनी ❀ धोबी बनी धोबिनी
धोबीको सुनि बात राम प्रभुले ❀ त्याग्नूभएको भनी ।
लीला हुन्छ अपार राम प्रभुकी ❀ पत्नी ति सीता पनि
त्याग्दामा रघुनाथले दुख सही ❀ बस्थिन् बनी दुःखिनी ॥४५॥
सीतालाइ त्यजेर राम सहसा ❀ त्यागी तपस्वी बनी
बस्थे कार्य त्यजी सभा-भवनको ❀ एकान्त खोज्दै अनि ।
आए भेट्न भनी कुनै दिन त्यहीँ ❀ ज्ञानी अगस्ती मुनि
राखी आसनमाथि राम प्रभुले ❀ सोध्नूभएथ्यो, अनि ॥४६॥

हे सर्वज्ञ ऋषे मलाइ कहनोस् ❀ सुन्छू म लौ ध्यानले
भन्नोस् रावण को थियो सब कुरा ❀ सुन्छू म विस्तारले ।
कस्को पुत्र थियो र त्यस्कि जननी ❀ को हुन् मुने ! त्यो पनि
आज्ञा गर्नुहवस् म सुन्दछु सबै ❀ विस्तारले हे मुनि ॥४७॥
यस्तो श्रीरघुनाथको सुनि कुरा ❀ खूशी अगस्ती भए
जोरी हात दुवै प्रसन्न मनले ❀ विस्तार गर्दै गए ।
ब्रह्माका सुत श्री पुलस्त्य ऋषिजी ❀ ठूला तपस्वी थिए
तिन्का उत्तम पुत्र श्रेष्ठ सबमा ❀ श्री विश्रवाजी भए ॥४८॥
तिन्की एक पतिव्रता गुणवती ❀ पत्नी थिइन् कैकसी
स्वामीको दिन-रात चाकरि तिनी ❀ गर्थिन् नगीचै बसी ।
मागीथिन् ऋतुदान ती सुमुखिले ❀ साह्रै कुबेलामहाँ
इच्छा पूर्ण गरे त्यजेर तप त्यो ❀ ती विश्रवाले त्यहाँ ॥४९॥
छोरा रावण, कुम्भकर्ण बलिया ❀ तिम्रा हुनेछन् तर
अन्यायी दुइलाइ राम प्रभुले ❀ मारीदिनन् आखिर ।
होला पुत्र पछी विभीषण गुणी ❀ श्रीराम-भक्ती गरी
लंकाको बनि भूपती पछि ठुलो ❀ होला बुझे; सुन्दरी ॥५०॥
पत्नीलाइ बुझाइ फेरि तप ती ❀ श्री विश्रावाले गरे
पाई दर्शन रामको पछि तिनी ❀ संसार-पारी तरे ।
ज्ञानी सिद्ध मुनी गुणी सुजनको ❀ त्यो कष्टदाता थियो
मारी रावण नाथले पृथिविको ❀ उद्धार गर्नूभयो ॥५१॥
सारा ज्ञान थियो तथापि प्रभुले ❀ सोध्नूभएको जति
जानेको जति त्यो भनें हजुरमा ❀ आफ्नू लगाई मति ।
संसार-स्थिति-नाशका अधिपती ❀ गर्ने स्वयं पालन
हत्या रावणको सुनेर हुनगो ❀ क्यै क्षुब्ध जस्तो मन ॥५२॥

मारें रावण विप्र-वंश भनि क्यै ❀ सामान्य जस्तो बनी
ठूलो पाप गरेछु ज्ञान नभई ❀ हो ब्रह्महत्त्या भनी ।
हत्याको भयले अचेत हुनुभो ❀ श्रीराम सीता-पति
पक्री भन्नुभयो अगस्ति मुनिले ❀ स्वामी, जगत्का पति ॥५३॥
यस्तो चेत हराउँदा हजुरको ❀ आश्चर्यमा पर्दछु
यस्को कारणको निवारण पनी ❀ मैले छिटै गर्दछु ।
आज्ञा गर्नुहवस् प्रसन्न मनले ❀ शंका नमानीकन
संसारी जन झैं सुनाउनुभयो ❀ क्यै खिन्न पारी मन ॥५४॥
के गर्ने अब हे अगस्त्य-मुनिजी ❀ मैले नजानीकन
हत्या ब्राह्मण-वंशको गरिदिएँ ❀ मारी वृथा रावण ।
मैले थाह नपाइ हे ऋषिपते ! ❀ जो ब्रह्महत्या गरें
सोही कारणले म यो बखतमा ❀ ठूलो विपत्मा परें ॥५५॥
जस्ले ब्राह्मण-वंश नाश सहजै ❀ गर्नेछ त्यै पापले
त्यस्को मुक्ति हुँदैन वंश-सहितै ❀ नाशिन्छ त्यै रापले ।
तीर्थ-स्नान र दान पुण्य व्रतले ❀ पूजा र यज्ञादिले
नाशिन्छन् कति पाप घोर जनका ❀ भन्छन् सबै शास्त्रले ॥५६॥
जस्ले गर्छ विनाश विप्र-कुलको ❀ जानी नजानीकन
त्यस्को छैन उपाय मुक्ति हुनको ❀ भन्दै छ मेरो मन ।
इक्ष्वाकू कुलको पवित्र मुखमा ❀ ध्वाँसो लगाईदिएँ
यस्को देख्दिनँ क्यै उपाय म स्वयं ❀ ठूलो कलंकी भएँ ॥५७॥
पर्नेछू म गएर कुन् नरकमा ❀ यै पापले हे मुनि !
आज्ञा गर्नुहवस् उपाय छ भने ❀ गर्नेछु लौ त्यो पनि ।
लैजानन् यमराजले नरकमा ❀ भन्ने छ ठूलो डर
चिन्ताग्रस्त भएँ म यो बखतमा ❀ बाटो बुझी दुस्तर ॥५८॥

जस्ले कष्ट दिनेछ विप्र-कुलको ❀ खोसेर आजीविका
त्यस्ताले गइ भोग्दछन् थरि-थरी ❀ संकष्ट ती नर्कका ।
मार्ने ब्राह्मण-वंश को अधम छन् ❀ अर्को म जस्ता जन
मेरो चित्त असाध्य व्याकुल भई ❀ दुःखी छ बर्ता मन ।।५९।।
यस्तो तर्क सुनेर राम प्रभुको ❀ क्यै बेर सोचीकन
थाले भन्न अगस्तिले हित कुरा ❀ गर्दै सफा वर्णन ।
गर्नू शोच वृथा छ यो विषयमा ❀ हे राम ! हे ईश्वर !
भूमीको जब भार बढ्दछ निकै ❀ फैलेर चारैतिर ।।६०।।
त्यै बेला अवतार हुन्छ प्रभुको ❀ कल्याणका खातिर
त्यस्तै भार-स्वरूप रावण भयो ❀ अत्यन्त नै दुच्छर ।
मारी रावण गर्नुभो हजुरले ❀ कल्याण यी भूमिको
धेरै काल रहन्छ यो पृथिविमा ❀ कीर्ती ठुलो नाथको ।।६१।।
गर्ने नाश समस्त यो निमिषमा ❀ सृष्टि-स्थिती पालन
त्यस्ताले किन गर्नु शोक यसरी ❀ मारीदिदा रावण ।
आफ्नू नित्य स्वरूप नष्ट नहुने ❀ पैह्ले गरी धारण
बाँधी आसन ब्रह्मको दृढ भई ❀ गर्नूहवस् चिन्तन ।।६२।।
धेरै यै रितका अगस्ति ऋषिले ❀ वार्ता सुनाए जब
बोल्नूभो अनि फेरि चित्त नबुझी ❀ तत्काल श्री राघव ।
जानेरै अथवा नजानि गरिने ❀ छन् पाप जो लोकमा
जस्ले गर्दछ पाप त्यो बुझि-बुझी ❀ काटिन्न संसारमा ।।६३।।
मैले थाह नपाइ पाप् गरिलिएँ ❀ त्यस्बाट मुक्ती हुने
केही युक्ति भए बताउनुहवस् ❀ गर्छू म त्यो हे मुने ।
मेरो कीर्ति रहन्छ यो पृथिविमा ❀ नाशिन्न कैह्यै पनि
गर्नेछू त्यहि काम उत्तम; रहोस् ❀ अक्षुण्ण कीर्ती भनी ।।६४।।

जो हुन् नाथ त्रिलोकका रघुपती ❀ राम्रो नराम्रो सब
जानेकै छ तथापि आदर दिई ❀ सोधीलिनूभो तब ।
यस्तो प्रश्न सुनेर झट्ट मुनिले ❀ मन्मा गरी निश्चय
भन्छू एक उपाय पाप सहजै ❀ पार्नेछ त्यस्ले क्षय ॥६५॥
यौटा यज्ञ छ अश्वमेध कहिने ❀ विख्यात संसारमा
सोही गर्नुहवस् प्रभो! हजुरले ❀ उत्साहका · साथमा।
त्यस्तो पुण्य दिने कुनै मख अरू ❀ छैनन् म यो भन्दछु
इच्छा पूर्ण हुनेछ श्रेष्ठ मखले ❀ विश्वास यो मान्दछु ॥६६॥
राजा इन्द्र, दिलीप औ वरुणले ❀ जुन् यज्ञ पैह्ले गरे
त्यस्तै यज्ञ गरेर श्रीनहुषले ❀ संसार-पारी तरे।
तिन्को कीर्ति छँदै छ लोकभरिमा ❀ प्रख्यात ऐह्ले पनि
बिन्ती गर्दछु नाथले मख त्यही ❀ गर्नूहवस् लौ भनी ॥६७॥
शंका लाग्दछ मारि रावण ठुलो ❀ लाग्यो कि हत्त्या भनी
सारा पाप भई निवारण स्वयं ❀ फैलिन्छ कीर्ती पनि ।
यस्तो यज्ञ समर्थ भै हजुरले ❀ पर्दैन गर्नू, तर
गर्नैपर्दछ लोकको हित तथा ❀ सत्कीर्तिको खातिर ॥६८॥
जो गर्छन् क्षणमा समर्थ पनि छन् ❀ सृष्टि-स्थिती-पालन
तिन्लाई द्विज-वंशको समरको ❀ लाग्नेछ हत्त्या किन ।
यस्ता बात अगस्तिको सुनिसकी ❀ मन्मा गरी निश्चय
गर्नेछू हयमेध हे ऋषिपते ! ❀ त्यो पाप गर्ला क्षय ॥६९॥
त्यस्को के कति हो विधान क्रमले ❀ आज्ञा हवस् हे मुने !
सारा पार्छु तयार वस्तु जति हुन् ❀ त्यो यज्ञमा चाहिने ।
यो आज्ञा रघुनाथको सुनिसकी ❀ बोले अगस्ती मुनि
यौटा अश्व म भन्छु लक्षण सहित् ❀ चाहिन्छ यस्तो भनी ॥७०॥

सेतो देह हुने समस्त थुतुनो ❀ चाहिन्छ रातो हुने
काला कान दुवै तथा पुछर त्यो ❀ छात्रू पर्हेलो हुने ।
हिड्ने वायु-गती समान पथमा ❀ साह्रै ठुलो वेगले
थर्काओस् अरिलाइ घोर रणमा ❀ यौटा त्यही अश्वले ॥७१॥
अर्को एक विधान जो छ हयको ❀ सुन्नूहवस् त्यो पनि
पैह्ले पूजन गर्नु वेद-विधिले ❀ कल्याण होला भनी ।
गर्दा पूजन पार्नुपर्छ दिन त्यो ❀ वैशाखको पूर्णिमा
पूरा गर्नु विधान पर्छ क्रमले ❀ पाइन्छ जो शास्त्रमा ॥७२॥
यौटा पत्र तयार पारि सुनको ❀ लेखी सुकीर्ती जति
घोडालाइ लगाइ भूषणहरू ❀ धेरै कती हो कति ।
पूजा पुष्प अबीरले र विधिले ❀ एकेक पूरा गरी
छाड्नूपर्छ अबाध निश्चय दिशा ❀ जानेछ सोही घरि ॥७३॥
घोडा जान्छ जता-जतातिर उतै ❀ लागून् पछी सैनिक
भाईलाइ पठाउनू हजुरले ❀ त्यो अश्वको रक्षक ।
कोही वीर अघी सरेर पथमा ❀ घोडा समायो भने
पर्ला युक्ति अनेक गर्न, पदमा ❀ त्यस्लाइ न्यूराउने ॥७४॥
त्यस्लाई उ-पछी पठाउनु छिटै ❀ बोकेर धेरै धन
जित्नूपर्छ सबै दिशातिर गई ❀ वैरी त्यसै कारण ।
घोडालाइ घुमाइ वर्ष दिन त्यो ❀ ल्याएर फेरी यहाँ
गर्नू पूजन पर्छ वेद-विधिले ❀ त्यै यज्ञशालामहाँ ॥७५॥
घोडा हिड्छ उता; यता रघुपती ❀ सारा तयारी गरी
बस्नूपर्दछ ब्रह्मचर्य-व्रतको ❀ रक्षा गरी राम्ररी ।
बाँड्नू पर्दछ नित्य अन्न धन ती ❀ दुःखी दरिद्रीकन
यस्ले कीर्ति हुनेछ लोकभरिमा ❀ क्वै हुन्न दुःखी जन ॥७६॥

हे स्वामी ! रघुनाथ ! हे रघुपते ! ❀स्वामी तिनै लोकमा
कीर्ती खूब हुनेछ, व्यर्थ किन हो ❀चिन्ता लिनू चित्तमा ।
यस्तो बिन्ति गरे अगस्त्य मुनिले ❀श्रीरामलाई जब
शान्ति प्राप्त भयो, प्रसन्न मनले ❀बोल्नूभयो राघव ॥७७॥

त्यो अश्वको अघि सुलक्षण भन्नुभो जो
चिन्नूपर्‍यो गइ स्वयं मुनिले उही त्यो ।
धेरै थरी हयहरू त्यहिं बाँधिएका
छन्, ती चिह्नेर लिनुपर्दछ जाँचिएका ॥७८॥

जाऊँ भनी ऋषि र राम जसै हिंडेथे
सेना तथा गुरु वशिष्ठ पनी गएथे ।
देख्दा भए हय विचित्र अनेक त्याहाँ
चिल्ला सफा र बलिया हय सामुमाहाँ ॥७९॥

क्वै चीनियाँ, अरबका हय, भोटका ती
काबूल, सिन्धुतटका कति देशका ती ।
लाहोर मद्रनगरी-तिरका अनेक
मान्थे समस्त हय दर्शनले उदेक ॥८०॥

जुन् श्यामकर्ण हय उत्तम देखिएथ्यो
जाने अगस्ति ऋषिले हय श्रेष्ठ यै हो ।
हावा सरी गति हुने बलवान छानी
बिन्ती गरे ति ऋषिले अति हर्ष मानी ॥८१॥

घोडा मिल्यो सकल लक्षण युक्त नाथ !
पूरा हुनेछ अब यज्ञ विधान-साथ ।
ल्याएर अश्व विधिले मखमा उभ्याए
जे चाहिने सकल वस्तु छिटै जुटाए ॥८२॥

आज्ञा दिए गुरु वशिष्ठ स्वयं गएर
बस्नूभयो रघुपती सरयू किनार।
ल्याए अनेक मखका सरजाम त्याहाँ
उत्साह देखिन गयो सब व्यक्तिमाहाँ ॥८३॥
अनेकौं ठुला ज्योतिषीले गुनेर
गरे भूमि शोधन् गुरूले गएर।
तुल्याए सफा शुद्ध भूमी पवित्र
छरे स्वच्छ पानी सबै यत्र-तत्र ॥८४॥
बसेका गुणी विप्र चारै दिशामा
चल्यो वेदको घोष उच्च स्वरैमा।
बनाए ठुला वेदि शास्त्रोक्त छानी
गुरूले बताए स्वयं वेद-वाणी ॥८५॥
सुनैका बनाए सबै यज्ञ-पात्र
थिएनन् कुनै वस्तु त्यस्मा कुपात्र।
सबै गर्दथे रामको कीर्ति-गान
सुनिन्थ्यो कतै विप्रको साम-गान ॥८६॥
ध्वजा तोरणादि सबै ठिक्क पारे
जहाँ जे भने त्यो तुरुन्तै वसारे।
श्रीरामको चरण-पंकजमा नुहेर
चौतर्फ स्वच्छ हय-मेध गरे तयार ॥८७॥
ज्ञानी विप्र मुनी ऋषीश्वरहरू ❀ निम्ता पठाईकन
डाकेथे मखमा वसिष्ठ गुरुले ❀ आए सबै सज्जन।
ज्ञानी नारद गर्ग पर्वत मुनी ❀ श्री कण्व औ हारित
वक्ता शृङ्गि ऋषी र देवल तथा ❀ आए हुँदै हर्षित ॥८८॥

जातूकर्ण र वामदेव, भृगुजी ❀ श्री विश्रवा, लोमश
आए सज्जन साधु-सन्त र गुणी ❀ सद्धर्मका रक्षक ।
पाई दर्शन रामको ऋषि-मुनी ❀ अत्यन्त खूशी भए
पाई आदर रामबाट सबले ❀ आशीष धेरै दिए ॥८९॥
सारालाइ बसालि, स्वच्छ जलले ❀ पाऊ पखाली छरे
राखी आसनमा प्रसन्न मनले ❀ पूजा सबैको गरे ।
इच्छा पूर्ण हुने सुआशिष दिए ❀ ज्ञानीहरूले जब
चर्चा गर्न भनेर धर्म-पथको ❀ बस्नूभयो राघव ॥९०॥
भन्थे धर्म, विवेक, नीति-पथका ❀ धेरै कुरा ती सब
सुन्थे सामु बसी प्रसन्न मनले ❀ तिन्का कुरा राघव ।
बोल्नूभो रघुनाथ विज्ञ-जन हो ❀ यौटा कुरा सोध्छु म
भन्छन् शास्त्र, पुराण, वेद-मतले ❀ धन्यो गृहस्थाश्रमः ॥९१॥
जान्नेले घरमै बसेर कसरी ❀ गर्ने गृहस्थाश्रम
यस्को अर्थ बताउनोस् सब जना, ❀ संक्षेपमा सुन्छु म ।
गर्ने पालन धर्म कार्य सबको ❀ हो श्रेष्ठ यै आश्रम
यस्तो श्रीरघुनाथको सुनि कुरा ❀ चर्चा बुझी उत्तम ॥९२॥
लागे भन्न स्वयं अगस्त्य मुनिले ❀ एकेक विस्तारले
सुन्नूहोम् रघुनाथ ! यो विषयमा ❀ जे भन्दछन् शास्त्रले ।
रात्री चार घडी छँदै सुजनले ❀ उठ्नू र प्रातः स्तुति
जोरी हात दुवै प्रसन्न मनले ❀ गर्नू सकेको जति ॥९३॥
मान्ने व्यक्ति गुरू, पिता र जननी ❀ ढोग्नू सबैलाइ र
गर्नू नित्य-क्रिया नुहाउनु गई ❀ सम्झी उनै ईश्वर ।
गायत्री जप गर्नु तर्पण दिनू ❀ देवर्षि पितृकन
गर्नूपर्दछ वैश्वदेव विधिले ❀ वेदध्वनी, पूजन ॥९४॥

गर्नूपर्दछ विप्रले दिन-दिनै ❀ मध्याह्न सन्ध्या पनि
माँग्नेमा र दरिद्रमा पनि दिनू ❀ अन्नादि दाता बनी ।
भान्सामा गइ बस्नु बालक बुढा ❀ जो गर्दछन् चाकरी
पंक्ती-भेद नपारि भोजन दिनू ❀ तिन्लाइ राम्रो गरी ॥९५॥
खानू बत्तिस गाँस केहि नभनी ❀ मीठो नमीठो पनि
आफ्नू शक्ति जती छ खानु त्यति नै ❀ खान्छू म यो यो भनी ।
भान्सामा तरकारि दूध र दही ❀ जम्मा गरी गो-घृत
खानू-पर्छ गृहस्थले यति कुरा ❀ जोरेर राम्रो सित ॥९६॥
राख्नू श्वानबली र काकबलि त्यो ❀ गो-ग्रास सार्नू पर
यो हो धर्म गृहस्थको नियममा ❀ बस्नू चलाई घर ।
खाई उठ्नु, चुठेर हात-मुख त्यो ❀ बिस्तार हिड्नू अनि
सुत्नू हुन्न गएर, बस्नु जनले ❀ विश्राम गर्छु भनी ॥९७॥
अर्काको उपकार गर्नु पहिलो ❀ कर्तव्य हो यो भनी
गर्नैपर्दछ अर्थ-लाभ हुनको ❀ उद्योग केही अनि ।
पढ्नू वेद, पढाउनू, लिनु-दिनू ❀ दानादि धेरै थरि
गर्नू यज्ञ गराउनू यि द्विजका ❀ षट्कर्म हुन् राम्ररी ॥९८॥
गर्दा होम धुवाँ उठेर नभमा ❀ फैलिन्छ चारैतिर
यस्ले मेघ बनेर घोर जलको ❀ वर्षा भई सुन्दर ।
इच्छित् अन्न हुनेछ खेतहरुमा ❀ उत्पन्न त्यै कारण
फैलेला सुख-शान्ति लोकभरिमा ❀ होवैन दुःखी जन ॥९९॥
ठान्नूपर्छ पर-स्त्रिलाइ जननी ❀ दीदी र बैनी सरी
चोर्नू ठग्नु पराइको धन लिनू ❀ खोस्नू उपायै गरी ।
ठूलो पाप हुनेछ जीवन त्यजी ❀ जानेछ त्यो नर्कमा
जो गर्ला उपकार धर्म, मरि त्यो ❀ जानेछ स्वर्गादिमा ॥१००॥

आमा बाबु पती यि तीनकन नै ❀ मानेर द्यौता सरी
विष्णू भूप सरी, गुरू शिव सरी ❀ माया बुझी ईश्वरी ।
मान्नू वायु र अग्नि भूमि जल नै ❀ आकाश हुन् देवता
यिन्को पूजन ध्यानले सुजनको ❀ जानेछ दारिद्र्यता ॥१०१॥
गर्नू हुन्न विवाह शास्त्र-मतले ❀ कन्या सगोत्री परे
जान्छन् सन्तति नर्कमा मरि छिटै ❀ त्यस्तो अचाक्ली गरे ।
बार्नूपर्दछ तीन दीन नछुने ❀ स्त्रीलाइ सार्नू पर
त्यस्तो बार्न सकेन क्यै गरि भने ❀ मर्नेछ चाँडै नर ॥१०२॥
छोरो पाउँ भनी समागम गरे ❀ एकेक सोह्रौँ दिन
त्यस्को उत्तम पुत्र हुन्छ सबले ❀ जान्नू विचारीकन ।
षष्ठीमा कहिल्यै नघस्नु जनले ❀ तैलादि सर्वाङ्गमा
औँसीमा, दिनमा नगर्नु कहिल्यै ❀ सम्भोग स्त्री-रत्नमा ॥१०३॥
मासू खानु हुँदैन अष्टमि तिथी ❀ वा पितृको क्वै दिन
गर्नू हुन्न चतुर्दशी र शनिमा ❀ कैह्ल्यै पनी मुण्डन ।
नीचाका घरमा नगर्नु द्विजले ❀ सेवा तथा चाकरी
आयु क्षीण हुनेछ, जान्छ सहजै ❀ त्यो व्यक्ति चाँडो मरी ॥१०४॥
कस्तै आपदमा पनी कुकुरको ❀ वृत्ती नगर्नू भनी
भन्छन् शास्त्र पुराणले र घरका ❀ बूढा पुराना पनि ।
पितृ, देव, मनुष्यलाइ नदिई ❀ खाए नरक् पर्दछन्
आशा क्षीण भई गए अतिथि झन् ❀ सन्ताप ती भोग्दछन् ॥१०५॥
आगोमा कहिल्यै नफुक्नु मुखले ❀ पाऊ नसेक्नू, अनि
चीसै पाउ हुँदैन सुत्नु नपुछी ❀ हो पाप लाग्ने भनी ।
स्त्री कोही नछुने भएकि छ भने ❀ क्वै शस्त्रधारीकन
गर्नू हुन्न प्रणाम, दोष छ ठुलो ❀ यै भन्दछन् सज्जन ॥१०६॥

पाऊ हुन्न पखाल्नु काँस अथवा ❀ क्वै ताम्रको थालिमा
सन्ध्यामा कहिल्यै नखानु अथवा ❀ टुक्रा खसे भूमिमा ।
त्यस्लाई टिपि खानु हुन्न जनले ❀ भन्छन् सबै शास्त्रमा
फूट्यो पात्र भने नखानु नलिनू ❀ अन्नादि त्यो पात्रमा ।।१०७।।
जुत्ता वस्त्र जडाउरी नलिनु क्यै ❀ सित्तैं दिए तापनि
आफैं हुन्न बढाइँ गर्न मुखले ❀ आफैं मपाइँ बनी ।
नाङ्गी स्त्री कहिल्यै नहेर्नु जनले ❀ खाने बखत्मा पनि
लाग्ला दोष र पाप घोर ननिको ❀ शास्त्रोक्त हो यो भनी ।।१०८।।
नासो राख्नु हुँदैन विज्ञ जनले ❀ विश्वासघाती बनी
त्यागनूपर्छ सुबुद्धिले बखतमा ❀ हो अग्नि जस्तै भनी ।
पूजाहारि तथा पुरोहित भई ❀ जो गर्छ आजीविका
भान्से ब्रह्मण, पेट भर्दछ भने ❀ फेला परी दुष्टका ।।१०९।।
भर्ने शस्त्र चलाइ पेट अथवा ❀ खाने मसीले गरी
यस्ता विप्र बनेर शूद्र कलिमा ❀ डुल्छन् सुँगुर्ले सरी ।
त्यस्ता ब्राह्मणको हुँदैन रचना ❀ पढ्नू र सुन्नू पनि
वाणी ईश्वरले हरी लगिदिनन् ❀ हो मूर्खको यो भनी ।।११०।।
सारा ज्ञान हजूरलाइ छ प्रभो ! ❀ यस्तो र यो हो भनी
थोरै हो युगको प्रमाण भनि यो ❀ मैले सुनाएँ पनि ।
जस्ले सुन्छ गृहस्थ-धर्म ऋषिले ❀ आज्ञा भएको सब
त्यस्को पाप हुनेछ नाश सहजै ❀ बोल्नूभयो राघव ।।१११।।
चर्चा चल्न गयो मुनी र ऋषिमा ❀ सद्धर्ममा, नीतिमा
आयो क्यै दिनमा यथाक्रम उही ❀ वैशाखको पूर्णिमा ।
आज्ञा गर्नुभयो वशिष्ठ गुरुले ❀ श्रीरामलाई अनि
छाड्ने उत्तम श्यामकर्ण हयको ❀ वेला भयो लौ भनी ।।११२।।

आज्ञा भो निज भाइलाइ प्रभुंले ❀ डाकेर हे लक्ष्मण
ल्याऊ अश्व छिटै गएर मखमा ❀ तत्काल येसै क्षण ।
आज्ञा लक्ष्मणले दिए नगिचमा ❀ डाकेर सेनापति
ल्याऊ वाहन सैन्य शस्त्र र रथी ❀ छन् चाहिएका जति ॥११३॥
हात्ती अश्व सवार वीर जति छन् ❀ संग्राममा उद्यत
ल्याऊ ती सबलाइ योग्य रितले ❀ पारी सबै सज्जित ।
ल्याऊ उत्तम श्यामकर्ण हय त्यो ❀ राम्रो सिँगारीकन
त्यस्का रक्षक वीर सैनिकहरू ❀ जान्छन् अनेकौं जन ॥११४॥
पक्रन्छन् हयलाइ शत्रु-दलले ❀ भन्ने कुशंका हुँदा
राख्नूपर्छ अगाडि सैनिक तथा ❀ योद्धा पछाडी सदा ।
आज्ञा लक्ष्मणको सुनीकन गए ❀ तत्काल सेनापति
पारेथे सरजाम ठिक्क सहजै ❀ हुन् चाहिने जे जति ॥११५॥
ल्याएथे अनि श्यामकर्ण हय त्यो ❀ जाँची सबै लक्षण
शृंगारी सबले मिलेर छिनमै ❀ पैह्राइ आभूषण ।
सारा रत्न-जडाउ उत्तम ठुलो ❀ माला गलामा धरी
पूजा वेद-विधानले गरिदिए ❀ त्यो अश्वको राम्ररी ॥११६॥
हीरा मोति अनेक रत्नहरु ती ❀ पैह्राउँदा उत्तम
त्यै-माथी रविको तिखा किरणले ❀ आँखा हुने झिम्झिम ।
छाता उत्तम श्वेत चामर लिने ❀ सेना डटेका थिए
हिड्दा ती सब भूमि-कम्प हुनगो ❀ आश्चर्य मान्दा भए ॥११७॥
बाजा बज्न गई अनेक थरिका ❀ धाँ-धाँ र धूँ-धूँ गरी
पाऱ्यो पर्वत थर्र घोर ध्वनिले ❀ सारा दिशा बेसरी ।
हात्ती अश्व सवार वीर बलिया ❀ सेना लिई साथमा
ल्याए मण्डपमा सहर्ष हय त्यो ❀ श्रीरामको पासमा ॥११८॥

बिन्ती गरे गुरुजिलाई स्वयं प्रभूले
बेला भयो अब गरौं सब काम पैह्ले ।
आज्ञा सुनेर प्रभुको गुरुले तुरुन्त
सीता लगेर सुनकी तहिँ वामतर्फ ॥११९॥

राखीदिए गुरुजिले श्रुति-मन्त्र-साथ
श्रीराम दीक्षत भए निहुराई माथ ।
शुद्धी भयो शरिरको गरि दान धेर
थाले सुकार्य मखको अनि उत्लिखेर ॥१२०॥

वेदी र मण्डपहरू ति दिशा-दिशामा
पारे तयार ऋषिवृन्द मिलेर छिन्मा ।
श्रीखण्ड चन्दन कपूर सुरम्य धूप
सिन्दूर फूल-फल उत्तम बालि दीप ॥१२१॥

सामग्रि उत्तम जहाँ जति चाहिने हुन्
कम्ती थिएन सुनका सब पात्र नै छन् ।
जुन् मुख्य मण्डप थियो हयमेध गर्ने
देख्नेहरू सकलको मन दंग पर्ने ॥१२२॥

ढोकाहरू सब दिशातिर चार राख्दा
त्यस्को सिँगार गरि बाहिरबाट देख्दा ।
चारै दिशातिर सजाइ ध्वजा-पताका
रत्नादि भूषण लगाइ ठड्याइएका ॥१२३॥

कस्तूरि चन्दन र अत्तर छर्कि-छर्की
पारे सुगन्धित सबैतिर वर्कि-फर्की ।
जाही जुही फुल गुलाफ अनेक ल्याई
चम्पा चमेलि अरु मालतिले सजाई ॥१२४॥

माला उनेर सब द्वारहरू सजाए
राम्रा ध्वजा विमल तोरण टाँग्न लाए ।
उद्यान स्वर्ग पुरिको जति दिव्य मान्थे
त्यो देखि उत्तम ति मण्डपलाइ ठान्थे ॥१२५॥

खाई हविष्य गरि भोजन एक छाक
भूमी-शयन् गरि रहे रघुवंश-नाथ ।
पालन् गरी रहनुभो अनि ब्रह्मचर्य
त्यागीदिए सकल राजसि भोग-वर्य ॥१२६॥

पैह्रेर चर्म मृगको लिइ सीङ हात
बस्नूभयो सुनकि पत्नि लिएर साथ ।
नाशिन्छ विप्र-वधको अब पाप जो हो
पक्का भयो हृदयमा रघुनाथको त्यो ॥१२७॥

आचार्यको असल आसनमा गएर
शृङ्गी ऋषी बसनुभो खुशिले फुलेर ।
ब्रह्मा अगस्ति ऋषिलाइ त्यहाँ बनाए
अद्ध्वर्यु वाल्मिकि मुनीकन नै खटाए ॥१२८॥

पारेर द्वारपति विज्ञ कणादलाई
राखे वसिष्ठ गुरुले क्रमले खटाई ।
जो द्वार पूर्वतिरका अतिरम्य थीए
तिन्मा बसी असित देवल वेद पढ्थे ॥१२९॥

हुन् सामवेद पढने यि दुवै प्रवीण
थाले तुरुन्त दुइले अनि साम-गान ।
राखेर दक्षिण ति कश्यप अत्रिलाई
ती पढ्दथे यजुरवेद निकै रमाई ॥१३०॥

जाबालिका सँग बसे मिलि जातुकर्ण
ऋग्वेद पश्चिम दिशातिर पाठ गर्न ।
जुन् हो अथर्व कहिने शुभ वेद-पाठ
राखे ति अश्विनि-कुमार मिलाइ साथ ॥१३१॥

चारै दिशातिर बसे जब द्वारपाल
वेदध्वनी हुन गयो बहुतै विशाल ।
पूजा गरे गुरुजिले हयको पहीले
श्रीरामले पनि गरे गुरुझैँ क्रमैले ॥१३२॥

आएर यौवनवती युवती अनेक
पूजा गरे घुमि-घुमी लिइ द्रव्य नेक ।
वेश्याहरू पनि अनेक पुगेर त्याहाँ
सारा थिए निपुण नाच र गानमाहाँ ॥१३३॥

तिन्ले अनेक थरि उत्सव गर्न थाले
अर्को अनेक नटुवागण नाच्न लागे ।
चल्दो भयो अधिक उत्सव केहि बेर
हर्षे प्रसन्न भइ दर्शक धेर-धेर ॥१३४॥

यौटा जो सुन-पत्र वेद-विधिले ❀ पैह्ले तयारी थियो
लेखे कीर्ति र रामको गुरुजिले ❀ सानन्द त्यो बाँधियो ।
त्यस्को तेज सफा रवी-किरण झैँ ❀ झल्कीरहेको थियो
त्यस्मा श्रीगुरुले स्वयं कलमले ❀ यो कीर्ति लेखीइयो ॥१३५॥

दशरथ भनि राजा सूर्यवंशी थिए जो
रघुकुल-मणि उन्को पुत्रको नाम राम् हो ।
जनहित बुझि उन्ले वीर रावण् निभाए
अब बुझि द्विज-हत्त्या चित्तमा दुःख पाए ॥१३६॥

गर्दै छन् हयमेध यो बखतमा ❀ लाग्यो कि हत्त्या भनी
जस्ले यो हयलाइ पक्रन अघी ❀ सर्नेछ योद्धा बनी ।
त्यस्लाई रणमा पछार्न बलिया ❀ शत्रुघ्न छन् साथमा
जो न्यूरन्छ लिएर द्रव्य खुशिले ❀ आओम् यहीं यज्ञमा ॥१३७॥
यस्तै कीर्तिहरू अरू पनि निकै ❀ लेखे गुरूले अनि
आज्ञा बक्सनुभो तुरुन्त प्रभुले ❀ लौ अश्व छाड्नू भनी ।
भन्नूभो रघुनाथले प्रिय गरी ❀ शत्रुघ्नलाई पनि
आज्ञा पालन गर्नु भाइ ! तिमिले ❀ मैले भनेको भनी ॥१३८॥
हे बाबू ! तिमि जाउ अश्वसित यो ❀ रक्षा गरे राम्ररी
होला मंगल, शत्रु छन् जति जहाँ ❀ तिन्लाइ वशमा गरी ।
चाँडो यज्ञमहाँ पठाउनु अनी ❀ जानू अगाडी सरी
जित्नेछौ सबलाइ घोर रणमा ❀ शस्त्रास्त्र वर्षा गरी ॥१३९॥
निर्धा वा विरथी अशक्त र रथी ❀ आए भने न्यूरन
रित्तो, बालक वृद्ध स्त्रीकन पनी ❀ पर्दैन सास्ती दिन ।
रक्षा गर्नु अवश्य दीन र दुःखी ❀ संग्राम त्याग्ने छ जो
त्यस्तालाइ हुँदैन मार्न रणमा ❀ माफी दिने योग्य हो ॥१४०॥
गाई ब्राह्मण साधु-सन्त, ऋषिको ❀ वा विष्णुका भक्तको
गर्नू स्वागत मान योग्य रितको ❀ श्री शम्भुका दासको ।
यो शिक्षा दिइ शास्त्रका नियमको ❀ शत्रुघ्नलाई अनि
सेनातर्फ फिराइ दृष्टि प्रभुजी ❀ बोले दयालू बनी ॥१४१॥
हे योद्धागण ! श्यामकर्ण हयको ❀ बेला भयो हिड्नको
भाई जान्छ सँगै तिमीहरु पनी ❀ जानेछ रक्षार्थ को? ।
रक्षा गर्न भनेर वीर सँगमा ❀ जो जान तैयार छौ
श्रीशत्रुघ्नजिको ठुलो समरमा ❀ साहाय को गर्दछौ ॥१४२॥

यस्ता बात सुने जसै भरतका ❀ छोरा उठे पुष्कल
जोरी हात भने विनम्र स्वरमा ❀ बिन्ती छ यो केवल ।
जित्नेछन् प्रभुको प्रताप बलले ❀ संग्राम शत्रुघ्नले
जान्छू तैपनि पृष्ठ-रक्षक भई ❀ एक्लै म आनन्दले ॥१४३॥
यस्ता पुष्कलका कुरा सुनि निकै ❀ देखी ठुलो साहस
आज्ञा गर्नुभयो-बढाउनु गई ❀ हाम्रो सुकीर्ती यश ।
स्याबासी तिमिलाइ दिन्छु रणमा ❀ जित्छौ तिमी पुष्कल
आफ्ना शस्त्र गरी प्रहार अरिमा ❀ पारीदिनू खल्बल ॥१४४॥
आज्ञा भो हनुमानलाइ तिमि भै ❀ प्रख्यात सेनापति
रक्षा गर्न भनेर जाउ सँगमा ❀ तत्काल हे सद्मति!।
आज्ञा भो रघुनाथको सुनिसकी ❀ स्वीकार गर्दा भए
सारालाइ गरी प्रणाम रणमा ❀ जान्छू भनी तम्सिए ॥१४५॥
हे अंगद् ! नल-नील वीरहरु हो ❀ जाओ तयारी गरी
रक्षा गर्नु सबै मिलेर हयको ❀ शत्रुघ्नको राम्ररी ।
आफ्ना मन्त्रि सुमन्त्रलाइ जति जे ❀ शिक्षा दिने हो दिए
श्रीराम्‌को चरणारविन्द सबले ❀ सम्झीरहेका थिए ॥१४६॥
त्यै बेला झुकि श्यामकर्ण हयको ❀ जोरेर कान्‌मा मुख
यौटा मन्त्र भने वसिष्ठ गुरुले ❀ मानेर मन्‌मा सुख ।
जानूपर्दछ श्यामकर्ण ! तिमिले ❀ हावा सरी वेगले
पृथ्वी पूर्ण घुमेर आउनु यहीँ ❀ आनन्द उत्साहले ॥१४७॥
घोडालाइ बिदा दिने समयमा ❀ फेरी गरे पूजन
हम्के चामर सुन्दरीगण मिली ❀ आनन्द मानीकन ।
हात्मा पुष्प लिई अबीर सबले ❀ थाल्दा भए छर्कन
देख्दा उत्सव त्यो चकित् हुन गए ❀ सारा प्रजा, सज्जन ॥१४८॥

थाले ढोल, मृदंग, शंख नगड़ा ❀ बाजाहरू गर्जन
नाच्थे ताल मिलाइ खूब भँडिनी ❀ सेवा जनाईकन ।
रत्नाऽऽभूषणले सुसज्जित सबै ❀ त्यो अश्वको वर्णन
यस्तो हो, यसरी थियो, यति भनी ❀ सक्तैन कोही जन ॥१४९॥
घोडा उत्तम श्यामकर्णकन त्यो ❀ छाडीदिदा बेसरी
चर्को शब्द भई त्रिलोक सहसा ❀ थर्क्यो नराम्रो गरी ।
घोडा मुक्त भएर पूर्वतिर त्यो ❀ बिस्तार बढ्दै गयो
सेनाका सब वीर सैन्य सहसा ❀ त्यस्का पछी लम्कियो॥१५०॥
श्रीशत्रुघ्न पनी हिंडे पछि-पछी ❀ जैकार झन् चर्कियो
ठूलो शब्द तथा जय-ध्वनि हुँदा ❀ पृथ्वी, दिशा थर्कियो ।
बीदा माँग्न भनेर पुष्कल गए ❀ माता पिताजीकहाँ
आशीर्वाद दिए सदा विजयको ❀ खूशी भई मन्महाँ ॥१५१॥
पौंचेथे ति प्रियाकहाँ पुगि बिदा ❀ माँगौं भनी पुष्कल
नाऊँ कान्तिमती थियो उनि थिइन् ❀ निर्दोष निष्केवल ।
कस्तूरी अगरू र चन्दन घसी ❀ सर्वांगमा केशर
काहाँ छौ अहिले प्रिये, भनि पुगे ❀ खोज्दै ति चारैतिर ॥१५२॥
देखी पुष्कललाइ कान्तिमतिले ❀ निक्कै गरिन् आदर
जान्छू देउ बिदा भने प्रियतमे ! ❀ पक्रेर राम्रा कर ।
सुन्दा पुष्कलका कुरा मनमनै ❀ दुःखी भए तापनि
हाँस्तै बिन्ति गरिन् मिलोस् विजयश्री ❀ दिन्छू बिदा लौ भनी ॥१५३॥
पैह्राइन् तिनिले मुकूट र धनू ❀ तर्बार राम्रो दिई
माला उत्तम पुष्पको पनि दिइन् ❀ अत्यन्त खूशी भई ।
शेखी गर्दछु नाथ ! यो बखतमा ❀ हूँ वीर-पत्नी भनी
त्यस्को योग्य विचार राख्नु रणमा ❀ पर्ला चनाखो बनी ॥१५४॥

हाम्रो हार भयो भने समरमा ❀ शेखी र इज्जत् गयो
हाँसे पुष्कल पत्निको सुनि कुरा ❀ बोले मिठा बात यो ।
हे प्यारी ! तिमिले नमान मनमा ❀ चिन्ता कुनै बातको
चाँडै नै समचार दिन्छु म शुभे ! ❀ हाम्रो ठुलो जीतको ॥१५५॥
तिम्रो इज्जतमा कुनै तरहको ❀ बाधा नपारीकन
फिर्नेछू विजयी भएर सुमुखी ! ❀ आनन्द होला मन ।
पत्नीलाइ बुझाइ, दिव्य रथमा ❀ चढ्दा भए पुष्कल
तिन्का साथ गए अनेक थरिका ❀ सेनाहरूको दल ॥१५६॥
क्यै सेना चतुरंगिणी पनि हिंडे ❀ हात्ती र घोडा रथ
पृथ्वी कम्प गरी असंख्य विरले ❀ ढाकीदिएथे पथ ।
जै-जैकार भयो चतुर्दिक सबै ❀ जै राम ! हे रामको
गर्थे बात कती प्रजागणहरू ❀ श्रीरामको, यज्ञको ॥१५७॥

दुःखी दरिद्र अनि दीन अपंगलाई
अन्नादि वस्त्र धन बाँड्न स्वयं लगाई ।
गर्दै रही नियम पालन नीति-साथ
बस्नूभयो रघुपती नझुकाइ माथ ॥१५८॥
पांचाल देशहरुमा घुमि बार-बार
डुल्दै गयो हय सबै 'नगरी' विचार ।
जान्थ्यो जता हय उतै सब वीर जान्थे
राजाहरू शिर स्वयं निहुराइ मान्थे ॥१५९॥
कीर्ती पढेर अथवा सुनि हर्ष मानी
दिन्थे प्रशस्त धन ती भय क्यै नमानी ।
शत्रुघ्नको हुकुमले गइ यज्ञमाहाँ
गर्थे सुकार्य जति आइपरे ति ताहाँ ॥१६०॥

राजाहरू जति-जती वशमा गराए
तिन्को दिएर धन-मान खुशी तुल्याए।
इच्छानुसार हय जान्छ जता उतै ती
जान्थे अनेक थरि सैनिक लागि ताँती ॥१६१॥
श्रीरामको सुयश खूब ठुलो हुनाले
त्यो अश्व पक्रन सकेन कहीं कसैले।
पाएर दर्शन सहर्ष प्रणाम गर्थे
शत्रुघ्नका चरणमा धन-मान धर्थे ॥१६२॥



## श्यामकर्णको अहिक्षेत्रमा प्रवेश







थियो राम्रो नीती सबतिर व्यवस्था असल झन्
सबै दिन्थे आफ्नू शुभ-मति तथा रामतिर मन्।
गयो इच्छाचारी हय डुलि अहिक्षेत्र पुरमा
सबैको श्रद्धा औ दृढमति थियो राम-पदमा ॥१६३॥
संख्या केहि थिएन वीर कति छन् ❀ सेना र योद्धा कति
हेर्थे छक्क परी उसै बखतमा ❀ देखी त्यहाँको स्थिति।
यौटा नन्दन बाग झैं सुख दिने ❀ देखे बगैचा जब
उस्तै उत्तम क्वै सरोवर थियो ❀ व्यामोह पार्ने सब ॥१६४॥
चारैतर्फ अनेक फूल-फलका ❀ वृक्षादिले शोभित
न्यूरेका फल-भारले ति रुखका ❀ हाँगाहरू छन् स्थित।
चारैतर्फ छ स्नान-खातिर सफा ❀ साना ठुला खुड्किला
उस्तै छन् फल-फूलका रुखहरू ❀ चारै दिशा छन् खुला ॥१६५॥

त्यस्तो दिव्य तलाउको वरिपरी ❀ घेरा थियो तापनि
देख्ने दर्शकको लिने मन खिँची ❀ हो स्वर्ग की यो भनी।
देखे स्वच्छ तलाउ, बाग सहसा ❀ शत्रुघ्नजीले जब
त्यस्मा आँप अनार अंगुर लिची ❀ पाकीरहेका सब ॥१६६॥
बोल्ने हंस चकोर कोकिल चरा ❀ वाणी मधूरो गरी
हेर्नेको मन खैँचने सब थिए ❀ शोभा अनेकौं थरि ।
सामुन्ने त्यहिँ एक मन्दिर पनी ❀ देखे, अनौठो थियो
धेरै रत्नहरू जडी वरिपरी ❀ कारीगरी देखियो ॥१६७॥
त्यस्मा तोरण औ ध्वजाहरु पनी ❀ रत्नादिका नै थिए
देख्दा वैभव त्यो मनैमन सबै ❀ उद्विग्न झैं देखिए ।
यस्तो मन्दिर ता कतै पृथिविमा ❀ होवैन भन्ने भई
सोधेथे निज-मन्त्रिलाइ सहसा ❀ शत्रुघ्न हर्षित् भई ॥१६८॥
देख्छू सुन्दर यो सरोवर तथा ❀ राम्रो बगैचा पनि
त्यस्तै उत्तम देख्छु मन्दिर यहाँ ❀ कुन् देवको हो भनी ।
को गर्छन् बसि राज्य यो नगरमा ❀ को हुन् ठुला भूपति
आयौं हामि यहाँ, ति छन् अब कहाँ ❀ कस्तो छ तिन्को स्थिति ॥१६९॥
यस्तो प्रश्न सुमन्त्रले सुनिलिए ❀ शत्रुघ्नजीको जब
लागे भन्न बुझाइ बात क्रमले ❀ जाने-बुझेको सब ।
हे शत्रुघ्न ! मलाइ ज्ञात छ कथा ❀ सारा अहिक्षेत्रको
त्यस्को वर्णन सुन्नुहोस् हजुरले ❀ आश्चर्य लाग्ने छ त्यो ॥१७०॥
राजा हुन् अहिक्षेत्रका सुमदजी ❀ गर्छन् उनै शासन
तिन्को श्रेष्ठ विचार घोर तपले ❀ धेरै बिताए दिन ।
देवीको नृपलाइ प्राप्त हुनगो ❀ क्यै कालमा दर्शन
बस्तै छन् अझसम्म ती सुमदजी ❀ उन्कै कृपा भैकन ॥१७१॥

जस्तो कष्ट खपी गरे तप ठुलो ❀ राजा सुमद्ले अनि
पाए दर्शन देविको जसरि त्यो ❀ भन्छू सबै त्यो पनि ।
धेरै दुःख दिए र शत्रुहरुले ❀ साम्राज्य भो अस्थिर
राजा दिक्क भई हिमालय पुगी ❀ लागे तपस्यातिर ॥१७२॥
धेरै वर्ष गरे कठोर तप ती ❀ राजा सुमद्ले तर
पाएनन् जब दिव्य दर्शन अनी ❀ निक्कै भए अस्थिर ।
जाडोमा जलमा र ग्रीष्म ऋतुमा ❀ पंचाग्नि 'तापीकन
वर्षा काल हुँदा खुला चउरमा ❀ एकाग्र पारी मन ॥१७३॥
खान्थे पात सुखा ति केहि दिन ता ❀ खाँदैनथे त्यो पनि
नीराहार गरी रहे दिन कती ❀ मिल्नेछ दर्शन् भनी ।
रोकी श्वास समाधिमा दृढ भई ❀ तिन्ले बिताए दिन
धेरै वर्ष बिते कठोर तपमा ❀ हल्लेछ इन्द्रासन ॥१७४॥
डाकेथे अनि कामलाइ डरले ❀ आज्ञा दिए सादर
जाऊ झट्ट तिमी त्यहाँ सुमदको ❀ तत्काल सातो हर ।
सुन्दा बात सुरेन्द्रको मनमनै ❀ ढाक्यो अहंकारले
लागे भन्न सुरेन्द्रलाइ सहसा ❀ ती काम झन् शेखिले ॥१७५॥
ब्रह्मा, विष्णु र शम्भुलाइ वशमा ❀ पारेँ र पार्छू पनि
के गाह्रो छ ति भूपलाइ वशमा ❀ पार्नेछु चाँडै भनी ।
यस्तो शेखि गरेर इन्द्रसित ती ❀ पत्नी लिई साथमा
राखेथे ऋतुराजका सँग अरू ❀ ती अप्सरा साथमा ॥१७६॥
रम्भा उर्वशि मेनका अरु पनी ❀ पाँचे लिई सुन्दरी
गर्थे जुन् स्थलमा बसी तप उहीँ ❀ पुग्दा भए त्यो घरि ।
पैह्ले उत्तम त्यो वसन्त ऋतुको ❀ शोभा फिजाईलिए
राजाको तप भंग गर्न जति जे ❀ सक्थे सबै गर्दिए ॥१७७॥

फैलेका रुखका अनेक फलका ❀ हाँगाहरूमा फल
देखिन्छन् लटरम्म, छड्छड गरी ❀ छाँगो छ खस्तो तल ।
डुल्दै छन् भ्रमरा अनेक फुलका ❀ हाँगा र गुच्छामहाँ
चल्दा मन्द समीर स्वच्छ मनमा ❀ बाधा हुने झन् तहाँ ॥१७८॥
लागे नाच्न मिलाइ ताल सुरमा ❀ ती अप्सरा सुन्दरी
हानेथे अनि कामले शर तिखा ❀ ताक्की नराम्रो गरी ।
मीठो गान र तान उत्तम सुने ❀ राजा सुमद्‌ले जब
बाधा पर्न गयो कठोर तपमा ❀ आँखा उघारे तब ॥१७९॥
देखे उत्तम अप्सरा-गणहरू ❀ नाचीरहेका अनि
जाने श्रीसुरराजले छल गरे ❀ ऐह्ले मलाई भनी ।
बोले सुन्दरि अप्सरासित तिनी ❀ हे कामिनी हो ! किन ?
पाउन्नन् सहसा ठुलो तप गरी ❀ यो रूपको दर्शन ॥१८०॥
ऐह्ले आइ मलाइ यो किसिमले ❀ बाधा दिएका किन ?
के इच्छा मनमा छ गर्न अब के ❀ खोज्छौ मलाई भन ।
तिन्को चाल बुझेर भाव नृपले ❀ मोहित् भएझैं गरी
बोलेको सुनि क्यै प्रसन्न भइ गै ❀ त्यो उर्वशी सुन्दरी ॥१८१॥
बांगा नेत्र नचाउँदै अगि सरी ❀ बिन्ती गरी सादर
देखी यो तप नाथको, वश भयौं ❀ हामीहरू आखिर ।
मै हूँ उर्वशि, मेनका सँगिनि हुन् ❀ मेरै रही साथमा
अर्की श्रेष्ठ मिलोत्तमा शशिमुखी ❀ हेर्नूहवस् गाथमा ॥१८२॥
हामी धाइ हजूरलाइ खुशिले ❀ आईरहेछौं यहाँ
जान्नूहोस मलाइ मुख्य नृपते ! ❀ यी अप्सरा तीन्महाँ ।
क्रीडा गर्न भनेर हामिसित ती ❀ द्यौताहरू खोज्दछन्
जो गर्छन् तप हामिलाइ ति पनी ❀ पाए भने रोज्दछन् ॥१८३॥

तस्मात् यो तप त्यागि हे नरपते ! ❀ मायातिरै ढल्कनोस्
हाम्रा साथ गरेर मोज सहसा ❀ नै काममा पल्कनोस् ।
हाऊ-भाउ कटाक्षले घरि-घरी ❀ सर्दै अगाडीतिर
पार्थे नक्कल जो थिए अरु सँगै ❀ तिन्ले पनी बेसित ॥१८४॥
आफ्नू शक्ति जती थियो सब गरे ❀ ती अप्सराले तर
मन्मा केहि नभै विकार नृपती ❀ बस्ता भए सुस्थिर ।
हेरेनन् नृपले कुनै तरहले ❀ ती-तर्फ राम्रो गरी
फर्के हार भएर काम रति औ ❀ ती अप्सरा सुन्दरी ॥१८५॥
त्यै बेला सहसा त्रिलोक-जननी ❀ आई दिइन् दर्शन
धारी पाश, धनू र अंकुश, गदा ❀ औ सिंहको वाहन ।
पाए दर्शन शक्तिको सुमदले ❀ अत्यन्त गद्गद् भई
पाऊमा परि दण्डवत् गरिलिए ❀ दुर्गे ! भनी न्यूरिई ॥१८६॥
थाले गर्न तिनी प्रसन्न मनले ❀ हात् जोरि धेरै स्तुति
हे दुर्गे ! जगदम्बिके ! भगवती ❀ पाऊँ शिवे ! सद्मति ।
ब्रह्मा शम्भु फणीन्द्र सेव्य हरिले ❀ त्रैलोक्यकी रक्षिणी
बारम्बार प्रणाम गर्छु पदमा ❀ हे शत्रुसंहारिणी ! ॥१८७॥
बिन्ती गर्दछु हे त्रिलोक-जननी ❀ हे भक्त-संरक्षिणी
अर्को छैन हजूर बाहिक कुनै ❀ दैत्यादि-संहारिणी ।
आफ्ना भक्त परे भने विपदमा ❀ उद्धार तिन्को गरी
छैनन् कोहि अरू दिने वर पनी ❀ सन्तुष्ट भै ईश्वरी ॥१८८॥
आएको छु हजूरको शरणमा ❀ बिन्ती छ पाऊ परी
रक्षा गर्नुहवस् प्रसन्न मनले ❀ तत्काल हे ईश्वरी ।
पाएँ भाग्य ठुलो भई हजुरको ❀ प्रत्यक्ष यो दर्शन
भक्तीको वरदान पाउँ जननी ! ❀ माग्दीनँ मैले धन ॥१८९॥

केही जान्दिनँ भक्ति-भाव विषयी ❀ छू, कष्टमा यो घरी
मेरो गर्नुहवस् निवारण सबै ❀ सन्ताप हे ईश्वरी ! ।
धेरै यै रितले गरे सुमदले ❀ ती ईश्वरीको स्तुति
तिन्को भक्ति बुझी प्रसन्न हुनुभो ❀ तत्काल देवी अति ॥१९०॥

आज्ञा गरिन् जननिले नृपतर्फ हेरी
मागेर लेउ वर लौ नगरेर देरी ।
यस्तो सुने नृपतिले जब शुद्ध वाणी
बिन्ती गरे मनमनै बुझि भाग्यमानी ॥१९१॥

दर्शन् मिल्यो हजुरको वरदान यो हो
चाहिन्न राज्य-सुख वैभव नै यही हो ।
इच्छा छ शेष जननी ! अब एकमात्र
साम्राज्य होस् अरिबिना सब एकछत्र ॥१९२॥

पापी शत्रु जितौँ र राज्य पनि होस् ❀ सर्म्पूण निष्कण्टक
लागोस् चित्त हजूरका चरणमा ❀ नै नित्य बाँचे तक ।
राजाको सुनि प्रार्थना भगवती ❀ अत्यन्त खूशी भइन्
जित्नेछौ सब शत्रु निश्चय भनी ❀ आशीष धेरै दिइन् ॥१९३॥

माग्यौ मुक्ति अवश्य दिन्छु नृपते ❀ त्यस्मा छ जुन् कारण
छाड्नेछन् जब रामले हय, यता ❀ त्यो आउला जुन् दिन ।
हिड्नन् सैनिक अश्व-रक्षकहरू ❀ शत्रुघ्न योद्धा पनि
हे राजन् ! जब आउनन् नगरमा ❀ जानू तिमीले, अनि ॥१९४॥

गर्नू स्वागत, पर्दछू शरणमा ❀ भन्नू स्वयं न्यूरिई
जे भन्छन् उनिले प्रसन्न मनले ❀ स्वीकार्नु सानू भई ।
जानू रक्षक रूपमा तिमि पनी ❀ शत्रुघ्नका साथमा
हुन्छौ मुक्त अवश्य दर्शन मिली ❀ श्रीरामको यज्ञमा ॥१९५॥

गर्नेछौ सुख-भोग हे नरपते ! ❀ वैरी जिती राज्यका
राजा खूशि भए सुनी वचन ती ❀ श्रीशक्ति कामाक्षिका ।
अन्तर्धान भइन् त्रिलोक-जननी ❀ हेर्थे ति आश्चर्यले
देवीकै चरणारविन्द मनमा ❀ सम्झेर भूपालले ॥१९६॥
राम्रो मन्दिर देविको र पर यो ❀ उद्यान देखिन्छ जो
पारे निर्मित भूपले श्रम गरी ❀ उन्को यही कीर्ति हो ।
देवीको महिमा सुनी मनमनै ❀ ढोगे ति शत्रुघ्नले
राजालाइ भन्यो सभा-भवनमा ❀ पौँचेर क्वै दूतले ॥१९७॥
राम्रो अश्व विचित्र एक पुरमा ❀ आएर हे भूपति !
त्यस्को देख्छु निधारमा छ सुनको ❀ क्वै पत्र राम्रो अति ।
उस्को बात सुनी जगज्जननिको ❀ सम्झे कुरा भूपले
ठूलो उत्सवको हुकुम् पनि दिए ❀ श्रीरामका भक्तले ॥१९८॥
लावा पुष्प अबीर चन्दन लिई ❀ नाना थरी सुन्दरी
हर्षित् भैकन पुष्पवृष्टि सबले ❀ गर्दा भए राम्ररी ।
थाले बज्न अनेक वाद्य पुरमा ❀ आनन्द त्यो फैलियो
गाना नाच प्रसन्न उत्सव उता ❀ भित्रै चलेको थियो ॥१९९॥
पौँचे भूप सुमद् ससैनिक जसै ❀ शत्रुघ्नको सामुमा
भेटी राखि अनेक सम्पति स्वयं ❀ ढोगीदिए पाउमा ।
गर्थें आश म प्राप्त गर्न दिन यै ❀ हे वीर ! पर्खीकन
इच्छा पूर्ण भयो, प्रसन्न म भएँ ❀ पाएर यो दर्शन ॥२००॥
हे स्वामी ! म त दास हूँ हजुरको ❀ राख्नोम् सबै वैभव
रक्षा गर्नुहवस्, म छू शरणमा ❀ चाहिन्न केही अब ।
योद्धा पुष्कलको पनी नृपतिले ❀ निक्कै गरे स्वागत
पौँचाए रथमा बसालि खुशिले ❀ दर्बार राम्रो-सित ॥२०१॥

देखे पुष्कलले सजावट ठुलो ❀ शत्रुघ्नजीले पनि
हेरे छक्क परी सबै महलको ❀ सौन्दर्य राम्रो भनी।
केही सैन्य-समेत पुष्कल तथा ❀ शत्रुघ्नजी तीन् दिन
ताहीँ बस्नुभयो प्रसन्न मनले ❀ विश्राम गर्नाकन ॥२०२॥
छोरालाइ दिएर राज्य खुशिले ❀ राजा सुमद्‌ले पनि
केही सैन्य लिई हिडे हयसँगै ❀ साथै म जान्छू भनी।
धेरै सैनिक, राज-भूषण पनी ❀ तिन्कै दिई हातमा
चल्थ्यो श्रीरघुनाथको मख जहाँ ❀ भेजे त्यही स्थानमा ॥२०३॥



## च्यवन मुनिको आख्यान



हिड्दो भो अनि श्यामकर्ण हय त्यो ❀ सानन्द चौथो दिन
जान्थ्यो अश्व जता, उतैतिर सबै ❀ जान्थे खुशी भैकन।
घोडा पुग्न गयो पयोष्णि नदिमा ❀ बस्थे तपस्वी मुनि
गर्थे उत्सव ती मिलेर सबले ❀ जै राम, जै-जै भनी ॥२०४॥
पापी कोहि थिएन धर्म-पथमै ❀ हिड्थे सबै सज्जन
बस्थे जन्तुहरू मिलेर वनका ❀ वैरत्व बिर्सीकन।
गर्थे नित्य सुकर्म श्रेष्ठ तप वा ❀ श्रीईश-आराधना
हुन्थे पूर्ण सबै सुविज्ञ ऋषिका ❀ जे जे थिए कामना ॥२०५॥
देखी आश्रम त्यो सुरम्य खुशिले ❀ सोधे ति शत्रुघ्नले
हे मन्त्री ! सब यो बताउ क्रमले ❀ सुन्छू म विस्तारले।
कस्को आश्रम हो, यहाँ कसरि को ❀ बस्छन् तपस्या गरी
लागे भन्न सुमन्त्रले सब कुरा ❀ एकेक त्यो राम्ररी ॥२०६॥

छोरा हुन् भृगुका मुनि च्यवनको ❀ उत्पत्ति सुन्नोम् अब
धेरै धर्म हुने र पाप तनको ❀ हो यो पखाल्ने सब ।
राजन् ! क्वै दिनमा बटुल्न समिधा ❀ वन्मा भृगूजी गए
पायो औसर दैत्य त्यो दमनले ❀ पौंच्यो, सबै तर्सिए ॥२०७॥
पत्नी छन् भृगुकी कहाँ ? यति भनी ❀ सोधीलिएथ्यो जब
त्यस्को उत्तर क्यैं नपाइ सहसा ❀ क्रोधित् भयो दानव ।
सोधेथ्यो अनि अग्निलाइ मखको ❀ उन्ले डराईकन
संकेत्ले सब त्यो भनिन् जब, निकै ❀ गर्ज्यो रिसाईकन ॥२०८॥
छोरी दिन्छु तँलाइ नै अघि भने ❀ यिन्का पिताले तर
त्यो बिर्सी भृगुलाइ सुम्पन पुगे ❀ मेरो नमानी डर ।
यिन्का साथ गरे विवाह भृगुले ❀ थाहै नापाईकन
दिन्थें नत्र विवाह गर्न कसरी ❀ मैले तिमी नै भन ॥२०९॥
बोकी ती भृगु-पत्निलाइ पिठमा ❀ तत्काल दौडी गयो
त्यस्को चाल बुझेर ती सुमुखिको ❀ सातो गएझैं भयो ।
चिच्च्याइन् अनि बेसरी डर परी ❀ हे नाथ ! रक्षा गर
तिन्को गर्भ थियो त्यहीं पतन भो ❀ लागेर बर्ता डर ॥२१०॥
त्यै वेला सहसा नजान्न सकिने ❀ आश्चर्य यौटा भयो
हेर्दा बालक तेजले दमनको ❀ देहै जली गै-गयो ।
फर्किन् ती भृगुपत्नि आफ्नु घरमा ❀ शङ्कित् थिइन् तापनि
स्वामीलाइ भनिन् समस्त घटना ❀ यस्तो भयो लौ भनी ॥२११॥
अग्नीले अघि दैत्यलाइ डरले ❀ मेरो चिनारी दिए
त्यो सुन्दा भृगुजी कठोर रिसले ❀ यो बात बोल्दा भए ।
हे अग्नी ! तिमिलाइ श्राप अहिले ❀ दिन्छू नराम्रो सुन
भन्नेछन् अब सर्वभक्षि सबले ❀ भन्ने मनैमा गुन ॥२१२॥

येती बात भनेर ब्राह्मण मुनी ❀ डाकेर ज्ञानी जन
सारा वेद-विधानले गरिदिए ❀ त्यो पुत्रको न्वारन ।
राखे नाम 'च्यवन्' भनी सुजनले ❀ शस्त्रोक्तको रीतिले
गर्थिन् ती भृगु-पत्नि पालन सदा ❀ त्यो पुत्रको स्नेहले ॥२१३॥
निक्कै तेज बढी छिटै च्यवनजी ❀ ठूला भएथे जब
ज्ञानी पूर्ण थिए गएर वनमा ❀ थाले तपस्या तब ।
धेरै वर्ष गरे मुनि च्यवनले ❀ ठूलो तपस्या, अनि
ढाकेथ्यो धमिरा र झ्याउहरुले ❀ देखिन्नथ्यो क्यै पनि ॥२१४॥
केही ज्ञान थिएन देहतिरको ❀ लाग्दा तपस्या-तिर
यौटै लक्ष्य थियो यही तप गरी ❀ भेट्टाउँछू ईश्वर ।
आए खेल्न भनी शिकार वनमा ❀ शर्याति कोही दिन
सेना औ परिवारले सहित ती ❀ आनन्द मानीकन ॥२१५॥
छोरी एक थिइन् तिनै नृपतिकी ❀ मैयाँ सुकन्या भनी
डुल्दै जंगलमा पुगिन् सँग थिए ❀ केटी सुसारे पनि ।
माटोको ढिकुरो सरी नगिचमै ❀ देखिन् तिनीले जब
के हो यो म बुझूँ भनेर सहसा ❀ आँखा लगाइन् तब ॥२१६॥
दोटा अग्नि-शिखा-समान तिनिले ❀ देखेर ज्वाला सरी
आँखा मात्र ति देखिने च्यवनका ❀ आश्चर्य लाग्ने गरी ।
यौटा काठ लिएर चिन्न नसकी ❀ घोचीदिइन् बेसरी
आँखा फुट्न गए मुनि च्यवनका ❀ आयो रगत् तर्तरी ॥२१७॥
त्यो देखेर डराइ केहि नभनी ❀ फर्किन् सुकन्या घर
बोलेनन् सँगिनीहरू पनि कुनै ❀ मानी रहेथे डर ।
साराको मल-मूत्र बन्द हुनगो ❀ उत्पात ठूलो भयो
पृथ्वी कम्प भइन् ठुला गिरिपनी ❀ थर्के सरी देखियो ॥२१८॥

उल्का-पात भएर घोर वनमा ❀ जन्तूहरू भर्किए
घोडा हात्तिहरू डराइ सहसा ❀ चौतर्फ भाग्दै गए ।
यस्तो के हुनगो भनेर मनमा ❀ शर्याति राजा डरी
खोज्दै जंगलमा गए च्यवनजी ❀ बस्थे तपस्या गरी ॥२१९॥
को आयो अपराध के गरिदियो ❀ जानीनँ केही पनि
माफी बक्सनुहोस् परें शरणमा ❀ हो दास आफ्नै भनी ।
शर्याती नृपको सुनेर विनती ❀ बोले मुनी सुस्तरी
राजन् ! तिम्रि कुमारि आइ तपमा ❀ यो विघ्न-बाधा गरी ॥२२०॥
आँखा फोरिदिइन् नजानिकन नै ❀ व्यर्थै खित्लाँची गरिन्
लाग्यो बग्न रगत्, डराइ मनमा ❀ तत्काल भागीगइन् ।
सोही कारणले उपद्रवहरू ❀ हुन् यी भएका सुन
देऊ पुत्रि मलाइ शान्त सहजै ❀ पार्नेछु भन्ने गुन ॥२२१॥
यो आज्ञा मुनिको सुनी नरपती ❀ क्यै बेर चिन्तित् भए
कन्यालाइ गरी समर्पण अझै ❀ झन् तापमा गाड़िए ।
जोरी हात भने विनम्र स्वरमा ❀ पाऊँ बिदा हे मुनि
आफ्ना सैन्य सबै लिई नगरमा ❀ फर्के ति दुःखी बनी ॥२२२॥

गर्दा सदा तप शरीर सुकीसकेका
संसारबाट मनले ति विरागिएका ।
त्यस्ता मुनि च्यवनको कुटिमा बसेर
सेवा गरिन् चरणमा पतिको नुहेर ॥२२३॥
यस्तै रहेछ निज भाग्य भनेर जानी
सन्तोषले तिनि बसिन् दुख क्यै नमानी ।
धेरै बिते दिनहरू यसरी क्रमैले
सेवा-विषे त्रुटि भएन कुनै कहीले ॥२२४॥

आए कुनै दिन ति अश्विनि दो कुमार
तिन्को गरिन् अतिथि-स्वागत मानि सार ।
तिन्ले फकाउन गरे तिनिलाइ यत्न
लौ जाउँ स्वर्ग हिड हे सुमुखी ! प्रसन्न ॥२२५॥
हौली, उहाँ सुख अनेक छ भोग गर्ने
यी वृद्धका सँग बसी भन के छ मिल्ने ।
यस्तै अनेक थरिका दिइ लोभ तिन्ले
भन्दा, भनिन् सुमुखिले अति नम्रताले ॥२२६॥
जस्ता मिले पति मलाइ म छू प्रसन्न
सेवा म गर्दछु सदा भइ खूब मग्न ।
यस्ता कुरा नगर, स्वामि नगीचमै छन्
तिन्ले सुने मकन दोष ठुलो दिनेछन् ॥२२७॥
अन्धा भए पनि पती, म पतिव्रता छु
सेवा गरेर पतिको म खुशी रहन्छु ।
चाहिन्न स्वर्ग-सुख-भोग म छू प्रसन्न
त्यागेर वृद्ध पतिलाइ कतै म जान्नँ ॥२२८॥
यस्ता कुरा ति दुइले जब सुन्न पाए
दिन्छू म केहि वरदान भनी सुनाए ।
तिन्ले सुनी वर दिने जब बात तिन्को
बिन्ती गरिन् अनिपछी निज बात मन्को ॥२२९॥
फोरीदिएँ नयन जंगलमै नजानी
आँखा दिनोस् अब दुवै निज-दान ठानी ।
ती देव-वैद्य दुइले सुनि बात तिन्को
भन्दा भए निज कुरा अनि भित्रि मन्को ॥२३०॥

दिन्नन् ति भाग हविको सुर हामिलाई
पारून् खुशी च्यवनले हवि त्यो दिलाई ।
यिन्का दुवै नयन स्वच्छ तुल्याइदिन्छौं
सक्छन् भने मुनि भनून् अनि मानिलिन्छौं ॥२३१॥
सुन्दै थिए च्यवनले सब बात तिन्को
भन्दा भए अनि सफासित बात मन्को ।
मौका परे मख हुँदा बुझ सत्य भन्छु
तिम्रो अवश्य हवि-भाग दिलाउनेछु ॥२३२॥

यस्ता बात सुनी मुनि च्यवनको ❀ जानी प्रतिज्ञा पनि
यौटा सिद्ध तलाउमा अब छिटै ❀ जाऔं नुहाऔं भनी ।
यो सल्लाह गरी गए सब जना ❀ स्नानार्थ त्यै स्थानमा
सब्ले स्नान गरे तलाउ बिचमा ❀ देखा परे सामुमा ॥२३३॥
माला कुण्डल रत्न वस्त्र पहिरी ❀ सौन्दर्यले सज्जित
राम्रा यौवनपूर्ण एक रुपका ❀ पारीलिने मोहित ।
देखी एकसमान रूप वयका ❀ स्वामी चिह्नीनन् जब
स्वामी चिह्न सकीनँ विज्ञ जनहो ❀ माफी दिनूहोस् अब ॥२३४॥
तिन्को बिन्ति सुनी कुमार दुइले ❀ स्वामी चिह्नाईदिए
आफू स्वर्गपुरी प्रसन्न मनले ❀ तत्काल फर्की गए ।
देखे आश्रमका अनेक जनले ❀ आश्चर्य माने अनि
जै-जैकार गरे कुमार दुइको ❀ हुन् यी दयालू भनी ॥२३५॥
देखिन् ती ऋषिपत्निले पति युवा ❀ राम्रा तथा उत्तम
स्वामीलाइ भनिन् विनम्र स्वरमा ❀ त्यागी सबै संयम ।
धेरै काल बित्यो विहार नगरी ❀ लाग्दा तपस्यातिर
इच्छा गर्दछु भोग आदि सुखको ❀ पाऊँ भनी सादर ॥२३६॥

पत्नीको सुनि भाव जानि मुनिले ❀ भन्दा भए सुन्दरी
आऊ स्नान गरी तिमी पनि त्यहीँ ❀ जाऊ शुभे ! यै घरि ।
आज्ञाले पतिको गएर सुमुखी ❀ आइन् नुहाई जब
राम्री हुन् पहिल्यै तथापि बहुतै ❀ राम्री भइन् झन् तब ॥२३७॥
निस्के सोहि तलाउबाट सहसा ❀ दासी हजारौँ परी
सारा उत्तम रूप यौवनवती ❀ सौन्दर्य वर्षा गरी ।
वस्त्राऽऽभूषणले सुसज्जित थिए ❀ पक्री सफा चामर
हम्कन्थे मुनि-पत्निका वरिपरी ❀ गर्दै ठुलो आदर ॥२३८॥
ओफू माझमहाँ बसिन् खुशि भई ❀ साध्वी सुकन्या उता
सेवा गर्न थिए तयार सब ती ❀ मानेर आज्ञा यता ।
त्यस्तै उत्तम भोगका र सुखका ❀ सारा थिए साधन
स्वामीको तपको प्रभाव गहिरो ❀ भन्ने बुझिन् मन्मन ॥२३९॥
इच्छाचारि विमान उत्तम रचे ❀ ज्ञानी च्यवन्ले अनि
पत्नीका सँगमा अनेक सुमुखी ❀ राखे दयालू बनी ।
हीरा मोति जडाउ रत्नहरुको ❀ शोभा थियो यानको
त्यो-माथी सुनको थियो महल झन् ❀ मानो कुनै स्वर्ग हो ॥२४०॥
खम्बा छन् सुनका तथा स्फटिकका ❀ ढोका तथा झ्याल छन्
देख्दा हर्ष हुने अनेक पुतली ❀ त्यै यानना बेस छन् ।
शोभाले शशि झैँ अलौकिक छ त्यो ❀ कोठा अटाली सब
खाने वस्तु अनेक छन् वरिपरी ❀ क्यै छैन कम्ती अब ॥२४१॥
पारे उत्तम एक श्रेष्ठ तपले ❀ उद्यान त्यै यानमा
त्यस्मा एक तलाउ स्वच्छ जलको ❀ देखा पर्‍यो माझमा ।
त्यस्मा पुष्प अनेक छन् कमलका ❀ पानी छ झन् निर्मल
राम्रा वृक्षविषे चराहरु बसी ❀ गर्छन् जहाँ खल्बल ॥२४२॥

इच्छा-माफिक हिड्दथ्यो च्यवनको ❀ त्यो यान चारैतिर
धेरै वर्ष डुले प्रसन्न मनले ❀ त्यै यानमा सुन्दर ।
पत्नीलाइ प्रसन्न पार्न मुनिले ❀ सारा रचेका थिए
केही कालपछी विरक्त हुन गै ❀ सम्पूर्ण त्यागीदिए ॥२४३॥
फेरी गर्छु गई ठुलो तप भनी ❀ एकाग्र पारी मन
आई यै नदिका सुरम्य तटमा ❀ बस्छन् खुशी भैकन ।
छन् ऐह्लेतक ती कठोर तपमा ❀ बस्छन् सदा ध्यानमा
धेरै छन् मुनि विज्ञ उत्तम ऋषी ❀ तिन्का यही स्थानमा ॥२४४॥
चर्चा धर्म विवेकको दिन-दिनै ❀ गर्छन् मुनीले यहाँ
यै हो आश्रम ती मुनि च्यवनको ❀ जान्नूहवस् मन्महाँ ।
तिन्लाई सब जान्दछन् वरिपरी ❀ ठूला तपस्वी भनी
यै हो दिव्य प्रभाव श्रेष्ठ तपको ❀ हेर्नोस् हजुरले पनि ॥२४५॥
शर्याती नृपले निकै दिनपछी ❀ क्वै यज्ञ गर्छू भनी
छोरी ज्वाइँ म डाक्दछू भनि स्वयं ❀ निम्तार्थ आए तिनी ।
देखे यौवन-पूर्ण ज्वाइँ सँगमा ❀ छोरी बसेकी जब
ठाने चित्तविषे गरीछ कुलको ❀ नै नाश यस्ले सब ॥२४६॥
त्यस्तो भाव पिताजिको जब बुझिन् ❀ बोलिन् सुकन्या अनि
ज्वाइँ हुन् यि हजूरका च्यवनजी ❀ जान्नोस् तपस्वी भनी ।
शर्याती नृपले बुझे अनि लगे ❀ आफ्नू ठुलो यज्ञमा
सारा देव तथा मुनी ऋषिहरू ❀ बस्थे त्यहीं साथमा ॥२४७॥
लाए भाग स्वयं मुनि च्यवनले ❀ स्ववैद्यलाई पनि
लागे गर्जन इन्द्र त्यै बखतमा ❀ यस्तो नगर्नू भनी ।
ताके वज्र सुरेन्द्र क्रोधित भई ❀ मार्ने इरादा धरी
रोकेथे सहजै मुनि च्यवनले ❀ हुः शब्दले नै गरी ॥२४८॥

बाहू रोकिदियो तुरुन्त तपले ❀ चल्दै नचल्ने गरी
शक्ति-क्षीण भई तुरुन्त निहुरे ❀ देवेन्द्र सोही घरी ।
माफी बक्सनुहोस् मुने ! हजुरले ❀ यो दोष मेरो अब
लिन्छन् भाग अवश्य भाइ दुइले ❀ यज्ञादि होला जब ॥२४९॥
यस्तो बिन्ति सुनेर श्रीच्यवनले ❀ तिन्लाइ माफी दिए
बाहू मुक्त भयो र इन्द्र अघि झैं ❀ बाधा नपर्ने भए ।
पाए भाग तुरुन्त भाइ-दुइले ❀ अंत्यन्त हर्षित् थिए
जै-जैकार गरी मुनि च्यवनको ❀ फर्केर जाँदा भए ॥२५०॥
शर्याती नृपले गरे अनिपछि ❀ त्यो होम पूर्णाहुति
पत्नी साथ लिई फिरे मुनि पनी ❀ आनन्द मान्दै अति ।
हे शत्रुघ्न हजूरले पनि गई ❀ गर्नूहवस् दर्शन
गर्नेछन् मुनिले सुआदर अनी ❀ सन्तुष्ट होला मन ॥२५१॥
श्री शत्रुघ्न गए सहर्ष कुटिमा ❀ गर्छू भनी दर्शन
आशीर्वाद दिए तुरुन्त मुनिले ❀ आनन्द मानीकन ।
देख्दामा तिमिलाइ राम प्रभुकै ❀ दर्शन् मिलेझैं भयो
मेरो जे जति ताप पाप मनको ❀ तत्काल सारा गयो ॥२५२॥
श्रीराम्को करुणा-विना सफलता ❀ पाइन्न यो जन्मको
पाऊ पर्छु सहर्ष यज्ञ-बिचमा ❀ पौचेर श्रीरामको ।
इच्छा ती ऋषिको बुझेर मनमा ❀ सन्तोष मानीकन
बोले पूर्ण भए मनोरथ मुने ! ❀ पाएर यो दर्शन ॥२५३॥
श्रीशत्रुघ्नजिको हुकुम् हुन गई ❀ बोकी हनूमानले
पौचाई रघुनाथको हजुरमा ❀ फर्के ति आनन्दले ।
गर्नूभो मुनिको प्रसन्न मनले ❀ श्रीरामले आदर
जै-जैकार गरे सबै सुजनले ❀ हे राम ! हे ईश्वर ! ॥२५४॥

# राजा रत्नग्रीव र शालिग्राम महिमा




आज्ञा गर्नुभयो प्रसन्न मनले ❀ श्री शेषले सादर
हे वात्स्यायन ! सुन्नुहोस् अब कथा ❀ विस्तारले सुन्दर ।
त्यै वेला रघुनाथको हय हिड्यो ❀ नाच्दै र खेल्दै अनि
सारा फौज हिड्यो कुनै नृपतिले ❀ पक्री लिनन् की भनी ॥२५५॥
बाटैमा नृपती थिए विमलजी ❀ सद्भक्त दानी पनि
आएथे धन-सम्पती सब लिई ❀ शत्रुघ्न भेट्छू भनी ।
श्री शत्रुघ्नजिले भने नरपते ! ❀ चाहिन्न केही धन
खूशी छू म यसै प्रसन्न मनले ❀ गर्दै रहू शासन ॥२५६॥
छोरालाइ दिएर राज्य खुशिले ❀ जान्छू म साथै भनी
सेनाकै सँगमा हिडे विमलजी ❀ राजा थिए तापनि ।
घोडालाइ अघी लगाइ सँगमा ❀ सेना पछाडी हुँदा
देखिन्थ्यो हयको प्रभाव बलियो ❀ नाचेर त्यो उफ्रँदा ॥२५७॥
घोडा पुग्छ जहाँ र जुन् नगरमा ❀ जो छन् त्यहाँ भूपति
न्यूरन्थे मुखले भनी-शरण छौँ ❀ दिन्थे निकै सम्पति ।
घुम्दै त्यो हय श्यामकर्ण यसरी ❀ धेरै थरी देशमा
ठूलो पर्वतमा पुग्यो घुमि-घुमी ❀ राम्रो कुनै स्थानमा ॥२५८॥
त्यस्तो पर्वतमा थिए थरि-थरी ❀ खानी सुरत्नादिका
पानीका छहरा सुरम्य पहरा ❀ वृक्षादि छन् पुष्पका ।
छन् राम्रा मुनिका कुटी वरिपरी ❀ गन्धर्व विद्याधर
पत्नीका सँग डुल्दछन् घरि-घरी ❀ सानन्द चारैतिर ॥२५९॥

बोल्छन् हाँस चकोर सारस चरा ❀ मैना जुरेली चरी
डुल्छन् निर्भय जन्तु घोर वनमा ❀ चौतर्फ नाना थरी ।
त्यस्तो पर्वतलाइ देखि सहसा ❀ सोधे ति शत्रुघ्नले
कस्को हो वन बाग यो भन तिमी ❀ हे मंत्रि ! विस्तारले ॥२६०॥
को छन् पर्वतमा मुनीश्वर तथा ❀ कुन् देव छन् स्थापित
यस्तो उत्तम आजसम्म कहिल्यै ❀ देखीनँ क्वै पर्वत ।
जानेको तिमिले छ यो विषयमा ❀ एकेक त्यै कारण
यस्को जुन् इतिहास हो, गर तिमी ❀ सम्पूर्णको वर्णन ॥२६१॥
मन्त्रीले यति प्रश्न उत्तम सुने ❀ शत्रुघ्नजीको जब
लागे भन्न बुझाइ शान्त मनले ❀ विस्तार गर्दै सब ।
हे शत्रुघ्न ! कहिन्छ नीलगिरि यो ❀ सम्पूर्ण संसारमा
बस्छन् श्रीपति विष्णु लोकहरुको ❀ रक्षार्थ यो स्थानमा ॥२६२॥
राजा उत्तम रत्नग्रीव कहिने ❀ पैह्ले भएका थिए
त्यागी देह चतुर्भुजी हुन गई ❀ संसार-पारी गए ।
अर्को एक कथा यसै विषयको ❀ विस्तार गर्छू अब
सुन्नाले पनि पाप ताप मनको ❀ नाशिन्छ यस्ले सब ॥२६३॥
साह्रै उत्तम एक कञ्चन पुरी ❀ बस्थे त्यहीँ भूपति
राख्थे राज्य तथा प्रजा सुजनमा ❀ माया दया ती अती ।
गर्थे भक्ति र रामका चरणको ❀ श्रद्धा बढाईकन
अर्काको धन-दारमा रत भई ❀ जाँदैनथे लम्कन ॥२६४॥
धेरै वर्ष बिते सुशासन गरी ❀ आयो बुढ्याईं जब
चिन्ता बढ्न गयो अनेक थरिको ❀ भन्थे ति हे माधव ।
पैह्ले गर्न सकीनँ दान मख वा ❀ सद्धर्म केही पनि
थाले चिन्तन गर्न नित्य मनमा ❀ के गर्नुपर्ला भनी ॥२६५॥

रानीलाइ भने प्रसन्न मनले ❀ लौ जाउँ तीर्थाटन
तिम्रो के छ विचार यो विषयमा ❀ रानी ! मलाई भन ।
यस्तै बात गरी सुते दुइ जना ❀ सानन्द त्यै रातमा
आए ब्राह्मण एक स्वप्न-बिचमै ❀ ती भूपका सामुमा ॥२६६॥
प्रातःकाल हुँदा उनै द्विज स्वयं ❀ देखापरेथे अनि
हात्मा दण्ड कमण्डलू छ शिरमा ❀ लामा जटा नै पनि ।
निक्कै तेज मुहारमा छ, तनमा ❀ बल्दो छ आगो सरि
पाई दर्शन ती अनिन्द्य द्विजको ❀ तत्काल श्रद्धा गरी ॥२६७॥
ढोगे पाउ परेर आसन दिए ❀ श्रद्धा गरी राम्ररी
सोधे सञ्च-विसञ्च हे द्विजपते ❀ आज्ञा हवस् यो घरी ।
गर्दै छू म प्रणाम न्यूरि पदमा ❀ हे ब्रह्मचारी प्रभो !
पाएँ दर्शन नाथको सफल भो ❀ यो जन्म मेरो विभो ॥२६८॥
गर्नूभो जति तीर्थमा डुलि सबै ❀ हे देव ! ज्ञानार्जन
त्यस्कै गर्नुहवस् प्रसन्न मनले ❀ सुन्छू म त्यो वर्णन ।
जस्तो जुन् महिमा छ तीर्थहरुको ❀ जान्नूभएकै छ त्यो
सुन्छू वर्णन गर्नुहोस् हजुरले ❀ सानन्द एकेकको ॥२६९॥
राजाको सुनि प्रश्न ब्राह्मण पनी ❀ निक्कै भए हर्षित
थाले भन्न बुझाइ बात मनको ❀ उन्को चिताई हित ।
हे राजन् ! अहिले म तीर्थ-महिमा ❀ गर्छू सबै वर्णन
जुन्-जुन् तीर्थविषे पुगें त्यहिं गरें ❀ स्नानादि औ मज्जन ॥२७०॥
जो हो पाप निखार्नको अधिपती ❀ ठूलो अयोध्या पुरी
त्याहाँ स्नान गरेर दान सरयू- ❀ मा विप्र-पूजा गरी ।
तासी स्नान गरी पुगें म सहजै ❀ राम्रो हरिद्वारमा
त्याहाँ पाप निखार्न यज्ञ प्रभु छन् ❀ श्री विष्णुको रूपमा ॥२७१॥

डुल्दै हाटकमा अवन्तिपुरमा ❀ पौंची गरें दर्शन
ढोगी राम र कृष्णका चरणमा ❀ खुशी भएथ्यो मन ।
त्याहाँबाट प्रयाग संगम पुगें ❀ स्नानादि पूजा गरी
पाएँ दर्शन बिन्दुमाधवजिको ❀ हे भूपती ! राम्ररी ॥२७२॥
पौंचेथें कुरुक्षेत्र सूर्यग्रहणै- ❀ मा स्नानको त्यो स्थल
फर्केथें मथुरा पुरी सुख दिने ❀ श्रीकृष्ण-लीला-स्थल ।
गंगा-सागरमा मुनी कपिलको ❀ देखें गई आश्रम
ज्ञाता हुन् तिनि सांख्यका थरि-थरी ❀ शिक्षा दिने उत्तम ॥२७३॥
रेवा सागर स्नान-दान गरियो ❀ गोकर्ण गोदाबरी
मल्लीकार्जुन तीर्थमा पनि पुगें ❀ डुल्दै अनेकौं थरी ।
ठूलो तीर्थ छ गोमती जब पुगें ❀ त्यस्को सुनें वर्णन
हड्डी मात्र परे पनी उ जलमा ❀ जानी नजानीकन ॥२७४॥
त्यस्को बन्दछ चक्र गोमति त्यही ❀ नै चक्र हो भन्दछन्
पूजा गोमति-चक्रको गरि-गरी ❀ संसार यो तर्दछन् ।
त्याहाँ दर्शन श्रीत्रिविक्रम प्रभू- ❀ को गर्न पाएँ अनि
त्याहाँबाट हिडें प्रसन्न मनले ❀ पुग्छू म काशी भनी ॥२७५॥
काशीमा मणिकर्णिका छ तटमा ❀ भागीरथी बग्दछिन्
तिन्मा स्नान गरेर दान गरदा ❀ पापी दुखी तर्दछन् ।
बिन्दूमाधव, विश्वनाथ प्रभु छन् ❀ श्री संकटा योगिनी
ढुण्डी भैरव दण्डपाणि सब छन् ❀ कल्याणदाता पनि ॥२७६॥
काशीमा जति मर्दछन् मनुज वा ❀ पन्छी र कीरा पनि
दिन्छन् तारक मन्त्र श्री शिवजिले ❀ ती मुक्त होऊन् भनी ।
काशीबाट गएर दाखिल भएँ ❀ सानन्द नेपालमा
न्वाही बागमती पुगें पशुपती ❀ श्री शम्भुको पाउमा ॥२७७॥

पाएँ दर्शन गुह्यकालि जननी ❀ छन् सिद्ध देवी उहाँ
धेरै मन्दिर छन् अनेक थरिका ❀ द्यौताहरूका त्यहाँ ।
नाना तीर्थहरू डुलें अरु पनी ❀ जाने-सुनेका जति
बाँकी भारतमा रहेन बुझिल्यौ ❀ क्वै तीर्थ हे भूपति ॥२७८॥
डुल्दै फेरि पुगें प्रसिद्ध गिरिमा ❀ हो नाम नीलाञ्चल
त्यस्तो हुन्न कहीं पनी नरपते ❀ त्यो छक्क पर्ने स्थल ।
देखें एक चतुर्भुजी स्वरुपको ❀ साक्षात् कुसुण्डो थियो
विष्णूका जति चिह्न हुन् सकल ती ❀ प्रत्यक्ष नै देखियो ॥२७९॥
देखी विष्णु-स्वरूप चिह्न नसकी ❀ सोधें नगीचै गई
पायौ दिव्य स्वरूप कुन् किसिमले ❀ कुन् युक्तिले के भई ।
लाग्यो भन्न सुनेर बात सहसा ❀ हे ब्रह्मचारी ! सुन !
सानै बालकमा मिली शिशुहरू ❀ खेल्थ्यौं रमाईकन ॥२८०॥
कोही मन्दिर एक उत्तम परै ❀ देखेर हामी गयौं
कोही देव भए त दर्शन गरी ❀ फिर्छौं भनेका थियौं ।
ब्रह्मा, इन्द्र, कुबेर औ वरुणजी ❀ गर्थे त्यहाँ आरती
पूजा मन्त्रहरू पढी कति त्यहाँ ❀ गर्थे ति वेद-स्तुति ॥२८१॥
गर्थे नाच र गान उत्तम कती ❀ पाऊ झुकी पर्दथे
पक्वान्नादि चढाउँदै शरणमा ❀ न्यूरेर ती पर्दथे ।
पूजा यै क्रमले सकेर सबले ❀ पर्साद खाई गए
आफाप्ना पुरिमा पुगेर सब ती ❀ आनन्द मान्दा भए ॥२८२॥
हामीले गइ त्यो प्रसाद जति हो ❀ बाँकी बचेको सब
खायौं जाति-नजाति उत्तम बुझी ❀ सारा शिशूले तब ।
श्री विष्णू भगवानले खुशि भई ❀ दिनूभयो दर्शन
हाम्रा शंख गदादि चक्रहरुले ❀ शोभित् भएथे तन ॥२८३॥

अन्तर्धान भएर विष्णु भगवान् ❀ जानूभएथ्यो जब
हाम्रो रूप भयो चतुर्भुज भनी ❀ आश्चर्य मान्यौँ तब ।
त्याहाँबाट फिरेर बालक सबै ❀ आफ्ना घरैमा गए
आमा बाबु र बन्धु-बान्धव चकित् ❀ भै हेतु सोधीलिए ॥२८४॥
पाए रूप त्यहाँ गएर जसरी ❀ सारा गरे वर्णन
आमा-बाबु र बन्धु-बान्धव पुगे ❀ गर्छौँ भनी दर्शन ।
पाए रूप चतुर्भुजी सकलले ❀ आश्चर्य मानीलिए
जै-जैकार गरेर विष्णु प्रभुको ❀ स्वस्थानमा फर्किए ॥२८५॥
लागे ब्राह्मण भन्न हे नरपते ! ❀ मैले भनेको सुन
जाऊ झट्ट त्यहीँ प्रसन्न मनले ❀ गर्नू झुकी दर्शन ।
पायौ खान प्रसाद त्यो यदि भने ❀ श्रीविष्णुको रूप त्यो
भेट्नेछौ तिमिले चतुर्भुज अनी ❀ मानेर पत्यार यो ॥२८६॥
यस्मा संशय छैन केहि मनमा ❀ यस्तो विचारीकन
पाए रूप चतुर्भुजी गइ त्यहीँ ❀ श्रीविष्णुको दर्शन ।
हे राजन् ! तिमिलाइ सत्य सब यो ❀ मैले बताएँ अब
गर्नू दर्शन औ प्रसाद खुशिले ❀ खाई हुनू वैष्णव ॥२८७॥
सारा पाप हुनन् सखाप सहजै ❀ वैकुण्ठ भेट्टाउला
राम्रो रूप चतुर्भुजी सहजमै ❀ श्रीविष्णुको पाउला ।
पाए ब्राह्मणबाट सुन्न महिमा ❀ तीर्थादिको त्यो जब
सोधे फेरि समाइ पाउ द्विजको ❀ त्यो तीर्थयात्रा तब ॥२८८॥
बाटोका नियमादि छन् कति थरी ❀ गर्ने कती पालन
के गर्दा शुभ हुन्छ यो विषयमा ❀ भन्नोस् बुझाईकन ।
के-के गर्नु कहाँ गई दिन कती ❀ बस्नू ठुलो तीर्थमा
यस्को वर्णन गर्नुहोम् अब मुने ! ❀ विस्तारका साथमा ॥२८९॥

यस्तो प्रश्न सुनेर विज्ञ द्विजले ❀ जान्छन् कि राजा भनी
बोले-सुन्नुहवस् सबै नरपते ! ❀ त्यो तीर्थयात्रा पनि ।
चारै धाम पुऱ्याउँछू म अहिले ❀ भन्ने इरादा धरी
गाह्रो पर्दछ जान, पूर्ण पनि त्यो ❀ होला कि ! बाधा परी ॥२९०॥
रित्तै फिर्नु हुँदैन हे नरपते ! ❀ पूरा नपारीकन
जो शास्त्रोक्त विधान हो अब तिमी ❀ विस्तारले त्यो सुन ।
पैह्ले त्यो व्यवहार शुद्ध घरको ❀ सारा मिलाईलिनू
जस्लाई दिनुपर्छ जे जति जहाँ ❀ सन्तोष मान्दै दिनू ॥२९१॥
काम क्रोध र लोभ मोह ममता ❀ त्याग्नू अहंकार र
ध्यान् गर्दै भगवानका चरणमा ❀ मन्लाइ पार्नू स्थिर ।
साधू सज्जन विज्ञ पण्डित सबै- ❀ लाई गरी स्वागत
आशीवार्द लिनू प्रसन्न मनले ❀ विद्वान् र ज्ञानीसित ॥२९२॥
सुन्नू नित्य कथा पुराण खुशिले ❀ आराधना विष्णुको
जप्नू केवल 'राम-राम' मनले ❀ चर्चा गरी शम्भुको ।
बाटोमा मृगचर्म धारण गरी ❀ पैह्रेर पीताम्बर
बस्नूपर्दछ ब्रह्मचर्य व्रतमा ❀ सम्झी उनै ईश्वर ॥२९३॥
नित्यै भोजन एक छाक पथमा ❀ गर्नू हविष्यान्नको
त्याग्नूपर्दछ मोह-बन्धन सबै ❀ ठानेर बेकामको ।
पत्नी रूपवती लिएर सँगमा ❀ के जानु तीर्थाटन
त्यस्को क्यै फल प्राप्त हुन्न घरमै ❀ बस्नू छ राम्रो सुन ॥२९४॥
अर्काको धन खोस्नु चोर्नु जनले ❀ निंदा नगर्नू स्तुति
त्यो तीर्थाटनले हुँदैन फल क्यै ❀ हो सत्य हे भूपति ! ।
अर्काको उपकार गर्नु जनले ❀ सम्पत्तिले देहले
दुःखी दीन दरिद्र हीन जनमा ❀ गर्नू दया स्नेहले ॥२९५॥

साधू सन्त अनेक तीर्थ स्थलमा ❀ जो मिल्दछन् सज्जन
तिन्को स्वागत गर्नुपर्छ जनले ❀ झर्को नमानीकन ।
डुल्नू तीर्थ र ब्रह्मचर्य व्रतको ❀ गर्नू सदा पालन
त्यस्ले पूर्ण हुनन् मनोरथ गरे ❀ श्रीरामको चिन्तन ॥२९६॥
हिड्नूपर्दछ एक कोश जति नै ❀ सानन्द पैह्लो दिन
बर्ता हिड्नु हुँदैन शास्त्रहरुले ❀ गर्छन् यही वर्णन ।
भोलीपल्ट कपाल खौरनु पनी ❀ मानिन्छ आवश्यक
चोखो वस्त्र लगाउनू नियमको ❀ बन्नू सदा रक्षक ॥२९७॥
हिड्दा सादर 'राम-राम' मुखले ❀ जप्नू स्वयं मन्मन
कैल्यै गर्नु हुँदैन तीर्थहरुको ❀ सम्मान उल्लंघन ।
यात्रा पदैल गर्नु शास्त्र-मतले ❀ त्यस्को छ पूरा फल
थोत्रा गन्थन वा वृथा गफ गरे ❀ होला सबै निष्फल ॥२९८॥
डोलीमा, रथमा र यानहरुमा ❀ जो गर्छ तीर्थाटन
आधा नै फल मिल्छ हे नरपते ! ❀ तीर्थादिको त्यस्कन ।
पादत्राण लगाइ तीर्थहरुको ❀ जो गर्दछन् सेवन
चौथाई फल मिल्छ धर्म-पथको ❀ गर्दै रहे पालन ॥२९९॥
गो-हत्या सरि पाप लाग्दछ कतै ❀ गाडा चढेमा भनी
तेस्रो भाग बटुल्छ धर्म जन जो ❀ बोल्दैन केही पनि ।
आठौं भाग लिनेछ सेवक बनी ❀ जो जान्छ तीर्थादिमा
नाशिन्छन् सब पाप ताप मनका ❀ जो बस्छ सन्तोषमा ॥३००॥
यात्राको यहि हो विधान नृपते ❀ मैले बताएँ सब
त्यागनूपर्छ हजूरले सकल यो ❀ साम्राज्यको वैभव ।
आफ्ना मानिस बन्धु सेवक जती ❀ छन् ती सबैको पनि
जे-जे वस्तुहरू दिनू छ खुशिले ❀ सुम्पीदिनू लौ भनी ॥३०१॥

गर्नू छैन विलम्ब देहकन यो ❀ जानी सदा अस्थिर
यो तीर्थाटनले पुऱ्याउँछ छिटै ❀ वैकुण्ठमा आखिर ।
यस्तो अर्ति सुनेर भूप पदमा ❀ राखेर आफ्नू शिर
सम्झे श्री हरिलाइ भित्रि मनले ❀ हे राम ! हे ईश्वर ! ॥३०२॥
मन्त्रीलाइ नगीच डाकि नृपले ❀ आज्ञा दिएथे अनि
मेरो उर्दि सुनाउ रैतिहरुमा ❀ लौ तीर्थ जान्छू भनी ।
मन्त्रीले नृपको सुनी हुकुम त्यो ❀ झ्याली पिटाईदिए
त्यो संचार सुनी प्रजागण सबै ❀ तत्काल जम्मा भए ॥३०३॥
हामीले पनि गर्दछौँ नृप-सँगै ❀ श्रीरामको दर्शन
आए विज्ञ मुनी ऋषीश्वरहरू ❀ आनन्द मानीकन ।
प्रातःकाल हुँदा उठेर सबले ❀ स्नानादि पूरा गरी
श्रद्धा भक्ति बढाइ राम-पदमा ❀ कीर्तन् गरे राम्ररी ॥३०४॥
जो-जो उत्तम विप्र हुन् सकलको ❀ पूजा गरे भक्तिले
इच्छा पूर्ण हुने सुआशिष दिए ❀ एकेक ती विप्रले ।
पाई आशिष विप्रको खुशि भई ❀ पाऊ परे भूपति
जाऊँ तीर्थ भनी हिडे सब जना ❀ आनन्द मान्दै अति ॥३०५॥
यात्रामा सब एक कोश जतिमै ❀ विश्राम गर्दा भए
रात्रीमा मिलि कीर्तनादि हरिको ❀ सानन्द गर्दै रहे ।
नाचे गान गरेर नाम हरिको ❀ सम्झेर रात्रीभरि
निद्रा पर्न सकेन रात्रिभरिमा ❀ भन्थे सबै हे हरि ॥३०६॥
राजाले पहिले कपाल शिरको ❀ फालेर लौरो लिए
दण्डी झैँ सबले कपाल र जनै ❀ तत्काल त्यागीदिए ।
संन्यासी सरि भै गृहाश्रम तजी ❀ वैरागि भै निःस्पृह
माया मोह सबै तजेर गरनू ❀ तीर्थाटनै केवल ॥३०७॥

राम्रो एक कमण्डलू र मृगको ❀ छाला गरे धारण
रित्तै पाउ हिडे भजेर मुखले ❀ हे विष्णु ! नारायण ।
बाटोमा पनि गर्दथे घरि-घरी ❀ विप्रादि वेद-ध्वनि
जै-जैकार गरेर उच्च स्वरले ❀ गर्थे ति शंख-ध्वनि ॥३०८॥
भेटिन्थे पथमा अनेक थरिका ❀ साना ठुला तीर्थ जो
तिन्मा स्नान गरेर दान द्विजमा ❀ चर्चा गरी रामको ।
धेरै तीर्थहरू डुले खुशि हुँदै ❀ राजा प्रजाले जब
देखे एक नदी सफा जल हुने ❀ अत्यन्त राम्रो तब ॥३०९॥
गर्थे ध्यान त्यहीँ बसी ऋषिमुनी ❀ ज्ञानी गुणी ब्राह्मण
ढुंगा चक्र स्वरूपका कति थिए ❀ मानो ति नारायण ।
शालिग्राम शिला थिए तटभरी ❀ पानी थियो निर्मल
देख्दै चित्त हुने प्रसन्न सबले ❀ पानीपिए कल्कल ॥३१०॥
राजाले अति स्वच्छ पुण्य-सलिला ❀ देखे नदी ती जब
सोधे नाम बताउनोस् यि नदिको ❀ ज्ञानी मुनी हो ! सब ।
यस्तो प्रश्न सुनेर ती नृपतिको ❀ आनन्द मानीकन
सारा ती तपसी मुनी र ऋषिले ❀ गर्दा भए वर्णन ॥३११॥
राजन् ! यी नदिको महात्म्य छ ठुलो ❀ ती देवता वा नर
गर्छन् सेवन दान ध्यान खुशिले ❀ सद्भक्तिले सुन्दर ।
निस्केकी अघि गण्डबाट विधिकी ❀ ऐह्ले त्यसै कारण
भन्दै छन् शुभ नाम गण्डकि भनी ❀ यिन्लाइ ज्ञानी जन ॥३१२॥
यिन्को दर्शन मात्रले पनि सबै ❀ पापादिका बन्धन
काटिन्छन् अनि स्पर्शले हृदय नै ❀ होला सफा कञ्चन ।
गर्नाले जल-पान कोटि जुनिको ❀ काटिन्छ दुर्भावना
तिन्लाई सुख शान्ति मिल्छ, यमको ❀ पर्दैन क्यै यातना ॥३१३॥

शालिग्राम शिला यि विष्णु-रुपका ❀ पाइन्छ धेरै यहाँ
शालिग्राम र चक्र द्वारवतिको ❀ पूजिन्छ साथै जहाँ ।
गंगा-सागरको समान त्यहि नै ❀ हो मुक्ति-दाता स्थल
यस्मा संशय छैन हे नरपते ! ❀ साह्रै छ यो उज्ज्वल ॥३१४॥
शालिग्राम प्रसन्न भै दिन-दिनै ❀ जो गर्दछन् पूजन
यो संसार समुद्र-पारि सहजै ❀ जान्छन् तिनै सज्जन ।
पानी मात्र पिए पनी शरिरका ❀ पापादि छन् जे जति
तिन्को नाश हुनेछ, भक्ति मनमा ❀ बढ्ला कती हो कति ॥३१५॥
संसारी र गृहस्थ-धर्म-पथमा ❀ चल्नेहरू छन् जति
सारा पाप पखालि मोक्ष पदमा ❀ पुग्छन् तिनै सद्मति ।
शालिग्राम सहर्ष पूजन गरी ❀ जो गर्दछन् भोजन
हुन्छन् मुक्त अवश्य, देह त्यजि ती ❀ ज्ञानी सुखी ब्राह्मण ॥३१६॥
शालिग्राम नगर्नु पूजन कबै ❀ नारीहरूले भनी
चाहे त्यो विधवा रहोस् कि सधवा ❀ बस्नेछ दुःखी बनी ।
पूजा गर्नु परे रहोस् छुनु पनी ❀ हो मूर्खता भन्दछन्
धेरै वर्ष परी ठुलो नरकमा ❀ संकष्ट ती भोग्दछन् ॥३१७॥
भन्छन् वज्र समान पुष्प, विष झैं ❀ श्रीखण्ड नैवेद्य भो
नारीले त नगर्नु पूजन कबै ❀ शास्त्रोक्त यो बात हो ।
शालिग्राम सदैव पूजन स्वयं ❀ गर्छु म जो भन्दछन्
जस्ले रोक्तछ, त्यो ठुलो नरकमा ❀ पर्नेछ यो मान्दछन् ॥३१८॥
शिक्षा नास्तिकलाइ दिन्छ, तिमिले ❀ गर्नू सधैं पूजन
त्यस्को मुक्ति हुनेछ सात कुलको ❀ त्यै हो गुणी सज्जन ।
डाकू चोर अनेक पापहरुमा ❀ छन् गाडिएका जति
शालिग्राम गरेर पूजन छिटै ❀ तर्छन् ठुला दुर्मति ॥३१९॥

शालिग्राम सहर्ष पूजन जहाँ ❀ गर्छन् तपस्वी मुनि
हुन्छन् तीर्थ ति एक योजनभरी ❀ चाहिन्न केही पनि।
पूजा गर्नु हुँदैन भंग अथवा ❀ टूटे फुटेका पनि
चिल्लो उत्तम हेर्नुपर्छ वज्रनी ❀ हुन् विष्णुरूपा भनी ॥३२०॥
शालिग्राम लिएर राख्नु सँगमा ❀ यो देह त्याग्छु भनी
त्यस्लाई दुख हुन्न क्यै मरणको ❀ भन्छन् ति सुन्ने पनि।
त्यस्को मुक्ति अवश्य हुन्छ भवमा ❀ पर्दैन त्यो जन्मन
हो यो सत्य कुरा र शास्त्र-मत हो ❀ तोड्ला सबै बन्धन ॥३२१॥
चारै वर्ण पुराण शास्त्रहरुको ❀ ज्ञाता गुणी सज्जन
शालिग्राम पुजी गए सुरपुरी ❀ त्यागेर आफ्नू तन।
शालिग्राम र चक्र गोमति नदी- ❀ को गर्छ जो पूजन
त्यस्ले जन्मनु-मर्नु कष्ट कहिल्यै ❀ पर्दैन भोगीलिन ॥३२२॥
पूजामा धन-मोह क्रोध नगरी ❀ शान्ती गरे धारण
इच्छा पूर्ण हुनेछ, क्रोध मनको ❀ हो पापको कारण।
पल्केका पर-नारिमा र धनमा ❀ पापीहरूछन् जति
तिन्ले पूजन यो नगर्नु कहिल्यै ❀ हो नर्क जाने मति ॥३२३॥
पैह्लेका हरिभक्त अम्बरिष जो ❀ राजा थिए सज्जन
दुर्वासा ऋषि चक्रकै अघि परे ❀ ती भूपकै कारण।
यौटा भन्छु कथा म यै विषयको ❀ कोही थिए वैष्णव
पौँचे कीटक देशमा घुमि-फिरी ❀ क्यै कालमा ती जब ॥३२४॥
व्याधा एक रहेछ दुष्ट यमका ❀ क्यै दूत आए लिन
लौरो एक ठुलो छ, पात्र करमा ❀ थाले ति तर्साउन।
व्याधा दुःख परी अनेक थरिका ❀ सन्ताप मानीकन
हेर्थ्यो छक्क परेर बोल्न नसकी ❀ आत्तीरहेथ्यो मन ॥३२५॥

राता तरेर दुइ नेत्र तिखारि हेर्छन्
दाह्रा किटी घरि-घरी ति लतार्न खोज्छन् ।
त्यस्ता भयंकर ति दूत खडा भएर
हप्काउँछन् घरि-घरी नगिचै गएर ॥३२६॥
हत्या गरिस् किन अघी सब जानि जानी
नारी पराइ हरिथिस् किन क्यै नमानी ।
अर्को नगीच गइ भन्दछ दूत फेरि
पापी ठुलो रछ लु बाँध झिकेर डोरी ॥३२७॥
अर्को रिसाइकन भन्दछ काट्नुपर्छ
यस्लाइ त्यो नरकमा लगि जाक्नुपर्छ ।
अर्को उतर्सिकन भन्दछ कुट्नु पर्छ
छाड्नू हुँदैन अब प्राण निकाल्नुपर्छ ॥३२८॥
गर्थे कुरा थरि-थरी यमदूत ताहाँ
क्वै दूत नाग बनि झट्ट गएर वाहाँ ।
खुट्टामहाँ डसिदियो अनि त्यो ढलेर
मूर्च्छा पऱ्यो जमिनमा लडि उत्नि खेर ॥३२९॥
वाणी रुकेर जब बोल्न सकेन त्यस्ले
बाँधे तुरुन्त यमका बलवान दूत्ले ।
हात्मा लिएर यमदण्ड रिसाइ धेर
पापी ! तँ जा नरकमा नगरी अबेर ॥३३०॥
दुष्कर्म जन्मभरि जो अघि हो गरेको
पर्नेछ भोग्न अब रौरवमा परी त्यो ।
मारिस् अघी जसरि जीवहरू अनेक
ती जीवले अब लिनन् बदला विवेक ॥३३१॥

केही रहेन मनमा बनि निर्विवेकी
पापै गरिस् किन यता-उति ताकि-ताकी ।
नारी र वैभव कतातिर भेट्छु भन्दै
दुष्कर्म नै किन गरिस् सुख-योग्य ठान्दै ॥३३२॥
गोविन्द-नाम जब बिर्सिदिइस् त्यसैले
पर्ने भइस् नरकमा दुख भोग्न ऐह्ले ।
लौ हिड् छिटै तँ यमका नजदीक पैह्ले
दिन्छन् हुकुम् नरकमा गइ बस्नु तैँले ॥३३३॥
यस्तै अनेक थरिका त कुरा सुनाई
लैजान तत्पर भए उहि व्याधलाई ।
वाणी भएर अवरुद्ध सकेन बोल्न
थाल्यो मनैमन अनेक कुतर्क गर्न ॥३३४॥

व्याधालाइ चुटेर दूतहरुले ❀ लैजान आँटे जब
आए एक मुनी उसै बखतमा ❀ ज्ञानी तथा वैष्णव ।
व्याधाको दुखले र खिन्न मनले ❀ केही नबोले पनि
शालिग्राम शिला पखालि जल त्यै ❀ ख्वाए दयालू बनी ॥३३५॥
फेरी त्यो जलमा तुरुन्त तुलसी- ❀ का पात हालीकन
छर्के त्यै जल व्याधको तनभरी ❀ निष्पाप पारीदिन ।
पढ्दै उत्तम 'ॐनमो भगवते०' ❀ त्यस्का दुवै कानमा
पैह्ले मन्त्र सुनाइ आशिष दिए ❀ तिन्ले दया-भावमा ॥३३६॥
सोधे ती यमदूतलाइ मुनिले ❀ निष्पाप व्याधा भयो
गर्छौ कष्ट दिने कुरा किन वृथा ❀ आश्चर्य लाग्दै छ यो ।
यस्तै ती यमदूतलाइ मुनिले ❀ सोध्दै थिए तापनि
व्याधा बन्धनमै थियो अति रुँदै ❀ निर्दोष छू लौ भनी ॥३३७॥

त्यै वेला सहसा उपस्थित भई ❀ श्रीविष्णुका दूतले
सोधे ती यमदूतलाइ सहसा ❀ हप्काउँदै रीसले ।
व्याधालाइ दियौ अनेक थरिका ❀ सन्ताप ऐह्ले किन
कस्को पाइ हुकुम् अनर्थ यसरी ❀ गर्छौ मलाई भन ॥३३८॥
सुन्दा ती यमदूतले यति कुरा ❀ श्रीविष्णुका दूतको
बोले श्रीयमराजकै हुकुमले ❀ बाँधीलियौं हामिले ।
पापी हो र कुकर्म घोर खलले ❀ जानी अनेकौं गर्‍यो
तेसै कारणले सजाय अहिले ❀ भोग्दै छ, भोग्नेछ यो ॥३३९॥
यस्तालाइ पनी क्षमा गरि सबै ❀ वैकुण्ठ लान्छौं भनी
गर्दै छौ बल व्यर्थमा किन तिमी ❀ ऐह्ले दयालू बनी ।
यस्ता ती यमदूतका सुनि कुरा ❀ श्रीविष्णुका दूतले
शालिग्राम शिला र दिव्य तुलसी ❀ हो श्रेष्ठ यै हेतुले ॥३४०॥
पापी धेर भए पनी मरणको ❀ वेला उपस्थित् हुँदा
शलिग्राम् तुलसी तथा जल लिई ❀ छोई, छुवाईदिदा ।
सारा पाप पखालियो भनि स्वयं ❀ प्रत्यक्ष जानीलिनू
त्यस्तालाइ कुकर्मको फल भनी ❀ हो व्यर्थ सास्ती दिनू ॥३४१॥
यस्को देह भयो पवित्र, हरिले ❀ आज्ञा दिनूभो जब
आयौं हामिहरू र स्वर्गपुरिमा ❀ यस्लाइ लान्छौं अब ।
जाओ भाग तिमीहरू अब छिटै ❀ आज्ञा प्रभूको भनी
पर्छौ नत्र त कष्टको भुमरिमा ❀ निर्दोष छौ तापनि ॥३४२॥
यस्ता बात सुनेर दूत यमका ❀ तत्काल भागीगए
त्यो सारा यमराजको हजुरमा ❀ बिन्ती चढाईदिए ।
व्याधालाइ विमान स्वर्गपुरिको ❀ आयो अगाडी अनि
पौंचाए सब दूतले विनयले ❀ लौ स्वर्ग जाऊँ भनी ॥३४३॥

जस्ले धर्म गरेन, पापतिर नै ❀ लागी बित्यो जीवन
त्यस्तालाइ मिल्यो पवित्र जलले ❀ नै स्वर्ग जाने क्षण ।
आफ्नू जन्मभरी अनेक थरिका ❀ दुष्कर्म जस्ले गऱ्यो
त्यस्लाई प्रभुको दया हुन गई ❀ संसार-पारी तऱ्यो ॥३४४॥
जस्ले पढ्छ महात्म्य यो दिन-दिनै ❀ श्रद्धा र भक्ती गरी
व्याधा झैँ गति मिल्छ त्यस्कन पनी ❀ जानेछ पारी तरी ।
ती रत्नग्रिव भूपले यति सुनी ❀ आनन्द मानीकन
पैह्ले स्नान गरेर पितृहरुको ❀ गर्दा भए तर्पण ॥३४५॥
तिन्ले गण्डकिका शिलाहरु लिए ❀ चौबीस छानीकन
शंालिग्राम भनेर शास्त्रविधिले ❀ गर्दा भए पूजन ।
राजा खूशि भई त्यहाँपछि हिडे ❀ सानन्द नीलांचल
इच्छा एक थियो, ति विष्णु प्रभुको ❀ दर्शन् हुने केवल ॥३४६॥
गंगा-सागरमा पुगे सब जना ❀ हेर्थे ति चारैतिर
देखेनन् जब नील-पर्वत अनी ❀ सोधे कती छन् पर ।
मैले देख्दिनँ के भयो मकन यो ❀ जान्दीनँ केही पनि
यस्मा कारण के छ हे द्विजपते ❀ भन्नोस् दयालू बनि ॥३४७॥

तिन्को कुरा सुनि भने मुनिले बुझाई
लौ हेर नीलगिरि छन्, नगिचै रमाई ।
आज्ञा सुनेर मुनिको नृप भक्तिसाथ
हेर्दै थिए सब दिशा निहुराइ माथ ॥३४८॥
तिन्लाइ दर्शन मिलेन जसै गिरीको
दुःखी भए मनमनै बढि ताप मन्को ।
तिन्लाइ दुःखित बुझी मुनि एक आए
सानो र उत्तम उपाय छिटै बताए ॥३४९॥

आएँ यहीँ म पनि हे नृप कोहि दिन्मा
पाईनँ दर्शन भयो अति कष्ट मन्मा।
राजन्! जहाँ जलधि-भागिरथी मिलेर
ठूलो छ संगम त्यहीँ म गएँ कुदेर ॥३५०॥
आएँ नुहाइ मनमा लिइ भक्ति धेर
बाँधेर आसन बसेँ नगरी अबेर।
थालेँ म विष्णु प्रभुको अनि ध्यान गर्न
भेटेँ अनी पथ सफा मन भो प्रसन्न ॥३५१॥
गर्नोस् हजूर पनि पूजन ध्यान दर्शन्
मिल्नेछ विष्णु प्रभुको, नगरेर दोमन्।
यस्तो सुनेर उपदेश ति भूपतीले
आए नुहाइकन संगम शुद्ध मन्ले ॥३५२॥
श्री विष्णुको चरणमा मनलाइ बाँधी
ती ध्यानमा जब डटे बनिगो समाधि।
रोकेर चंचल हुने निज चित्तलाई
गर्दा भए स्तुति त्यहीँ मनमा रमाई ॥३५३॥
हे नाथ! हे यदुपते! करुणानिधान!
त्रैलोक्य-रक्षक, दयामय! हे प्रधान।
हे भक्त-रक्षक! सदा पदमा प्रणाम
गर्छू म बिन्ति सुखका प्रभु दिव्य धाम ॥३५४॥
पर्छन् विपत्ति जब भक्तविषे तुरुन्त
नै जानुहुन्छ हित गर्न भनी समस्त।
त्यस्लाइ इच्छित दिने वरदान नाथ!
गर्छू प्रणाम पदमा निहुराइ माथ ॥३५५॥

दुर्वासा ऋषि श्राप दिन्छु म भनी ❀ व्यर्थै भए तत्पर
तिन्को तोड्नुभयो घमण्ड, नृपको ❀ रक्षा गरी सादर ।
छोडेथे जब इन्द्रअस्त्र बलियो ❀ श्री इन्द्रले क्रै दिन
रक्षा गुर्नभयो दिलीप-सुतको ❀ त्यो छातिमा गैकन ॥३५६॥
धेरै यत्नहरू गऱ्यो कशिपुले ❀ प्रह्लाद मार्छू भनी
धारी रूप नृसिंह मारिदिनुभो ❀ त्यो दुष्टलाई पनि ।
रक्षा गर्नुभयो सबै तरहले ❀ प्रह्लादको हे प्रभो !
माग्दै छू म पनी दया हजुरको ❀ पाऊँ भनी हे विभो ! ॥३५७॥
तानेथ्यो गजराजलाइ जलमा ❀ त्यो ग्राहले बेसरी
त्यस्ले बिन्ति गऱ्यो विनम्र स्वरमा ❀ पाऊ परी हे हरि ।
पाल्नूभो दगुरेर त्यो बखतमा ❀ हावा सरी वेगले
रक्षा गर्नुभयो पुगेर करको ❀ त्यो तेजिलो चक्रले ॥३५८॥
ठूलो आपद पर्छ जुन् बखतमा ❀ आफ्नो कुनै भक्तमा
पुग्नूहुन्छ स्वयं सवेग दगुरी ❀ रक्षार्थ त्यै स्थानमा ।
पैह्ले नै अवतार धारण गरी ❀ मारी अधर्मी जति
रक्षा गर्नुहुँदै छ भक्त जनको ❀ धेरै कती हो कति ॥३५९॥
गर्छन् गान हजूरका थरि-थरी ❀ लीलाहरूको जन
तिन्लाई दिनुहुन्छ श्रेष्ठ वरदान् ❀ हुन्छन् सुखी सज्जन ।
ऐह्ले छू म विपत्तिमा हजुरको ❀ पाईनँ ख्वै दर्शन
गर्नूहोस् उपकार यो बखतमा ❀ हे विष्णु नारायण ! ॥३६०॥
ब्रह्मा अग्नि सुरेन्द्र औ वरुणले ❀ जो ध्यान गर्छन् सदा
अर्को छैन दयालु क्वै हजुर झैं ❀ स्वामी, सदा-सर्वदा ।
रक्षा ती सबको र भक्त जनको ❀ भक्ती विचारीकन
गर्नूहुन्छ दया कृपा हजुरले ❀ हुन्छन् सुखी सज्जन ॥३६१॥

मैले जान्दिनँ मूर्ख छू हजुरको ❀ श्रद्धा र भक्ती पनि
यौटै बात म जान्दछू शरणमा ❀ पर्नेछ मौका भनी ।
बारम्बार प्रणाम गर्छु पदमा ❀ पाऊँ छिटै दर्शन
राजाले यसरी गरे थरि-थरी ❀ भक्ती तथा पूजन ॥३६२॥
नित्यै ती नृपले यसै गरि गरे- ❀ थे ध्यान भक्ती जब
निद्रा भोक थकाइ केहि नबुझी ❀ बिर्सीदिएथे सब ।
तिन्को प्रेम बुझी प्रसन्न मनले ❀ दिन्छू भनी दर्शन
इच्छा गर्नुभयो म गर्दछु भनी ❀ कल्याण तिन्को सुन ॥३६३॥
हात्मा दण्ड कमण्डलू र कटिमा ❀ जाज्वल्य पीताम्बर
पैह्लेको छ जनै, खराउ पदमा ❀ देखिन्छ झन् सुन्दर ।
सामुन्ने नृपका उपस्थित भए ❀ मुद्रा हँसीलो थियो
देख्दैमा नृपको भएजति सबै ❀ चिन्ता अशान्ती गयो ॥३६४॥
ती दण्डीकन भूपले मनमनै ❀ विष्णू यिनै हुन् भनी
पूजा आदर भक्तिले गरिलिए ❀ केही नजान्ने बनी ।
दण्डीलाइ भने विनम्र स्वरमा ❀ मेरो छ यस्तो स्थिति
ऐह्ले दर्शन विष्णुकै सरि भयो ❀ आनन्द मेरो मति ॥३६५॥
यस्तो बिन्ति गरेर भूपति बसे ❀ केही नबोली जब
लागे भन्न बुझाइ बात हितको ❀ हाँसेर ती वैष्णव ।
हे राजन् ! मन शान्त राख र दिनन् ❀ श्रीविष्णुले दर्शन
इच्छा पूर्ण हुनेछ स्वर्गपुरिमा ❀ जानू खुशी भैकन ॥३६६॥
अन्तर्धान भए तुरुन्त त्यहिँ नै ❀ ती दण्डधारी जब
को हुन् यी भनि चिन्न-जान्न नसकी ❀ आश्चर्य माने तब ।
सोधेथे मुनिलाइ आदर गरी ❀ को हुन् तपस्वी यिनी ?
बोलेथे अनि भूपको सुनि कुरा ❀ ती ब्रह्मचारी मुनि ॥३६७॥

राजन् ! भाग्य ठुलो रहेछ र मिल्यो ❀ श्री विज्ञको दर्शन
जान्नू विष्णु भनी तिनैकन तिमी ❀ झूठो कुरा बोल्दिनँ ।
पुग्नेछौ जब नीलपर्वतविषे ❀ मिल्ला त्यहीं दर्शन
बस्नेछौ गइ झट्ट स्वर्गपुरिमा ❀ आनन्द मानीकन ॥३६८॥
ज्ञानी ब्राह्मणबाट यो सब सुनी ❀ राजा भए हर्षित
हर्षाश्रू नृपका दुवै नयनमा ❀ टल्पल् भए शोभित ।
इच्छा एक थियो म कुन् तरहले ❀ भेट्टाउँछू दर्शन
ज्ञानी ब्राह्मणले भनेपछि भयो ❀ क्यै शान्त तिन्को मन ॥३६९॥
देखेथे अनि स्वप्न एक निशिमा ❀ यौटा निकै सुन्दर
आफ्नू रूप चतुर्भुजी हुन गयो ❀ आश्चर्य माने तर ।
पाए दर्शन श्रेष्ठ नीलगिरिमा ❀ साक्षात् रमाका पति
हुन्छौ मुक्त भनी स्वयं वर दिए ❀ शंका नमानी रति ॥३७०॥
निद्रा भंग भयो उठे वरि-परी ❀ हेर्दै थिए भूपति
देखी ब्राह्मणलाइ सादर भने ❀ त्यो स्वप्न देखे-जति ।
पाएँ दर्शन स्वप्नमा ति गिरिको ❀ हो टाकुरा जुन् त्यहाँ
साक्षात् विष्णु बसेर दर्शन दिए ❀ खुशी भएँ मन्महाँ ॥३७१॥
राजाले द्विजलाइ स्वप्न निशिको ❀ गर्दै थिए वर्णन
द्यौताले नभबाट पुष्पहरुको ❀ गर्दा भए वर्षण ।
ठूलो उत्सव भो र सोहि दिनमा ❀ आकाशवाणी भयो
राजाले सहसा सुने गिरि स्वयं ❀ लौ हेर ऊ देखियो ॥३७२॥

यस्तो सुनेर नृपती अति हर्ष मानी
सौभाग्य-युक्त सबमा निजलाइ ठानी ।
अत्यन्त उज्ज्वल सफा गिरि टाकुराले
शोभा थियो रवि सरी अति टल्कनाले ॥३७३॥

त्यो पूर्वमा उदय नीलगिरि प्रधान
पाएर दर्शन भने करुणा-निधान।
प्रत्यक्ष दर्शन मिल्यो कृतकृत्य छू म
गर्छू प्रणाम पदमा प्रभु सत्यकाम ॥३७४॥

पाएँ दर्शन आज नीलगिरिको ❀ हो बात सौभाग्यको
बारम्बार प्रणाम गर्छु पदमा ❀ सम्झी दया नाथको।
ढोगेथे गिरिराजलाइ मनले ❀ गर्दा भए पूजन
जो-जो पाप थिए समस्त तनमा ❀ धोई पखालीदिन ॥३७५॥

जम्मा पाँच जना मिलेर गिरिको ❀ जाँ टाकुरामा भनी
पक्का दर्शन मिल्छ सोहि स्थलमा ❀ आनन्द मान्दै अनि।
हुन्छौं मुक्त अवश्य दर्शन मिले ❀ श्री विष्णुको उत्तम
इच्छा पूर्ण हुनेछ धैर्य मनमा ❀ राख्यौं भने संयम ॥३७६॥

यस्तै तर्क गरी हिडे उनिहरू ❀ पाँचै जना ती जब
बाटोमा गुण-गानका सँग-सँगै ❀ जैकार गर्थे सब।
चाँडै पुग्न गए ति नीलगिरिको ❀ त्यो टाकुरामा अनि
देख्दैमा सबले भने खुशि हुँदै ❀ हे नाथ ! आयौं भनी ॥३७७॥

हेर्थे मन्दिरको छटा तिनिहरू ❀ शोभा अनौठो थियो
खम्बा उत्तम छन् सबै स्फटिकका ❀ चौतर्फमा देखियो।
मोती माणिकका ति झालरहरू ❀ लर्की रहेका कति
सिंहासन् त्यहिँ एक स्वच्छ सुनको ❀ सिंगारिएको अति ॥३७८॥

आई देवहरू ति स्वर्गपुरिका ❀ जम्मा भएका थिए
तिन्ले चाकरि विष्णुको थरि-थरी ❀ सानन्द गर्दा भए।
लक्ष्मी चामरले प्रभूकन स्वयं ❀ हम्कीरहेकी थिइन्
खाने वस्तुहरू उपस्थित रही ❀ आफै तिनी हेर्दथिन् ॥३७९॥

रत्नै-रत्न जडाउ मन्दिर ठुलो ❀ देखे अगाडी जब
त्यस्मा तेज परेर स्वच्छ रविको ❀ टल्कीरहेको सब ।
पौंचे मन्दिर-भित्र पाँच जन ती ❀ सौन्दर्य हेर्दै अनि
थाले पूजन गर्न शुद्ध मनले ❀ हे विष्णु, स्वामी ! भनी ॥३८०॥
पैह्ले स्नान गराइ स्वच्छ जलले ❀ पाऊ पखालीदिए
बत्ती धूप सुपारि पान मसला ❀ सानन्द राख्दा भए ।
सारा वस्तु चढाइ न्यूरि पदमा ❀ ढोगे सबैले अनि
राजा नम्र भएर गर्दछु स्तुती ❀ श्री ईशको लौ भनी ॥३८१॥

संसारमा सुजनको दुख ताप हर्ने
कल्याण सत्पुरुषको सुख मानि गर्ने ।
त्री-मूर्ति धारण गरी बनि मूर्ति एक
कल्याणका बखतमा बनि झन् अनेक ॥३८२॥
गर्दै रहूँ हजुरको म सदैव ध्यान
चाहिन्न केहि सुख वा धन कीर्ति मान ।
आएँ यहाँ जुन ठुलो गरि आश आज
पूरा भयो त्यजिदिएँ सब ती समाज ॥३८३॥
जुन् रूप दर्शन मिल्यो अहिले मलाई
हे नाथ ! त्यो रहिरहोस् मनमा रमाई ।
यो शंख चक्र र गदा कर-बीच धारी
चौथो छ पद्म शुभ रक्षक हे मुरारि ॥३८४॥
यै रूपमा म दिन-रात रमीरहन्छु
आउन् जती दुख विपत्ति सबै सहन्छु ।
बुद्धी छ हीन मतिको म छु मूर्ख नाथ
शिक्षा दिनोस् हजुरले अब भक्ति-साथ ॥३८५॥

जान्दीनँ केहि पनि, छू बहुतै अनाथ
गर्छू प्रणाम पदमा निहुराइ माथ ।
माग्दीनँ केहि अरु भक्ति-सिवाय मैले
पाऊँ, प्रसन्न हुनुहोस ममाथि ऐह्ले ॥३८६॥
यस्तो सुनेर स्तुति भूपतिको प्रभूले
धारी चतुर्भुज स्वरूप त्यहीँ खुशीले ।
प्रत्यक्ष दर्शन दिए नृप-सामु आई
ढोगे सहर्ष झुकि पाउ दुवै समाई ॥३८७॥
छन् शंख चक्र र गदा अरु पद्म सार
पीताम्बरादि अरु भूषण छन् अपार ।
यस्तो अलौकिक स्वरूप धरेर त्याहाँ
आज्ञा गरे खुशि भई निज भक्तमाहाँ ॥३८८॥
राजन् ! प्रसन्न म भएँ अब बात मान
खाऊ प्रसाद र लगाउ सबै समान ।
मिल्ला चतुर्भुज स्वरूप र मुक्ति पाई
वैकुण्ठमा गइ बसे बहुतै रमाई ॥३८९॥
गर्नू अनेक सुख-भोग त्यहाँ तिमीले
इन्द्रादिदेखि पनि क्यै कमि हुन्न कैह्ले ।
वैकुण्ठ जाउ तिमि दिव्य विमानमाहाँ
भक्ती गरे दिन-दिनै नभुलेर वाहाँ ॥३९०॥

अन्तर्धान भएर विष्णु सहसा ❀ जानूभएथ्यो जब
लागे नाच्न भई प्रसन्न सहसा ❀ जो-जो गएथे सब ।
पूजाको सबले प्रसाद प्रभुको ❀ बाँडेर खाए अनि
पाए श्रेष्ठ चतुर्भुजी स्वरुप त्यो ❀ श्री विष्णु जस्तै बनी ॥३९१॥

राजन् ! दिव्य विमान स्वर्गपुरिको ❀ आई, भयो हाजिर
धैरै रत्नहरू जडाउ सुनका ❀ त्यस्मा थिए सुन्दर ।
गर्ने गान मिलाइ तान सुमुखी ❀ धैरै थरी सुन्दरी
हाँक्थे चामर अप्सरागण पनी ❀ तिन्को गरी चाकरी ॥३९२॥
सक्थे पर्न कुनै मुनी ऋषि पनी ❀ हेरेर नै मोहित
राजा रानि दुवै बसीकन भए ❀ अत्यन्त नै शोभित ।
लाग्यो उड्न विमान वायु-गतिले ❀ वैकुण्ठ पुग्दो भयो
जो जो शेष थिए सबैकन पनी ❀ आएर फेरी लग्यो ॥३९३॥
मन्त्रीले सब यो यथाक्रम कथा ❀ शत्रुघ्नलाई भने
श्री वात्स्यायनले सबै शुभ कथा ❀ श्री शेषद्वारा सुने ।
घोडा उत्तम श्यामकर्ण सहसा ❀ बढ्दै अगाडी गयो
श्री शत्रुघ्न पनी उसै पछि-पछी ❀ चाँडो सवारी भयो ॥३९४॥
गंगा-सागर स्नान औ कपिलको ❀ गर्नूभयो दर्शन
पूजा गर्नुभयो प्रसन्न मनले ❀ भक्ती बढाईकन ।
श्री शत्रुघ्नजिले गरे कपिलको ❀ पूजा स्तुती प्रार्थना
आशीर्वाद दिए मुनी कपिलले ❀ पुग्ला सबै कामना ॥३९५॥



# राजा सुबाहु र अन्यान्य राजाहरूको आख्यान



राजन् ! उत्तम श्यामकर्ण हय त्यो ❀ बढ्दै अगाडी गयो
श्री शत्रुघ्न-समेत सैनिक सबै ❀ त्यस्कै पछी दौडियो ।
मन्त्री पुष्कल वीर-वीर बलिया ❀ सेनापती जो थिए
तिन्का साथ समस्त सैनिक पनी ❀ तत्काल जाँदा भए ॥३९६॥

यौटा उत्तम जो थियो नगर त्यो ❀ सम्पूर्ण चक्राङ्कित
त्याहाँ भूप थिए सुबाहु, उनका ❀ छोरा दमन् शोभित ।
यौटा बाग थियो सुरम्य त्यहिँ नै ❀ उद्यान चारैतिर
सारा सैन्य पुग्यो त्यही स्थलमहाँ ❀ घोडा सहित् आखिर ॥३९७॥
खेल्थे त्यै वनमा शिकार् दमनजी ❀ घोडा त्यहीं देखियो
सुन्को पत्र निधारमा छ हयको ❀ शृंगारले पूर्ण त्यो ।
देखेखे हय त्यो जसै दमनले ❀ आश्चर्य मानीलिए
ल्याओ अश्व समाइ झट्ट चर हो ! ❀ भन्ने सुनाईदिए ॥३९८॥
ल्याएथे हय पक्रि दूतहरुले ❀ तिन्का अगाडी जब
हेरे पत्र पढे समस्त सुनको ❀ विस्तार जाने सब ।
राजा राम हुँदा सबै पृथिविका ❀ प्राणीहरू छन् सुखी
कोही छैन समस्त राज्यभरिमा ❀ संकष्ट भोग्ने दुखी ॥३९९॥
उन्ले गर्दछु अश्वमेध भनि यो ❀ छाडीदिएको हय
होला अश्व समाउने समरमा ❀ शत्रुघ्नद्वारा क्षय ।
त्यस्को हुन्छ भनेर जान्नु जनले ❀ योद्धा भए तापनि
तोड्नेछन् अभिमान वीरहरुले ❀ वैरी यही हो भनी ॥४००॥
जो पर्नेछ स्वयं झुकी शरणमा ❀ त्यस्लाइ माफी दिनन्
योद्धा पुष्कलले जिती समरमा ❀ घोडा फिराईलिनन् ।
यो देखेर ति राजपुत्र रिसले ❀ आगो सरीका भए
आफ्ना नेत्र घुमाइ सैन्यतिर नै ❀ तत्काल हेर्दै थिए ॥४०१॥
थाले गर्जन राम मात्र छ ठुलो ❀ क्वै छैन अर्को भनी
शेखी धेर भई गरेछ अभिमान् ❀ ऐह्ले घमण्डी बनी ।
यस्तो राम रहेछ, भाइहरु हो ! ❀ शत्रुघ्नका साथमा
ठूलो युद्ध गरी घमण्ड सहजै ❀ तोड्छू म संग्राममा ॥४०२॥

छन् ऐहलेतक राज्यका अधिपती ❀ मेरा पिता जीवित
तिन्का सामु गरेर शेखि हय यो ❀ छाड्ने गरे हिम्मत ।
छाड्नेछू जब युद्धमा शरहरू ❀ पानी परेझैं छरी
जानेछन् सब सैन्य घोर रणमा ❀ शत्रुघ्नजीका मरी ॥४०३॥
रातो पुष्प हुने पलाश-रुख झैं ❀ शत्रुघ्न होलान् जब
पाई त्यो बलिदान योगिनिहरू ❀ सन्तुष्ट होलान् सब ।
सेनाको रणमा बगी रगतको ❀ जानेछ खोलो बनी
खाई गिद्ध र स्याल मांस खुशिले ❀ नाच्नन् भलो भो भनी ॥४०४॥
यस्ता बात कठोर उच्च स्वरमा ❀ बोले दमन्ले जब
बाँधीदेउ लगेर अस्तबलमा ❀ यो अश्व चाँडै अब ।
घोडा बाँधिदिए लगेर सबले ❀ आज्ञा गरे पालन
जो शस्त्रास्त्र थिए उपस्थित गरे ❀ तत्काल ल्याईकन ॥४०५॥
डाके शब्द गरी ठुलो बिगुलको ❀ आए सबै पल्टन
सेना-नायकलाइ आडर दिए ❀ संग्राममा लम्कन ।
श्री शत्रुघ्न लिएर सैनिकहरू ❀ संग्राममा आउनन्
घोडाको सबले मिली वरिपरी ❀ खोजी पनी गर्दछन् ॥४०६॥
यो आज्ञा सुनि वीर ती दमनको ❀ सेना तयारी गरी
आए लड्न ति राजपुत्र रणमा ❀ शस्त्रास्त्र ली बेसरी ।
पंक्ती-बद्ध भएर सैनिकहरू ❀ संग्रामको निम्तिमा
सारा शस्त्रहरू लिईकन डटे ❀ त्यो युद्धको भूमिमा ॥४०७॥
हे वात्स्यायन ! अश्व-रक्षकहरू ❀ सेना ति शत्रुघ्नका
खोज्दै आइपुगे नजानिकन नै ❀ रक्षार्थ त्यो अश्वका ।
खोजेथे तर क्यै मिलेन हयको ❀ पत्ता त्यसै कारण
दुःखी चित्त गरी बसेर मुखले ❀ बोल्थे ति नारायण ॥४०८॥

सेनाका सँग हिड्दथे नरपती ❀ यौटा प्रतापाग्र्य जो
तिन्ले देखिलिए सशस्त्र नगिचै ❀ धैरै थिए सैन्य त्यो ।
घोड़ा पक्रिलिएछ निश्चय पनी ❀ हाम्रो यही वीरले
भेजे दूत तुरुन्त बात हितको ❀ शिक्षा दिई भूपले ॥४०९॥
पौँची त्यो चरले भन्यो-दमनजी ❀ जुन् अश्व हो रामको
देख्यौ की तिमिले बताउ अथवा ❀ कस्ले कहाँ पक्रियो ।
थाहा कत्ति नपाइ यो विषयमा ❀ पक्री लियौ की भन
राखेको घरमा भए खुरु-खुरू ❀ ल्याऊ बुझाईदिन ॥४१०॥
दिन्नौ अश्व भने विचार गरिल्यौ ❀ शत्रुघ्न क्रोधित् भई
गर्नेछन् फजिती ठुलो समरमा ❀ सेना सबै मार्दिई ।
लैजानन् हय त्यो फुकाइ बलले ❀ को सक्छ रोकीलिन
रक्षा गर्न भनेर सैनिक पनी ❀ छन् साथमा कोटिन ॥४११॥
छाडीदेउ तुरुन्त अश्व खुशिले ❀ यो बात मेरो सुनी
मान्दैनौ हितका कुरा त पछितो ❀ पर्ला नराम्रो अनि ।
यस्ता बात सुनीसकेर चरको ❀ तिन्ले दिए उत्तर
पक्रेको हयलाइ राम्ररि चिह्नी ❀ भन्ने बुझे हे चर ! ॥४१२॥
बाँधेको छु लगेर अस्तबलमा ❀ तिम्रो भए तागत
लैजाऊ हय त्यो फुकाइ बलले ❀ फर्केर जाऊ न त ।
तिन्को त्यो अभिमान देखि चरले ❀ बोलेन क्यै तापनि
त्याहाँबाट गई प्रताप नृपती- ❀ लाई सुनायो अनि ॥४१३॥
त्यस्को बात सुनेर हाँक रणको ❀ रन्के प्रतापाग्र्य जी
राता नेत्र भए, फुरे दुइ भुजा ❀ दाह्रा किटे कट्कटी ।
निक्कै शेखि गरेछ त्यो दमनले ❀ त्यस्लाइ जित्छू अनि
त्यस्का सैनिक मार्दछू म सहजै ❀ कालाग्नि जस्तै बनी ॥४१४॥

ठूलो त्यो रथमा बसेर सुनको ❀ शस्त्रास्त्र राखी सब
गर्नू पर्छ लडाइँ हामि सबले ❀ उत्साह राखी अब ।
यस्ता बात भनेर साहस दिदै ❀ बढ्दै अगाड़ी गए
सेना ती चतुरंगिणी समरमा ❀ चारै दिशा फैलिए ॥४१५॥
लागे भन्न हियाउँदै दमनको ❀ शेखी उतार्छू भनी
तिन्का सामु पुगी प्रताप नृपती ❀ गर्जे रिसाई अनि ।
जानैरै भन श्यामकर्ण हय त्यो ❀ कुन् बुद्धिले पक्रियौ
कस्को पाइ सहायता भन तिमी ❀ संग्राममा तम्सियौ ॥४१६॥

छौ बालकै सहज राज-कुमार ऐह्ले
ठूलो पराक्रम छ युद्ध लड्यौ कि पैह्ले ।
शेखी गर्‍यौ अघि जती चरले सुनायो
त्यै बातले मकन युद्धविषे पठायो ॥४१७॥
राजा दुवै नयन झिम्म नपारी हेर्दै
टंकार श्रेष्ठ धनुको पनि खूब गर्दै ।
बढ्दै गए जब अगाडि प्रताप वीर
गर्जे निकै दमन वीर भई अधीर ॥४१८॥

राखेर अस्त्रहरु ती रथमा बसेर
संग्राम--खातिर हिडे नगरी अबेर ।
तिन्का पछी सब हिडे अति श्रेष्ठ वीर
सेनापती पनि थिए सब वीर-धीर ॥४१९॥
उफ्रन्छ सिंह मृग-फौजविषे जसोरी
त्यस्तै गरे दमनले सहसा अजोरी ।
सेना दुवै तरफका जब सामु आए
तीखा कुरा अनि परस्परमा सुनाए ॥४२०॥

हात्ती सवारसित हात्ति-सवार लड्थे
घोडा सवारसित अश्व-सवार भिड्थे ।
लड्थे रथीसँग रथी डटि सामुमाहाँ
भिड्थे ति पैदल पदाति डटेर त्याहाँ ॥४२१॥
संग्राम मच्चिन गयो सहसा अघोर
भाग्थे ति काँतर जती डरमा परेर ।
हात्ती र अश्व रथि पदैल सैन्य मर्दा
गिर्थे धमाधम ति शस्त्र प्रहार गर्दा ॥४२२॥
लौ काट मार खलको टुकुरा गराऊ
हानी गदा सहज खप्पर नै फुटाऊ ।
उम्केर जान्छ कि भनी करमा समाऊ
काटेर गर्दन छिटै जिमिमा ढलाऊ ॥४२३॥
यस्तै अनेक थरिका ध्वनि चल्न थाले
शस्त्रास्त्र ती घरि-घरी सब चम्कनाले ।
उद्दीप्त तेज रविको कछु मन्द भैगो
वैरी र मित्र पनि चिह्न कठिन् परीगो ॥४२४॥
खोलो बग्यो रगतको नदिकै समान
दिन्थे कती समरमा लडि ज्यान-मान ।
मिच्तै लगे दमनले रथ क्यै अगाडि
हट्तै गए अनि प्रताप स्वयं पछाडि ॥४२५॥
देखे जसै दमनलाइ रिसाइ भन्छन्
तेरो मलाइ सबले यमराज मान्छन् ।
हूँ काल-रूप बुझिले तँ स्वयं मलाई
उम्केर जान अब दिन्नँ बुझेस् तँलाई ॥४२६॥

श्री रामलाइ नचिह्नी किन शेखि गर्छस्
तेरो घमण्ड सब तोड्दछु आज मर्छस् ।
घोडा समाइकन जानि नजानि तैँले
डाकिस् विपत्ति किन बालक ! व्यर्थ ऐह्ले ॥४२७॥

मारे युद्ध गरेर घोर रणमा ❀ योद्धा ठुलो रावण
जस्को कीर्ति प्रताप फैलिन गयो ❀ संसारमा त्यै क्षण ।
बाटोमा जति भेटिए नृपहरू ❀ ठूलै भए तापनि
घोडा पक्रन, युद्ध गर्न पथमा ❀ आएन कोही पनि ॥४२८॥

त्वैँले आज गरिस् अनादर वृथा ❀ घोडा समाईकन
के हो नाम बता ? तँ दुष्ट रहिछस् ❀ भन्दै छ मेरो मन ।
घोडा मुक्त गरी म छू शरणमा ❀ माफी दिनूहोस् भनी
श्री शत्रुघ्नजिका परे चरणमा ❀ माफी दिनेछन् उनी ॥४२९॥

सानै बालक देख्दछू म कसरी ❀ तीखा चलाऊँ शर
मैले गर्छु क्षमा प्रसन्न मनले ❀ फर्केर जाऊ घर ।
यस्ता बात प्रतापको दमनले ❀ सुन्दा भएथे जब
लागे भन्न रिसाइ उच्च स्वरले ❀ गर्जेर साम्ने तब ॥४३०॥

मैले हैन नजानि अश्व अहिले ❀ पक्रीलिएको सुन
बाँधेको छु लगेर अस्तबलमा ❀ भन्ने मनैमा गुन ।
छोरो क्षत्रियको म वीरहरुमा ❀ छू श्रेष्ठ योद्धा पनि
भन्छौ बालकले लडाइँ कसरी ❀ गर्छस् तँ ऐह्ले भनी ॥४३१॥

राजाको सुत हूँ र खेल्न मनमा ❀ इच्छा हुनाले गरी
आएँ खेल्न भनी शिकार नरको ❀ संग्राममा यो घरि ।
स्वेच्छाले हय दिन्नँ यो तिमि बुझे ❀ कस्तै परे तापनि
लैजाऊ तिमि सक्तछौ यदि भने ❀ गर्जे रिसाई तिनी ॥४३२॥

येती बात सुनाइ उग्र रिसले ❀ छाडे अनेकौं शर
एकै बाण चलाइ ती शर सबै ❀ काटीदिए आखिर ।
काटे वाण भनी छिटै दमनले ❀ शेखी गरी बेसरी
छाडे मन्त्रित बाण एक धनुमा ❀ राखेर सोही घरि ॥४३३॥
गर्जी मेघ समान उच्च स्वरले ❀ आयो जसै बाण त्यो
आगो निस्कि यता-उता समरमा ❀ हा-हा गराईदियो ।
लागे मर्न डढेर सैनिक कती ❀ त्यै अग्निको तेजले
त्यो देखेर भए प्रताप नृपती ❀ आगो सरी क्रोधले ॥४३४॥

हे राज-पुत्र ! रणबाट नभागि ऐह्ले
रोकेस् प्रहार अब गर्दछु वाण मैले ।
येती भनेर दश बाण गरे प्रहार
लाग्यो गई दमनको तनमा अपार ॥४३५॥
हानीदिए दमनले सय बाण फेरि
लाग्यो गई तनभरी नगरेर देरी ।
फेरी प्रताप नृपले शर बार-बार
छोडे रिसाइ शर उत्तम तीन् हजार ॥४३६॥
तोडीदिए रथ र सारथिलाइ मारे
नौ बाण ती दमनका शिरमा बजारे ।
लागेर चोट ति गिरे रथबाट झट्ट
अर्को लिएर रथ फेरि डटे बिछट्ट ॥४३७॥

ताकी बाणहरू अनेक रिसले ❀ छाडीदिएथे जब
मार्‍यो अश्व र सारथी नृपतिको ❀ हाहा गरायो तब ।
छातीमा गइ एक बाण बलियो ❀ लाग्यो निकै वेगले
त्यो देखेर भए खुशी दमनजी ❀ त्यो जीतको हर्षले ॥४३८॥

लाग्यो बज्न मृदंग ढोल नगड़ा ❀ त्यो दिव्य शंख-ध्वनि
लागे हर्ष बढाइँ गर्न सबले ❀ भो जीत हाम्रो भनी ।
अर्को क्वै रथमा चढेर नृपती ❀ आए निकै वेगले
लागे गर्जन ती कठोर स्वरले ❀ आगो बनी क्रोधले ॥४३९॥
तैँले शौर्य गरिस् ठुलो समरमा ❀ स्वाबास भन्छू अब
मेरो चोट पनी खपेर रहनू ❀ हे वीर ! तैँले सब ।
छाडे बाण अनेक तीक्ष्ण नृपले ❀ चौतर्फ ढाकीदियो
संसारै सब अन्धकार हुनगो ❀ प्रत्यक्ष देखिन्नथ्यो ॥४४०॥
रोके वेग तुरुन्त नै दमनले ❀ छाडेर यौटा शर
सारा स्वच्छ भए दिशाहरु अनी ❀ फेरी भए तत्पर ।
लागे भन्न प्रताप भूपति निकै ❀ गम्भीर वाणी गरी
भाग्नेछस् रणबाट एक शरले ❀ भन्ने बुझेस् राम्ररी ॥४४१॥

येती भनेर नृपले शर एक ताने
ताकेर ती दमनलाइ तुरुन्त हाने ।
रोक्के गरे शर तिखो पथमै तिनीले
आयो तथापि शर त्यो सहसा बलैले ॥४४२॥
युक्ती गरी शर पनी सहसा दमनले
हाने रिसाइकन छातिविषे बलैले ।
लाग्यो गएर शर त्यो जब छातिमाहाँ
लोटे प्रताप नृपती त्यहिँ भूमिमाहाँ ॥४४३॥
राखेर झट्ट रथमा निज सारथीले
संग्राम-बाहिर लग्यो दगुराइ बेग्ले ।
शत्रुघ्नका समिपमा लगि राखिदीयो
तिन्लाइ देखिकन चित्त मलीन भैगो ॥४४४॥

संग्रामको स्थिति निकै विपरीत देखी
भागे बचाइकन जीवन त्यागि शेखी।
हर्षित् भए दमनजी विजयी बनेर
पर्खे त्यहीँ नजिक आउँछ को भनेर ॥४४५॥

राजा प्रतापकन घायल देखि ताहाँ
शत्रुघ्नको रिस चढ्यो सब देहमाहाँ।
कुन् वीर हो भन अनादर आज गर्ने
वेला भएछ बुझियो अब शीघ्र मर्ने ॥४४६॥

घोडा समाइ किन येसरि उम्लियो यो
चाँडो बताउ सबले अब वीर जो हो।
राता भए नयन ती रिसले गरेर
बिन्ती गऱ्यो चर अघी सरि उत्लिखेर ॥४४७॥

योद्धा कोहि सुबाहु नाम नृपती ❀ ठूला रहेछन् यहाँ
तिन्कै पुत्र दमन् रहेछ उसले ❀ संग्राम-भूमीमहाँ ।
मूर्च्छा पारिदियो प्रताप नृपती- ❀ लाई निकै गर्जियो
घोडा बाँधिरहेछ अस्तबलमा ❀ संग्राममा नै छ त्यो ॥४४८॥

यस्तो बिन्ति सुनीसकेर चरको ❀ झन् क्रोध बढ्दै गयो
श्री शत्रुघ्न लिएर सैनिक निकै ❀ तत्काल पाल्नूभयो ।
हात्ती अश्व-सवार पैदल रथी ❀ देखी सबै सोतर
धेरै वीरहरू मरे समरमा ❀ लागेर तीखा शर ॥४४९॥

खोलो बग्न गयो ठुलो रगतको ❀ चौतर्फ हा-हा थियो
धेरै सैन्य लिई स्वयं दमनले ❀ त्यो दु:स्थिती पार्दियो ।
सोधे सैन्यहरू सबैसित त्यहाँ ❀ गर्जेर शत्रुघ्नले
बिन्ती पुष्कलले गरे नगिच गै ❀ अत्यन्त उत्साहले ॥४५०॥

जित्लेछू म गई छिटै दमनको ❀ तोड्छू म शेखी पनि
त्यस्लाई नजिती म फिर्दिन यहाँ ❀ हे नाथ ! हारें भनी ।
यस्ता पुष्कलका कुरा सुनिसकी ❀ शत्रुघ्न खूशी भए
तिम्रो जीत हुनेछ निश्चय भनी ❀ आशीष धेरै दिए ॥४५१॥
योद्धा पुष्कल लम्किए रथ चढी ❀ संग्राम-भूमीतिर
तिन्का साथ अनेक सैनिक गए ❀ संग्रामका खातिर ।
आए लड्न भनी स्वयं दमनजी ❀ पर्खीरहेकै थिए
आँखा लाल थिए ति वीरहरुका ❀ तत्काल रोकीलिए ॥४५२॥
बोले पुष्कल-पुत्र हूँ भरतको ❀ हूँ दास श्रीरामको
तेरो शेखि म तोड्दछू समरमा ❀ जानीलिनू बात यो ।
आएँ लड्न भनी म हे दमन यो ❀ संग्रममा तैंसित
राखी धैर्य खडा रहेस् समरमा ❀ आफ्नू चिताई हित ॥४५३॥
मैले यो रणमा तँलाइ नजिती ❀ फर्कन्नँ भन्ने पनि
तेरै सामु म गर्दछू प्रण अनी ❀ बोल्दीनँ मिथ्या भनी ।
तिन्को हाँक सुनीसकी दमनले ❀ अत्यन्त क्रोधित् भई
लागे भन्न गरी घमण्ड बहुतै ❀ केही नगीचै गई ॥४५४॥
छोरो हूँ म सुबाहु वीर नृपको ❀ हो नाम मेरो दमन्
तेरा साथ लडाइँ गर्दछु डटी ❀ भाग्दीनँ भन्छू म झन् ।
तैंले जित्छु भनिस् मलाइ रणमा ❀ बोल्नू अहंकार हो
मैले जित्छु बरू तँलाइ सहजै ❀ भन्ने कुरा सत्य हो ॥४५५॥
यस्तै खूब गरी विवाद रिसले ❀ छाडीदिएथे शर
लाग्यो घुम्न गराइ विह्वल सबै ❀ त्यो बाण चारैतिर ।
पार्‍यो पुष्कललाइ व्याकुल निकै ❀ सेनाहरूमा पनि
धेरै नाश गर्‍यो चतुर्दिक त्यहाँ ❀ हा-हा गरायो अनि ॥४५६॥

गर्जे पुष्कल अग्निबाण सहसा ❀ छाडेर चर्को अति
हा–हाकार परी गिरे कति मरी ❀ भागे डराई कति ।
काटीए कति बाहु पाउ शिर नै ❀ गिर्दै गएथे कति
भागे प्राण लिई कती समरमै ❀ हेर्थे कती दुर्गति ॥४५७॥
देखी दुःस्थिति युद्धको दमनले ❀ क्यै बेर चिन्ता परी
छाडे उत्तम वारुणास्त्र रिसले ❀ मन्त्रेर सोही घरि ।
पानी पर्न गयो तुरुन्त रणमा ❀ आगो सबै शान्त भो
धेरै पानि परेर सैन्य दलमा ❀ हा–हा गराईदियो ॥४५८॥
थाले डुब्न कती अगाध जलमा ❀ धेरै भए आकुल
लागे भाग्न कती र भाग्न नसकी ❀ सेना भए व्याकुल ।
आफ्ना सैनिकको ठुलो समरमा ❀ देखी नराम्रो स्थिति
बारम्बार गरे विचार मनमा ❀ हाम्रो ठुलो भो खति ॥४५९॥
वायव्यास्त्र गरे प्रहार रणमा ❀ योद्धा दमन्ले अनि
ठूलो आँधि चलेर बादल हटे ❀ चौतर्फ टुक्रा बनी ।
पानी बन्द भई हुरी शुरु भयो ❀ निक्कै ठुलो वेगले
लागे जुङ्न अनेक वाहनहरू ❀ त्यै वायुका झोकले ॥४६०॥
सेना गिर्न गए कती दमनका ❀ मूर्च्छा परी घोप्टिए
लागे उड्न घुमेर फन्फनि कती ❀ तत्काल पच्छारिए ।
देखी दुःस्थिति सैन्यको दमनले ❀ त्यो पर्वतास्त्रै लिए
त्यस्लाई पढि मन्त्र त्यै बखतमा ❀ सानन्द छाडीदिए ॥४६१॥
लागे गिर्न अनेक पर्वतहरू ❀ ढुङ्गा र मूढा लिई
सेनालाइ थिच्यो त्यहीं कति कहीं ❀ भाग्नै नसक्ने भई ।
त्यस्को मार्जन गर्न पुष्कल पनी ❀ जान्ने हुनाले गरी
छाडे मन्त्रित शत्रुका उपरमा ❀ वज्रास्त्र सोही घरि ॥४६२॥

धूलो पर्वतको भयो, दमनको ❀ लाग्दो भयो वक्षमा
ठूलो चोट परी ढले ति रथमै ❀ मूर्च्छा भई युद्धमा ।
हाँक्यो सारथिले घुमाइ रथ त्यो ❀ संग्रामको बाहिर
उन्का बाबु सुबाहुको हजुरमा ❀ राखीदियो सादर ॥४६३॥
भागे सैन्यहरू डरी जति थिए ❀ आफ्नू सुरक्षा गरी
मन्त्री आदि गई कहे समरको ❀ त्यो दुःस्थिती राम्ररी ।
हाम्रो जीत भयो भनी खुशि भए ❀ सेना-सहित् पुष्कल
जै-जैकार गरे प्रसन्न मनले ❀ गर्दै ठुलो खल्बल ॥४६४॥
पाए सुन्न सुबाहुले समरको ❀ सम्चार सारा जब
साह्रै चित्त दुख्यो, उठ्यो रिस पनी ❀ लड्छू म आफै अब ।
आऊन् शंकर नै सहायक भई ❀ संग्राममा तैपनि
खोज्छू दुःख दिने दमन्कन कता ❀ छौ वीर योद्धा भनी ॥४६५॥
सेना वाहन अस्त्र-शस्त्र रथमा ❀ राखी तयारी गरी
जान्छू लड्न भनेर तत्पर भए ❀ भूपाल सोही घरि ।
पैह्ले भेट्न गए दमन्कन जहाँ ❀ मूर्च्छा परेका थिए
देखी हालत पुत्रको मनमनै ❀ दुःखी र क्रोधित् भए ॥४६६॥
छर्केथे अनुहारमा जल लिई ❀ हम्कीदिए वस्त्रले
आयो चेत फिरी अनी दमनले ❀ बोल्दा भए कष्टले ।
मैले यत्न गरें अनेक रणमा ❀ जाने-बुझेको जति
लाग्यो वाण गिरें, अचेत म भएँ ❀ साह्रै भयो दुर्गति ॥४६७॥
गर्थे बात यता पिता-सुत दुवै ❀ दुःखी भए तापनि
भाई आइपुगे दुवै दमनका ❀ साहायकर्ता बनी ।
साजी सैन्य र अस्त्र-शस्त्र रणको ❀ सारा तयारी गरी
आए लड्न सुबाहु नै समरमा ❀ जित्ने इरादा धरी ॥४६८॥

हे वात्स्यायन ! क्रौञ्चव्यूह रचना ❀ गर्दा भए भूपले
रक्षा गर्न भनी सबैतिर डटे ❀ सेनाहरू यत्नले ।
देखे सैन्य ठुलो तयार रणमा ❀ शत्रुघ्नजीले जब
सोधे विज्ञ सुमन्त्रलाइ-भन यो ❀ को हो ? मलाई अब ॥४६९॥
मन्त्रीले सुनि बात सोचि मनमा ❀ यस्तो दिए उत्तर
आए लड्न भनी सुबाहु रणमा ❀ सेना लिई दुर्धर ।
यिन्को हो नगरी सबै तरहले ❀ सम्पन्न चक्रांकित
छोरा नाति लिएर लड्न अहिले ❀ आए यि हामीसित ॥४७०॥
हेर्दैनन् परदार-तर्फ कहिल्यै ❀ वृत्ती हुँदा सात्त्विक
यिन्का रैति प्रसन्न छन् नगरमा ❀ डुल्छन् बनी रक्षक ।
गाई ब्राह्मण देव-पूजक यिनी ❀ आनन्द मानीकन
सुन्छन् नित्य कथा-पुराण हरिका ❀ सद्धर्मको चिन्तन ॥४७१॥
मूर्च्छा पर्न गएर पुत्र यि स्वयं ❀ आए अगाडी सरी
आफ्ना वीर अनेक सैन्य रणमा ❀ डाक्नूहवस् यो घरि ।
मन्त्रीको सुनि ती कुरा मनमनै ❀ सोचेर शत्रुघ्नले
डाकी सैन्य प्रधान वीर रणमा ❀ आज्ञा दिए गर्वले ॥४७२॥
हे सेनापति ! वीर हो ! नरपती ❀ छन् जो सुबाहू यहाँ
तिन्का साथ लडाइँ गर्न रणमा ❀ को सक्तछौ छिन्महाँ ।
यस्ता बात सुनेर लक्ष्मिनिधि जो ❀ राजा प्रतापी थिए
तिन्ले लड्छु भनी स्वयं अघि सरी ❀ गर्जेर भन्दा भए ॥४७३॥
यस्ता बात सुनेर लक्ष्मिनिधिको ❀ शत्रुघ्न हर्षित् भए
तिन्का रक्षक-रूप चार बलवान् ❀ योद्धा खटाईदिए ।
तिन्मा पुष्कल नीलरत्न नृपती ❀ उग्राश्व योद्धा अनि
चौथा हुन् ति प्रताप श्रेष्ठ सबमा ❀ मान्थे यिनै हुन् भनी ॥४७४॥

योद्धा लक्ष्मिनिधी चढेर रथमा ❀ प्रस्थान गर्दा भए
तिन्का साथ हिंडे सबै सलह झैं ❀ सेनाहरू दौडिए।
ती लक्ष्मीनिधिले सुबाहु नृपको ❀ देखे जसै व्यूह त्यो
हेर्थे छक्क परेर केहि भयको ❀ संचार झैं देखियो ॥४७५॥
बाजा झट्ट बजाउनू समरको ❀ भन्ने सुनाईदिए
थाले बज्न मृदंग ढोल नगरा ❀ सेनाहरू तम्सिए।
त्यो चर्को स्वरले दिशा र पृथिवी ❀ 'आकाश ढाकीदियो
भागे काँतर, वीर-धीर सबमा ❀ उत्साह बढ्दै गयो ॥४७६॥
मैरै जीत हुनेछ निश्चय भनी ❀ इच्छा दुवै गर्दथे
गर्जेरै अरि-तर्फका सकलको ❀ उत्साह ती हर्दथे।
हात्तीका अनि अश्वका र रथका ❀ पांग्राहरूको ध्वनि
एकै-साथ भएर थर्कन गयो ❀ आकाश पृथ्वी पनि ॥४७७॥
लम्कीदै नगिचै दुवै तरफका ❀ सेना भए जम्जम
राखी बाण थरी-थरी धनुषमा ❀ हिड्दा भए सम्सम।
राजा एक थिए सुबाहु-तिरका ❀ योद्धा सुकेतू भनी
आए लड्न भनी अगाडि सँगमा ❀ सेना बटुल्दै तिनी ॥४७८॥
श्रीलक्ष्मीनिधिले सुकेतुकन ती ❀ देखे नगीचै जब
लागे गर्व गरेर भन्न सुनिल्यौ ❀ मैले भनेको अब।
हे लक्ष्मीनिधि ! नाम श्रीसुजनको ❀ छोरो प्रतापी म हुँ
तिम्रो नाश हुनेछ आज रणमा ❀ धेरै बढ़ी के कहुँ ॥४७९॥
जाऊ अश्व लिई छिटै शरणमा ❀ शत्रुघ्नजीको पर
गर्नेछन् खुशिले क्षमा शरणमा ❀ आयो भनी सादर।
मेरो बात नमानि युद्धतिर नै ❀ हे वीर लम्क्यौ भने
तिम्रो मृत्यु हुनेछ एक शरले ❀ मिल्दैन मौका रुने ॥४८०॥

तिन्को हाँक सुनी सुकेतु नृपले ❀ हेलाँ गरी बेसरी
टङ्कारे धनुको कठोर ध्वनिले ❀ सेना गएथे डरी ।
ढाकेथ्यो जब अन्धकार बलियो ❀ फैलेर चारैतिर
पाऱ्यो व्याकुल सैन्यलाइ दिनमै ❀ भो रात्रि झैं आखिर ॥४८१॥
श्रीलक्ष्मीनिधिले तुरुन्त शर नौ ❀ मन्त्रेर छाडीदिए
लागे बाण सुकेतुको हृदयमा ❀ क्यै बेर ती आत्तिए ।
बारम्बार गरी प्रहार यसरी ❀ योद्धा दुवै लड्दथे
धेरै सैन्यहरू चतुर्दिक उभी ❀ स्याबास हो भन्दथे ॥४८२॥
श्री लक्ष्मीनिधिले तिखा शर लिई ❀ जुन् चार छाडीदिए
तिन्ले सारथि अश्व औ रथ ध्वजा ❀ टुक्रा अनेकौं भए ।
हाम्फाली रथबाट झट्ट करमा ❀ ठूलो गदा पक्रिए
ती लक्ष्मीनिधिले पनी रथ त्यजी ❀ पक्री गदा गर्जिए ॥४८३॥
हानाहान गरे परस्पर गदा ❀ ताकेर मार्छू भनी
लागी चोट अनेक अंगभरिमा ❀ घाऊ भए तापनि ।
किञ्चित् कोहि डरेन ती स्थिर रहे ❀ यस्लाइ मार्छू भनी
तिन्को निर्णय क्यै भएन यसरी ❀ संग्राम गर्दा पनि ॥४८४॥
लड्दा यै रितले सुकेतु विरको ❀ धूलो भएथ्यो गदा
बाहूयुद्ध गरौँ भनी अघि सरे ❀ ती एकनासे हुँदा ।
खुट्टाले अनि मुड्किले घरि-घरी ❀ हान्थे पछारौँ भनी
दोटै वीर थिए समान बलका ❀ योद्धा प्रतापी पनि ॥४८५॥
हेर्थे अद्भुत युद्ध देवगणले ❀ सानन्द आकाशमा
कोही बोल्न सकेन वीर दुइको ❀ त्यो श्रेष्ठ संग्राममा ।
तिन्को हार भयो न जीत, त्यसरी ❀ संग्राम गर्दा पनि
स्याबासी सबले दिए खुशि भई ❀ हुन् श्रेष्ठ योद्धा भनी ॥४८६॥

आए पुत्र सुबाहुका अघि सरी ❀ चित्रांग योद्धा जब
हा-हा पारिदिए ति फौज-बिचमा ❀ शत्रुघ्नजीका सब ।
योद्धा पुष्कल लड्न तत्पर भए ❀ चित्रांगका साथमा
हानाहान गरे परस्पर निकै ❀ गर्जेर संग्राममा ॥४८७॥
छाडे सम्भ्रम बाण पुष्कलजिले ❀ ताकेर लाग्ने गरी
थाले फन्फनि घुम्न ती रथसहित् ❀ चित्रांगजी बेसरी ।
रोक्ने यत्न गरे तथापि नसकी ❀ घुम्दै रहे आखिर
केही बेर अडेर भूमितलमा ❀ पच्छारिएथे तर ॥४८८॥
साटो फेर्न भनेर सम्भ्रम लिए ❀ मन्त्रेर तीखो शर
हाने पुष्कललाइ लक्षित गरी ❀ लाग्यो गई आखिर ।
लाग्यो घुम्न विमान वाहन-सहित् ❀ आकाशमा फन्फनी
तिन्ले यत्न गरे अनेक विधिले ❀ यस्लाइ रोकौं भनी ॥४८९॥
निक्कै बेरपछी गिऱ्यो पृथिविमा ❀ पच्छारिए पुष्कल
केही बेर गरे विचार, पसिना ❀ आयो निकै खल्खल ।
हानेथे जब पाँच बाण रिसले ❀ चित्रांगलाई अनि
मारे अश्व र सारथी रथ ध्वजा ❀ जालास् कहाँ लौ भनी ॥४९०॥
अर्को नै रथमा चढी समरमा ❀ चित्रांग पुग्दा भए
हानेथे दश बाण, पुष्कल पनी ❀ लागेर त्यो आत्तिए ।
हाने पुष्कलले पनी शर तिखा ❀ छानेर धेरै जब
मूर्च्छा पर्न गई ढले पृथिविमा ❀ चित्रांग योद्धा तब ॥४९१॥
आयो चेत अनी उठेर रिसले ❀ नौ बाण छोडीदिए
त्यस्को चोट खपेर पुष्कल निकै ❀ संग्राममा गर्जिए ।
संझीदै रघुनाथलाइ मनले ❀ मार्ने इरादा गरी
हाने अग्नि-शिखा समान शरले ❀ मंत्रित् गरी राम्ररी ॥४९२॥

रोक्ने यत्न गरे अनेक बिचमै ❀ चित्रांगजीले तर
तीखा बाण दुवै परस्पर जुझे ❀ आकाशमा आखिर ।
हेर्थे छक्क परी बसेर रथमा ❀ गन्धर्व विद्याधर
सारा देवहरू तथा अरु पनी ❀ जो-जो थिए लश्कर ॥४९३॥
श्रीचित्रांगदले ति पुष्कलजिको ❀ टुक्रा तुल्याए शर
त्यो आधा शरले गई गिडिदियो ❀ चित्रांगजीको शिर ।
मुर्दा देह ढल्यो जसै पृथिविमा ❀ हा-हा गरांईदियो
बाँचेका जति सैन्य हुन् सकल ती ❀ तत्काल भागीगयो ॥४९४॥

चित्रांगको मरण त्यो रणभूमिमाहाँ
सुन्दा भए जब सुबाहु पुगेर ताहाँ ।
आँसू बगाइ ति विलाप गरेर रुन्थे
'बाबू ! गयौ तिमि कता !' यहि बात भन्थे ॥४९५॥
गर्थे पिता बसि विलाप जहाँ अघोर
आईपुगे दमनजी त्यहिँ उत्तिखेर ।
बिन्ती गरे किन पिता ! अब शोक गर्ने ?
हो देह नश्वर कुनै दिन मर्नुपर्ने ॥४९६॥
भाई रहेछ अति उत्तम भाग्यमानी
त्यागीदियो समरमा तन क्यै नमानी ।
यौटै कुरा सकल शास्त्र पुराण भन्छन्
संग्राममा तन त्यजी सुरलोक पुग्छन् ॥४९७॥
लड्छन् दुवै थरि म जित्छु स्वयं भनेर
भन्दैन कोहि पनि हार्छु भनी लडेर ।
चल्दै रहन्छ रणको क्रम हार-जीत
यस्मा दुखाउनु वृथा छ म भन्छु चित्त ॥४९८॥

संग्राममा विजय के गरि मिल्छ भन्ने
आईपऱ्यो बखत चिन्तन खूब गर्ने।
साटो म फेर्दछु अवश्य ति शत्रु मारी
छाड्दीनँ यै समरमा नगरी तयारी ॥४९९॥
उत्साहको यति कुरा सुतको सुनेर
खूशी भए नृपति चिन्तनमा डुबेर।
जम्मा गरी थरि-थरी बलवान वीर
सेना सुसज्जित गरे बनि खूब धीर ॥५००॥
संग्रामतर्फ नृपको रथ बढ्न थाल्यो
सेना पनी उदधि झैँ सब उर्लिहाल्यो।
घोडा सवार-सित अश्व-सवार लड्थे
हात्ती सवार-सित हात्ति-सवार भिड्थे ॥५०१॥
योद्धा रथीसित भिडे रथमा सवार
लड्थे पदाति सब पैदल श्रेष्ठ वीर।
जोडी मिलाइ रणमा सब लड्न थाले
हो धर्म-युद्ध यहि नै सब भन्न लागे ॥५०२॥
जोडी मिलाइ ति परस्पर युद्ध गर्थे
आकाशमा सुरहरू बसि खूब हेर्थे।
योद्धा सुबाहु रणमा बहुतै रिसाई
गर्जे लिएर करमा निज शस्त्रलाई ॥५०३॥
मारे सुपुत्र भनि ईख थियो मनैमा
शत्रुघ्नको नगिच पुग्न गए छिनैमा।
उन्का सुरक्षक थिए हनुमान ताहाँ
तोड्छू म दर्प नृपको रणभूमिमाहाँ ॥५०४॥

गर्जे कठोर ध्वनिले हनुमान वीर
थर्क्यो जमीन सब सैन्य भए अधीर।
राता थिए नयन क्रोध बढेर धेर
पौंचे सुबाहु नृपको नगिचै डटेर ॥५०५॥
ठाडो तुल्याइ निज-पुच्छर लट्ठि जस्तो
देखे खडा विकट रूप विचित्र त्यस्तो।
आइस् तँ वानर यहाँ किन प्राण त्याग्न
भागी बचा अब तँ निश्चय आफ्नु ज्यान ॥५०६॥
मेरो सुपुत्रकन मारिदिने छ काहाँ
त्यस्को बता मकन नाम र धाम याहाँ।
हो राम को ? डर म मान्दिनँ केहि उस्को
*के मान्दथें भय म यी भुसुनाहरूको ॥५०७॥*

आएँ काल-स्वरूप यो समरमा ❀ संहार गर्छू अब
कोही शेष रहन्न आज भुसुना ❀ झैं मारिइन्छन् सब।
शेखी-युक्त कुरा सुबाहु नृपको ❀ यस्तो सुनेथे जब
लागे भन्न बुझाइ वीर हनुमान् ❀ जे सत्य हो त्यै सब ॥५०८॥
राजा होस्, तर भन्छु मूर्ख अरु को ❀ होला तिनै लोकमा
तैंले झैँ रघुनाथको गरिलिने ❀ निन्दा अति व्यर्थमा।
भाई हुन् प्रभु रामका ति यहिँ छन् ❀ शत्रुघ्नजी नाम हो
यस्ता हुन् भनि क्यै नजानि तिमि झैं ❀ निन्दा कहाँ गर्छ को? ॥५०९॥
साक्षात् राम अनन्त ईश्वर भनी ❀ कीर्ती सबै गाउँछन्
हुन्छन् जीवनमा सुखी कति मरी ❀ वैकुण्ठ भेट्टाउँछन्।
त्यस्ता ईश्वरको नजानि महिमा ❀ होच्याइ बोल्छस् किन ?
उन्को नाम जपी अनेक भवका ❀ पापी तरे दुर्जन ॥५१०॥

मै हूँ सेवक रामको र बलवान् ❀ शत्रुघ्नजीको पनि
मैले जित्छु तँलाइ यै सगरमा ❀ के काम आउन् उनी ।
जस्ले सिन्धु तरेर वंश-सहितै ❀ मारीदिए रावण
त्यस्ताको भय छैन भन्नु यसरी ❀ हो मूर्खता दुर्गुण ॥५११॥

सुनी यस्ता तीखा वचन हनुमान्‌का नृपतिले
रिसाई हानेथे शर दश तिखा तीव्र बलले ।
समाई भाँचेथे पवन-सुतले ती शरहरू
अनी गर्जे चर्को स्वर गरि उतर्से जनहरू ॥५१२॥

अनी बेह्रे राजा रथसहित लामू पुछरले
छिटै फ्याँके माथी गगन-बिच घुम्दै नृपतिले ।
डराई हानेथे शर जब तिखा त्यै पुछरमा
घुमाई छाडेथे अनि नृपति आए पृथिविमा ॥५१३॥

रिसाई राजाले पवन-सुतलाई शर जति
जती हान्थे पक्री शर विफल पार्थे उति-उति ।
गई लाग्यो यौटा शर जब तिखो घाउ गरने
अनी हाने लात्ती पवन-सुतले तेज हरने ॥५१४॥

लागेथ्यो हनुमानको अति कडा ❀ लात्ती सुबाहूकन
मूर्च्छा पर्न गई ढले पृथिविमा ❀ तत्काल ती सज्जन ।
भागे सैन्य सबै डराइ नृपका ❀ आफ्नू लिई जीवन
लोटे सैन्य अनेक भाग्न नसकी ❀ घोप्टेर थाले रुन ॥५१५॥

त्यै वेला सहसा पुगे दमनजी ❀ रक्षार्थ ती सैन्यको
फर्केनन् तर क्वै पनी समरमा ❀ सातो गयो वीरको ।
मूर्च्छामै सपना सुबाहु नृपले ❀ देखे विचित्रै अनि
थाले गर्न विचार ती मनमनै ❀ यो के भएको भनी ॥५१६॥

यस्तै तर्कहरू गरी समरको ❀ सारा कुरा बिर्सिए
धेरै सैन्यहरू लिएर सँगमा ❀ प्रस्थान गर्दा भए ।
श्रीशुत्रुघ्नकहाँ पुगी चरणमा ❀ ढोगीदिए सादर
बारम्बार भने विनम्र स्वरमा ❀ माफी दिनोस् ईश्वर ॥५१७॥
सामुन्ने गइ भाइको दमनको ❀ भन्दा भए यो कुरा
मैले बल्ल चिन्हेँ उनै रघुपती ❀ श्रीराम भन्ने पुरा ।
यी शत्रुघ्न पनी उनै प्रभुजिका ❀ भाई हुनाले गरी
उस्तै ईश्वर हुन् म पर्छु पदमा ❀ गर्नोस् क्षमा हे हरि ॥५१८॥
ल्याओ अश्व छिटै विलम्ब नगरी ❀ जिम्मा लगाऊँ अनि
ल्याओ झट्ट असंख्य सम्पति पनी ❀ कर्तव्य आफ्नू भनी ।
यो आज्ञा सुनि ती सुबाहु नृपको ❀ छोरा र भाई गई
पारे ठिक्क सबै सिंगारि पुरमा ❀ आफै उपस्थित् भई ॥५१९॥
दासी-दास प्रशस्त सम्पति लिई ❀ सेनाहरू साथमा
जाऊँ लौ रघुनाथको हय लिई ❀ शत्रुघ्नको पासमा ।
हो घोडा हयमेधको फल दिने ❀ राम्रो, त्यसै कारण
यस्को हामि गरौँ सबै जन मिली ❀ राम्रो गरी पूजन ॥५२०॥
बत्ती धूप गरी, छरी अबिर झन् ❀ बाटोभरी उत्सव
ल्याए अश्व समाति सैन्य-दलले ❀ जैकार गर्दै तब ।
रोकी युद्ध तुरुन्त सम्पति लिई ❀ घोडा डुर्‍याईकन
श्रीशत्रुघ्नकहाँ पुगे नरपती ❀ हर्षित् भएथ्यो मन ॥५२१॥
राखे पाउमहाँ लगे-जति सबै ❀ सम्पत्ति भूपालले
ढोगी 'माफ दिनोस् गरे जति सबै ❀ उत्पातको नाथले'।
छोरो बालक नै छ जान्न नसकी ❀ मैले गरें युद्ध जो
त्यस्को निम्ति क्षमा म माग्दछु परी ❀ पाऊविषे हे प्रभो ! ॥५२२॥

पैह्ले श्राप हुँदा अनादर गरें ❀ हो श्रापकै दोष त्यो
बारम्बार प्रणाम गर्छु पदमा ❀ पाऊँ क्षमा हे विभो ।
मान्छू धन्य म धन्य-धन्य हनुमान् ❀ हानीदिया लात जो
पाएँ मुक्ति र श्रापबाट प्रभुको ❀ त्यो सम्झना फर्कियो ॥५२३॥
साह्रै व्याकुल छू म यो बखतमा ❀ श्रीरामको दर्शन
कैह्ले मिल्छ मलाइ चिन्तन पनी ❀ गर्छू म यै छिन्-छिन ।
बिन्ती पाउ परी झुकी चरणमा ❀ लत्रे सुबाहू जब
गर्नूभो खुशिले क्षमा, जति भयो ❀ शत्रुघ्नले त्यो सब ॥५२४॥
पायौं श्राप र ज्ञान प्राप्त हुनको ❀ त्यै मुख्य हो कारण
लैजाऊ तिमि बाँड्नु दीन-जनमा ❀ ल्याए-जती यो धन ।
छोरालाइ दिएर राज्य सब यो ❀ शंका नमानीकन
जाऊँ उत्तम अश्व-रक्षक बनी ❀ हामी सँगै सज्जन ! ॥५२५॥
त्यो स्वीकार गरे सुबाहु नृपले ❀ जान्छू म साथै भनी
सम्झीदै रघुनाथलाइ मनले ❀ आफू तपस्वी बनी ।
सारा सैन्यहरू हिडे हय-सँगै ❀ पूरा तयारी गरी
हात्तीमा रथमा र अश्वहरुमा ❀ हिड्दा भए त्यै घरि ॥५२६॥
घोडा जान्छ जता, जतातिर उतै ❀ जानू सबै रक्षक
बाधा पर्न दिनू हुँदैन पथमा ❀ साना र ठूलातक ।
घोडा उत्तम अश्वमेध मखको ❀ बढ्दै अगाडी गयो
त्यस्को रक्षक रूपमा थरि-थरी ❀ सेना पनी लम्कियो ॥५२७॥
जो-जो देश परे नरेश-बिचमा ❀ न्यूरेर पाऊ परी
रक्षा गर्नुहवस् भनी शरणमा ❀ पर्थे झुकी त्यै घरि ।
राखे सम्पति ल्याइ भूपहरुले ❀ शत्रुघ्नजीले पनि
फिर्ता त्यो सब गर्दथें, धन लगी ❀ बाँड्नू दुखीमा भनी ॥५२८॥

डुल्दै अश्व पुग्यो र तेजपुरमा ❀ देखी त्यहाँ वैभव
हेर्थे छक्क परी सबै वरिपरी ❀ आश्चर्य मान्थे सब ।
सोधे झट्ट सुमन्त्रलाइ नगिचै ❀ डाकेर शत्रुघ्नले
को हो रक्षक यो सुरम्य पुरिको ❀ एकेक विस्तारले ॥५२९॥
इच्छा गर्दछु जान्न यो विषयमा ❀ देख्छू पुरी सुन्दर
डुल्दै छन् पुरमा अनेक सुमुखी ❀ सानन्द चारैतिर ।
गर्छन् प्रश्न सुनी सुमन्त्र पुरको ❀ विस्तारले वर्णन
बस्छन् धार्मिक सत्यवान कहिने ❀ राजा यहाँ सज्जन ॥५३०॥
गर्छन् पालन धर्मको सब प्रजा ❀ क्वै छैन दुःखी जन
दिन्छन् ती सब धर्म पालन गरी ❀ श्रीराममा नै मन ।
यिन्का योग्य पिता ऋतम्भर थिए ❀ गौको गरी चाकरी
पाए पुत्र यि सत्यवान उनिले ❀ हर्षित् थिए बेसरी ॥५३१॥
मन्त्रीको सुनि बात छक्क परि यो ❀ सोधे ति शत्रुघ्नले
पाए के गरि गाइको टहलले ❀ यी पुत्र ती भूपले ।
मन्त्रीले सुनि प्रश्न त्यो खुशि भई ❀ बोले बुझाईकन
निःसन्तान थिए ऋतम्भर, निकै ❀ दुःखी त्यसै कारण ॥५३२॥
जाबाली सहसा कुनै दिन पुगे ❀ तिन्लाइ भेट्नाकन
तिन्को दुःख बुझी भने-सुत हुने ❀ युक्ती म भन्छू सुन ।
श्री गोविन्द र शम्भुको सुरभिको ❀ गर्नू र आराधना
होला पुत्र गुणी अवश्य नृपते ! ❀ पुग्ला सबै कामना ॥५३३॥
गाईको सरि छैन चाकरि कुनै ❀ अर्को विचारीलिनू
त्यस्को भन्छु विधान-दान जनमा ❀ दुःखीहरूमा दिनू ।
होला पुत्र अवश्य केहि दिनमै ❀ विश्वास मेरो गर
गर्ला त्यो सुतले सदा हित हुने ❀ सत्कार्य चारैतिर ॥५३४॥

जस्ले गर्दछ चाकरी सुरभिको ❀ श्रद्धा बढाईकन
दिन्छन् अशिष पितृ, देवगणले ❀ त्यस्लाइ छोरो, धन ।
गाई हुन् सबमा पवित्र बुझिल्यौ ❀ कल्याण गर्ने पनि
मान्छन् उत्तम पंचगव्य जनले ❀ हो शुद्ध पार्ने भनी ॥५३५॥
गाई भोक र प्यासले दुख दिई ❀ जो राख्दछन् दुर्जन
कन्या राख्नु रजोवतीकन घरै ❀ हो पाप लाग्ने सुन ।
चर्ने गाइ धपाउने छ जन जो ❀ पर्नेछ त्यो नर्कमा
जस्ले कुट्दछ गाइलाइ जन त्यो ❀ पर्नेछ आपत्तिमा ॥५३६॥
यस्तै अर्तिहरू दिएर कुटिमा ❀ जाबालि फर्कीगए
गाईको दिनहूँ ऋतम्भर स्वयं ❀ सेवाविषे तम्सिए ।
गाई नित्य चराउँथे वन लगी ❀ गर्थे स्वयं चाकरी
आयो बाघ र गाइलाइ वनमै ❀ मारीदियो त्यै घरि ॥५३७॥
गोहत्या हुनगो भनेर मनमा ❀ चिन्ता परी बेसरी
लाग्यो पाप ठुलो; हुनेछ कसरी ❀ निस्तार मेरो हरि ।
यस्तै तर्क गरी ऋतम्भर पुगे ❀ जाबालिको पासमा
जोरी हात भने विनम्र स्वरमा ❀ तिन्को परी पाउमा ॥५३८॥
गाई मारिदियो लखेटि वनमा ❀ हे नाथ ! त्यो बाघले
लाग्यो पाप मलाइ, मुक्त कसरी ❀ हुन्छू म कुन् युक्तिले ।
यस्को युक्ति कुनै बताउनुहवस् ❀ यस्‌बाट मुक्ती हुने
गर्छू धर्म भनेर पार हुनको ❀ यो कार्यले हे मुने ॥५३९॥
यस्ता बात सुनेर चिन्तित भए ❀ जाबालि ज्ञानी मुनि
लागे भन्न उपाय भन्दछु म जो ❀ सुन्नूहवस् त्यो पनि ।
गर्नूपर्दछ गाइ-दान दिनहूँ ❀ एकेक नित्यै अनि
पूरा वर्ष हुनेछ एक नृपते ! ❀ श्रीराम जै-जै भनी ॥५४०॥

गर्नू पूजन रामको भइ कृपा ❀ होला अवश्यै सुत
त्यस्ले पूर्ण हुनन् मनोरथ सबै ❀ गर्ला अनेकौं हित ।
शिक्षा माफिक रामका चरणमा ❀ तिन्ले लगाए मन
जन्म्यो पुत्र अनी ऋतम्भर भए ❀ साह्रै खुशी मन्मन ॥५४१॥
डाकी ब्राह्मण विज्ञ ज्योतिषिहरू ❀ संस्कार गर्दा भए
राखे नाम त सत्यवान् दिन-दिनै ❀ बिस्तारि बढ्दै गए ।
सुम्पी राज्य गए ऋतम्भर स्वयं ❀ गर्छू तपस्या 'भनी
गर्छन् राज्य ति सत्यवान अहिले ❀ छन् ती विवेकी पनि ॥५४२॥
घोडा हो रघुनाथको खबर यो ❀ पाए भने सादर
गर्नन् दर्शन आइ सम्पति-सहित् ❀ आफै भई तत्पर ।
चर्चा यै रितका अनेक थरिका ❀ चल्दै थिए जो यता
आयो अश्व यहीँ भनेर चरले ❀ सम्चार ल्याए उता ॥५४३॥
त्यो सम्चार सुनेर दूतहरुको ❀ श्री सत्यवान्ले जब
गर्छू दर्शन लौ भनेर बहुतै ❀ ल्याए त्यहाँ वैभव ।
ढोगे नम्र भई प्रसन्न मनले ❀ शत्रुघ्नका पाउमा
राखी वैभव त्यो समर्पण गरे ❀ आनन्दका साथमा ॥५४४॥
देखी उत्तम भावना नृपतिको ❀ शत्रुघ्नजीले पनि
फिर्ता गर्नुभयो मलाइ धन क्यै ❀ चाहिन्न ऐह्ले भनी ।
छोरा रुक्म थिए तिनैकन दिए ❀ त्यो राज्यको शासन
रैती राजि गरी बसे उनि त्यहीँ ❀ पाएर सिंहासन ॥५४५॥










# विद्युत्माली र उग्रदंष्ट्र आदिको आख्यान



घोडा पूर्वतिरै हिड्यो खुरु-खुरू ❀ श्रीरामजीको अनि
श्री शत्रुघ्न र सत्यवान् पनि हिंडे ❀ जाऊँ सँगै लौ भनी ।
डुल्दै अश्व पुग्यो समुद्र-तटमा ❀ सानन्द कोही दिन
पक्री विद्युतमालिले हय लग्यो ❀ थाहै नपाईकन ।।५४६।।
मारे रावण रामले समरमा ❀ पैह्ले त्यसै कारण
उस्कै वंश हुँदा म लिन्छु बदला ❀ भन्थ्यो सदा दुर्जन ।
सोही कारणले लग्यो हय हरी ❀ दागा धरी दुष्टले
पारेथ्यो अनि अन्धकार दिनमै ❀ क्वै मन्त्रको जोरले ।।५४७।।
घोडा त्यो खलले जसै हरिलियो ❀ हा-हा पऱ्यो सैन्यमा
लागे खोज्न सबै मिली वरिपरी ❀ सैन्यादिका साथमा ।
आँधी बन्द भयो, दिशा सब खुले ❀ आकाश भो निर्मल
देखे एक विमानमा चहकिलो ❀ घोडा-सहित् त्यो खल ।।५४८।।
घोडा दानवले लग्यो खबर यो ❀ सुन्दा भएथे जब
निक्कै क्रोध गरी भने सुमतिले ❀ को हो ठुलो दानव ।
यस्का साथ लडाइँ गर्नु कसरी ❀ पर्नेछ कुन् युक्तिले
त्यस्तो प्रश्न सुनी भने सुमतिले ❀ एकेक विस्तारले ।।५४९।।
हो त्यो रावण वंशको, छ बलवान् ❀ निक्कै प्रतापी पनि
यस्का साथ लडुन् प्रशस्त बलिया ❀ योद्धाहरूले भनी ।
यस्तो प्रश्न सुनी प्रसन्न मनले ❀ सोधे ति शत्रुघ्नले
यस्का साथ लडाइँ गर्न रणमा ❀ सक्नेछ कुन् वीरले ।।५५०।।

योद्धा पुष्कल आदि वीरहरुले ❀ मेरा अगाडी भनून्
सारा शस्त्र र बुद्धिले र बलले ❀ मार्ने प्रतिज्ञा गरून् ।
यस्ता बात सुनेर पुष्कल पुगे ❀ शत्रुघ्नका सामुमा
मैले मार्दछु दैत्य दानव सबै ❀ हे नाथ ! संग्राममा ॥५५१॥
हे राजागण हो ! र वीरहरुहो ! ❀ मेरो प्रतिज्ञा सुन
मार्नेछू सब दैत्य दानवहरू ❀ एकेक छानीकन ।
मेरो एक सहाय छन् रघुपती ❀ भर्मा उनैंका परी
मैले जित्न सकीनँ क्यै गरि भने ❀ भन्छू प्रतिज्ञा गरी ॥५५२॥
सक्छू सोस्न म सिन्धु त्यो प्रलयको ❀ उर्लीरहेको पनि
ठूलो के छ कुरा यि दानवहरू ❀ मार्छू खिलाँची भनी ।
सीताको रघुनाथको यदि कृपा ❀ निर्भीक पाएँ भने
केही छैन असाध्य, साध्य सब छन् ❀ आनन्द वर्षाउने ॥५५३॥
पूरा गर्न सकीनँ यो प्रण भने ❀ फेरी म भन्छू सुन
गाई पाल्दछ दूध-प्यून कइली ❀ त्यै हो ठुलो दुर्जन ।
रक्सी केवल सुँघ्छ मात्र जन जो ❀ त्यो पर्छ गै नर्कमा
रक्सी प्यूँदछ विप्र भैकन भने ❀ जाकिन्छ वैतर्णिमा ॥५५४॥
रक्सी केवल छुन्छ मात्र जन जो ❀ त्यो पर्छ सन्तापमा
मैले पूर्ण गरीनँ त्यो प्रण भने ❀ पर्नेछु त्यै नर्कमा ।
यस्ता बात सुनी सबै खुशि भए ❀ पुष्पादि वर्षा गरे
श्री शत्रुघ्नजिले स्वयं उठि त्यहाँ ❀ यस्तो प्रतिज्ञा गरे ॥५५५॥
पापी दानवको विमान टुकुरा ❀ पारी खसाल्छू अनि
घाँटी काट्न सकीनँ क्यै गरि भने ❀ बस्नेछु दोषी बनी ।
बक्नू साक्षि झुठो र चोर्नु, द्विजको ❀ निन्दा गरी पाप जो
त्यो भोग्नेछु, लडाइँमा प्रण झुठा ❀ क्यै हेतु मेरो भयो ॥५५६॥

बोले वीरहरू मिलीकन सबै ❀ स्यावास शत्रुघ्न हुन्
यी झैँ वीर कुनै ठुलो पृथिविमा ❀ खोजेर पाइन्छ कुन् ।
यस्तै ती सब वीरले गरिसके ❀ आफ्नू प्रतिज्ञा जब
आफाफ्ना लिइ अस्त्र उत्तम पुगे ❀ संग्राममा ती सब ॥५५७॥
विद्युत्मालि जता थियो सब उतै ❀ सेनाहरू लम्किए
देख्तै सैन्य विशाल दानवहरू ❀ झन् क्रोधले रन्किए ।
लागे गर्जन मेघ झैँ समरमा ❀ हेलाँ गरी बेसरी
हेर्थे छक्क परी ढ्वरीपरि घुमी ❀ सेना मनैमा डरी ॥५५८॥
योद्धा हो ! नगिचै नआउ रणमा ❀ फर्केर जाओ घर
घोडा खोज्नु वृथा छ, दिन्छु म कहाँ ❀ व्यर्थै हुनू तत्पर ।
मार्ने रावण मित्रलाइ, सुनकी ❀ लंका जलाईदिने
बाँधी साँघु समुद्रको तटमहाँ ❀ सेना लिई उत्रले ॥५५९॥
ऐल्हे राम कहाँ छ ? भाइ छ कहाँ ❀ शत्रुघ्न योद्धा पनि
मारी ती दुइ भाइलाइ अऋणी ❀ हुन्छू सखाको भनी ।
त्यस्को पुष्कलले सुने सब कुरा ❀ शेखी गरेको जब
बोले-व्यर्थ प्रलाप गर्नु रणमा ❀ हो मूर्खता दानव ॥५६०॥
मारे रावणलाइ साँघु बलियो ❀ हालेर जुन् रामले
उन्कै अश्व हरिस्, तँलाइ सहजै ❀ पक्रीलियो कालले ।
यस्ता बात सुनेर पुष्कलजिको ❀ क्रोधित् भई दानव
भाला एक ठुलो लिएर करमा ❀ हानीदिएथ्यो तब ॥५६१॥
पक्री पुष्कलले, बनाइ टुकुरा ❀ फालीदिए भूमिमा
भाला व्यर्थ गयो भनी हुन गयो ❀ सन्ताप क्यै चित्तमा ।
हान्यो एक त्रिशूल अग्नि-सरिको ❀ गर्ज्यो निकै वेगले
काटे झट्ट त्रिशूल पुष्कलजिले ❀ हेलाँ गरी बाणले ॥५६२॥

हाने बाण तिखा चढाइ धनुमा ❀ ताकेर छातीतिर
लागी त्यो शर वेगले हृदयमा ❀ घोप्टो परेथ्यो तर।
फक्र्यो चेत छिटै र मुद्गर लिई ❀ हान्यो रिसाईकन
मूर्च्छा पुष्कलजी परे खल निकै ❀ थाल्दो भयो गर्जन ।।५६३।।
हाहाकार परेर सैन्य-दलमा ❀ क्वै भाग्न लागे जब
आए लक्ष्मिनिधी भनेर मुखले ❀ आएँ म हे दानव ।
आयो राक्षस उग्रदंष्ट्र सहसा ❀ गर्जेर संग्राममा
श्रीलक्ष्मीनिधिको त्यसैसित पर्‍यो ❀ दोटै डटे सामुमा ।।५६४।।
मारामार पर्‍यो परस्पर ठुलो ❀ संग्राम झन् मच्चियो
दोटै वीर हुँदा समान बलका ❀ जोडी मिलेकै थियो ।
आयो चेत र वीर पुष्कल उठे ❀ देखी त्यहीँ दानव
बोले-खूब गरिस् पराक्रम यहाँ ❀ क्यै बेर पर्खी अब ।।५६५।।
येती बात भनी, झिकी शर तिखो ❀ ताकेर छातीमहाँ
हाने अग्निशिखा-समान शरले ❀ तत्काल लाग्यो त्यहाँ ।
रोक्ने यत्न गर्‍यो अनेक नसकी ❀ लाचार भो दानव
लाग्यो बाण गई जसै हृदयमा ❀ मूर्च्छा परेथ्यो तब ।।५६६।।
हा-हाकार पर्‍यो र सैनिक सबै ❀ भागे लिई जीवन
पौँचाए रथले छिटै शिबिरमा ❀ विद्यूतमालीकन ।
आयो दानव उग्रदंष्ट्र रणमा ❀ आफै अगाडी सरी
लाग्यो भन्न कराइ उच्च स्वरले ❀ दाह्रा किटी बेसरी ।।५६७।।
दाजूलाइ जितेँ भनी समरमा ❀ होला वृथा गम्कनु
साटो फेर्छु छिटै म यै समरमा ❀ भन्ने नबिर्सीदिनु ।
त्यस्का बात सुनेर केहि नभनी ❀ ताकेर तीखा शर
छोडे पुष्कलले, समाइ खलले ❀ भाँचीदियो आखिर ।।५६८।।

हाने वज्रसरी कठोर मुठिले ❀ लाग्यो जसै छातिमा
त्यस्को चोट खपी त्रिशूल खलले ❀ पक्रीलियो हातमा ।
हान्यो पुष्कलको गई हृदयमा ❀ लाग्यो निकै वेगले
मूर्च्छा पर्न गई ढले पृथिविमा ❀ तत्काल त्यो चोटले ।।५६९।।
आएथे हनुमान त्यै बखतमा ❀ देखेर युद्धस्थिति
पापी दानव ! छू यहीँ म अहिले ❀ शेखी तँ गर्छस् कति ।
तेरो यो अभिमान तोड्दछु छिटै ❀ छाड्दीनँ मैले अब
यस्ता बात भनी उडेर नभमा ❀ जाँदा भएथे तब ।।५७०।।
इच्छाचारि विमान पक्रि बलले ❀ तान्दै गए; दानव
पच्छारी कतिलाइ भूमितलमा ❀ मार्दै गएथे सब ।
नंग्राले कति दाँतले पुछरले ❀ लात्ती तथा बाहुले
मारे दानव सैन्यलाइ भुसुना ❀ झैँ ती हनूमानले ।।५७१।।
मुड्कीले कतिलाइ हानि बलले ❀ मार्दै गएथे जब
भागेथे डरले कती समरको ❀ इच्छा त्यजी दानव ।
पारे शून्य सबै रणास्थलविषे ❀ देखिन्नथे क्वै पनि
स्याबासी सबले दिए कपिपती ❀ हुन् श्रेष्ठ योद्धा भनी ।।५७२।।
त्यै वेला नभमा विमान सहसा ❀ देखा पर्‍यो सुन्दर
पक्री श्रीहनुमानले सहजमा ❀ फ्याँकीदिए तल्तिर ।
आएथ्यो तल त्यो विमान नभमा ❀ फर्केर फेरी गयो
उफ्रेथे हनुमान फेरि बलले ❀ उत्पात अर्कै भयो ।।५७३।।
चिच्च्यायो अनि उग्रदंष्ट्र रिसले ❀ पर्खी तँ हे वानर !
मारिस् दानव-सैन्य व्यर्थ, रणमा ❀ फेला परिस् आखिर ।
भागी जा रणबाट जीवन लिई ❀ बाँच्ने इरादा भए
त्यस्का बात सुनेर केहि नभनी ❀ चर्को गरी गर्जिए ।।५७४।।

हान्यो झट्ट लिई त्रिशूल खलले ❀ ताकी निकै वेगले
टुक्रा पारिदिए समाइ सहजै ❀ योद्धा हनूमानले ।
अस्त-व्यस्त भएर एकक्षण त्यो ❀ चिन्ता परी झोक्रियो
माया-जाल फिज्यो तुरुन्त रणमा ❀ सारा अँध्यारो भयो ॥५७५॥
हा-हाकार पऱ्यो कतैतिर कहीँ ❀ देखिन्नथ्यो क्यै पनि
आयो दुःस्थिति त्यो नचिह्न सकिने ❀ आफ्नू बिरानो भनी ।
थाले दौडन अन्धकार बिचमै ❀ सेना यता वा उता
लड्थे कोहि डटी, हिडे कति उसै ❀ भागी कता हो कता ॥५७६॥
हान्थे झट्ट तिखा अनेक शरले ❀ शत्रुघ्नलाई जब
धारा बग्न गयो निकै रगतको ❀ आश्चर्य मान्थे सब ।
वायव्यास्त्र गरे प्रहार सहसा ❀ शत्रुघ्न क्रोधित् भई
थाल्यो चल्न हुरी परेर भुमरी ❀ भागे कती आत्तिई ॥५७७॥
छाड्यो पाशुपतास्त्र शीघ्र खलले ❀ हा-हा पऱ्यो युद्धमा
थाले गर्जन दैत्य दानव जती ❀ आफ्नू ठुलो जीतमा ।
देखी अद्भुत शक्ति घोर रणमा ❀ गर्जेर शत्रुघ्नले
त्यो नारायण अस्त्र छाडिदिनुभो ❀ अत्यन्त उत्साहले ॥५७८॥
सारा नाश भए र दानवहरू ❀ आकाश भो उज्ज्वल
हान्यो विद्युतमालिले शरहरू ❀ देखाइ ठूलो बल ।
काटे त्यो शर-जाल एक क्षणमै ❀ शत्रुघ्नजीले अनि
हानेथे अनि अर्धचन्द्र शरले ❀ लौ पार हो जा भनी ॥५७९॥
घाँटी काटिदियो गएर शरले ❀ विद्यूतमाली मऱ्यो
भागे दैत्य हरू बचेजति सबै ❀ चौतर्फ हा-हा पऱ्यो ।
दाजू मारिदिए भनेर रिसले ❀ आयो अगाडी जब
मारे त्यो खल उग्रदंष्ट्र रणमा ❀ मुर्दा भयो दानव ॥५८०॥

त्यस्का सैनिकले बुझाइ हय त्यो ❀ भागे लिई जीवन
थाले हर्ष बढाइँ गर्न जनले ❀ आनन्द मानीकन ।
बज्थे ढोल मृदंग आदि नगरा ❀ चौतर्फ शंख-ध्वनि
गर्थे विप्रहरू बसी वरिपरी ❀ सानन्द वेद-ध्वनि ॥५८१॥
माला पुष्प अबीर देवगणले ❀ पानी परेझैं छरे
ज्ञानी विज्ञ मुनी ऋषीश्वर मिली ❀ जैकार ठूलो गरे ।
त्राहि-त्राहि भनी सदा सुरहरू ❀ भाग्थे डराईकन
त्यस्ता दानवलाइ मारिदिनुभो ❀ खूशी छ हाम्रो मन ॥५८२॥

# आरण्यक ऋषि र रामायणको संक्षिप्त वर्णन

साह्रै उत्तम श्यामकर्ण हय त्यो ❀ छोडीदिएथे जब
लाग्यो उत्तरतर्फ अश्व सहसा ❀ लागे पछाडी सब ।
डुल्दै अश्व पुग्यो कुनै दिन जसै ❀ रेवा-नदी-तीरमा
गर्थे उत्तम अग्निहोत्र र धुवाँ ❀ उड्थ्यो र आकाशमा ॥५८३॥
रेवाको जल स्वच्छले र कुटिका ❀ ती श्रेष्ठ सौन्दर्यले
पार्थे मोहित पुष्पले र रुखमा ❀ बस्ने चरा पक्षिले ।
देखी उत्तम त्यो सरोवर उहाँ ❀ शत्रुघ्न खूशी भए
मन्त्रीलाइ नगीच डाकि मनको ❀ इच्छा बताई-दिए ॥५८४॥
देख्छू वृक्ष यहाँ अनेक थरि छन् ❀ उद्यान राम्रो वन
कस्को हो अनि बस्छ को ? सब कुरा ❀ सुन्छू मलाई भन ।
यस्तो प्रश्न सुमन्त्रले जब सुने ❀ अत्यन्त हर्षित् भए
श्री शत्रुघ्नजिलाइ त्यो विषयमा ❀ एकेक भन्दै गए ॥५८५॥

साह्रै उत्तम धर्म-मूर्ति ऋषि छन् ❀ हो नाम आरण्यक
गर्छन् भक्ति यि रामका चरणको ❀ छन् धर्मका रक्षक ।
यिन्को दर्शन मात्रले हृदयको ❀ दुर्भावना नाश्तछ
हुन् यी उत्तम भक्त राम प्रभुमा ❀ अत्यन्त विश्वास छ ॥५८६॥
नित्यै छन् यि निमग्न राम-रसमा ❀ सर्वज्ञ ज्ञानी मुनि
हाम्रा पाप हुनन् सखाप सहजै ❀ दर्शन् गरे तापनि ।
मन्त्रीको सुनि बात हर्षित हुँदै ❀ बोले ति शत्रुघ्नजी
जाऊँ लौ हनुमान पुष्कल सुमद् ❀ योद्धा प्रतापाग्न्यजी ॥५८७॥
राजा लाक्ष्मिनिधी सुबाहु सुमती ❀ आठौँ ति शत्रुघ्नजी
बाटोमा सबले गरे थरि-थरी ❀ चर्चा मुनीकै अति ।
ती आरण्यकको पुगेर कुटिमा ❀ पैह्ले गरे दर्शन
पाऊमा परि दण्डवत् पनि गरे ❀ आनन्द मानीकन ॥५८८॥
सारा भूपतिको सुविज्ञ मुनिले ❀ गर्दा भए स्वागत
पाद्यार्घ्यादि गरे प्रसन्न मनले ❀ अत्यन्त राम्रोसित ।
सोधेथे मुनिले ससैनिक यहाँ ❀ के कामले पाल्नुभो
श्री आरण्यकलाइ श्रीसुमतिले ❀ बिन्ती गरे बात यो ॥५८९॥
छाड्नुभो जब अश्वमेध मखको ❀ घोडा स्वयं रामले
आयौँ रक्षक रूपमा पछि-पछी ❀ हामी यसै हेतुले ।
लागे भन्न बुझाइ बात हितका ❀ हाँसेर आरण्यक
पूजा यज्ञ गरेर पुण्य-फल के ❀ पाइन्छ हे रक्षक ॥५९०॥
ठूलो पुण्य छ राम-नाम भवमा ❀ जप्तै गरे उत्तम
त्यस्ले मुक्ति दिनेछ वैभव-सहित् ❀ राख्नू सदा संयम ।
जस्को पाप अनेक नाम्-स्मरणले ❀ नै काटिइन्छन् भने
गर्ने पूजन तीर्थ यज्ञ सब यी ❀ हुन् भोग भेट्टाइने ॥५९१॥

राजन् ! जो-सित छैन श्रेष्ठ मखमा ❀ दानादि गर्ने धन
तिन्ले केवल रामको स्मरणले ❀ पारून् सुखी जीवन।
भन्छन् पण्डितले सदा गर तिमी ❀ यज्ञादि औ पूजन
भन्छु लौ म त राम-नाम सरिको ❀ क्यै छैन अर्को धन ॥५९२॥
जानौं तत्त्व कहाँ गएर कसरी ❀ भन्ने भई चित्तमा
सारा तीर्थहरू डुलें पृथिविका ❀ आएन शान्ती ममा।
आफ्नू भाग्य भनौं कि राम-महिमा ❀ आए मुनी लोमश
ढोगी प्रश्न गरें उनैसित अनी ❀ आएर क्यै साहस ॥५९३॥
कस्तो कर्म-गरे तरिन्छ सहजै ❀ संसार-पारी मुने !
हुन् ती लौकिक कर्म वा अरु कुनै ❀ बाटो छ मुक्ती हुने ।
मेरो बिन्ति सुनेर लोमश मुनी ❀ हाँसेर बोल्नूभयो
जे भन्छू तिमि ध्यानपूर्वक सबै ❀ सुन्दै रहू बात यो ॥५९४॥
गर्छन् दान र पुण्य यज्ञ तप जो ❀ डुल्छन् कती तीर्थमा
त्यस्को मिल्दछ भोग आदि जति हुन् ❀ पौंचेर त्यो स्वर्गमा ।
जस्को चित्त रहन्छ अस्थिर तथा ❀ जो लाग्छ भोगैतिर
त्यस्को निम्ति वृथा छ नाम-महिमा ❀ हो बात यो सुन्दर ॥५९५॥

पूजा र यज्ञ पनि श्रेष्ठ कुनै हुँदैनन्
श्रीराम झैं बुझ दयालु अरू त छैनन् ।
सम्झेर श्री रघुपतीकन जो रहन्छन्
पाएर सिद्धि सब मुक्त तिनै हुनेछन् ॥५९६॥
पापी पनी कति तरे जपि राम-नाम
हो सिद्ध मन्त्र भवमा बुझ राम-नाम ।
जुन् धाममा श्रुति पढी द्विज पुग्न सक्छन्
त्यै धाममा गरि भजन् सब पुग्न सक्छन् ॥५९७॥

यै हो रहस्य बुझ गोप्य श्रुति-स्मृतीको
हो सार राम-महिमा पनि भक्ति यै हो ।
वार्ता सुनेर मुनि लोमशका उदार
सोधे तुरुन्त मुनिले झुकि बार-बार ॥५९८॥

ज्ञानी लोमश ! गर्नुहुन्छ दिनहूँ ❀ जस्को स्वयं पूजन
को हुन् ती रघुनाथ मिल्छ कि कतै ❀ ती रामको दर्शन ।
तिन्ले मानिस-रूप धारण गरे ❀ कस्तो परी कारण
यस्को गर्नुहवस् म सुन्दछु मुने! ❀ विस्तारले वर्णन ॥५९९॥



## श्रीराम-आरण्यकको भेट



तिन्को प्रश्न सुनेर लोमश मुनी ❀ अत्यन्त हर्षित् भए
गर्छू वर्णन रामको शुभ कथा ❀ भन्दै तिनी हर्षिए ।
त्रेतामा अवतार सूर्य-कुलमा ❀ श्रीरामजीको हुँदा
पृथ्वीको सब भार टारि प्रभुले ❀ त्यो अश्वमेध् गर्दिदा ॥६००॥
वर्षै ग्यार हजार राज्य गरदा ❀ बित्नेछ उन्को वय
गर्नेछन् अनि अश्वमेध प्रभुले ❀ पापीहरूको क्षय ।
हे आरण्यकजी ! यही स्थलमहाँ ❀ घोडा डुली आउला
योद्धा वीरहरू तिमीसित मिली ❀ आनन्द भेट्टाउला ॥६०१॥
तिम्रो राम-कथा सुनेर सब ती ❀ हर्षित् हुनेछन् जब
गर्नेछौ अनि राम-दर्शन उहीँ ❀ पुग्छौ अयोध्या तब ।
लीनेछौ तिमिले समाधि त्यहिँ नै ❀ आश्चर्य मान्नन् सब
जान्नेछन् अनि राम-भक्तहरुमा ❀ ठूला स्वयं राघव ॥६०२॥

शिक्षा लोमशले अघी जति दिए ❀ एकेक सम्झन्छु म
सोही बात हुँदै छ यो बखतमा ❀ देख्छू सबै उत्तम ।
आमा धन्य म भन्छु त्यो बखतमा ❀ जन्माउनू धन्य हो
ऐह्ले दर्शन पाउनू हजुरको ❀ झन् यो अहोभाग्य हो ॥६०३॥
सारा वर्णन गर्न सक्तिन यहाँ ❀ पैह्ले भए जे जति
मेरो भक्ति बुझेर वीर हनुमान् ❀ हर्षित् हुनेछन् अति ।
यो सुन्दा हनुमान दास हुँ भनी ❀ तत्काल बिन्ती गरे
जोरी हात दुवै प्रसन्न मनले ❀ आनन्द पाऊ परे ॥६०४॥
हे आरण्यक ! रामभक्त सबमा ❀ अत्यन्त सानो म छु
यस्तो अद्‌भुत रामको रस पिई ❀ सन्तुष्ट छौँ, मान्दछु ।
हे स्वामी ! रघुको पवित्र कुलमा ❀ पैदा हुने रामका
गर्छन् भाइ प्रणाम यी चरणमा ❀ शत्रुघ्नले नाथका ॥६०५॥
यिन्ले नै लवणासुरादि खलको ❀ संहार गर्दा भए
उन्ले आइदिदा कुटी हजुरको ❀ उज्ज्वल् गराईदिए ।
गर्दै छन् पदमा प्रणाम मुनिको ❀ योद्धा ठुला पुष्कल
प्यारा छन् रघुनाथका यि भतिजा ❀ कीर्ती हुने उज्ज्वल ॥६०६॥
ढोग्दै छन् यि सुबाहु भूप पदमा ❀ न्यूरी मुने ! दर्शन
योद्धा वीर ठुला यि छन् समरका ❀ ज्ञाता गुणी सज्जन ।
लोभी छन् यिनि रामका चरणको ❀ गर्नै सदा दर्शन
आफ्नू राज्य त्यजेर हामिहरुका ❀ छन् साथमा सज्जन ॥६०७॥
यिन्ले श्री शिवकी प्रिया गिरिसुता ❀ श्री पार्वतीको तप
गर्दा प्राप्त गरे अकण्टक ठुलो ❀ साम्राज्य औ वैभव ।
ऐह्ले राज्य त्यजेर यो हयपछी ❀ लागे उनै रामको
गर्छन् ध्यान सदैव राम-पदकै ❀ इच्छा त्यजी भोगको ॥६०८॥

राजा उत्तम सत्यवान हयको ❀ लागी पछाडी यहाँ
गर्दै छन् शिरले प्रणाम मुनिको ❀ लत्रेर पाऊमहाँ ।
श्री आरण्यकलाइ वीर सबले ❀ ज्ञानी मुनी हुन् भनी
बारम्बार गरे प्रणाम पदमा ❀ अत्यन्त सानो बनी ॥६०९॥
सारालाइ दिएर आदर ठुलो ❀ सत्कार गर्दा भए
पाल्कीमाथि बसी त्यसै दिन मुनी ❀ सोझै अयोध्या गए ।
त्यो यज्ञस्थलमा पुगेर मुनिले ❀ देखे तयारी जब
जै-जैकार गरे प्रसन्न मनले ❀ हे देव ! हे राघव ! ॥६१०॥
जानेको जति शास्त्र पूजन सबै ❀ आजै भयो सार्थक
पाई दर्शन नाथको खुशि भएँ ❀ हे धर्मका रक्षक ! ।
सामुन्ने प्रभुका खडा मुनि थिए ❀ जोरेर बाहू दुई
आए भक्त भनी प्रसन्न हुनुभो ❀ केही नगीचै गई ॥६११॥
गर्नूभो पछि अंकमाल प्रभुले ❀ पाल्नूभयो हे मुनि
मेरो पूर्ण भयो अवश्य मख यो ❀ हत्त्या हरायो भनी ।
लागे भन्न प्रसन्न भैकन गुणी ❀ सर्वज्ञ आरण्यक
योगी दुर्लभ नाथका चरणमा ❀ बिन्ती छ हे रक्षक ॥६१२॥
ज्ञानीलाइ पनी छ दुर्लभ सदा ❀ जुन् रूपको दर्शन
सोही दर्शन पाइ यो बखतमा ❀ हर्षित् छ मेरो मन ।
मैले जन्म लिनू भयो सफल यो ❀ भन्दै अगाडी सरे
पाई दर्शन आज सूर्य-कुलमा ❀ सम्पूर्ण राजा तरे ॥६१३॥
मेरो यो हयमेध शुद्ध हुनगो ❀ पाल्नूहुँदा नाथले
राखी आसनमाथि स्वागत ठुलो ❀ गर्नूभयो रामले ।
ऐह्ले पाल्नुहुँदा मुने ! हजुरले ❀ मेरा गए दुर्दिन
पक्का नाश गराउनेछ मखले ❀ त्यो ब्रह्महत्त्याकन ॥६१४॥

यस्ता बात सुनेर राम प्रभुको ❀ बोले ति आरण्यक
साँचो बात बताइबक्सनुभयो ❀ हे धर्म-संरक्षक ! ।
गर्ने पाठ सदैव वेदहरुको ❀ छन् वेदवेत्ता जति
मान्छू मूर्ति हजूरकै उनिहरू ❀ हो शास्त्रको सम्मति ॥६१५॥

गर्दै छु जो म हयमेध हजूर ऐहृे
हत्त्या निवारण हुनेछ पछी त्यसैले ।
लाग्यो मलाइ त प्रभो ! सब हास्य जस्तो
सर्वज्ञले यसरि भन्नु उदेक कस्तो ! ॥६१६॥

वेदादि शास्त्रहरुको पनि सार यै हो
पापादि नाशनकन नाम प्रधान जो हो ।
श्रीराम-नामकन जो दिन-रात जप्नन्
हत्त्या र पापहरुले तिनिलाइ छुन्नन् ॥६१७॥

जप्तैन नाम प्रभुको जबसम्म नाथ !
नाशिन्न पाप तबसम्म रहन्छ साथ ।
जो जप्छ राम भनि नाम सदा प्रभूको
सारा हुनेछ मन निर्मल पाप त्यस्को ॥६१८॥

हत्या हजूरकन सक्तछ लाग्न कैहृे
भाग्ला डराइकन नाम सुनेर पैहृे ।
गर्जन्छ पाप तबसम्म नमानि भीति
सुन्दैन नाम जबसम्म छ राम-प्रीति ॥६१९॥

हे राम ! राम ! भनि जो जन पाठ गर्ला
त्यो पापका नगिचमा कहिल्यै नपर्ला ।
यस्तै अनेक थरिका गुण-गान गर्थे
हेरेर राम-तिर ती मुनि दंग पर्थे ॥६२०॥

ती आरण्यकको उसै बखतमा ❀ ब्रह्माण्ड पड्कीगयो
तिन्को तेज मिलेर राम प्रभुमा ❀ आश्चर्य पारीदियो ।
लावा पुष्प अबीर वर्षण गरे ❀ ती स्वर्गका देवले
पाए मुक्ति तुरुन्त राम-प्रभुको ❀ सान्निध्य ती भक्तले ॥६२१॥



## राजा वीरमणि आदिको आख्यान



आज्ञा भो अनि शेषले मुनिहरू ❀ हे भक्त वात्स्यायन
ज्ञानी विज्ञ मुनी ऋषी जति थिए ❀ त्यो यज्ञमा सज्जन ।
ती आरण्यकको अलौकिक गती ❀ देखेर छक्कै परे
जै-जै राम ! भनेर उच्च स्वरले ❀ जैकार धेरै गरे ॥६२२॥
लागे भन्न उता पुराण खुशिले ❀ विद्वान् ति पौराणिक
सुन्थे विज्ञ ऋषी मुनीश्वर तथा ❀ ज्ञानी ठुला पूजक ।
घोडाका सब वीर रक्षकहरू ❀ खोजी रहेथे यता
रेवाको जलमा पसेर सहजै ❀ घोडा हरायो कता ॥६२३॥
यो बिन्ती सबले गरे जब गई ❀ शत्रुघ्नका पासमा
तिन्को बिन्ति सुनी बुझाउनुभयो ❀ क्यै सान्त्वना-साथमा ।
रेवाको जलमा पसे ति हनुमान् ❀ साथै थिए पुष्कल
जाँदा त्यो जलभित्र देखिन गयो ❀ प्रासाद क्वै उज्ज्वल ॥६२४॥
खम्बा छन् मणिका चतुर्दिक सफा ❀ रत्नादिले शोभित
छन् उद्यान पनी अनेक थरिका ❀ पुष्पादिले सज्जित ।
नारी उत्तम देखिए त्यहिँ थिए ❀ सौन्दर्यले भूषित
तीनोटी मिलि हेर्दथे घरि-घरी ❀ मन्मा थिए शंकित ॥६२५॥

मारी त्यो हय-चोरलाइ सहजै ❀ लैजान इच्छा गरे
देखी तीन जना उपस्थित निकै ❀ आश्चर्यमा ती परे ।
थाले गर्न कुरा परस्पर तिनै ❀ छन् तीन व्यक्ती यहाँ
लैजाऊँ बलले समाइ सहजै ❀ छन् स्वामिनी ती जहाँ ॥६२६॥
हेरिन् स्वामिनिले कुरा सब सुनी ❀ ती तीन योद्धातिर
तिन्लाई सबले प्रणाम सहजै ❀ गर्दा भए आखिर ।
डाकिन् स्वामिनिले, गए नगिचमा ❀ ती तीन योद्धा जब
लागिन् सोध्न तिनी यहाँ तिमिहरू ❀ के काम आयौ सब ॥६२७॥
साह्रै गुप्त र देव-दुर्लभ छ यो ❀ आयौ कसोरी यहाँ ?
इच्छा के छ बताउ स्पष्ट पहिले ❀ फर्केर जान्छौ कहाँ ?
कस्को हो हय यो, छ पत्र सुनको ❀ देख्छू सफा अक्षर
सारा शस्त्र भिरी उपस्थित भयौ ❀ के कामको खातिर ॥६२८॥
तिन्को प्रश्न सुनेर वीर हनुमान् ❀ बोल्दा भए सादर
भन्छन् जस्कन राम, हुन् सकलका ❀ स्वामी तथा ईश्वर ।
यो घोडा हयमेध गर्दछु भनी ❀ छाड्नूभयो रामले
आयौँ सेवक पृष्ठ-रक्षक बनी ❀ हामी त्यही कामले ॥६२९॥
नारी हौ तिमिलाइ उत्तम कुरा ❀ मैले भनेको सुन
घोडा छाडिदिई परी शरणमा ❀ जानीनँ मैले भन ।
गर्नेछन् प्रभुले क्षमा खुशि भई ❀ आनन्दका साथमा
छौँ हामी अहिले सबै तरहका ❀ शस्त्रास्त्र छन् हातमा ॥६३०॥
छाडीद्यौ हय रामको नहिँ भने ❀ त्यागछ्यौ तिमी जीवन
तिन्को बात सुनेर ती सुमुखिले ❀ भन्छिन् रिसाईकन ।
तीखा बाणहरू सकेजति सबै ❀ छाड्दै गरे तापनि
सक्तैनौ हय लान आफ्नु सँगमा ❀ नारी छ यौटी भनी ॥६३१॥





घोडा हो प्रभु रामको यति भन्यौ ❀ हे वीर ! लाचार छु
दासी हूँ म पनी उनै प्रभुजिकी ❀ श्रीराम नै जप्तछु ।
भन्दै छू हनुमान वीर ! सुनिल्यौ ❀ श्रीरामकै चिन्तन
गर्दै पर्खिरहें नदी-तटमहाँ ❀ होला भनी दर्शन ॥६३२॥
जाऊ अश्व लिई प्रसन्न मनले ❀ मागेर लेऊ वर
बोले श्री हनुमान नम्र स्वरले ❀ उन्को गरी आदर ।
केही छैन अभाव भन्छु तपनी ❀ श्रीरामका पाउको
माँग्छू भक्ति मलाइ देउ अरु क्यै ❀ चाहिन्न बिन्ती छ यो ॥६३३॥
तिन्को बिन्ति सुनी भनिन् सुमुखिले ❀ माग्यौ ठुलो जो वर
इच्छा पूर्ण हुनेछ आशिष दिएँ ❀ मैले खुशीले, तर ।
अर्को एक कुरा म भन्छु हय यो ❀ जाला अगाडी जब
योद्धा वीरमणी लिनन् हय हरी ❀ शंका नमानी तब ॥६३४॥
छन् ती भक्त-शिरोमणी शिवजिका ❀ घोडा लिनू युक्तिले
यौटा बाण म दिन्छु, त्यै समरमा ❀ छाडीदिनू वेगले ।
लागी बाण हुनेछ ती नृपतिमा ❀ श्रीरामको सम्झना
पर्नेछन् प्रभुका स्वयं शरणमा ❀ त्यागी सबै कामना ॥६३५॥
त्यागने त्यो शरको सबैविधि पनी ❀ उन्ले बताईदिइन्
श्री शत्रुघ्नजिलाइ त्यै बखतमा ❀ त्यो बाण सुम्पीदिइन् ।
घोडालाइ लिई हिडे तिनिहरू ❀ उन्लाइ ढोगीकन
निस्केथे जलबाट बाहिर अनी ❀ हर्षित् भएथ्यो मन ॥६३६॥
आफ्नू लश्करमा पुगे हय-सहित् ❀ ती तीन योद्धा जब
बिन्ती श्री हनुमानले गरिदिए ❀ वार्ता भएको सब ।
वीणा भेरि मृदंग ढोल नगरा ❀ बज्थे र शंख-ध्वनि
लावा पुष्प अबीर बेसरि छरे ❀ शत्रुघ्न जै-जै भनी ॥६३७॥



घोडा छाडिदिए उसै बखतमा ❀ बढ्दै अगाडी गयो
धेरै देशहरू अबाध गतिले ❀ डुल्दै हिडेको थियो।
त्यो विन्ध्याचलको विशाल गिरिमा ❀ घोडा गएथ्यो जब
त्यस्का रक्षक वीर सैनिकहरू ❀ पुग्दा भएथे सब ॥६३८॥
देखे अद्भुत ज्योति देवपुरिको ❀ शत्रुघ्न खूशी भए
बाधा छैन कुनै सबैतिर सफा ❀ देखी अगाडी गए।
धेरै रत्न जडाउ भै महल त्यो ❀ टल्कीरहेको थियो
ढोका झ्याल र द्वार आदि रवि झैँ ❀ चौतर्फमा देखियो ॥६३९॥
त्यस्मा कारिगरी थियो थरि-थरी ❀ श्री विश्वकर्माजिको
हेर्थे छक्क परी उभी वरिपरी ❀ सौन्दर्य प्रासादको।
लागे हेर्न अनी खिँच्यो मन पनी ❀ ती वीर शत्रुघ्नको
तान्यो चित्त गराइ मोहित सबै ❀ योद्धा तथा सैन्यको ॥६४०॥

ठूलो तलाउ छ, सबैतिर घाट उस्तै
सीँढीहरू स्फटिकका त्यहिँ छन् प्रशस्तै।
रात्री तथा दिवसको भ्रम पार्न सक्ने
बत्ती थिए ति बिचमा रवि-तेज हर्ने ॥६४१॥
सौन्दर्य-पूर्ण सुमुखी कति छन् हिडेका
ढोई-सरी शरिर छन् कति ढल्किएका।
छन् बेलका फल सरी स्तन अग्लिएका
प्रत्यक्ष छन् कलश झैँ चुचुरा उठेका ॥६४२॥
तानीलिने मन ति कम्मर बारुले छन्
ओढेर चादर यताउति हेरि हिड्छन्।
आँखा दुवै कमलका दल झैँ खुलेका
यस्ता अनेक सुमुखीहरु छन् डुलेका ॥६४३॥

क्रीडास्थली सकल रत्नहरू जडेका
वृक्षादि छन् फल र पुष्पहरू झुलेका।
जोडा मिलाइ कति हंसहरू बसेका
भूँ-भूँ गरेर भ्रमरागण झुम्मिएका ॥६४४॥
बोल्ने चराहरु कती रुखमा बसेका
उद्यानमा फुलहरू कति छन् फुलेका।
चम्पा चमेलि र जुही छ सुगन्धराज
गम्कीरहेछ, खुशि छन् पुरका समाज ॥६४५॥
त्यो स्वर्गको असल नन्दन बागभन्दा
राम्रो थियो नृपतिको सबतर्फ हेर्दा।
कर्मिष्ठ श्रेष्ठ नृप वीरमणि प्रधान
बस्थे त्यहीं सकलमा बलका निधान ॥६४६॥
गाह्रो परे नृपतिलाइ कुनै कुरामा
रक्षा स्वयं शिव पुगेर गरीदिदामा।
चिन्ता थिएन नृपलाइ कुनै कुराको
गर्थे ति आश मनमा शिवको शिवाको ॥६४७॥

राजन्! एक थिए सुपुत्र नृपका ❀ हो नाम रुक्मांगद
तिन्का साथ थिए अनेक रमणी ❀ राम्रा तथा सज्जित।
साह्रै उत्तम जो लतागृह थियो ❀ ताहीं डटेका थिए
छिन्-छिन्मा जलपान, पान मसला ❀ सेवार्थ राख्दा भए ॥६४८॥
तिन्का साथ बसेर नाच-सहितै ❀ क्यै गानको खातिर
गानाको अनि रागको पनि दिए ❀ आज्ञा अती सुन्दर।
बाजा ताल मिलाइ सुन्दर गरी ❀ पैह्ले तयारी गरे
पैह्ली उत्तम वस्त्र भूषणहरू ❀ नाच्ने अगाडी सरे ॥६४९॥

लागे बज्न मृदंग ढोल नगरा ❀ मीठो गरी बाँसुरी
स्याबासी सबले दिए घरि-घरी ❀ खूशी भए सुन्दरी ।
यस्तो नाच र गानको समयमा ❀ थाहै नपाईकन
आयो अश्व नगीचमा र सबले ❀ त्यस्को गरे दर्शन ॥६५०॥
बाँधेको सुन-पत्र देख्दछु निकै ❀ श्रीसूर्य झैं टल्कने
काला छन् दुइ कान देह छ सफा ❀ सेतो निकै झल्कने ।
यस्तो उत्तम श्यामकर्ण हय त्यो ❀ आयो र ऐल्हे यहाँ
पक्रौं यस्कन लौ भनेर सहसा ❀ रानी उठीथिन् त्यहाँ ॥६५१॥
जानेनन् रघुनाथको हय भनी ❀ तत्काल पक्रीलिए
बाँचेथे सुन-पत्र उत्तम पढी ❀ विस्तार जान्दा भए ।
बाँधेथे हयलाइ एक रुखमा ❀ हेरेर रानीतिर
बोले हे सुमुखी ! नमान मनमा ❀ केही कुराको डर ॥६५२॥
को छन् शक्ति-प्रधान वीर अहिले ❀ मेरा पिता झैं भन
उन्को भक्ति बुझी पिनाक धनु जो ❀ गर्छन् सदा धारण ।
तिन्ले दास भनी सदा बखतमा ❀ दिन्छन् स्वयं मद्दत
गर्नूहुन्छ पिताजिले मख यही ❀ छाडेर भन्छू म त ॥६५३॥
तोडीदिन्छु घमण्ड घोर रणमा ❀ श्रीरामको अश्व यो
मैले सुम्पनु छैन तत्पर बनी ❀ जे जे भनें सत्य हो ।
बोले-सैनिक हो ! फिरौं हय लिई ❀ हामीहरू यो घरि
पत्नीलाइ भने-छिटै महलमा ❀ लौ जाउँ हे सुन्दरी ॥६५४॥
फर्केथे दरबारमा हय-सहित् ❀ साथै गएका जति
त्यो चर्चा घरमा पितासित गरे ❀ शेखी बढाई अति ।
बाबा ! देखि प्रचण्ड शेखि अहिले ❀ त्यो तोड्नलाई भनी
पक्रें यो हय अश्वमेध मखको ❀ साम्ने छ घोडा पनि ॥६५५॥

राजा वीरमणी सुनेर सुतका ❀ यस्ता कुरा क्यै पनि
स्याबासी नदिएर केवल भने ❀ मान्दीनँ राम्रो भनी ।
लागे ती नृपती समाधितिर नै ❀ श्री शम्भुको ध्यानमा
के गर्दा हित हुन्छ सोद्धछु भनी ❀ चिन्ता थियो चित्तमा ॥६५६॥
आई दर्शन बक्सियो शिवजिले ❀ ती भूपलाई अनि
आज्ञा भो नृपलाइ-आज मनमा ❀ केको छ इच्छा भनी ।
त्यो आज्ञा नृपले सुनेर शिवको ❀ न्यूरेर पाऊ परे
मानी हर्ष ठुलो प्रसन्न मनले ❀ सानन्द बिन्ती गरे ॥६५७॥
शम्भो ! गर्न भनी विहार वनमा ❀ छोरो गएको थियो
त्यस्ले श्री रघुनाथको हय त्यहीं ❀ पक्रेर राखीलियो ।
के गर्दा हित हुन्छ यो विषयमा ❀ शिक्षा म पाऊँ प्रभो
मैले के अब गर्नुपर्दछ यहाँ ❀ आज्ञा हवस् हे विभो ॥६५८॥
तिन्को बिन्ति सुनेर श्रीशिवजिले ❀ क्यै बेर सोची अनि
भन्नूभो सुतले गरेछ अहिले ❀ यो काम बाठो बनी ।
पर्ला घोर लडाइँ हे नरपते ! ❀ यै हेतुले नै गरी
यो घोडा रघुनाथको लिइ सँगै ❀ जाऊ छिटै यो घरि ॥६५९॥
हे शत्रुघ्न ! म दास हूँ शरणमा ❀ आएँ क्षमा गर्नुहोस्
छोराको अपराध हो, तर स्वयं ❀ दोषी मई मान्नुहोस् ।
मान्दैनौ तिमि यो कुरा यदि भने ❀ हो वीरको धर्म यो
लड्नू क्षत्रिय-धर्मले समरमा ❀ हे भूप ! कर्त्तव्य हो ॥६६०॥
गर्नेछू म सहायता समरमा ❀ शक्ती पुगेको जति
यौटा राम-सिवाय जोसित पनी ❀ लड्नेछु हे भूपति ।
यो आज्ञा शिवको सुने र नृपले ❀ बिन्ती गरे सादर
लड्नू क्षत्रिय धर्म हो समरमा ❀ मान्दीनँ मैले डर ॥६६१॥

मेरो हार नहोस् भनी हजुरले ❀ राखीदिनोस् इज्जत
ऐह्ले जाइपरौं भने समरमा ❀ हूनेछ बेइज्जत ।
सोही कारणले म जान्छु रणमा ❀ मानी हजुर्कै भर
यो सुन्दा खुशि भै स्वयं शिवजिले ❀ आज्ञा भयो सुन्दर ॥६६२॥
हे राजन् ! सुन, स्वर्गका सुरहरू ❀ एकेक आए पनि
सक्तैनन् सँग लान अश्वकन यो ❀ भो जीत हाम्रो भनी ।
आए श्रीरघुनाथ नै समरमा ❀ पुग्दैन क्यै योग्यता
मैले पाउ समाइ ढोग्दछु स्वयं ❀ मानी ठुला देवता ॥६६३॥
सक्तैनौ तिमि लड्न रामसित के ? ❀ यस्तो भनौला, तर
मैले लड्नु हुँदैन यी पृथिवि नै ❀ नाशिन्छ भन्ने डर ।
तिम्रो रक्षक-रूपमा समरमा ❀ आई स्वयं लड्दछु
तीनै लोक लडे पनी म सहजै ❀ एक्लै लडी जित्तछु ॥६६४॥
यस्तो अर्ति दिई सदाशिव गए ❀ सानन्द कैलासमा
राजा जान्छु भनेर कम्मर कसे ❀ तत्काल संग्राममा ।
यस्तै बात थियो यता, अनि उत्ता ❀ घोडा हरायो भनी
खोज्थे जंगल पर्वतादिहरुमा ❀ शत्रुघ्न योद्धा पनि ॥६६५॥
पाएनन् जब अश्व क्रोधित भई ❀ बोले तिनी रोषमा
हाम्रो अश्व हरेर त्यो अब छिटै ❀ जाने भयो नर्कमा ।
सोधे फेरि सुमन्त्रलाइ भन को ❀ स्वामी छ यो राज्यको
तिन्को सैन्य कती छ शक्ति छ कती ❀ विस्तार यो देशको ॥६६६॥
भेट्यो अश्व कहाँ र कारण छ के ❀ त्यस्ले समाईलिने
यस्तो बात सुनी सुमन्त्र दुइ हात् ❀ माथी उचाली भने ।
पैह्ले नै रचना गरे नगर यो ❀ श्री विश्वकर्माजिले
राजा वीरमणी प्रधान यहिँ छन् ❀ उन्कै ठुलो कीर्तिले ॥६६७॥

छैनन् शत्रु कुनै अगम्य छ यहाँ ❀ कैलास झैं सुन्दर
डुल्छन् शम्भु तथा सबै सुरहरू ❀ केही नमानी डर ।
गर्दै छन् रणमा स्वयं शिवजिले ❀ साहाय आई भने
ठूलो युद्ध हुनेछ सैन्य-दल छन् ❀ संग्राममा मारिने ॥६६८॥
वार्ता टुंगिन क्यै सकेन र सबै ❀ क्यै खिन्न जस्ता थिए
ज्ञानी नारदले उसै बखतमा ❀ आएर दर्शन् दिए ।
श्री शत्रुघ्न उठेर आदर-सहित् ❀ तिन्को गरे पूजन
जोरी हात भने विनम्र स्वरमा ❀ पाऊ समाईकन ॥६६९॥
देवर्षे ! हय त्यो कतातिर गयो ❀ केही पनी जान्दिनँ
घोडा मिल्छ कहाँ गएर कसरी ❀ आत्तिन्छ साह्रै मन ।
चोर्नेलाइ सकीनँ चिह्न अहिले ❀ दुःखी भएँ हे मुनि !
आज्ञा गर्नुहवस् मलाइ सजिलो ❀ जो युक्ति हो त्यो पनि ॥६७०॥
यस्तो बिन्ति सुनेर नारद मुनी ❀ बोल्दा भए बात यो
देख्दै छौ दरबार देवपुरको ❀ कैलास जस्तै छ यो ।
राजा वीरमणी प्रधान अहिले ❀ गर्छन् यहाँ शासन
राजी छन् पुरमा प्रजाहरु पनि ❀ क्वै छैन दुःखी जन ॥६७१॥
यिन्को ज्येष्ठ कुमार उद्धत निकै ❀ रुक्मांग भन्ने छ जो
व्यर्थै अश्व समाइ यो बखतमा ❀ गर्जीरहेको छ त्यो ।
त्यस्का साथ हुनेछ घोर वनमै ❀ संग्राम ठूलो, तर
हे शत्रुघ्न ! छिटै तिमीहरु पनी ❀ सेना तयारी गर ॥६७२॥
जित्नेछौ तिमि नै ठुलो समर यो ❀ बाधा परे तापनि
ठूलो नाश हुनेछ सैन्य-दलको ❀ यै युद्धमा नै भनी ।
अन्तर्धान भएर नारद मुनी ❀ तत्काल जाँदा भए
त्यो देवासुरको ठुलो समर झैं ❀ सेनाहरू तम्सिए ॥६७३॥

ज्ञानी नारद युद्ध हेर्दछु भनी ❀ आकाशमाथी गए
गर्छू युद्ध भनेर वीरमणि झन् ❀ चर्को गरी गर्जिए।
आज्ञा झट्ट दिए ति वीरमणिले ❀ डाकेर सेनापति
बाजा झट्ट बजाउनू समरका ❀ आऊन् भएका जति ॥६७४॥

आज्ञा सुनेर नृपको सब हड्बडाए
पैह्री लुगा कवच अस्त्र लिएर धाए।
योद्धाहरू अघि-अघी सब हिड्न लागे
सेनाहरू पछि-पछी लिइ अस्त्र त्यागे ॥६७५॥

त्यागेर वास धन-धाम त्यजेर आए
एकत्र भै ति दरबार ठुलो सजाए।
मोती मणी र सुनका गहना सजेको
घोडा प्रधान रथमा दुइटा जुतेको ॥६७६॥

आए अनेक थरि वीर डटेर धेर
ढाक्यो अकाशभरि खूब धुलो उडेर।
शस्त्रास्त्र-सज्जित भई रथमा चढेर
रुक्मांग दाखिल भए लिइ सैन्य धेर ॥६७७॥

पैह्री सफा कवच रत्न जडाउ, धीर
आए सुभांग उनका पनि भाइ वीर।
भाञ्जा थिए नृपतिका बलमित्र नाम
तिन्को थियो समरमा अघि बढ्नु काम ॥६७८॥

सेनापती ति रिपुवार थिए प्रधान
तिन्को थियो समरमा बढि खूब मान।
योद्धा जुटे सकल यी जब एक ठाम
बाजाहरू पनि बजे रणका तमाम ॥६७९॥

आकाशमा सुरहरू सबको विमान
डुल्दै थिए समर हेर्न भनेर जान।
निस्केर वीरमणिले कवचादि ल्याए
शस्त्रास्त्र आदि रथमा, सब राख्न लाए ॥६८०॥
राजा चढी जब स्वयं रथमा बसेथे
बाजाहरू समरका सहसा बजेथे।
हिड्दा ति सैनिकहरू ध्वनि भो अघोर
ढाकीदियो सब दिशा त धुलो उडेर ॥६८१॥
कम्पित् भइन् पृथिवि सैनिक वीर हिड्दा
उर्ल्यो समुद्र पनि बेसरि छाल उठ्दा।
पल्टे कती गिरिहरू पहरा ढलेर
मान्दैनथे भय कतै पनि क्यै भएर ॥६८२॥
हिड्दा सैनिकको छुटेर धुइरो ❀ पानी परे झैं भयो
चर्को शब्द भएर स्वर्गभरिमा ❀ तत्काल फैलीगयो।
देखे सैन्य असंख्य वीरहरुको ❀ शत्रुघ्नजीले जब
लागे सोध्न सुमन्त्रलाइ भन लौ ❀ के गर्नुपर्ला अब ॥६८३॥
हाम्रा वीर लडाइँ गर्न अहिले ❀ तैयार को छन् भन
यस्तो मर्जि सुनी सुमन्त्र सबको ❀ भन्छन् बुझाई मन।
हे शत्रुघ्न ! यि नीलरत्न बलवान् ❀ छन् वीर यी पुष्कल
जाऊन् लड्न प्रधान वीर दुइले ❀ पारून् ठुलो खल्बल ॥६८४॥
श्री शत्रुघ्नजिले पनी खुशि भई ❀ आफ्नू दिए सम्मति
आफ्ना शस्त्रहरू लिएर रथमा ❀ आए दुवै वीर ती।
हाम्रो जीत हुनेछ जुन् किसिमले ❀ लड्नू त्यही चालले
बोल्यो कोहि भने जवाफ दिनु त्यै ❀ होच्याउने बातले ॥६८५॥

सेना वीर भए परस्पर दुवै ❀ साम्ने दुवै पक्षका
थाले छुट्न अनेक बाण रणमा ❀ पक्षी समान् पंखका ।
धावा त्यो पहिले गरे समरमा ❀ श्रीरामका सैन्यले
थाले गिर्न विपक्षका रथ ध्वजा ❀ घोडा र हात्ती ढले ॥६८६॥
आफ्ना सैनिकको बिजोग रणमा ❀ देखेर रुक्मांगले
मारे सैन्य अनेक रामतिरका ❀ धेरै तिखा बाणले ।
तिन्का साथ म लड्दछू अब भनी ❀ आए डटी पुष्कल
देखी पुष्कललाइ आफ्नु नगिचै ❀ बोले तिनी केवल ॥६८७॥
छोरो क्षत्रियको म हूँ तिमि पनी ❀ उस्तै हुनाले गरी
लड्नू योग्य छ राजपुत्र दुइले ❀ संग्राममा यो घरि ।
जोडी मिल्न गयो प्रहार गर लौ ❀ हेरौं पराक्रम् पनि
तिन्का बात सुनेर तीक्ष्ण शरले ❀ हाने रिसाई, अनि ॥६८८॥
लागेथ्यो गइ वक्षमा तर पनी ❀ केही नमानीकन
हानेथे दश बाण मन्त्रित गरी ❀ रुक्मांगले तत्क्षण ।
ती दोटै वयमा समान बलमा ❀ एकै हुनाले पनि
मत्ता हात्ति लडे सरी वनमहाँ ❀ लड्थे म ठूलो भनी ॥६८९॥
हाने पुष्कलले तिखा शर लिई ❀ मन्त्रित् दशोटा जब
घोडा सारथि औ ध्वजा रथ ठुलो ❀ धूलो गराए सब ।
यौटा बाण गई गड्यो हृदयमा ❀ रुक्मांगजीको जब
लाग्यो घाउ तथापि केहि नगनी ❀ निक्कै रिसाए तब ॥६९०॥
ती अर्को रथमा चढी धनु लिई ❀ अर्को बलीयो अनि
भित्रै मुर्मुरिई झिके शर छिटै ❀ यस्लाइ मार्छू भनी ।
ऐह्ले वीर ! ठुलो पराक्रम गऱ्यौ ❀ स्याबास भन्छू, सुन
मेरो रोक प्रहार, आफ्नु तिमिले ❀ रक्षा गरे जीवन ॥६९१॥

पुग्नेछौ अहिले उडीकन छिटै ❀ हे वीर! आकाशमा
केही बेर घुमाइ फन्फनि यहीँ ❀ झार्नेछु संग्राममा ।
येती बात भनेर बाण धनुमा ❀ मन्त्रेर राख्दा भए
छाडे भ्रामक अस्त्र घोर रवले ❀ सारा दिशा थर्किए ॥६९२॥
शोभा-युक्त सुवर्ण-पंख सरिको ❀ आकाशमा शोभियो
आई पुष्कलको सुरम्य रथमा ❀ त्यो वेगले ठोकियो ।
योजन् एक जती हट्यो रथ पछी ❀ आश्चर्य त्यो देखियो
रोक्ने यत्न गरे तथापि रथ त्यो ❀ चौतर्फ घुम्दै गयो ॥६९३॥
योद्धा पुष्कलले लिई धनु ठुलो ❀ राखेर तीखा शर
लागे भन्न कराइ उच्च स्वरले ❀ आफ्नू सुरक्षा गर ।
योद्धा हौ तिमि श्रेष्ठ भन्छु म पनी ❀ के बस्तछौ पृथ्विमा
जाऊ झट्ट तिमी पठाउँछु छिटै ❀ यै बाणले स्वर्गमा ॥६९४॥
यस्ता बात भनेर खैँचि बलले ❀ ताँदो, रिसाईकन
छाडे मन्त्रित बाण श्रेष्ठ रथमा ❀ पुग्दो भयो बज्रन ।
लाग्यो फन्फनि घुम्न त्यो रथ, पुगे ❀ तत्काल आकाशमा
पौंचेथ्यो जब सूर्यमण्डलविषे ❀ मानो पर्‍यो अग्निमा ॥६९५॥
त्यस्का सारथि अश्व औ रथ डढे ❀ रुक्मांगजी पल्टिए
आए ढुन्मुनिदै र जीवत बच्यो ❀ क्यै बेर मूर्च्छित् भए ।
भागे सैन्यहरू डराइ रणको ❀ देखी नराम्रो स्थिति
रोक्ने यत्न गरे, तथापि नसकी ❀ भागे डराई कति ॥६९६॥
थाले गर्जन वीर पुष्कल निकै ❀ भो जीत हाम्रो भनी
एक्लै घुम्न शुरू गरे समरमा ❀ विख्यात योद्धा बनी ।
देखे दुर्गति पुत्रको नृपतिले ❀ त्यस्तो नराम्रो जब
आए वीरमणी म लड्दछु भनी ❀ थिच्दै र मिच्दै सब ॥६९७॥

रोके पुष्कललाइ, वीर हनुमान् ❀ आफै अगाडी सरी
रोकेथे हनुमानलाइ उनिले ❀ गर्जेर सातो हरी ।
यिन्का साथ म लड्न सक्तछु अझै ❀ धैरै छ मैमा बल
पर्नेछैन लडाइँ गर्न तिमिले ❀ पार्छू स्वयं खल्बल ॥६९८॥
यस्ता पाँच अरू भए पनि सँगै ❀ लड्छू र जित्छू पनि
शंका कत्ति नमान वीर हनुमान् ❀ मैले भनेको भनी ।
योद्धा वीर कुनै पनी अघिसरी ❀ आए भने युद्धमा
सक्छू जित्न वृथा छ लड्नु तिमिले ❀ यी भूपका साथमा ॥६९९॥
यिन्का साथ लडाइँ गर्न रणमा ❀ बेजोड छौ भन्दछु
सोही कारणले पछी सर तिमी ❀ एक्लै डटी लड्दछु ।
यस्ता पुष्कलका कुरा सुनि कपी ❀ केही पछाडी सरे
योद्धा वीरमणी र पुष्कल दुवै ❀ तत्काल साम्ने परे ॥७००॥
यौटा पुत्र थिए शुभांग कहिने ❀ लक्ष्मीनिधीका सुत
लागे लड्न तिनी प्रसन्न मनले ❀ योद्धा अनेकौं-सित ।
अर्का ती बलमित्रको सुमदको ❀ भिन्नै लडाईं चल्यो
हाहाकार पर्‍यो दुवैतिर अनी ❀ संग्राम झन् मच्चियो ॥७०१॥
भाई एक थिए ति वीरमणिका ❀ जो वीरसिं नामका
आए लड्न छिटै तिनी अघिसरी ❀ साम्ने हनूमानका ।
डाके पुष्कलले ति वीरमणिको ❀ देखेर फूर्ती त्यहाँ
आऊ लड्न छिटै तिमी अघिसरी ❀ मेरा अगाडीमहाँ ॥७०२॥
तिन्को हाँक सुनेर वीरमणिले ❀ हाँसेर हाः हाः गरी
लागे भन्न रिसाइ उच्च स्वरले ❀ गर्जी निकै बेसरी ।
देखी बालकलाइ यो समरमा ❀ लाग्यो दया चित्तमा
लज्जा लाग्छ मलाइ लड्न अहिले ❀ क्वै बालका साथमा ॥७०३॥

जित्ले क्वै निज-पुत्रलाइ रणमा ❀ होला प्रतापी भनी
आएँ लड्न तथापि फिर्दछु पछी ❀ लाचार जस्तै बनी।
देख्दामा तिमिलाइ क्रोध त निकै ❀ जागीसकेको थियो
के लड्नू शिशु-साथ, क्रोध यतिमै ❀ सारा हराईगयो ॥७०४॥
जान्छू लड्न बरु प्रसन्न मनले ❀ शत्रुघ्नका साथमा
बोले पुष्कल धाक त्यो सुनिसकी ❀ गर्जेर संग्राममा।
आफू वृद्ध भएर, बालक तिमी ❀ भन्छौ मलाई, तर
कस्तै वीर भए पनी समरमा ❀ मान्दीनँ मैले डर ॥७०५॥
मूर्च्छा पर्न गई ढले पृथिविमा ❀ सत्पुत्र तिम्रा जब
आयौ लड्न भनी घमण्ड मनमा ❀ राखेर आफै अब।
ठूला छौ तिमि वीर छौ समरका ❀ ज्ञाता पनी छौ, तर
लागी बाण सुरेन्द्रको नगरमा ❀ जान्छौ तिमी आखिर ॥७०६॥
सानो सेवक हूँ म राम प्रभुको ❀ मान्छू म उन्कै भर
आऊन् लड्न म जित्तछू समरमा ❀ गन्धर्व विद्याधर।
यस्ता बात भनेर तीक्ष्ण शरले ❀ हाने रिसाईकन
लाग्यो बाण ध्वजा तथा रथ टुट्यो ❀ त्यो सारथी जीवन ॥७०७॥
हाने पुष्कलले तिखा शरहरू ❀ ताकी निकै वेगले
तिन्का काटिदिए ध्वजा रथ पनी ❀ टुक्रा गरी बाणले।
धारा बग्न गयो जसै रगतको ❀ घाऊ भए देहमा
दोटै वीर भए पलाश फुल झैं ❀ राता ठुलो युद्धमा ॥७०८॥
देखी पुष्कलको पराक्रम ठुलो ❀ ती भूपतीले जब
बोले धन्य म भन्छु वीर रणमा ❀ शस्त्रास्त्र छोडी सब।
गर्छौ जो रघुनाथको हृदयमा ❀ नित्यै तिमी सम्झना
त्यस्ले पार्न सक्यौ मलाइ विरथी ❀ धेरै दियौ यातना ॥७०९॥

मेरो श्रेष्ठ प्रहारको पनि छिटै ❀ नै स्वाद चाखे अब
यस्ता बात भनी तिखा शरहरू ❀ ताकेर छोडे सब ।
हा-हा पारिदिए दिशा र विदिशा ❀ ढाकेर ती बाणले
लागे भाग्न अनेक सैनिकहरू ❀ त्यै बाणका कामले ॥७१०॥

खोलो बग्यो रगतको नदिकै समान
त्यस्मा बगे थरि-थरी कर पाउ कान।
घोडा र सारथि-सहित् रथ चूर्ण भैगो
सेनाहरू सकलको त्यहिँ प्राण गैगो ॥७११॥

घोडा र हात्तिहरुको शव थुप्रिनाले
वीभत्स दृश्य हुनगो कति हेर्न थाले।
कुत्ता र गिद्ध अरु स्याल जमा भएर
मासू लुछे थरि-थरी नगिचै गएर ॥७१२॥

नाच्थे ति योगिनिहरू अति हर्ष मानी
प्यूँथे घुटू-घुटु रगत् मृत देह तानी।
घाँटी कटेर कतिका शिर फालिएका
बाहू र पाउ कतिका त्यहिँ छुट्टिएका ॥७१३॥

खाएर मांस शवका ति पिशाच जो छन्
नाचेर रातभरि हर्षबढाइँ गर्छन् ।
बाहू र पाउ शिर-हीन मुढा समान
ढल्दा भए कति त्यजी मरि प्राण मान ॥७१४॥

रातो नदी सरि भयो रणभूमि ताहाँ
माछा सरी शव बगे कति रात्रिमाहाँ ।
भाग्थे डराइ कति काँतर भीरु ताहाँ
लड्थे डटेर कति वीर लडाइँमाहाँ ॥७१५॥

देखे ति पुष्कलजिले रणको तमाश
आएन क्वै किसिमको मनमा हताश।
पक्रेर तीन शर तीक्ष्ण भने कराई
मूर्च्छा म पार्दछु भने शर यै चलाई ॥७१६॥
हे वृद्ध भूप ! रणमा तिमिले गरेको
देखेर शौर्य म त दंग भएँ समर्को।
तैयार पारि शरको पिंजरा तिमीले
त्यस्मा थुन्यौ मकन जानिलिएँ मनैले ॥७१७॥
हौ वीरमा तिमि प्रधान भनेर जानें
देखेर कौशल ठुलो गुण श्रेष्ठ मानें।
मैले सकीनँ यति गर्न भने म भन्छु
विश्वास मान तिमिले जति जे कहन्छु ॥७१८॥

मूर्च्छा पार्न सकीनँ क्यै गरि भने ❀ भन्छू प्रतिज्ञा गरी
लागोस् पाप मलाइ विप्र-वधको ❀ वा गाइहत्या सरी।
गंगामा गइ स्नान-दान नगरी ❀ फर्कन्छ जो दुर्जन
त्यस्लाई जति लाग्छ पाप उ सबै ❀ लागोस् मलाई, सुन ॥७१९॥
यस्ता बात सुनेर पुष्कलजिको ❀ राजा रिसाईगए
तीखो बाण लिएर त्यै बखतमा ❀ मन्त्रेर छाडीदिए।
त्यस्ले पुष्कललाइ केहि नगरी ❀ पातालमा भासियो
जस्तै पर्दछ नर्कमा विमुख भै ❀ क्वै दुष्ट श्रीरामको ॥७२०॥
हाने पुष्कलले रिसाइ सहसा ❀ त्यो अग्नि झैं बाणले
त्यस्ले गर्न सकेन हानि नृपको ❀ लागे पनी वेगले।
दोस्रो बाण गरे प्रहार रिसले ❀ ताकेर छाती, तर
टुक्रा पारिदिए ति वीरमणिले ❀ केही नमानी डर ॥७२१॥

योद्धा पुष्कल बाणको विफलता ❀ देखेर चिन्तित् भए
सम्झी राम-पदारविन्द मनले ❀ क्यै बेर ती घोरिए।
यौटा बाण छ शेष, राम प्रभुको ❀ माया ममाथी भए
मेरो पूर्ण गरून् कबोल प्रभु नै ❀ भन्दै निकालीलिए ॥७२२॥
तेस्रो बाण गरे प्रहार मनमा ❀ श्रीराम सम्झीकन
बल्दो अग्निशिखा-समान शर त्यो ❀ गर्दै गयो गर्जन।
लाग्यो बाण गई जसै हृदयमा ❀ तत्काल मूर्च्छित् भए
सेना भाग्न भनेर जीवन लिई ❀ सर्दै पछाडी गए ॥७२३॥
स्वाबासी सबले दिए खुशि भई ❀ हुन् वीर यी पुष्कल
देखी वीरमणीजिको स्थिति त्यहाँ ❀ ठूलो चल्यो खल्बल।
तिन्का भाइ ति वीरसिंह हनुमान् ❀ हेरेर बांगो गरी
थाले गर्न प्रहार क्रोधित भई ❀ शस्त्रास्त्र नाना थरी ॥७२४॥
धेरै नै हनुमानका तनभरी ❀ लागे जसै बाण ती
धारा बग्न गई निकै रगतको ❀ ती आत्तिएथे अति।
हाने बेसरि वीरसिंहकन त्यो ❀ मुड्की रिसाईकन
मूर्च्छा पर्न गई ढले पृथिविमा ❀ ती वीर सोही क्षण ॥७२५॥
श्री रुक्मांगद औ सुबाहु नृपती ❀ आए अगाडी सरि
एकै साथ गरे प्रहार दुइले ❀ मार्ने इरादा धरी।
त्यो देखी हनुमान क्रोधित भई ❀ तत्काल मार्छू भनी
बेह्रे पुच्छरले दुवै रथ-सहित् ❀ केही नजान्ने बनी ॥७२६॥
फट्कारे जिमिमा दुवै रथ टुटे ❀ मूर्च्छा परे ती दुइ
गर्जेथे हनुमान उच्च स्वरले ❀ अत्यन्त खूशी भई।
बाँकी सैन्य र वीर वीरमणिका ❀ जो-जो अगाडी सरे
लागी पुष्कलका तिखा शर कती ❀ मूर्च्छा परे वा मरे ॥७२७॥

देख्नूभो शिवले ठुलो समरको ❀ त्यस्तो नराम्रो स्थिति
आफ्ना भक्त नरेश वीरमणिको ❀ देखी ठुलो दुर्गति ।
सारा सैन्य तथा लिई गणहरू ❀ कैलास छाडीकन
पाल्नूभो रणमा म लड्दछु भनी ❀ उन्लाइ मद्दत् दिन ॥७२८॥

भागीरथी शिरविषे शिवकी हुनाले
भस्मांग लेपन गरी शशि शोभिनाले ।
बाघम्बरू र करमा डमरू त्रिशूल
हिड्दा अगाडि गण खूब फुकी बिगूल ॥७२९॥

छन् तीन सूर्य शशि वह्नि विशाल नेत्र
हेर्दै थिए शिव घुमी-घुमि यत्र-तत्र ।
शस्त्रास्त्र सज्जित थियो रथ वज्र रूप
शोभा थियो शिवजिको बहुतै अनूप ॥७३०॥

पाल्नू हुँदा शिव स्वयं रणभूमिमाहाँ
हाहा पऱ्यो पृथिवि कम्प भएर ताहाँ ।
थर्के दिशाहरु, नदी र समुद्र उर्ले
धेरै गिरे गिरि यता-उति थर्कनाले ॥७३१॥

आएर क्रोध हुनगो अनुहार रातो
देखेर नै उडिगयो कतिको त सातो ।
शत्रुघ्नले समरमा जब शम्भुलाई
देखे उपस्थित, डटीकन लड्नलाई ॥७३२॥

शत्रुघ्नलाइ शिवले पनि सामुमाहाँ
देख्नूभयो अनि सबै गण डाकि ताहाँ ।
आज्ञा गरे तिमिहरू अब लड्न जाओ
एकेक शत्रुकन मार्न सहर्ष धाओ ॥७३३॥

हे वीरभद्र ! तिमि जाउ अगाडि लड्न
मारेर पुष्कलकनै फिरि आउ भन्न।
हे नन्दि, भृंगि र रिटी सब लड्न जाओ
संग्राममा ति कपिलाइ जितेर आओ ॥७३४॥
जाओ कुशध्वज, प्रचण्ड र चण्ड वीर
लड्नू सुबाहुसित खूब बनेर धीर।
लड्नू दमन्‌सित डटी तिमि वीर चण्ड
त्यस्को गराउ रणमा डटि खण्ड-खण्ड ॥७३५॥
आज्ञा सुनेर शिवको अति गर्जनाले
ती वीरभद्र पनि लड्न भनी खुशीले।
पुग्दा भए जब ति पुष्कलका अगाडि
सेनाहरू पनि थिए उनका पछाडि ॥७३६॥
ती वीरभद्रकन देखि रिसाइ धेर
चढ्दा भए रथ तिनी नगरी अबेर।
छाडेर पाँच शर बेसरि गर्जिएथे
ती वीरभद्र सुनि त्यो अलि तर्सिएथे ॥७३७॥

पक्री झट्ट त्रिशूल खूब बलले ❀ ताकेर छाडीदिए
हानी पुष्कलले तिखा शर छिटै ❀ त्यस्लाइ काट्दा भए।
ली खट्वांग तुरुन्त उग्र रिसले ❀ ताकेर हाने जब
लाग्यो मस्तकमा त वज्र सरिको ❀ मूर्च्छा परेथे तब ॥७३८॥
आयो चेत र वीर पुष्कल उठी ❀ खट्वांग काटीदिए
त्यो देखीकन वीरभद्र रिसले ❀ आगो सरीका भए।
तोडे पुष्कलको विशाल रथ त्यो ❀ धूलो गराए अनि
हेर्थे युद्ध ठुलो बसेर नभमा ❀ द्योताहरूले पनि ॥७३९॥

थाले लड्न ति बाहुयुद्ध रिसले ❀ गर्जेर साम्ने गई
लागे झट्ट पछार्न वीर दुइले ❀ झन् बेसरी पक्रिई ।
तान्थे कम्मरमा समाति कहिले ❀ थेच्च्याउँथे बेसरी
खुट्टा पक्रि घिसार्दथे घरि-घरी ❀ मार्ने इरादा धरी ॥७४०॥
कैह्ले वज्र परेसरी मुठि कसी ❀ गर्जेर हिर्काउँथे
कैह्ले लड्न भनी सरी अघि-पछी ❀ पच्छार्न ती खोज्दथे ।
यस्तै युद्ध गरी-गरी दिन बिते- ❀ थे चार तिन्का' जब
त्यो पाँचौं दिन वीरभद्र रिसले ❀ आगो भएथे तब ॥७४१॥
पक्री पुष्कललाइ बेसरि लगे ❀ तानेर आकाशमा
बाहूयुद्ध चल्यो त्यहाँ पनि दुवै ❀ ती वीरको साथमा ।
ल्याए पुष्कलले घिसारि बलले ❀ घाँटी थिची भूमिमा
केही मूर्च्छित वीरभद्र ति भए ❀ तत्काल त्यै स्थानमा ॥७४२॥
गर्जे पुष्कल बेसरी समरमा ❀ भो जीत हाम्रो भनी
लावा पुष्प अबीर बेसरि छरे ❀ द्यौताहरूले पनि ।
आयो चेत र वीरभद्र रिसले ❀ खुट्टा समाईकन
मारे पुष्कललाइ बेसरि कुटी ❀ तिन्को लिए जीवन ॥७४३॥
हा-हाकार पर्‍यो चतुर्दिक सबै ❀ चर्चा चल्यो युद्धमा
मारे पुष्कललाइ काटि रणमा ❀ प्रत्यक्ष संग्राममा ।
योद्धा वीर जती थिए समरका ❀ ज्ञाता प्रतापी सब
आए हेर्न भनी चतुर्दिक उभी ❀ आश्चर्य मान्थे तब ॥७४४॥
यो संचाद लिएर दूत दगुरे ❀ शत्रुघ्नका पासमा
आए झट्ट त्यहाँ र देखि भतिजो ❀ रोए परी दुःखमा ।
भूमीमै पसरा परीकन बसे ❀ चिन्ता परी बेसरी
चिच्च्याए अनि वीर पुष्कल गयौ ❀ छाडी सबै यो घरि ॥७४५॥

कता गयौ लौ भन वीर पुष्कल !
देख्छू अँध्यारो म त घोर केवल।
योद्धा भएर पनि यो रणमा तिमीले
त्यागीदियौ सहजमा किन प्राण ऐह्ले ॥७४६॥
रक्षार्थ यो हयसितै तिमि आउनाले
मान्थ्याँ खुशी समरमा विजयी हुनाले।
माता-पिताकन म गै कसरी सुनाऊँ
पत्नी ति कान्तिमतिलाइ म के बुझाऊँ ॥७४७॥
गर्निन् विलाप जब रोइ-कराइ तिन्ले
मैले बुझाउनु गई भन कुन् वचन्ले।
बाँच्नू वृथा छ यसरी दुःखमा परेर
आऊ बुझाउ अब बाबु स्वयं उठेर ॥७४८॥
शत्रुघ्नले जब विलाप गरे अघोर
सुन्ने पनी सब भए बहुतै अधीर।
जो अश्व-रक्षक थिए सब भूप आए
शत्रुघ्नलाइ सबले बहुतै बुझाए ॥७४९॥
योद्धा त्यहाँ कपिपती पछिबाट आए
शत्रुघ्नलाई सब बात स्वयं बुझाए।
श्रीरामको हजुरको शिवको कृपाले
लइनन् यि पुष्कल उठीकन भन्छु मैले ॥७५०॥
रक्षा गरेर शवको यहिँ राख्नुपर्छ
होला विचार पछि जे जति गर्नुपर्छ।
येती भनेर कपिले शव त्यो उठाए
जाहाँ सुरक्षित थियो उहिँ राखि आए ॥७५१॥

आए शम्भु स्वयं बुझाउँछु भनी ❀ शत्रुघ्नलाई त्यहाँ
जन्मन्छन् जति जीव यो पृथिविमा ❀ बाँचीरहन्छन् कहाँ ।
चिन्ता गर्नु वृथा छ पुष्कल मरे ❀ भन्ने कुरामा अब
के गर्दा हित हुन्छ यो विषयमा ❀ सोचून् म भन्छू सब ।।७५२।।
जानीलेउ ति वीरभद्र रणमा ❀ हुन् कालरूपी भनी
मारेथे अघि यज्ञमा पुगि स्वयं ❀ त्यो दक्षलाई पनि ।
मेरा वीर प्रधान हुन् अति ठुला ❀ तिन्को अगाडी परी
योद्धा पुष्कल पाँच दिन्तक लडी ❀ जाँदा भए ती मरी ।।७५३।।
चिन्ता गर्नु वृथा छ धैर्य मनमा ❀ शंका नमानी धर
गर्नैपर्छ लडाइँ यो समरमा ❀ आफै अगाडी सर ।
यस्ता बात सुनेर व्यंग्य शिवका ❀ शत्रुघ्न आगो भए
धेरै बाण गरी प्रहार सहसा ❀ आपत्ति पारीदिए ।।७५४।।
त्यो देखी शर-जालमा शिवजिले ❀ घेरेर बाँधीलिए
जै-जैकार गरे समस्त सुरले ❀ आकाशमा जो थिए ।
दिन् एकादशसम्म उग्र स्वरले ❀ संग्राममा गर्जिए
बाह्रौं दिन् शिवलाइ ताकि रिसले ❀ ब्रह्मास्त्र छोडीदिए ।।७५५।।
त्यो ब्रह्मास्त्र निले तुरुन्त शिवले ❀ पानी पिएझैं गरी
हानेथे शर एक तीक्ष्ण र गिरे ❀ शत्रुघ्न मूर्च्छा परी ।
हा-हाकार परेर सैनिकहरू ❀ ती भाग्न लागे जब
सम्झीदै रघुनाथलाइ मनले ❀ आए हनूमान् तब ।।७५६।।
बोले क्रोध गरेर हे शिव ! तिमी ❀ व्यर्थै घमण्डी बनी
बाधा यो किन पार्दछौ प्रभुजि को ❀ आफै ठुलो हूँ भनी ।
मान्नूहुन्छ तपाइँले पनि ठुला ❀ श्रीरामलाई जब
आँटेको किन विघ्न पार्न यसरी ❀ आई यहाँ हे शिव ।।७५७।।

यस्मा कारण के छ त्यो भन सबै ❀ विस्तारले सुन्दछु
भन्दैनौ तिमि यो कुरा यदि भने ❀ शेखी सबै तोड्दछु ।
जानीलेउ मलाइ शुद्ध मनले ❀ श्रीरामको सेवक
आएको अहिले म छू सँगसँगै ❀ भै अश्वको रक्षक ॥७५८॥
यस्ता बात सुनेर वीर कपिको ❀ बोल्नूभयो शंकर
साँचो बात भन्यौ म मान्दछु पनी ❀ श्रीराम हुन् ईश्वर ।
मेरा यी प्रिय भक्त वीरमणि हन् ❀ सम्झे विपत्ती परी
मैले मद्दत गर्न आउनुपर्‍यो ❀ संग्राममा यो घरि ॥७५९॥
यस्तो कारण हो तथापि म पनी ❀ भक्ती सदा गर्दछु
व्यर्थै धाक नलाउ लड्न म पनी ❀ यो युद्धमा सक्तछु ।
शम्भूको सुनि बात वीर हनुमान् ❀ अत्यन्त क्रोधित् भई
हाने पत्थरले, टुट्यो रथ ध्वजा, ❀ श्री शम्भुले गर्जिई ॥७६०॥
पाएथे जब आफुलाई विरथी ❀ चिन्तित् भएथे शिव
नन्दी आइ भने विनम्र स्वरमा ❀ बस्नोस् म-माथी अब ।
नन्दीको सुनि बात हर्षित भए ❀ संग्राममा श्री शिव
सुन्नूहोस् अब नन्दिको विषयमा ❀ विस्तार गर्छू सब ॥७६१॥

चाक्लो छ पीठ अनि योजन पाँच लाख
अग्लो छ उच्च गिरि झैं त पचास लाख ।
पाँचै हजार सिङ कान छ दीर्घ योजन्
घेरा जुरो वरिपरी छ हजार योजन् ॥७६२॥
देखिन्छ स्वच्छ थुतुनो त अनेक योजन्
उस्तै छ दीर्घ फल एक् सय मात्र योजन् ।
आँखा दुवै दुइ हजार कहिन्छ योजन्
हज्जार पाँच जति पुच्छर जान्नु योजन् ॥७६३॥

हल्लाउँदा चमर झैँ दुइ कानलाई
देखिन्छ योजन सहस्त्र जती लमाइ।
घेरो ठुलो छ खुरको त हजार योजन्
छन् प्वाल नाक दुइका त अनेक योजन् ॥७६४॥
जिभ्रो छ दीर्घ बुझ एक हजार योजन्
सम्पूर्ण देह म भनूँ कति पुग्छ योजन्।
हिड्दा ठुलो गिरि सरी बुझिइन्छ नन्दी
उर्लन्छ सिन्धु-जल कम्पित हुन्छ पृथ्वी ॥७६५॥
सारा सखाप गरि पाप दिने निखारी
दिन्छन् ति शत्रुहरुलाइ तुरुन्त मारी।
सेतो छ रंग शशि झैँ अति दिव्य शोभा
छन् पीठमा वसन झालर शोभिएका ॥७६६॥
उस्तै मुकूट छ ठुलो शिरमा रहेको
शोभा छ रत्नहरुको उसमा जडेको।
घाँटीभरी छ कति घण्ट झुलीरहेको
त्यस्को मिठो स्वर सुनिन्छ सुधा सरीको ॥७६७॥
निःश्वासले गिरिहरू पर फाल्न सक्ने
हुंकारले अरि जती सब मार्न सक्ने।
जो चार वर्ण, युग चार सदा कहिन्छन्
ती नन्दिका चरणमा खुशिले रहन्छन् ॥७६८॥
षट्शास्त्र वेद र पुराण अनेक जो छन्
ती नन्दिकै तनभरी खुशिले रहन्छन्।
तिन्का पछाडि अरु नन्दि हजार जो छन्
पैह्री विभिन्न गहना सब साथ हिड्छन् ॥७६९॥

देखेर वाहन ठुलो शिवको विचित्र
तस्वीर झैं हुन गए सब यत्र-तत्र।
पाएर दर्शन, भए कति वीर हर्षित्
भागे डराइ कति वीर भएर मूर्च्छित् ॥७७०॥
जो जो थिए समरमा बलवान वीर
शक्ती हटाउन गए र बने अधीर।
जैकार भो शिवजिको अनि नन्दिजीको
आकाशबाट सुरको फुल वृष्टि भैगो ॥७७१॥

नन्दीमाथि बसे तुरुन्त शिवजी ❀ आनन्द मानीकन
हानेथे हनुमानले लिइ शिला ❀ गर्दै ठुलो गर्जन।
हान्नूभो शिवले त्रिशूल रिसले ❀ तिन्लाइ ताकी जब
पक्री शूल तुरुन्त वीर कपिले ❀ टुक्रा बनाए सब ॥७७२॥
ठूलो शक्ति लिएर फेरि शिवले ❀ हाने रिसाई अनि
लाग्यो शक्ति गिरे त्यहीं कपिपती ❀ हा राम ! स्वामी भनी।
आयो चेत र वृक्ष एक कपिले ❀ हाने रिसाईकन
भागे सर्प त्यजेर देह शिवको ❀ पातालमा त्यै क्षण ॥७७३॥
बोले शम्भु लिई ठुलो मुसल नै ❀ पर्खी तँ हे वानर !
तेरो जीवन लिन्छु दुष्ट, मनमा ❀ लाग्दैन मेरो डर।
यस्ता बात भनेर छाडिदिनुभो ❀ गर्जेर श्री शम्भुले
बाँचेथे हनुमान त्यो बखतमा ❀ रक्षा गरे रामले ॥७७४॥
छाडेको शिवले ठुलो मुसल त्यो ❀ छेडेर पृथ्वीकन
उड्दै पुग्न गयो रसातल विषे ❀ हेर्थे अनेकौं जन।
नन्दीलाइ गरेर लक्ष्य कपिले ❀ छाडे ठुलो पर्वत
त्यस्ले गर्न सकेन हानि कपिको ❀ वा नन्दिको क्यै हित ॥७७५॥

हाने वृक्ष उखेलि एक बलियो ❀ योद्धा हनूमानले
टुक्रा पारिदिए अनेक बिचमै ❀ रोकेर श्री शम्भुले ।
हाने पुच्छरले तुरुन्त कपिले ❀ निक्कै ठुलो वेगले
रोकी झट्ट प्रहार त्यो शिवजिले ❀ भन्नूभयो हर्षले ॥७७६॥
साह्रै खूशि भएँ म यो समरमा ❀ केही नमानी डर
जस्तो आज गर्‍यौ पराक्रम छिटै ❀ मागेर लेऊ वर ।
यो आज्ञा शिवको सुनेर कपिले ❀ बिन्ती गरे सादर
केही छैन कमी मलाइ प्रभुको ❀ माया छ धेरै, तर ॥७७७॥
श्री शत्रुघ्न गिरेर मूर्छित भए ❀ औ मारिए पुष्कल
धेरै वीर अरू पनी मरिसके ❀ दुःखी म छू केवल ।
यिन्को जीवन राख्नुपर्दछ छिटै ❀ ल्याएर संजीवनी
भूत प्रेत पिशाच राक्षस तथा ❀ यिन्ले नखाऊन् भनी ॥७७८॥
रक्षा गर्नुहवस् हजूर यहिँ नै ❀ जान्छू म द्रोणाचल
जन्तू भक्षक स्याल वा कुकुरले ❀ जोगाउनोस् केवल ।
यस्ता बात सुनेर वीर कपिका ❀ राजी भए शंकर
जाऊ झट्ट तिमी म बस्तछु यहीँ ❀ पर्दैन मान्नू डर ॥७७९॥
त्याहाँबाट कुदेर वीर हनुमान् ❀ पौंचेर द्रोणाचल
बेरी पुच्छरले उखेल्छु गिरि नै ❀ भन्दै लगाए बल ।
लाग्यो हल्लन द्रोण पर्वत त्यहाँ ❀ जो-जो थिए रक्षक
रोकेथे हनुमानलाइ सबले ❀ गर्दै ठुलो खल्बल ॥७८०॥
सारालाइ चुटे रिसाइ कपिले ❀ हा-हा गराईदिए
लागी चोट, गएर इन्द्रसित त्यो ❀ विस्तार गर्दा भए ।
राजन् ! वानर एक आइ गिरिमा ❀ लामो गरी पुच्छर
लैजाने गिरिलाइ नै सहजमा ❀ गर्दो भयो तर्खर ॥७८१॥

हाम्रो युद्ध भयो परस्पर निकै ❀ फ्याँकी ठुला पत्थर
भाँच्यो हात टुटाइ पाउ कतिको ❀ भाग्यौं डरी आखिर।
यस्ता बात सुनेर ती सकलको ❀ देवेन्द्र क्रोधित् भए
जाओ लड्न समस्त देवगण लौ ❀ भन्दै निकै गर्जिए ॥७८२॥
यो आज्ञा सुनि इन्द्रको सुरहरू ❀ तत्काल जम्मा भए
त्यो द्रोणाचलमा पुगेर बहुतै ❀ उत्साहले गर्जिए।
सारा देवहरू मिलेर शरको ❀ वर्षा गरे बेसरी
भाँची ती शरलाइ झट्ट कपिले ❀ गर्जेर आँखा तरी ॥७८३॥
भाँची बाहु र पाउ देवगणको ❀ पारीदिए आकुल
लागे भाग्न कती डराइ मनमा ❀ साह्रै भई व्याकुल ।
फर्के स्वर्गपुरी सबै सुरहरू ❀ हारी डरी आखिर
लागे भन्न सुरेन्द्रलाइ सब ती ❀ गर्दै ठुलो आदर ॥७८४॥
राजन् ! वानर एक आइ अहिले ❀ हा-हा गराईदियो
छैनौं लड्न समर्थ हामि उहिँ त्यो ❀ पर्खीरहेकै थियो ।
यस्तो युक्ति कुनै उपाय सजिलो ❀ तत्काल गर्नूहवस्
यस्ले नत्र कुनै उपद्रव ठुलो ❀ गर्नेछ जान्नूहवस् ॥७८५॥
यस्तो बिन्ति सुनेर इन्द्र मनमा ❀ क्यै बेर चिन्तित् भए
सोध्नू पर्छ गई गुरूसित भनी ❀ तत्काल ती पौंचिए ।
खोज्दै आश्रममा पुगेर गुरुको ❀ अत्यन्त हर्षित् भए
पाऊ पक्रि गुरूजिको विनयले ❀ न्यूरेर सोधीलिए ॥७८६॥
आई वानर एक द्रोणगिरिमा ❀ पारेछ हा-हा अनि
मारी रक्षकलाइ त्यो अझ त्यहीं ❀ पर्खन्छु ऐल्हे भनी ।
यो संचार सुनेर पक्रन भनी ❀ द्यौता गएका थिए
आए ती सब चोट खाइ कपिको ❀ अत्यन्त दुःखी भए ॥७८७॥

को हो वानर त्यो र द्रोण गिरिमा ❀ आएछ के कामले
आज्ञा गर्नुहवस् गुरो ! हजुरले ❀ एकेक विस्तारले ।
भन्नूभो गुरुले सुनी यति कुरा ❀ देवेन्द्रलाई अनि
सारा बात बताउँछू सुन तिमी ❀ विस्तार ऐह्ले भनी ॥७८८॥
शत्रू रावण कुम्भकर्ण बलिया ❀ हुन् रामका दुर्जन
उन्कै सेवक श्रेष्ठ वीर हनुमान् ❀ आए दबाई लिन ।
आगो पुच्छरमा लिएर सुनकी ❀ लंका जलाईदिने
फ्याँक्ने वृक्ष उखेलि, अक्षयकनै ❀ पक्रेर मारीदिने ॥७८९॥
राजन् ! उत्तम राम-राज्य छ जहाँ ❀ ठूलो अयोध्यापुरी
गर्दै छन् हयमेध राम प्रभुले ❀ अत्यन्त श्रद्धा गरी ।
छोडेको हय श्यामकर्ण अहिले ❀ डुल्दै पुगेथ्यो जब
पक्रेथे शिव-भक्त वीरमणिले ❀ त्यो अश्वलाई तब ॥७९०॥
हारेथे रणमा र झट्ट शिवको ❀ तिन्ले गरे प्रार्थना
आई मार्नुभयो अनेक बलिया ❀ योद्धा, दिई यातना ।
तिन्को प्राण बचाउनाकन स्वयं ❀ आए हनूमान् जब
लागे भन्न सुनेर बात गुरुका ❀ सानन्द ती वासव ॥७९१॥
के गर्ने गुरुजी ! बताउनुहवस् ❀ युक्ती कुनै सुन्दर
तिन्का बात सुनी बृहस्पति गुरू ❀ बोल्दा भए सादर ।
जाऔँ हामि सबै परौँ शरणमा ❀ दिन्छन् क्षमा निश्चय
पौंचेथे तब देव द्रोणगिरिमा ❀ जम्मा भई निर्भय ॥७९२॥
गर्दै छू म प्रणाम हे कपिपते ! ❀ माफी दिनूहोस् अब
द्यौताले नचिनी अनादर गरे ❀ विश्वास मान्नोस् सब ।
व्यर्थै कष्ट दिए कुरा नबुझि क्यै ❀ त्यस्को क्षमा माग्दछौँ
भन्नूहुन्छ यहाँ जती हजुरले ❀ एकेक त्यो मान्दछौँ ॥७९३॥

त्यागी क्रोध स्वरूप शान्त हुनुहोस् ❀ हे अञ्जनीका सुत
आएका सब देवता शरण छन् ❀ गर्नूहवस् क्यै हित।
यस्तो उग्र स्वरूप धारण गरी ❀ के काम आयो परी
ऐह्ले पाल्नुभयो यहाँ हजुर लौ ❀ आज्ञा हवस् यो घरि ॥७९४॥
यस्तो प्रश्न सुनीसकेर गरुको ❀ बोले हनूमान् त्यहाँ
पाल्नूभो शिवजी ति वीरमणिको ❀ रक्षार्थ संग्राम्महाँ ।
मारे वीरहरू अनेक बलिया ❀ जीवित् म पार्छू भनी
आएँ पर्वतमा म चिन्दिनँ पनी ❀ बूटी उ संजीवनी ॥७९५॥
तिन्को बात सुनेर औषधि दिए ❀ ती देवताले जब
फर्के स्वर्गपुरी प्रसन्न मनले ❀ आए जतीका सब ।
पौंचेथे रणभूमिमा कपि छिटै ❀ बोकेर संजीवनी
स्याबासी सबले दिए पृथिविमा ❀ ठूला यिनै हुन् भनी ॥७९६॥
साक्षात् शम्भु जहाँ उपस्थित रही ❀ रक्षित् थिए पुष्कल
उन्लाई पहिले दिए लगि बुटी ❀ सञ्जीवनी उज्वल ।
जो-जो वीर मरे सबैकन स्वयं ❀ दिन्छू भनी जीवन
पारे जीवित एक-एक गरि ती ❀ सारा उठे सज्जन ॥७९७॥
उठ्नासाथ लिएर अस्त्र करमा ❀ गर्जे निकै पुष्कल
मूर्च्छा पारि ति वीरभद्र अहिले ❀ काहाँ छ, वैरी खल ।
मागे पुष्कलले धनू र कपिले ❀ बिन्ती गरे सादर
मारेथे तिमिलाइ, रक्षक बने ❀ श्रीराम नै आखिर ॥७९८॥
यो बूटी लिइ जाउँ झट्ट अहिले ❀ शत्रुघ्नजी छन् जहाँ
यो सल्लाह गरी पुगे सब जना ❀ संग्राम-भूमीमहाँ ।
बूटी राखिदिएर झट्ट मुटुमा ❀ भन्छन् प्रतिज्ञा गरी
मैले पालन ब्रह्मचर्यव्रतको ❀ गर्दा पनी राम्ररी ॥७९९॥

मूर्च्छा पर्न गए यि वीर कसरी ❀ पाऊन् छिटै जीवन
भन्नासाथ उठे सुते-सरि गरी ❀ शत्रुघ्न सोही क्षण।
काहाँ छन् शिवजी म लड्दछु भनी ❀ चर्को गरी गर्जिए
लागे भन्न हजूरलाइ शिवले ❀ मूर्च्छित् गरेका थिए ॥८००॥
ल्याए झट्ट बुटी गएर कपिले ❀ त्यस्ले बचाईदिए
स्याबासी कपिलाइ देवहरुले ❀ धेरै दिएका थिए।
यस्ता बात सुनी चढेर रथमा ❀ शस्त्रास्त्रका साथमा
पौंचे क्रोध गरेर लड्दछु भनी ❀ शत्रुघ्न संग्राममा ॥८०१॥
आफाफ्ना रथमा चढ़ेर करमा ❀ शस्त्रास्त्र सारा लिए
योद्धा पुष्कल वीरभद्र शिवथ्यैं ❀ शत्रुघ्न पुग्दा भए।
योद्धा चण्डतिरै कपिध्वज गए ❀ नन्दीतरफ् मारुति
लागे गर्जन ती परस्पर धनू ❀ टंकार गर्दै अति ॥८०२॥
योद्धा वीरमणी पुगे शिव-सहित् ❀ शत्रुघ्नका सामुमा
धेरै वीर र सारथी रथ सयौं ❀ टुक्रा गरे युद्धमा।
आग्नेयास्त्र गरे प्रहार सहसा ❀ शत्रुघ्नजीले जब
ठूलो अग्नि उठेर वीरमणिका ❀ सेना जलेथे सब ॥८०३॥
छाडे वारुण अस्त्र वीरमणिले ❀ तत्काल पानी पर्‍यो
जाडो धेर भई मरे कति त्यसै ❀ हा-हा गराईदियो।
वायव्यास्त्र गरे प्रहार रिसले ❀ शत्रुघ्नजीले जब
सारा मेघ भए विलीन नभका ❀ आँधी चलेथ्यो तब ॥८०४॥
छाडे पर्वत-अस्त्र वीरमणिले ❀ गर्दै ठुलो गर्जन
आए पर्वत वायु नै थुनिदिए ❀ हिड्नै सकेनन् जन।
त्यस्को मार्जन गर्न, त्यै बखतमा ❀ वज्रास्त्र छाडीदिए
भूमी कम्प भयो, दिशाहरु सबै ❀ चौतर्फमा हल्लिए ॥८०५॥

जुन् ब्रह्मास्त्र थियो ति वीरमणिले ❀ मन्त्रेर छाडीदिए
त्यस्ले नाश गर्‍यो चतुर्दिक निकै ❀ सेनाहरू मारिए ।
पाएको अघि योगिनीसित उही ❀ जुन् मोहिनी अस्त्र हो
श्री शत्रुघ्नजिले त छोडिदिनुभो ❀ ब्रह्मास्त्र नै टुक्रियो ॥८०६॥
छाडी बाण अनेक घोर रणमा ❀ शत्रुघ्नजी गर्जिए
मूर्च्छा पर्न गए ति रुद्रगण जो ❀ साम्ने डटेका थिए ।
त्यो देखी शिवजी चढेर रथमा ❀ संग्राममा तम्सिए
छोपेथे अनि अस्त्र-शस्त्रहरुले ❀ शत्रुघ्न क्यै आत्तिए ॥८०७॥
सल्लाह हुनगो तुरुन्त कपिको ❀ शत्रुघ्नजीको पनि
सक्तैनौं यसरी लडेर शिवजी ❀ कैहल्यै जितिन्नन् भनी ।
आउन्नन् जबसम्म यो समरमा ❀ श्रीराम आफै अब
हड्तैनन् तबसम्म घोर रणमै ❀ लागीरहन्छन् शिव ॥८०८॥
सम्झे श्रीहनुमानले रघुपती ❀ हे राम! हे ईश्वर
आँटे मर्न लडेर शम्भुसित यी ❀ शत्रुघ्नजी आखिर ।
रक्षा गर्नुपर्‍यो स्वयं हजुरले ❀ आएर संग्राममा
अर्को छैन समर्थ यो बखतमा ❀ योद्धा कुनै साथमा ॥८०९॥
भक्तीले हनुमानको खुशि भई ❀ श्रीराम पाल्नूभयो
देखेथे कति भक्तले प्रभुजिको ❀ त्यो रूप जस्तो थियो ।
जस्को अंग छ नील-पद्म सरिको ❀ दीक्षा लिएका अनि
पाएँ दर्शन यज्ञरूप प्रभुको ❀ हे नाथ! जै-जै भनी ॥८१०॥
बीचैमा उभिनूभयो समरको ❀ ढोगे सबै वीरले
हाम्रो कष्ट भयो निवारण भनी ❀ ढोगे हनूमानले ।
आज्ञा भो अनि शेषले सुन तिमी ❀ हे विज्ञ वात्स्यायन
देखेथे जब रामलाइ शिवले ❀ ढोगे खुशी भैकन ॥८११॥

थाले गर्न स्तुती प्रसन्न मनले ❀ हे राम ! हे ईश्वर
मायादेखि छ भिन्न रूप प्रभुको ❀ भन्छन् तपस्वी नर ।
अफै चक्र चलाउँछन् पृथिविको ❀ गर्छन् सुरक्षा पनि
गर्छन् जो सहसा महाप्रलय नै ❀ कर्तव्य हो यो भनी ॥८१२॥

ब्रह्मा बनेर सब सृष्टि तयार गर्ने
विष्णू बनेर सब पालन कार्य गर्ने ।
रुद्र-स्वरूप गरि धारण सृष्टि नाश्ने
रक्षार्थ अद्वितियलाइ सदैव मान्ने ॥८१३॥

तत्काल गर्छु हयमेध भनी प्रभूले
जो अश्व छाडिदिनुभो अहिले खुशीले ।
गंगा बगिन् हजुरकै पदबाट नाथ
तिन्लाइ धारण गरें निहुराइ माथ ॥८१४॥

मारेर ब्रह्मकुल पाप गरें भनेर
हो व्यर्थ गर्नु मख भन्दछु छक् परेर ।
जो धर्म-मूर्ति प्रभु छन् करुणावतार
तिन्लाइ भन्नु कसरी सब पाप टार ॥८१५॥

यो जान्दछू सब कुरा म तथापि भन्छु
लाग्दैन पाप प्रभुलाइ कबै कहन्छु ।
ज्ञानी मुनी ऋषि तपी जति छन् जगत्मा
ती जान्दछन् हजुरको महिमा बखत्मा ॥८१६॥

लाचारी छ प्रभो ! परी सकसमा ❀ रक्षा गरें भूपको
जानेको छु अवश्य भित्रि मनले ❀ यै तत्त्व हो रामको ।
डाकी यो रणमा वृथा दुख दिएँ ❀ त्यस्को क्षमा गर्नुहोस्
आएँ कारण जुन् परेर म यहाँ ❀ त्यो भन्दछू सुन्नुहोस् ॥८१७॥

त्यो उज्जैनविषे सही दुख महा- ❀ कालेश्वरैमा गई
क्षिप्राको तटमा गरे तप ठुलो ❀ सन्तापले आत्तिई ।
मैले तुष्ट भई भनें-नरपते ! ❀ मागेर लेऊ वर
मागे राज्य दिएँ यि देवपुरको ❀ कल्याणका खातिर॥८१८॥
हे राजन् ! रघुनाथले मख ठुलो ❀ गर्नन् र आयोजन
छोड्नेछन् हय आउनेछ सहसा ❀ डुल्दै यहाँ क्वै दिन ।
त्यै वेला तिमिलाइ मद्दत दिई ❀ उद्धार गर्नेछु म
आएँ पूर्ण कबोल गर्न त्यहि नै ❀ संग्राममा आज म ॥८१९॥
आई अश्व लिएर वीरमणिले ❀ अर्पी ठुलो वैभव
माग्नेछन् प्रभुका परी चरणमा ❀ माफी दिनोस् राघव ।
आज्ञा भो शिवका कुरा सुनिसकी ❀ श्रीरामले सादर
रक्षा गर्नु स्वधर्म हो हजुरको ❀ सद्भक्तका खातिर ॥८२०॥
तिम्रो चित्तविषे म छू र तिमि छौ ❀ मेरो सदा चित्तमा
यौटै हौँ यदि भेद गर्दछ भने ❀ पर्नेछ त्यो नर्कमा ।
अज्ञानी जन भेद मान्छन सदा ❀ श्रीराममा शम्भुमा
यौटै मान्दछ जो उही सुख ठुलो ❀ भोग्नेछ वैकुण्ठमा ॥८२१॥
जस्ले गर्दछ भेद राम-शिवमा ❀ हुन् भिन्न-भिन्नै भनी
त्यो पर्नेछ मेरर रौरवविषे ❀ कल्पान्त दुःखी बनी ।
तिम्रा छन् जति भक्त यो पृथिविमा ❀ हुन् भक्त मेरा पनि
मेरा छन् जति भक्त ती सकल हुन् ❀ मान्छू म तिम्रा भनी ॥८२२॥
यस्ता वाक्य सुनेर राम प्रभुका ❀ तत्काल श्री शम्भुले
जीवित् पारिदिए मरे-जति सबै ❀ आफ्नू ठुलो शक्तिले ।
ढोगे वीरमणी उठेर पहिले ❀ श्रीरामका पाउमा
राखेथे शिर पाउमा सुत सबै ❀ ब्यूँतेर त्यै ठाउँमा ॥८२३॥

श्री शत्रुघ्न तथा सबै नृपतिले ❀ गर्दा भएथे स्तुति
अर्पे राज्य र अश्व वीरमणिले ❀ आनन्द मान्दै अति ।
अन्तर्धान भए उसै बखतमा ❀ श्रीराम औ श्री शिव
राजा वीरमणी गए पछि-पछी ❀ शत्रुघ्नजीको तब ॥८२४॥

जो गर्दछन् स्मरण राम-चरित्र नित्य
तिन्लाइ हुन्न दुख क्यै बुझ बात सत्य ।
कम्ती हुँदैन, धन मान कुनै कुराको
भोग्नेछ सौख्य भवका सब सम्पतीको ॥८२५॥



## शेषद्वारा कर्मको फलवर्णन



हे वात्स्यायन! अश्वका पछि हिडे ❀ योद्धा तथा सैनिक
घोडा उत्तम हेमपर्वत पुग्यो ❀ साथै पुगे रक्षक ।
अग्लो पर्वत त्यो हजार दश नै ❀ योजन् थियो विस्तृत
जो उद्यान थियो त्यहाँ मन खिंची ❀ पारीलिने मोहित ॥८२६॥

त्यस्मा छन् लटरम्म फूल-फलका ❀ वृक्षादि नाना थरी
बोल्छन् हंस चकोर सारस चरा ❀ अत्यन्त मीठो गरी ।
देखिन्थ्यो सबतर्फ उत्तम सफा ❀ उद्यान चारैतिर
स्वेच्छाले हय रामको घुमि-फिरी ❀ पौंच्यो त्यहीं आखिर ॥८२७॥

घोडा थ्याच्च बस्यो उठेन कतिले ❀ मारे पिटे तापनि
आँटे पुष्कलले उठाउँछु स्वयं ❀ यस्लाइ मैले भनी ।
केही जोर चलेन पुष्कल बसे ❀ दिक्दार मानी जब
यस्तो के हुनगो भनी मनमनै ❀ शंका निकाल्थे सब ॥८२८॥

लागेथे कपिले उठाउन जसै ❀ शक्ती लगाईकन
बेह्रे पुच्छरले तथापि नहिली ❀ फर्के दुखाई मन ।
जस्ले द्रोणगिरी खिँची पुछरले ❀ सोझै उखेलीदिए
तिन्ले त्यो हयलाई बोक्न नसकी ❀ हारेर छाड्दा भए ॥८२९॥
देखी दुःस्थिति यो सबै नृपहरू ❀ चिन्तित् भएका थिए
श्री शत्रुघ्नजिले सुमन्त्र-सित यो ❀ तत्काल सोधीलिए ।
कस्तो कारण के परेर यसरी ❀ घोडा बस्यो लौ भन
देख्दा यो स्थिति अश्वको घरि-घरी ❀ आत्तिन्छ मेरो मन ॥८३०॥
लागे भन्न सुमन्त्रले सब कुरा ❀ हे नाथ ! ठान्छू म त
छन् धेरै ऋषि विज्ञ यी कुटिविषे ❀ सोधौँ तपस्वीसित ।
गंगाका तटमा पुगे तिनिहरू ❀ सल्लाह गर्दै जब
भेटे विज्ञ मुनी ऋषीश्वर जती ❀ तिन्लाइ सोधे तब ॥८३१॥
सोध्दै आश्रममा पुगे तिनिहरू ❀ बस्थे जहाँ शौनक
जानेथे मुनिले यि राम प्रभुका ❀ हुन् अश्वका रक्षक ।
श्री शत्रुघ्न-समेत भूप सबको ❀ तिन्ले गरे स्वागत
पाद्यार्घ्यादि गरेर आसन दिए ❀ तिन्लाइ राम्रोसित ॥८३२॥
सोधे-पाल्नुभयो यहाँ किन सबै ❀ जान्दै थिए तापनि
वार्ता शौनकको सुनी सब भने ❀ घोडा अड्यो लौ भनी ।
काबेरी नदिको अगाध वनमा ❀ जुन् गौड देशीय हो
त्यस्को वर्णन के गरूँ म अहिले, ❀ अत्यन्त राम्रो छ त्यो ॥८३३॥
बस्थे 'सात्त्विक' नामका मुनि त्यहीँ ❀ गर्थे तपस्या तिनी
धेरै वर्ष बित्यो र सिद्धि बलियो ❀ पाएर हर्षे मुनि ।
तिन्को मृत्यु भयो तपस्थिति-विषे ❀ आयो विमान् स्वर्गको
त्यस्मा साधन जो थिए सुख दिने ❀ सम्पूर्ण भोगादिको ॥८३४॥

क्रीडा गर्न ति अप्सरासित बसी ❀ आकाशमा उड्दथे
मेरू पर्वतको ठुलो शिखरमा ❀ धेरै मुनी बस्तथे ।
तिन्कै सामु लिएर उर्वशि तिनी ❀ दुष्कर्ममा गाडिए
पाए श्राप तुरुन्त राक्षस हुने ❀ साह्रै मुनी आत्तिए ॥८३५॥
ओर्ले सात्त्विक झट्ट विज्ञ मुनिको ❀ पाऊ समाईकन
लागे माग्न क्षमा, परी चरणमा, ❀ रोए दुखाई मन ।
उन्लाई खुशि भै भने ति मुनिले ❀ श्रीरामको अश्व जो
रोक्नेछस् अनि मुक्ति मिल्दछ उहीँ ❀ वाणी सुनी रामको ॥८३६॥
जाओ गर्नु त्यहीँ बसेर सबले ❀ श्रीरामको कीर्तन
त्यस्को म्याद पुग्यो र मुक्त हय त्यो ❀ होला बिना-कारण ।
श्री शत्रुघ्नजिले सुने यति कुरा ❀ ज्ञानी मुनीको जब
कस्तो कर्मगती विचित्र छ मुने ! ❀ जानी नसक्नू सब ॥८३७॥
ज्ञानी सात्त्विकले कुकर्म त्यसरी ❀ जानी नजानी गरे
पाई राक्षस-योनि राम प्रभुकै ❀ इच्छा हुनाले तरे ।
गर्छन् कष्ट सही कती तप ठुलो ❀ सिद्धी मिले तापनि
भोगेच्छा तर नाश हुन्न सहसा ❀ सन्ताप भोग्छन् तिनी ॥८३८॥
यस्तै छन् फल कर्मका कति गरूँ ❀ मैले यहाँ वर्णन
हे शत्रुघ्न ! ति कर्म-चिह्न जति छन् ❀ जानिन्छ देखीकन ।
जानूहोस् अब रामको सब मिली ❀ गर्नूहवस् कीर्तन
घोडा मुक्त हनेछ निश्चय छ यो ❀ सन्तुष्ट होला मन ॥८३९॥
त्याहाँबाट हिडे गए-जति सबै ❀ राजाहरू जो थिए
घोडाका नगिचै पुगेर कपिले ❀ यस्तो प्रतिज्ञा लिए ।
सारा पाप र ताप नाश्तछ उही ❀ श्रीरामको नामले
जाओ शीघ्र विमानमा तिमिहरू ❀ अत्यन्त आनन्दले ॥८४०॥

यो सुन्दा हुँदि श्रापमोचन भई ❀ ठूलो विमान्मा बसी
बीदा सात्त्विकजी भए मनमनै ❀ मानी रहेथे खुशी ।
केही बेर बसी गरे सकलले ❀ श्रीरामको कीर्तन
जै-जैकार गरे समस्त सुरले ❀ आकाशमा गैकन ॥८४१॥




## राजा सुरथको आख्यान




हे वात्स्यायन ! सात मास बितिगो ❀ घोड़ा छुटेको जब
सारा भारतमा डुल्यो अनि पुजे ❀ सारा प्रजाले सब ।
त्यो घोडा जहिले हिमालयतिरै ❀ देशादि डुल्दै गयो
शक्तीले रघुनाथको कहिँ कतै ❀ छूनै नसक्ने भयो ॥८४२॥
अंगै बंग कलिंग देशहरुमा ❀ पूजा गरे भूपले
पौँच्यो कुंडिनपूरमा सुरथजी ❀ विख्यात भूपालले ।
गर्थे शासन रामको स्मरणले ❀ सानै बनी बस्तथे
पूजा श्रीरघुनाथको तुलसिको ❀ ती गाइको गर्दथे ॥८४३॥
पापी कोहि थिएन धर्म-पथको ❀ गर्थे सबै पालन
तिन्को राज्यभरी थिएन झगडा ❀ चोरी हुने कारण ।
त्यस्ता धार्मिक भूपती सुरथका ❀ घुम्थे अनेकौँ चर
साह्रै उत्तम श्यामकर्ण हय त्यो ❀ देख्दा भए आखिर ॥८४४॥
आयो अश्व भनी तुरुन्त चरले ❀ सम्चार ल्याए जब
ल्याओ अश्व भनेर श्रीसुरथले ❀ आज्ञा दिएथे तब ।
ल्याए अश्व तुरुन्त दूतहरुले ❀ आज्ञा सुनी भूपको
इच्छा पूर्ण हुनेछ दर्शन मिली ❀ मेरा प्रभू रामको ॥८४५॥

घोडा बाँधिदिए त अस्तबलमा ❀ तत्काल ती दूतले
गर्नूपर्छ लडाइँ तर्खर गरून् ❀ जम्मा भई सैन्यले ।
ज्ञानी शेष ! सुनीरहू सुरथको ❀ साम्राज्यमा क्वै पनि
अर्काको धन दारमा मन दिने ❀ पापी र द्रोही खुनी ॥८४६॥
कोही व्यक्ति थिएन; हाजिर सबै ❀ हुन्थे खुशी छौं भनी
गर्थे कीर्तन रामको घरघरै ❀ सद्भक्त राम्रा बनी ।
लागे भन्न नरेश राज्यभरिमा ❀ जो छैन लोभी जन
जो छन् पत्नि-व्रती, कुनै सुजनको ❀ निन्दा नगर्ने सुन ॥८४७॥
उल्टो मार्ग त्यजीदिने सुख हुने, ❀ छन् वेद पढ्ने जति
गर्ने राम-भजन् प्रसन्न मनले ❀ बस्छन् अनेकौं यति ।
बोल्ने सत्य कुरा गुणी जनहरू ❀ यो राज्यमा बस्तछन्
सेवा श्रीरघुनाथको नगरने ❀ तत्काल नै भाग्दछन् ॥८४८॥
गर्ने धर्म-विरुद्ध कार्य अथवा ❀ पापी छ जो दुर्जन
त्यस्लाई म त बस्न दिन्नँ पुरमा ❀ यस्तै छ मेरो प्रण ।
राजाको यहि नीतिले यमपुरी ❀ रित्तीसके-झैं भयो
पाईला यमदूतको, सुरथको ❀ काहीं नपर्ने थियो ॥८४९॥
धारेका मुनि-भेष श्रीयम पुगे ❀ सानन्द कोही दिन
वाणी नम्र हुने र राम मुखले ❀ बोल्ने खुशी भैकन ।
देख्दा ती मुनिलाइ श्रीसुरथले ❀ आनन्द माने अनि
पाद्यार्घ्यादि गरेर आसन दिए ❀ बस्नूहवस् हे मुनि ! ॥८५०॥
बोले भूपति हे मुने! शुभ कथा ❀ क्यै भन्नुहोस् रामको
सुन्नाले पनि पाप ताप सहजै ❀ जाला दुखी चित्तको ।
हाँसेथे मुनि बात केहि नभनी ❀ ताली पिटे बेसरी
सोधे कारण भूपले अनि भने ❀ तिन्ले कुरा राम्ररी ॥८५१॥

राजन् ! भन्दछु हाँस्नको सुन तिमी ❀ जुन् मुख्य हो कारण
गर्छौं कीर्तन रामको तिमि ठुलो ❀ कुन् राम हुन् ती भन ।
छन् प्राणी सब कर्मका वशमहाँ ❀ त्योदेखि भिन्नै छ को
कस्को कीर्ति छ स्वर्ग वा नरकमा ❀ सक्नेछ लैजान को ॥८५२॥
जान्नू कर्म प्रधान सन्तति पनी ❀ हुन्छन् ठुला यज्ञले
बस्छन् इन्द्र बनेर स्वर्गपुरिमा ❀ आफ्नू ठुलो कर्मले ।
आफ्नै उत्तम कर्मले विधि भए ❀ ती सृष्टिकर्ता पनि
बस्छन् स्वर्ग गएर कर्म-फलले ❀ राजा तपस्वी मुनि ॥८५३॥
गर्नोस् यज्ञहरू र पूजन पनी ❀ द्यौता सबैको गरी
राख्नोस् कीर्ति ठुलो यही पृथिविमा ❀ हो कार्य त्यै आखिरी ।
तिन्का बात सुनेर क्रोधित भए ❀ तत्काल ती भूपति
यस्ता मानिस राख्नु हुन्न पुरमा ❀ गर्छन् यिनैले खति ॥८५४॥
गिर्छन् ती पदबाट कर्म सकिई ❀ देवेन्द्र ब्रह्मा पनि
को बस्छन् भन स्वर्गमा स्थिर भई ❀ विस्तारले हे मुनि ।
गिर्दैनन् तल रामभक्त हनुमान् ❀ प्रह्लाद ज्ञानी ध्रुव
यस्ता छन् बुझ रामभक्त ऋषिजी ! ❀ अन्यायि को टिक्तछ? ॥८५५॥
जस्ले गर्दछ द्रोह राम प्रभुको ❀ कोही भए तापनि
त्यस्तालाइ धपाउँछू नगरको ❀ बाहीर लौ जा भनी ।
राजाको सुनि बात दूतहरुले ❀ लागे र घोक्र्याउन
आफ्नू रूप लिएर झट्ट यमले ❀ भन्छन् बुझाईकन ॥८५६॥
हे राजन् ! अहिले सबै तरहले ❀ तिम्रो परीक्षा गरें
देखी वृत्ति प्रगाढ राम-पदमा ❀ आश्चर्यमा नै परें ।
जे इच्छा मनमा छ माग नृपते ! ❀ तत्काल दिन्छू वर
मेरो निम्ति अदेय छैन भवमा ❀ पर्दैन मान्नू डर ॥८५७॥

मैले जो तिमिलाइ बेसरि गरेँ ❀ यत्नादि झुक्क्याउने
यस्मा मिल्न सकेन क्यै सफलता ❀ मौका छ खूशी हुने ।
माग्दै छू वर राम-दर्शन-विना ❀ मैले नमर्नूपरोस्
मेरो यो तनमा कदापि भयको ❀ संचार कैह्ले नहोस् ॥८५८॥
बोलेथे यम-रामले हजुरको ❀ इच्छा पुऱ्याईदिनन्
अन्तर्धान भए त्यती भनिसकी ❀ राजा भए खूशि झन् ।
त्याहाँबाट गए सभा-भवनमा ❀ सारा डटेका थिए
गर्नैपर्छ लडाइँ अश्व नदिने ❀ यस्तो निधो गर्दिए ॥८५९॥
जेठा पुत्र थिए गुणी सुरथका ❀ योद्धा ठुला चम्पक
अर्का पुत्र थिए रिपुञ्जय अनी ❀ दुर्वीर औ मोहक ।
ती हर्यक्ष र भूरिदेव, सहदेव् ❀ पर्तापि सूतायन
तिन्का यी बल मोदक प्रभृति हुन् ❀ छोराहरू सज्जन ॥८६०॥
सारा सैन्य र अस्त्र-शस्त्रहरुले ❀ पूरा तयारी गरे
ठूला वीर पराक्रमी जति सबै ❀ योद्धा अगाडी सरे ।
लागे भन्न कथा प्रसन्न मनले ❀ श्रीशेषजीले उता
सारा खल्बलमा परे, हय गयो ❀ ऐह्ले कता हो कता ॥८६१॥
यौटा सेवकले दियो खबर यो ❀ यै राज्यका रक्षक
आई अश्व लगे समाइ बलले ❀ धेरै थिए सैनिक ।
त्यस्को बात सुनेर क्रोधित भई ❀ शत्रुघ्नजी गर्जिए
पार्छू ध्वस्त सबै म यो नगर नै ❀ सुन्दा सबै तर्सिए ॥८६२॥
को हो भूप? सुमन्त्रजी! भन छिटै ❀ को गर्दछन् शासन
तिन्को गर्दछु सुन्नुहोस् हजुर लौ ❀ विस्तारले वर्णन ।
ज्ञानी धार्मिक भूप छन् सुरथजी ❀ सम्पूर्ण संसारमा
जोडी छैन अरू कुनै पनि कहीँ ❀ चल्ने यि झैँ धर्ममा ॥८६३॥

धूलो झैं रघुनाथका चरणको ❀ मान्छन् ति आफूकन
भक्तीमा हनुमान झैं छ नृपको ❀ साह्रै रमेको मन ।
तिन्ले नै रघुनाथको हय लगी ❀ बाँधीलिएका भए
दिन्छन् वा यदि लड्दछन् पनि भने ❀ क्वै दूत आफ्नू गए ॥८६४॥
तिन्को के छ विचार हामि सबले ❀ जानीलिनेछौं जब
गर्ने त्यै अनुसारले अनि पछी ❀ होला निधो त्यो सब ।
यो सल्लाह सुमन्त्रको सुनिसकी ❀ शत्रुघ्न बोल्नूभयो
ल्याऊ अंगदलाइ डाकि नगिचै ❀ भन्छू बुझाई म यो ॥८६५॥
लंकामा दशकंठलाइ तिमिले ❀ पैह्ले भनेझैं गरी
भन्नू भूपतिको सभा–भवनमा ❀ निर्भीक भै राम्ररी ।
पैह्ले भन्नु बुझाइ अश्व तिमिले ❀ पक्रेर ल्यायौ किन ?
जाऊ झट्ट उठेर यै बखतमा ❀ घोडा बुझाईदिन ॥८६६॥
श्रीशत्रुघ्नजिका परी चरणमा ❀ माग्नू क्षमा सादर
भन्नू येति कुरा बुझाइ तिमिले ❀ पर्दैन मान्नू डर ।
पौंचे अंगद भूपको महलमा ❀ तत्काल सोद्धा भए
आएका किन वीर अंगद तिमी ? ❀ भन्दै निकै गर्जिए ॥८६७॥
बोले अंगद भूपका सुनि कुरा ❀ शंका नमानी रति
बाली–पुत्र मलाइ अंगद सबै ❀ भन्छन् चिनेका जति ।
आएँ दूत भएर श्रीरघुपती– ❀ का भाइ शत्रुघ्नको
देऊ उत्तर हे नरेश ! तिमिले ❀ मेरा सबै प्रश्नको ॥८६८॥
ऐह्ले श्रीरघुनाथको हय हरी ❀ ल्याएर बाँध्यौ किन ?
भक्तै हौ तिमि रामका त किन यो ❀ उल्टो गरेका भन ।
जाऊ अश्व र सम्पती सुत लिई ❀ शत्रुघ्नका पाउमा
राखी गर्नु प्रणाम, भन्नु नृपते ! ❀ गर्नूहवस् लौ क्षमा ॥८६९॥

मान्दैनौ तिमि यो कुरा यदि भने ❀ शत्रुघ्न भै क्रोधित
गर्नेछन् सब नाश शस्त्रबलले ❀ साह्रै नराम्रो-सित ।
जस्ले रावण-वंशको गरिदिए ❀ संहार संग्राममा
तिन्को अश्व हरेर यो बखतमा ❀ खोज्यौ निहूँ व्यर्थमा ॥८७०॥
यस्ता बात सुनी भने सुरथले ❀ जे जे भन्यौ वानर
हुन् ती सत्य कुरा म बुझ्दछु सबै ❀ मान्दीनँ मैले डर ।
ती शत्रुघ्नजिको परेर वशमा ❀ सुम्पन्नँ घोडा सुन
मिल्ला दर्शन रामको अनि स्वयं ❀ सक्नेछु सुम्पीदिन ॥८७१॥
मेरो राज्य र सम्पती सुत सबै ❀ गर्छू स्वयं अर्पण
लड्छू क्षत्रिय-धर्मले समरमा ❀ आए कुनै कारण ।
श्रीशत्रुघ्न, कपीपती र नृपती ❀ छन् जो ठुला पुष्कल
राख्नेछू सबलाइ बन्धन कसी ❀ देखाइ आफ्नू बल ॥८७२॥
तिन्का बात सुनेर अंगद निकै ❀ गर्जेर बोले अनि
गर्दै छौ बकवाद व्यर्थ नबुझी ❀ आफै मपाईँ बनी ।
मारेथे लवणासुर प्रभृति जो ❀ शत्रुघ्नले युद्धमा
विद्युत्मालि-समेत राक्षस ठुला ❀ मार्ने ति संग्राममा ॥८७३॥
ती शत्रुघ्न प्रधान वीरकन नै ❀ बाँध्छू भन्यौ जो यहाँ
शोभायुक्त भएन यो नरपते ! ❀ सोची लिए मन्महाँ ।
योद्धा पुष्कलले जिते समरमा ❀ ती वीरभद्रैकन
स्याबासी सबले दिए खुशि भई ❀ हे वीर ! हे सज्जन ! ॥८७४॥
स्वामी श्रीरघुनाथका चरणमा ❀ भक्ती छ जस्को अनि
याहीँ छन् हनुमान वीर नगिचै ❀ हेर्नोस् तपाईँ पनि ।
चिन्दैनन् तिनिलाइ अज्ञ जनले ❀ हुन् रामका सेवक
कोही छैन अरू तिनै भुवनमा ❀ यिन्का सरी लायक ॥८७५॥

छन् सुग्रीव पनी यि वानरपती ❀ बुद्धी छ यिन्को ठुलो
यिन्ले क्रोध गरी लडे समरमा ❀ सम्पूर्ण पार्छन् धुलो ।
राजा वीरमणी, प्रताप र सुमद् ❀ योद्धा कुशध्वज् भए
योद्धा श्रेष्ठ सुबाहु छन् विमलजी ❀ उस्तै ठुला भैगए ॥८७६॥
यस्ता वीर अनेक छन् समरमा ❀ सत्शौर्य ठूलो हुने
तिन्का साथ लडाइँ गर्नु कसरी ❀ कल्याण भेट्टाउने ।
छन् साना भुसुना सरी नरपते ! ❀ सेना यताका सब
गर्नन् रक्षण अश्वका सँग गए ❀ शत्रुघ्नले नै तब ॥८७७॥
तिन्का बात सुनी भने सुरथले ❀ मैले भनेको सुन
जत्ती शक्ति ममा छ उत्ति अरुमा ❀ पाइन्न भन्ने गुन ।
आएका कपि श्यामकर्ण हयको ❀ साथै बनी रक्षक
वाणीले मन कर्मले र तनले ❀ श्रीरामकै सेवक ॥८७८॥
मैले गर्दछु ध्यान नित्य विधिले ❀ श्रीरामकै चिन्तन
तिन्को खूब ठुलो दया छ मनमा ❀ देलान् छिटै दर्शन ।
ऐल्हे छन् जति वीर श्रेष्ठ प्रभुका ❀ हुन् भक्त प्यारा भने
लैजाऊन् हयलाइ बाँधि मकनै, ❀ सक्तैन कोही भने ॥८७९॥
ती शत्रुघ्नकहाँ गई सब कुरा ❀ पैल्हे सुनाओ अनि
जाओ तर्खर युद्धको गर, त्यहीँ ❀ नै आउँला मै पनि ।
फर्के अंगद भूपको सुनि कुरा ❀ आए सभामा जब
जो जो बात भयो उतातिर सबै ❀ तिन्ले सुनाए सब ॥८८०॥
पाए सुन्न जसै विचार नृपका ❀ हे विज्ञ वात्स्यायन !
योद्धा वीर ठुला थिए नृप जती ❀ थाले त्यहीँ गर्जन ।
हाम्रो अश्व हेरर ती सुरथले ❀ जुन् धाक लाए यहाँ
साटो फेर्नु अवश्य पर्दछ छिटै ❀ त्यै घोर संग्राम्महाँ ॥८८१॥

हात्ती र अश्व रथ पैदल सैन्य वीर
शस्त्रास्त्र-सज्जित भए सब उत्लिखेर।
बाजा बजे थरि थरी अति गर्जनाले
पृथ्वी प्रकम्पित भइन् गिरि हल्लनाले ॥८८२॥
कोकोहलो अति भयो ध्वनि स्वर्गमा गो
आश्चर्य देवगणमा सहसा हुने भो।
बाजा विपक्षतिरका पनि बज्न लागे
सेना समुद्र सरि उर्लन लागिहाले ॥८८३॥
शत्रुघ्नले सुमतिलाइ भने बुझाई
देखिन्छ सैन्य नृपको बहुतै सजाई।
आईपुग्यो समरमा अब युद्ध गर्न
जोडी मिलाउनुपर्‍यो बुझि शक्ति मर्म ॥८८४॥
बोले सुमन्त्र अनि केहि गरी विचार
जोडी मिलाउनुपर्‍यो अब वीर धीर।
हाम्रा यि पुष्कल र चम्पक वीर लड्छन्
योद्धा रिपुञ्जय कपीपति-साथ भिड्छन् ॥८८५॥
योद्धा कुशध्वज र लक्ष्मिनिधी मिलेर
दुर्वारको, विमलको र सुबाहु धीर।
अंगद् र धीर सहदेव समान वीर
हर्यक्ष वीर असुताप मिलुन् भिडेर ॥८८६॥
यी भूरिदेव निलरत्न समान जो छन्
योद्धा ति वीरमणिका सँगमा रहन्छन्।
जोडी मिलाइ यसरी रणभूमिमाहाँ
पर्नेछ लड्नु अब हामि डटेर ताहाँ ॥८८७॥

हे बाबु चम्पक ! भनीकन पुष्कलैले
सोधे-बताउ शुभ नाम स्वयं पहीले ।
को हुन् पिता र जननी भन नाम पैह्ले
इच्छा भयो मकन जान्न समस्त ऐह्ले ॥८८८॥
तारा सरी समर-भूमिविषे म देख्छु
शस्त्रास्त्र सज्जित तिमी अति धन्य मान्छु ।
बोले ति चम्पक सुनीकन प्रश्न त्यस्तो
सोध्यौ कुरा समरमा किन आज यस्तो ॥८८९॥
के काम नाम कुलको रणभूमिमाहाँ
शक्ती प्रदर्शन ठुलो बल हुन्छ याहाँ ।
यस्तो भए पनि सुध्याइलियौ तिमीले
भन्छू म नाम सुनिल्यौ क्रमले अहीले ॥८९०॥
माता उनै रघुपती र पिताजि राम
हूँ राम-भक्त अनि बान्धव श्रेष्ठ राम ।
हूँ राम-भक्त उनकै भरमा म लड्छु
तार्छन् मलाइ रणमा भनि आश गर्छु ॥८९१॥
भन्छन् जसोरी सब लोकले त्यो
भन्छू म नाम सुन वीर प्रधान जो हो ।
मेरा पिता सुरथ हुन् नृपती यहाँका
मेरी ति वीरमति हुन् बुझ जन्मदाता ॥८९२॥
अर्को छ नाम ऋतुराजविषे फुलेको
लुट्ने सुगन्ध भ्रमरागणले खुलेको ।
चर्को छ गन्ध फुलको बुझ टाकुरामा
झुल्छन् त्यहीँ भ्रमर-वर्ग वरीपरीमा ॥८९३॥

त्यस्तो छ पुष्प जुन हो त्यहि नाम जान
गर्छू सदैव रणमा म प्रसिद्ध काम।
यस्तो कुरा जब ति पुष्कलले सुनेथे
स्याबास वीर भनि चित्तविषे गुनेथे ॥८९४॥

त्यागी व्यर्थ विवाद वीर ति दुवै ❀ संग्राममा तम्सिए
वर्षाई शर बेसरी ति पिँजरा ❀ जस्तै तुल्याईदिए ।
तीखा वाण चलाइ वीर दुइले ❀ काटीदिएथे शर
हेराहेर गरे परस्पर दुवै ❀ तीखा नयन्ले, तर ॥८९५॥
तीखा वाण चलाइ चम्पकजिले ❀ हाँसी निकै गर्जिए
टुक्रा पुष्कलले समस्त शरको ❀ तत्काल पारीदिए ।
फेरी चम्पकले झिकी शर तिखा ❀ मन्त्रेर छाडीदिए
त्यो काटीकन वीर पुष्कल निकै ❀ संग्राममा गर्जिए ॥८९६॥
छाडे पाँच तिखा-तिखा शरहरू ❀ ताकेर तिन्ले जब
काटे लाग्न नपाइ चम्पकजिले ❀ टुक्रा गराई सब ।
हानेथे सय बाणले समरमा ❀ मार्ने इरादा धरी
व्यर्थै पारिदिए ति पुष्कलजिले ❀ हज्जार टुक्रा गरी ॥८९७॥
छाडे चम्पकले लिई शरहरू ❀ प्रत्यक्ष अग्नी सरी
काटे पुष्कलले समस्त नभमै ❀ टुक्रा हजारौं गरी ।
देखी त्यो शरको लडाइँ दुइको ❀ आश्चर्य मानीकन
हेर्थे देवहरू बसेर नभमा ❀ हर्षित् भएथ्यो मन ॥८९८॥
योद्धा पुष्कलले तुरुन्त रिसले ❀ ब्रह्मास्त्र छाडीदिए
त्यस्को तेज बढी दिशा दश सबै ❀ रातो तुल्याईदिए ।
पल्ट्यो सिन्धु कि यो महाप्रलय हो ❀ भन्ने तुल्याई-दियो
केही बेर रह्यो त्यही स्थिति अनी ❀ बिस्तार शान्ती भयो ॥८९९॥

हाने पुष्कलले रिसाइ बलले ❀ आगो सरीको शर
टुक्रा पारिदिए ति चम्पकजिले ❀ केही नमानी डर ।
छाडे मन्त्र पढेर राम प्रभुको ❀ रामास्त्र तिन्ले जब
रोक्ने शक्ति पुगेन पुष्कलजिको ❀ क्यै आत्तिएथे तब ॥९००॥
मौका पाइ तुरुन्त बाँधि रथमा ❀ तिन्लाइ राखीलिए
मेरो जीत भयो भनेर रणमा ❀ ती बेसरी गर्जिए ।
हाहाकार परी गए चरहरू ❀ शत्रुघ्नका पासमा
बाँधे पुष्कललाइ चम्पकजिले ❀ भन्ने सुने युद्धमा ॥९०१॥
सेनालाइ धपाउने दश दिशा ❀ कुन् वीर होला भनी
श्रीशत्रुघ्न असाध्य चिन्तित भए ❀ जान्दै थिए तापनि ।
लागे भन्न तुरुन्त गर्जि हनुमान् ❀ हे नाथ ! सुन्नूहवस्
योद्धा चम्पकले ति पुष्कलकनै ❀ बाँधे भनी जान्नुहोस् ॥९०२॥
छन् लैजान तयार यो बखतमा ❀ आज्ञा म पाऊँ अनि
जानेछू रणमा मिली सफलता ❀ फिर्छू अवश्यै पनि ।
जाऊ हे हनुमान वायु-गतिले ❀ छन् ती जहाँ पुष्कल
ल्याऊ मुक्त गराइ झट्ट तिमिले ❀ देखाइ आफ्नू बल ॥९०३॥
श्रीशत्रुघ्नजिको कुरा सुनिसकी ❀ दौडे ति वायूसुत
गर्जे चम्पकलाइ पर्खि तँ भनी ❀ अत्यन्त चर्कोसित ।
हाने चम्पकले अनेक शरले ❀ तिन्लाइ ताकी जब
टुक्रा त्यो हनुमानले गरिदिए ❀ बाँकी नराखी सब ॥९०४॥
छाडे चम्पकले अरू पनि तिखा ❀ मन्त्रेर धेरै शर
भाँचे ती हनुमानले सहजमा ❀ मान्दै नमानी डर ।
यौटा वृक्ष उखेलि वीर कपिले ❀ हाने रिसाई अनि
काटे चम्पकले अनेक टुकुरा ❀ पारेर लौखा भनी ॥९०५॥

हात्तीलाइ घुमाइ झट्ट कपिले ❀ ताकेर हाने जब
रोके चम्पकले तुरुन्त शरले ❀ त्यो हात्तिलाई तब ।
ढुंगाले कपिले प्रहार सहसा ❀ गर्दै रहे तापनि
काटे चम्पकले नलागि तनमा ❀ हाँसीरहेथे तिनी ॥९०६॥
पक्री चम्पकलाइ वीर हनुमान् ❀ आकाशमा उफ्रिए
माथी नै दुइ वीर घोर रवले ❀ गर्जेर लड्दै थिए ।
पाऊ पक्रि घुमाइ वीर कपिले ❀ फालीदिएथे जब
योद्धा चम्पकले धरी पुछरमा ❀ त्यो वेग रोके तब ॥९०७॥
घुम्दै फन्फनि भूमिमा कपि-पती ❀ पच्छारिए बेसरी
त्याहाँबाट उठेर चम्पककनै ❀ पक्री नराम्रो गरी ।
पच्छारे गजमाथि झट्ट कपिले ❀ मर्लाकि चाँडै भनी
मूर्च्छा पर्न गए ति चम्पक ठुला ❀ योद्धा थिए तापनि ॥९०८॥
बोकी पुष्कललाइ वीर हनुमान् ❀ तत्काल फर्की गए
हाहाकार पऱ्यो विपक्ष-रणमा ❀ सेनासहित् आत्तिए ।
छोरो मूर्च्छित युद्धमा हुन गयो ❀ भन्ने सुनी भूपति
आएथे दगुरेर त्यो समरमा ❀ चिन्तित् थिए ती अति ॥९०९॥
चिच्याए-पख वीर हे कपिपती ! ❀ आएँ म संग्राममा
गर्दै छौ तिमिले पराक्रम ठुलो ❀ देख्छू म यो युद्धमा ।
भन्छू धन्य तिमी गएर सुनकी ❀ लंका जलाईदियौ
मूर्च्छित् लक्ष्मणलाइ औषधि दिई ❀ जागा गराईलियौ ॥९१०॥
ठूला वीर तिमी प्रधान सबमा ❀ छौ रामका सेवक
तिम्रो घोर प्रहारले समरमा ❀ मूर्च्छा पऱ्यो चम्पक ।
मैले नै तिमिलाइ पारि शरको ❀ व्यामोहमा, वानर !
लैजान्छू दरबारमा म अहिल्यै ❀ मान्दीनँ केही डर ॥९११॥

मेरो यो प्रण हो भनेर तिमिले ❀ एकेक जानीलिए
राजाको सुनि बात वीर हनुमान् ❀ हाँसेर बोल्दा भए ।
हे राजन् ! तिमि गर्दछौ स्मरण जो ❀ श्रीरामका पाउको
उन्कै सेवक हूँ म बन्धन परे ❀ चिन्ता छ के बातको ॥९१२॥
दिन्छन् मुक्ति मलाइ राम प्रभुले ❀ तिम्रो छ जस्तो प्रण
त्यो पूरा सहजै गर्‍यौ यदि भने ❀ सन्तुष्ट होला मन ।
राजाले हनुमानका थरि-थरी ❀ वार्ता सुनेथे जब
झर्को मानि गरे प्रहार शरले ❀ सम्झी उनै राघव ॥९१३॥
भाँचेथे हनुमानले शर जती ❀ तिन्ले चलाए सब
हेर्थे छक्क परी त्यहीं सुरथजी ❀ के गर्नुपर्ला अब ।
अर्को श्रेष्ठ धनू लिएर नृपले ❀ हाने अनेकौं शर
भाँचेथे हनुमानले अनि लिए ❀ अर्को धनू सुन्दर ॥९१४॥
लिन्थे दिव्य धनू जती सुरथले ❀ हान्नै नपाईकन
पार्थे त्यो टुकुरा छिटै कपि-पती ❀ थाल्थे अनी गर्जन ।
भाँचे यै रितले सयौं धनुहरू ❀ टुक्रा गराई जब
हाने झट्ट त्रिशूल ती सुरथले ❀ सम्झी उनै राघव ॥९१५॥
लागी घोर त्रिशूल वीर हनुमान् ❀ क्यै बेर मूर्छित् भए
आयो चेत तुरुन्त त्यो समरमा ❀ चर्को गरी गर्जिए ।
पक्रेथे रथ झट्ट श्रीसुरथको ❀ आकाशमा पौंचिए
हाने भूपतिले ठुलो परिघले ❀ लाग्यो भनी हर्षिए ॥९१६॥
फ्याँके त्यो रथ झट्ट वीर कपिले ❀ तत्काल धूलो भयो
अर्को नै रथमा चढी कपितरफ् ❀ जाँदा भए भूप जो ।
तिन्को त्यो रथ सारथी पुछरले ❀ बेरेर फ्याँकीदिए
अर्को भूपतिले लिए रथ ठुलो ❀ मार्छू भनी गर्जिए ॥९१७॥

टुक्रा त्यो रथको पनी गरिदिए ❀ योद्धा हनूमानले
धेरै नै रथ टुक्रिए अनि भने ❀ 'स्याबास' ती भूपले ।
ऐहे वीर ! गर्‍यौ पराक्रम ठुलो ❀ हे वायुका नन्दन
छैनन् वीर, तिमी समान, न पछी ❀ होलान् कुनै सज्जन ॥९१८॥
डुब्नेछौ तिमि रामको रसमहाँ ❀ हौ रामकै सेवक
गर्नेछन् गुण-गान राम-प्रभुको ❀ छौ भक्तका लायक ।
जैह्ले सम्म धनू तयार नगरूँ ❀ पर्खी रहू वांनर !
गर्नेछू म प्रहार यो समरमा ❀ सम्झी उनै ईश्वर ॥९१९॥
यस्तो बात भनी तयार धनु त्यो ❀ पारीलिए भूपले
हाने पाशुपतास्त्र श्रीसुरथले ❀ अत्यन्त उत्साहले ।
भाँचे पाशुपतास्त्र झट्ट कपिले ❀ हा-हा पर्‍यो युद्धमा
हेर्थे छक्क परेर दर्शक तथा ❀ सेना ति संग्राममा ॥९२०॥
सम्झी राम-पदारविन्द मनले ❀ गर्जे हनूमान् जब
हाने झट्ट रिसाउँदै सुरथले ❀ ब्रह्मास्त्र मन्त्री तब ।
त्यो ब्रह्मास्त्र निलीदिए सहजमै ❀ योद्धा हनूमानले
देखी छक्क परे निकै सुरथजी ❀ अत्यन्त उत्साहले ॥९२१॥
सम्झी श्रीरघुनाथलाइ मनले ❀ रामास्त्र पक्रीलिए
राखी त्यो धनुमा खिँचेर बलले ❀ सन्धान गर्दा भए ।
बाँधीयौ अब हेर वीर हनुमान् ❀ भन्दै निकै वेगले
बाँधीए कपि राम-सेवक भई ❀ तत्काल रामास्त्रले ॥९२२॥
बोले बन्धनमा म छू रघुपते ! ❀ हे सृष्टिका पालक !
लैजाऊ पुरमा छिटै सुरथजी ! ❀ हेरी रहुन् सैनिक ।
आँटे गर्न त्यसै र पुष्कल पुगे ❀ तत्काल संग्राममा
हाने बाण तिखा-तिखा सुरथले ❀ तिन्को ठुलो छातिमा ॥९२३॥

काटी त्यो शरजाल पुष्कलजिले ❀ छाडे अनेकौँ शर
काटे ती शरलाइ एक शरले ❀ भूपालले आखिर।
योद्धा पुष्कलको तथा सुरथको ❀ संग्राम त्यो मच्चियो
सारा बाण भएर व्याप्त नभमा ❀ हा-हा गराईदियो ॥९२४॥
थाले मर्न सबै चराचरहरू ❀ पूरा अँध्यारो भयो
पर्दा घोर लडाइँ वीरहरुमा ❀ उत्साह बढ्दै गयो ।
यौटा बाण झिकी तिखो सुरथले ❀ ताकेर छाडीदिए
लाग्यो पुष्कलको गई हृदयमा ❀ तत्काल मूर्च्छित् भए ॥९२५॥
देखेथे जब त्यो स्थिती समरको ❀ शत्रुघ्न क्रोधित् भए
पार्‍यौ पुष्कललाइ मूर्च्छित यहीँ ❀ बन्धन् हनूमान् भए ।
यस्तो अद्भुत कर्म जो गरिलियौ ❀ आऊ अगाडी अब
बाँच्दैनौ तिमि यो ठुलो समरमा ❀ रक्षा गरून् राघव ॥९२६॥
यो देखी प्रभु रामको स्मरण ती ❀ गर्दै थिए चित्तमा
ऐल्हे जो हनुमान पुष्कलहरू ❀ योद्धा गिरे युद्धमा ।
हे शत्रुघ्न ! तिमी पनी समरमा ❀ गिर्छौ नराम्रो-सित
सम्झी श्रीरघुनाथलाइ मनले ❀ आफ्नू चिताऊ हित ॥९२७॥
यस्ता बात भनी हजार शरले ❀ हाने जसै भूपले
थाले भाग्न बचाइ जीवन कती ❀ सेनाहरू भीतिले।
श्रीशत्रुघ्न अनेक बाण-पिँजरा ❀ जस्सै परे बन्धन
काटूँ यो शरजाल के गरि भनी ❀ गर्दै रहे चिन्तन ॥९२८॥
मन्त्री उत्तम अग्निदैवत ठुलो ❀ दिव्यास्त्र छाडीदिए
त्यस्को नाश गराइ उज्ज्वल सफा ❀ सारा गराईलिए ।
छाडी वारुण अस्त्र ती सुरथले ❀ हा-हा गराए जब
सम्झे योगिनिबाट प्राप्त अघिको ❀ त्यो अस्त्रलाई तब ॥९२९॥

छाड्छू मोहिनि अस्त्र यै अब भनी ❀ आँटे ति शत्रुघ्नले
त्यो देखीकन भन्दछन् सुरथजी ❀ निर्भीक आनन्दले ।
पारेको छ मलाइ मोहित स्वयं ❀ श्रीरामको नामले
मेरो सक्तछ गर्न के समरमा ❀ यो मोहिनी अस्त्रले ॥९३०॥
छाडे यै बिचमा रिसाइ बहुतै ❀ त्यो अस्त्र शत्रुघ्नले
काटे मोहन अस्त्र एक शरले ❀ हाँसेर भूपालले ।
केही गर्न सकेन यस् बखतमा ❀ त्यो तेजिलो अस्त्रले
के गर्दा हित हुन्छ हामि सबको ❀ भन्थे दुखी चित्तले ॥९३१॥
मारेथे लवणासुर प्रभृति ती ❀ पापिष्ठ जुन् बाणले
ताके लक्ष्य गराइ बाण त्यहि नै ❀ मन्त्रेर शत्रुघ्नले ।
लागे भन्न तुरुन्त नै सुरथले ❀ देखेर उत्साह त्यो
पापीको अनि दुष्टको हृदयमा ❀ लाग्ने यही बाण हो ॥९३२॥
यो लाग्दैन कदापि भक्तगण वा ❀ श्रीरामका दासमा
व्यर्थै हुन्छ भनेर जान तिमिले ❀ आफ्नू दुखी चित्तमा ।
यस्ता बात सुने पनी हृदयमा ❀ ताकेर छाडीदिए
त्यस्को अग्नि-शिखा छुटी नरपती ❀ क्यै बेर मूर्च्छित् भए ॥९३३॥
आयो चेत छिटै र झट्ट नृपले ❀ ताँदो खिँची बेसरी
हानेथे सहसा अमोघ शरले ❀ मन्त्रेर सोही घरि ।
काटेथे बिचमै तथापि टुकुरा ❀ यौटा उछिट्टी गयो
श्रीशत्रुघ्नजिको गई हृदयमा ❀ त्यो वेगले बज्रियो ॥९३४॥
के आश्चर्य भयो भनी समरमा ❀ चर्चा त्यसैको चल्यो
मूर्च्छा पर्न गई ढले ति रथमै ❀ चौतर्फ हा-हा भयो ।
लागे भाग्न अनेक सैनिकहरू ❀ आफ्नू लिई जीवन
छोरा साथ लिई दशै सुरथजी ❀ थाल्दा भए गर्जन ॥९३५॥

आए लड्न जती सबैकन त्यहीँ ❀ चुट्तै भगाईदिए
स्यावासी सबले दिए र सुरले ❀ जै-जै भनेका थिए ।
लागे भन्न कथा ति शेष प्रभुले ❀ हे विज्ञ वात्स्यायन
देखी दुःस्थिति युद्धको गरिदिए ❀ सुग्रीवले गर्जन ॥९३६॥
योद्धा वीर समस्त राम प्रभुका ❀ मूर्च्छित् गराईदियौ
लम्की-झम्कि गरेर शेष सबको ❀ शेखी उतारीलियौ ।
आऊ लड्न छिटै भनी रुख ठुलो ❀ तिन्ले उखेलीलिए
ताकी भूपतिको विशाल शिरमा ❀ तत्काल हानीदिए ॥९३७॥
तिन्को त्यो रुखलाइ श्रीसुरथले ❀ लाग्नै नपाईकन
टुक्रा पारिदिए र एक शरले ❀ हानी गरे गर्जन ।
तिन्को चोट खपेर झट्ट कपिले ❀ ढुंगा चलाए जब
हात्ती अश्व तथा ठुलो गिरिसमेत् ❀ फाल्दै गएथे तब ॥९३८॥
काटी ती सबलाइ श्रीसुरथले ❀ रामास्त्र छाडीदिए
योद्धा वानरलाइ घोर रणमा ❀ तत्काल बाँधीलिए ।
हुन् यी उत्तम राम-भक्त सबमा ❀ जाने ति सुग्रीवले
स्याबासी नृपलाइ बेसरि दियो ❀ तिन्को दुःखी चित्तले ॥९३९॥
पारेँ बन्धनमा भनी सुरथले ❀ चर्को गरी गर्जिए
तिन्का पुत्र सबै र सैनिकहरू ❀ अत्यन्त हर्षित् थिए ।
त्यो संग्रामभरी बज्यो विजयको ❀ डंका तिनै भूपको
हेर्थे छक्क परी सबै सुरहरू ❀ आकाशमा युद्ध त्यो ॥९४०॥

हाम्रो भयो विजय यो रणमा अहीले
बाजा बजाउ सबले खुशिले पहीले ।
छोराहरू सब लिई रथमा बसेर
राजा हिडे महलतर्फ निकै डटेर ॥९४१॥

राखेर बन्धनविषे हनुमानलाई
हाँसी भने नृपतिले मनमा रमाई।
हौ राम-भक्त तिमि हे हनुमान वीर
बन्धन् छुटाउन निकै बन वीर धीर ॥१४२॥
सम्झेर राम-पदको गर ध्यान ऐह्ले
आएर दर्शन दिनन् प्रभुले खुशीले।
मुक्ती दिनेछु अनि मात्र भनेर जान
दर्शन् नपाइकन छाड्दिनँ बात मान ॥१४३॥
छन् ती दयालु रघुनाथ त्यसै हुनाले
चाँडै लगाउ तिमि ध्यान प्रसन्नताले।
सल्लाह श्रीसुरथको जब सुन्न पाए
चिम्ली दुवै नयन ती हनुमान् रमाए ॥१४४॥
हे राम! हे रघुपते! करुणावतार!
सन्ताप भक्तजनको सहजै उतार।
हामीहरू सकल बन्धनमा परेर
गर्छौं पुकार भगवन्! पदमा नुहेर ॥१४५॥
संकष्ट पर्दछ जती-जति देवतामा
गर्ने निवारण प्रभो! छ दया हजुर्मा।
हे रामचन्द्र! रघुनन्दन! शक्तिसिन्धो
हे भक्तवत्सल! दयामय! दीनबन्धो ॥१४६॥
हे शक्ति-भूषण विभो! रघुवंश नाथ!
गर्छू प्रणाम प्रभुलाइ म भक्तिसाथ।
हामीहरू सुरथका वशमा परेर
बिन्ती छ दर्शन दिनोस् नगरी अबेर ॥१४७॥

यस्तै गरे स्तुति जसै हनुमानजीले
पाल्नूभयो रघुपती सहसा खुशीले ।
भाई ति लक्ष्मण भरत् ऋषिवृन्दलाई
राखेर पुष्पकविषे करुणा जनाई ॥९४८॥
पाल्नूभयो रघुपती जब सामुमाहाँ
हर्षित् भए सकल दर्शन पाइ ताहाँ ।
देखे जसै सुरथले रघुनाथलाई
ढोगे झुकेर पदमा बहुतै रमाई ॥९४९॥
आज्ञा भयो प्रभुजिको नृपते ! तिमीले
जुन् कर्म यो गरिदियौ रणमा अहीले ।
मेरा यि भक्त हनुमान्‌कन बाँधिलियौ
यै बातले नृपति भक्त ठुला कहीयौ ॥९५०॥

यस्ता बात भनेर राम प्रभुले ❀ आफ्नू ठुलो शक्तिले
बन्धन्-मुक्त गराइ बक्सनुभयो ❀ तत्काल आनन्दले ।
मूर्च्छामा जति वीर सैनिक थिए ❀ सारा भए जागृत
तिन्ले सादर रामको स्तुति गरे ❀ अत्यन्त श्रद्धा-सित ॥९५१॥
राजाका दश पुत्रले र नृपले ❀ श्रीरामको सादर
पाद्यार्घ्यादि समेत पूजन गरे ❀ मान्दै ठुला ईश्वर ।
घण्टा-वादन पुष्प-वर्षण गरे ❀ चौतर्फ शंख-ध्वनि
ज्ञानी विप्र तथा मुनीश्वर यती ❀ गर्थे ति वेद-ध्वनि ॥९५२॥
पाऊमा प्रभुका परी सुरथले ❀ बिन्ती गरे हे प्रभो !
मेरो जो छ सबै समर्पण गरेँ ❀ स्वीकार होस् हे विभो ।
मैले जन्म लिनू पनी सफल भो ❀ पाएँ यहीँ दर्शन
स्वामीको अब श्यामकर्ण हय यो ❀ ल्याएँ बुझाईदिन ॥९५३॥

मैले जुन् अपराध यो समरको ❀ निम्ती गरेँ यो घरि
त्यस्को निम्ति क्षमा म माग्दछु दिनोस् ❀ राखी दया हे हरि !
यस्तो बिन्ति सुनेर ती सुरथको ❀ हाँसेर श्री रामले
आज्ञा गर्नुभयो प्रसन्न म भएँ ❀ तिम्रो सबै कामले ॥१५४॥
मेरो अश्व भनी गऱ्यौ जतनले ❀ त्यस्को सुरक्षा पनि
लड्नू क्षत्रिय-धर्मले समरमा ❀ कर्तव्य ठूलो भनी ।
यस्मा छैन मलाइ क्रोध अथवा ❀ क्यै खिन्नता चित्तमा
स्याबासी बरु दिन्छु हे नरपते ! ❀ तिम्रो यही कार्यमा ॥१५५॥
मेरा भक्त तिमी प्रधान सबमा ❀ जानेर आएँ यहाँ
जान्छू देउ बिदा प्रसन्न मनले ❀ त्यो यज्ञभूमीमहाँ ।
बस्नूभो रघुनाथजी सुरथको ❀ आतिथ्यमा तीन् दिन
त्यो चौथो दिन फेरि पुष्पक चढी ❀ फिर्नूभएथ्यो, सुन ॥१५६॥
घोडा छाडिदिए उसै बखतमा ❀ बाजा बजाईकन
छोरालाइ दिएर राज्य नृपती ❀ साथै गए, सज्जन ।
सारा वीर तथा अनेक नृपती ❀ योद्धा तथा नायक
पूरा लश्कर नै चल्यो उदधि झैँ ❀ भै अश्वका रक्षक ॥१५७॥

## सीताजीका कुमार लव-कुशको वर्णन



लागे भन्न बुझाइ शेष प्रभुले ❀ हे विज्ञ वात्स्यायन !
लाग्यो उत्तम श्यामकर्ण हय त्यो ❀ नाच्दै घुमी दौडन ।
गंगाको तटमा पुग्यो त्यहिँ थियो ❀ श्रीवाल्मिकी-आश्रम
धेरै नै ऋषिका कुटीहरु थिए ❀ साना ठुला उत्तम ॥१५८॥

चारैतर्फ अनेक पुष्प फलका ❀ उद्यान छन् सुन्दर
बोल्दै छन् पशु-पंछि वृक्षहरुमा ❀ मीठो निकाली स्वर ।
पत्नी श्री रघुनाथकी त्यहिँ थिइन् ❀ सीता बनी दुःखिनी
काट्तै थिन् दिन कष्टका थरि-थरी ❀ हो भोग मेरै भनी ॥९५९॥
जम्ल्याहा दुइ पुत्र जन्मन गए ❀ सीताजिका, यो कुरा
पैह्ले नै तिमिले सबै सुनिसक्यौ ❀ मैले बताएँ पुरा ।
कान्छा जो लव नामका सुत थिए ❀ सीताजिका सुन्दर
डुल्दै ती ऋषिपुत्रका सँगमहाँ ❀ सानन्द केही पर ॥९६०॥
केही दूर गए बटुल्न समिधा ❀ ती साथिका साथमा
देखेथे त्यहिँ श्यामकर्ण हय त्यो ❀ त्यै झाडिको माझमा ।
लागे भन्न तुरुन्त साथिहरु हो ! ❀ देखिन्छ जुन् अश्व यो
यस्को श्रेष्ठ निधारमा छ सुनको ❀ यो टल्किने पत्र जो ॥९६१॥
पक्री यस्कन पढ्नुपर्दछ सबै ❀ एकेक यी अक्षर
देख्छू अश्व पनी विचित्र छ म यो ❀ अत्यन्त नै सुन्दर ।
कस्ले छाडिदियो सुरम्य वनमा ❀ आयो यहाँ के गरी !
यस्ता बात गरी गए नगिचमा ❀ केही अगाडी सरी ॥९६२॥
पक्री त्यो हयको लगाम सुनको ❀ हेर्दै रहे पत्रक
लागे पढ्न अनी ति अक्षरहरू ❀ हेर्थे अरू रक्षक ।
टल्कन्थे रविका सफा किरण झैँ ❀ त्यो अश्वका भूषण
हेर्थे छक्क परी कुमार ऋषिका ❀ आश्चर्य मानीकन ॥९६३॥

श्री सूर्य वंश-बिचमा मणि झैँ भएको
जस्को सुकीर्ति छ सबैतिर फैलिएको ।
जो श्रेष्ठ छन् धनुषधारिहरू सबैमा
जो जित्तछन् सकल शत्रुहरू क्षणैमा ॥९६४॥

सम्पूर्ण देवगणले निहुराइ माथ
गर्छन् प्रणाम पदमा झुकि भक्तिसाथ।
गर्छन् सदा चरण-स्पर्श ति वीर जस्को
तोड्छन् घमण्ड रणमा डटि शत्रुको जो ॥९६५॥
जस्का पिता दशरथ प्रभुता भएका
उन्कै सुपुत्र बनि राघव जन्मिएका।
हो ब्रह्म-बीज भनि जान्न नपाउनाले
मारेर रावण धड्यो जब खिन्नताले ॥९६६॥
हत्या मलाइ यहि लाग्न गयो भनेर
त्यै नाशन-खातिर समस्त निधो गरेर।
यो श्यामकर्ण हय छाडिदिए र ऐल्हे
रक्षार्थ सैनिकहरू सब छन् अहीले ॥९६७॥
हात्ती र अश्व रथ पैदल सैन्य धेर
छन् साथमा बुझिलिनू मनमा गुनेर।
शत्रुघ्न छन् ति सबमा रणमा प्रधान
हुन् भाइ ती प्रभुजिका अति भक्त जान ॥९६८॥
मारे लडेर लवणासुरलाइ जस्ले
सक्छन् यि जित्न यमलाइ पनी त्यसैले।
क्वै वीर क्षत्रिकुलमा छ भने प्रधान
यो अश्वलाइ ति बढून् बलले समात्न ॥९६९॥
शक्ती र शौर्य नभए रणको विचार
शत्रुघ्नको शरणमा परि न्यूरिएर।
आफ्नू समस्त धन-मान र राज्य सुम्पून्
श्री रामको मखविषे ति अवश्य जाऊन् ॥९७०॥

त्यस्तो पढेर सुन-पत्र रिसाइ धेर
लागे ति सोध्न लव वीर त्यहीँ डटेर।
कुन् वीर हो सबल क्षत्रिय राम भन्ने
शत्रुघ्न भाइ उसको छ कहाँ र भेट्ने ॥९७१॥
गर्दै छ शेखि यसरी किन त्यो बढेर
त्यस्को घमण्ड सब चूर हुनेछ हेर।
क्यै शक्ति शौर्य छ भने हय यो फिराऊन्
नाहीँ त पाउ कुशका खुशिले समाऊन् ॥९७२॥
घोडा म दिन्न सबको अभिमान् नतोडी
गिर्नन् अवश्य रणमा बुझ क्वै नछोडी।
फूर्ती जनाइ यसरी लिइ अश्वलाई
बाँधीदिए पर लगी मनमा रमाई ॥९७३॥
तिन्का सखाहरु थिए ऋषि-पुत्र जो जो
तिन्ले भने हित कुरा अनि सत्य जो हो।
हो अश्व राम प्रभुको किन यो समायौ
आपत्तिलाइ तिमिले किन व्यर्थ डाक्यौ ॥९७४॥
हो श्यामकर्ण हय यो रघुनाथजीको
देऊ बुझाइ मख-खातिर छोडिएको।
तिन्ले भने हित कुरा जब यो बुझाई
लागे ति भन्न लवजी-सुनिलेउ भाइ ॥९७५॥
हूँ वीर क्षत्रिय-कुमार भनेर जान
संग्रामको भय म मान्दिनँ केहि मान।
थाहै नपाइकन क्षत्रिय-धर्म के हो!
बोल्छौ अनाहक कुरा नबुझेर जो हो ॥९७६॥

हो भात नै प्रिय ति ब्राह्मणको त्यसैले
जाऊ र खाउ घरमा बसि भात पैह्ले ।
इच्छा भए यहिँ बसेर लडाइँ हेर
नाहीँ त जाउ कुटिमा नगरी अबेर ॥९७७॥
यस्ता कुरा लवजिको जब सुन्न पाए
केही नबोलि ऋषि-पुत्र सबै डराए ।
जो अश्व-रक्षक थिए सब वीर धीर
लागे ति खोज्न हयलाइ बनी अधीर ॥९७८॥
देखेर अश्व-नगिचै लव वीरलाई
सोधीलिए शिशु भनी बहुतै रमाई ।
हे बाबु ! अश्व किन पक्रिलिएछ कस्ले
बाँधीलिएछ किन थाह नपाइ उस्ले ॥९७९॥
यस्ता कुरा जब सुने लव झोक्किएर
मैले पढेँ सब कुरा हय पक्रिएर ।
हेलाँ नगर्नु सहसा शिशु जानि ऐह्ले
हेरे पराक्रम ठुलो छ भनी सबैले ॥९८०॥
छन् दाजु श्रेष्ठ कुश वीर सहाय गर्ने
छन् वीर को मकन जित्न अगाडि सर्ने ।
आए भने यम पनी नडराइ लड्छु
विश्वास राख्छु मनमा म अवश्य जित्छु ॥९८१॥
यस्ता कुरा जब ति बालकको सुनेथे
तत्काल सैनिक मिली सबले भनेथे ।
गर्दै छ शेखि किन बालक यो बढेर
हे भाइ हो ! हय फुकाइलिऊँ गएर ॥९८२॥

यस्तो मतो गरि छुटाउन अश्वलाई
सेनाहरू हिडिगए बहुतै रमाई ।
देखे जसै दगुरि सैनिक ती गएको
देखेर साहस ठुलो सबले गरेको ॥९८३॥

वर्षाए शर बेसरी वरि-परी ❀ पानी परे-झैँ गरी
लागी चोट गिरे कती, कति त्यसै ❀ भागे पछाडी सरी ।
त्यो सम्चार लग्यो तुरुन्त चरले ❀ शत्रुघ्नका पासमा
सानो बालकले लग्यो हय स्वयं ❀ आएर यो झाडिमा ॥९८४॥

घोडा ल्याउँ भनी ससैनिक गयौं ❀ हामी अगाडी जब
सानो बालकले डटेर पथमा ❀ हा-हा गरायो तब ।
यो संवाद सुनेर क्रोधित भए ❀ शत्रुघ्नजी बेसरी
लागे भन्न कराइ उच्च स्वरले ❀ सातो सबैको हरी ॥९८५॥

सेना छन् कति ? वीर छन् नरपती ❀ त्यो अश्वका साथमा
त्यस्को ख्याल नराखि निद्रित अही ❀ पक्रीलियो हातमा ।
आए बालक-रूप धारण गरी ❀ ब्रह्मा कि विष्णू, शिव
जो हुन्, युद्ध हुनेछ घोर रणमा ❀ छाड्दीनँ मैले अब ॥९८६॥

को हो वीर ठुलो ? कि बालक कुनै ❀ थाहै नपाईकन
पक्र्यो श्रीरघुनाथको हय यहाँ ❀ हो विज्ञ वा दुर्जन ।
हे सेनापति वीर हो ! तिमिहरू ❀ जाओ लिई सैनिक
ल्याओ झट्ट फिराइ अश्व बलले ❀ लैजाउ संरक्षक ॥९८७॥

श्री शत्रुघ्नजिको सुनी हुकुम यो ❀ सेना भए तत्पर
धेरै वीर लिएर सैन्य सँगमा ❀ हिड्दा भएथे, तर ।
पौंचे लड्न र अश्व ल्याउन भनी ❀ जंगल्विषे ती जब
देखे बालक एक सुन्दर त्यहाँ ❀ हाँसीरहेको तब ॥९८८॥

योद्धा उत्तम कालजित् अघि सरी ❀ बोल्यो बुझाईकन
माया लाग्छ मलाइ बालक तिमी ❀ को हौ म क्यै जान्दिनँ ।
पक्रेका रघुनाथको हय यहाँ ❀ जान्दै नजानी किन ?
तिम्रो रूप छ रामचन्द्र सरिको ❀ शंकित् छ मेरो मन ।।९८९।।
देखी बालकरूप सूचन दिएँ ❀ तिम्रो चिताई हित
नाहीं ता म लडाइँ गर्न अहिल्यै ❀ सक्थें नराम्रोसित ।
घोडा देउ छिटै घमण्ड नगरी ❀ शत्रुघ्नका पाउमा
माफी पाउँ भनेर ढोग, उनले ❀ गर्नन् अवश्यै क्षमा ।।९९०।।
यस्ता बात सुनेर कालजितका ❀ बोले रिसाई लव
बर्ता बोल्नु वृथा छ यो समरमा ❀ देखाउ शक्ती अब ।
देख्दै छू तिमिले लडेर यहिँ नै ❀ त्याग्ने भयौ जीवन
आऊ अश्व लिने भए समरमै ❀ श्रीरामलाई भन ।।९९१।।
हेलाँ गर्नु वृथा छ, बालक भनी ❀ मान्दीनँ मैले डर
आफ्नू काल बुझी मबाट रणमा ❀ बस्नू तिमीले पर ।
माताले तिमिलाइ कालजित हो ❀ भन्नू पनी व्यर्थ हो
आफूलाइ हुँ कालजित् बुझिलिनू ❀ हो धूर्तता मात्र यो ।।९९२।।
जित्नेछौ जब कालरूप मकनै ❀ हे वीर ! संग्राममा
तिम्रो नाम हुनेछ सार्थक अनी ❀ विख्यात संसारमा ।
माताको गुरुको प्रताप बलले ❀ प्रत्यक्ष अग्नी म छु
मैले मान्छु कपास-रूप तिमि हौ ❀ तैयार पोल्ने म छु ।।९९३।।
यस्ता बात सुनेर कालजितले ❀ हाँस्तै दिए उत्तर
तिम्रो नाम र वंशको विषयमा ❀ जान्दीनँ केही, तर ।
आफू छू रथमा, तिमी पृथिविमा ❀ अन्याय हो युद्धमा
सानो बालक-साथ लड्नु कसरी ❀ दुःखी छु यो बातमा ।।९९४।।

यस्ता बात सुनेर कालजितको ❀ गर्जेर बोले लव
तिम्रो यो रथको घमण्ड अहिल्यै ❀ तोड्नेछु मैले तब ।
यस्ता बात भनेर वीर लवले ❀ शेखी उतारीलिए
तीखा बाण लिएर पाँच सहसा ❀ ताकेर छाडीदिए ॥९९५॥
टुक्रा पारिदियो तुरुन्त शरको ❀ त्यो कालजित् वीरले
पारेथे लवले धुलो रथ छिटै ❀ तत्काल नौ बाणले ।
हाम्फाली रथबाट झट्ट गजमा ❀ आयो अगाडी सरी
मारे त्यो गजलाइ शीघ्र शरले ❀ गिर्दो भयो त्यो मरी ॥९९६॥
आयो एक गदा लिएर करमा ❀ त्यो कालजित् गर्जिई
हान्यो श्रेष्ठ गदा घुमाइ रिसले ❀ आगो सरीको भई ।
त्यस्को काटिदिए गदा ति लवले ❀ छाड्नै नपाई जब
हान्यो एक लिई ठुलो परिघले ❀ त्यो कालजित्ले तब ॥९९७॥
पैह्ले झैं लवले छिटै परिघको ❀ टुक्रा गराए अनि
मुड्की हान्न भयो तयार, शिशु यो ❀ मार्छू अहील्यै भनी ।
हान्यो वज्र सरी कठोर मुठिले ❀ त्यो कालजित्ले जब
त्यस्को चोट खपेर वीर लवले ❀ गर्जे तँ पर्खी अब ॥९९८॥
यस्ता बात भनी अनेक शरले ❀ पारे जसै घायल
हा-हाकार पऱ्यो र कालजितले ❀ देखाइ आफ्नू बल ।
पक्रेथ्यो तरबार झट्ट करमा ❀ त्यो कालजित् वीरले
काटेथे तरबारले सहितको ❀ बाहू तिखा बाणले ॥९९९॥
अर्को हातमहाँ लिईकन गदा ❀ झम्ट्यो निकै वेगले
काटे हात गदा समेत लवले ❀ मन्त्रित् तिखो वाणले ।
काटीए दुइ हात, घोर मुखले ❀ आयो म खान्छू भनी
काटे गर्दन झट्ट वीर लवले ❀ लौ पार हो जा भनी ॥१॥

हा-हा पऱ्यो समरमा कति भाग्न लागे
मूर्च्छा परी कति ढले, कति वीर जागे।
खोलो बग्यो रगतको नदि झैँ भएर
मुर्दा बगे गरि सरी कति उत्रिएर ॥११॥
हात्ती र अश्व नरका शिर उत्रिनाले
माछा र कच्छप सरी सब देखिनाले।
आभूषणादि सबले शिर शोभिएको
बाहू र पाउ जलजन्तु सरी भएको ॥१२॥
देखी दुःस्थिति युद्धको थरि-थरी ❀ योद्धा प्रतापी पनि
थाले भाग्न डराइ काँतरहरू ❀ भागे म बाचूँ भनी।
बाँचेका चर जो थिए सब पुगे ❀ शत्रुघ्नका पासमा
मारे बालक एक ती लवजिले ❀ सेना सबै युद्धमा ॥१३॥
धेरै रक्त बगेर घोर नदि झैँ ❀ तर्नै नसक्ने भयो
त्यो सेनापति कालजित् समरमा ❀ लड्दै थियो मारियो।
क्यै विश्वास भएन बात चरको ❀ सुन्दा ति शत्रुघ्नले
साँचै हो कि झुठो भनेर सहसा ❀ सोधीलिए कष्टले ॥१४॥
हो यो सत्य कुरा भनेर चरले ❀ बिन्ती चढायो जब
चिन्ता-ग्रस्त भए निकै मनमनै ❀ शत्रुघ्न योद्धा तब ।
सोधे झट्ट सुमन्त्रलाइ रणमा ❀ ती बालको साथमा
को जानेछ बताउ वीर अहिले ❀ त्यो घोर संग्राममा ॥१५॥
यस्ता बात सुनी सुमन्त्र मनमा ❀ सोचेर क्यै घोरिए
लागे भन्न बुझाइ बात सब ती ❀ जानीरहेकै थिए ।
याहाँ वाल्मिकिको छ आश्रम ठुलो ❀ धेरै कुटी उत्तम
छैनन् क्षत्रिय क्वै वरी-परि अरू ❀ जानी रहेको छु म ॥१६॥

साक्षात् इन्द्र कि रुद्र वा यम हुनन् ❀ भन्छू म यी बालक
हाम्रो अश्व हरी लिने अरु छ को ❀ योद्धा यहाँ लायक ।
त्यो सेनापतिलाइ मार्न रणमा ❀ सक्नेछ कुन् वीरले
तिन्का साथ गएर पुष्कल लडून् ❀ भन्छू म यो नीतिले ॥१०७॥
सारा भूपहरू र सैनिक लिई ❀ जानोस् तापाईं पनि
यस्ता बात सुनेर मञ्जुर गरे ❀ शत्रुघ्नले लौ भनी ।
सेनाका पति वीर पुष्कल भए ❀ सेना लिई साथमा
श्रीशत्रुघ्न पनी गए पछि-पछी ❀ रक्षा गरी युद्धमा ॥१०८॥
देखी सैन्य असंख्य वीर लवले ❀ केही नमानी डर
पैह्लेपल्ट गरे सहर्ष धनुको ❀ टंकारले आदर ।
देखिन्थे मृगको बथान-भरिमा ❀ ती सिंह जस्तै लव
हज्जारौं शर छाडि घोर रणमा ❀ ढाकीदिएथे सब ॥१०९॥
त्यो देखेर रहेछ वीर शिशु यो ❀ भन्ने विचारीलिए
घेरा हाल्न भनेर सैनिकहरू ❀ चौतर्फमा राखिए ।
पैह्लो एक सहस्त्र सैनिक बसे ❀ हज्जार दोस्रो दश
तेस्रो पाँच सहस्त्र सैन्य-दलको ❀ लाखौं बसेको रछ ॥११०॥
घेरा सात बनाइ येहि क्रमले ❀ तैयार पारे जब
ती घेरा-बिचमा शशी सरि सफा ❀ देखा परेथे लव ।
धेरै बाण र अस्त्र-शस्त्र बलिया ❀ मन्त्रेर छाडीकन
घेरा सात विदीर्ण पारि लवले ❀ गर्दा भए गर्जन ॥१११॥
हे बाबू ! रणमा उपस्थित रहू ❀ भागेर जान्छौ कहाँ ?
भन्दै पुष्कल वीर दिव्य रथमा ❀ पुग्दा भएथे त्यहाँ ।
आफू पैदल छौ, म छू रथमहाँ ❀ लड्ने यहाँ के गरी
हो यो युद्ध-विरुद्ध काम, रथ यो ❀ दिन्छू म लौ यै घरि ॥११२॥

आऊ लड्न मिलाइ जोडि यसरी ❀ यो धर्म हो नीति हो
माग्ने भिक्षुक हैन, क्षत्रिय म हूँ ❀ शक्ती छ सत्शौर्यको ।
जस्ले थाप्दछ दान क्षत्रिय भई ❀ पापी त्यही व्यक्ति हो
लिन्छौ दान अवश्य क्षत्रिय भई ❀ के बात यो सत्य हो ? ।।११३।।
यस्ता बात भनेर तीक्ष्ण शरको ❀ वर्षा गराए जब
मारे अश्व र सारथी रथ पनी ❀ धूलो तुल्याए सब ।
योद्धा ती दुइ वीर पैदल भई ❀ लड्दै गए बेसरी
देखीए ति पलाश-पुष्प सरिका ❀ राता दुवै त्यो घरि ।।११४।।
हुन् ती एक जयन्त इन्द्र-सुत वा ❀ हुन् वीर ती कार्तिक
की हुन् रुद्र कि इन्द्र वीर यम हुन् ❀ भन्थे सबै दर्शक ।
दोटै वीर थिए समान बलका ❀ योद्धा त्यसै कारण
गर्थे शस्त्र प्रहार मन्त्र-बलले ❀ निक्कै रिसाईकन ।।११५।।
देखी श्रेष्ठ प्रहार वीर लवको ❀ बोल्दा भए पुष्कल
काट्नेछू अब बाणले शिर छिटै ❀ देखाइ आफ्नू बल ।
रक्षा गर्न भनी सतर्क नरहे ❀ जाला वृथा जीवन
यस्ता बात भनेर बाणहरुको ❀ वर्षा गराईकन ।।११६।।
थूनेथे शरजालमा र लवले ❀ भन्दा भए वीर जो
बाधा जुन् अहिले दियौ बुझ यही ❀ तिम्रो ठुलो शौर्य हो ।
यस्ता बात भनेर जाल शरको ❀ काटेर बोले तिनी
रक्षा जीवनको गरेर रहनू ❀ कर्तव्य आफ्नू भनी ।।११७।।
तिन्को बात सुनी प्रचण्ड रिसले ❀ आईपुगे पुष्कल
हानी तीक्ष्ण अनेक बाण लवले ❀ पारीदिए खल्बल ।
काटे पुष्कलले सबै शरहरू ❀ आफ्ना तिखा बाणले
हाने एक अमोघ अस्त्र लवले ❀ मन्त्री निकै वेगले ।।११८।।

लाग्यो पुष्कलको गई हृदयमा ❀ मूर्च्छा परे युद्धमा
पौंचे पुष्कललाइ बोकि हनुमान् ❀ शत्रुघ्नका पासमा ।
देखी पुष्कलको स्थिती रिस गरी ❀ शत्रुघ्नजी गर्जिए
मारी त्यो शिशुलाइ आउ हनुमान् ❀ भन्दा उनी दौडिए ॥११९॥

हाने उखेलिकन वृक्ष ठुलो कपीले
पारे अनेक टुकुरा लवले खुशीले ।
ढुंगा उचालि गिरि झैँ हनुमानजीले
हाने रिसाइ अब मार्छु भनी बलैले ॥१२०॥

धूलो गराइ गिरिको लव गर्जिएथे
त्यो शब्दले सकल सैनिक तर्सिएथे ।
बेरे अनी पुछरले कपिले रिसाई
त्यो देखि झट्ट लवले करले समाई ॥१२१॥

फ्याँके घुमाइ अनि पत्थरमा पछारे
देखेर शक्ति शिशुको हनुमान हारे ।
शक्ती हराउन गई म भएँ मलीन
शक्तीनँ गर्न अब केहि म दीन-हीन ॥१२२॥

मेरो मृत्यु हुँदैन ब्रह्म-वरले ❀ वा बाणले मूर्च्छित
यस्को खप्न सकीनँ चोट शरको ❀ यो बाल हो अद्भुत ।
भागूँ यो रणबाट क्यै गरि भने ❀ स्वामी हुनन् लज्जित
श्री शत्रुघ्न स्वयं उपस्थित भए ❀ होला अवश्यै जित ॥१२३॥

यस्तो निश्चयले तुरुन्त हनुमान् ❀ मूर्च्छा परे युद्धमा
भागे सैन्य अनेक भूपतिहरू ❀ हारेर संग्राममा ।
भन्नूभो अनि शेषले शुभ कथा ❀ हे विज्ञ वात्स्यायन !
श्री शत्रुघ्नकहाँ पुगी चरहरू ❀ सारा गरे वर्णन ॥१२४॥

त्यो सम्चार सुनी सुवर्ण रथमा ❀ शस्त्रास्त्र राखीकन
ठोक्रो वाण मुकुट औ कवच त्यो ❀ गर्दा भए धारण ।
सारा सैन्य र भूपतीहरु लिई ❀ पौंचे ति संग्राममा
देखे बालक सूर्य झैं चहकिलो ❀ एक्लै थियो युद्धमा ॥१२५॥
को हो यो रघुनाथकै स्वरुपको ❀ की जानकी-पुत्र हो ?
एक्लैले सब वीरलाइ रणमा ❀ जित्ने शिशू कौन हो ?
यस्का साथ लडी म हुन्न विजयी ❀ यस्तो विचारीकन
लागे सोध्न तिनी प्रसन्न मनले ❀ हे बाबु ! को हौ भन ॥१२६॥
माताको र पिताजिको भन तिमी ❀ के नाम, कुन् वंश हो ?
तिम्रो बालक रूप देखि मनमा ❀ शंका अनेकौं भयो ।
जान्दैनौ तिमिले प्रभाव रघुका ❀ वंशस्थ श्रीरामको
माफी माग दिएर अश्व मखको ❀ दिन्छू सबै माफ त्यो॥१२७॥
देख्नेछन् तिमिलाइ राम प्रभुले ❀ धेरै दिनन् खिल्लत
जाऔं लौ हय-मेधमा हिड तिमी ❀ सानन्द हामीसित ।
देखी बालक रूप यो बखतमा ❀ साह्रै भएँ मोहित
लागी भित्र दया भनें यति कुरा ❀ तिम्रो चिताई हित ॥१२८॥
यस्ता बात सुनेर वीर लवले ❀ केही नमानी डर
श्रीशत्रुघ्नजिलाइ सादर दिए ❀ त्यो बातको उत्तर ।
सोध्यौ नीति-विरुद्ध नाम तिमिले ❀ माता पिता वंशको
लड्छन् वीर डटेर घोर रणमा ❀ यो नीति हो युद्धको ॥१२९॥
सक्तैनौ यदि लड्न क्यै गरि भने ❀ न्यूराइ आफ्नू शिर
दाजू छन् कुश जो प्रधान सबमा ❀ पाऊ उनैका पर ।
हामीलाइ जितेर अश्व खुशिले ❀ लैजाउ त्यो यज्ञमा
सक्तैनौ त फिरेर जाउ घरमा ❀ आयौ वृथा युद्धमा ॥१३०॥

यस्ता बात भनेर तीक्ष्ण शरको ❀ वर्षा गरे बेसरी
लाग्यो चोट अनेक अंगहरुमा ❀ निक्कै नराम्रो गरी ।
त्यस्को उत्तरमा तिखा शरहरू ❀ छाडे ति शत्रुघ्नले
फेरी बाणहरू थपे लवजिले ❀ गर्जेर उत्साहले ॥१३१॥
ढाक्यो ती दुइका अनेक शरले ❀ सारा अँध्यारो भयो
हेर्दा मास्तिर बाण ती सलहले ❀ ढाके सरी देखियो ।
दिन्छन् दान अखण्ड हुन्छ भनि जो ❀ दानी, व्यतीपातमा
त्यस्तै त्यो शरजाल देखिन गयो ❀ सम्पूर्ण आकाशमा ॥१३२॥
ढाकीए शर-जालमा परि छिटै ❀ शत्रुघ्न योद्धा जब
थाले गर्न विचार यो बखतमा ❀ के गर्नु पर्ला अब ।
हा-हाकार परेर सैन्य, नृपती ❀ भागे लिई जीवन
थाले गर्न प्रहार बाणहरु ती ❀ शत्रुघ्न आत्तीकन ॥१३३॥
काटे त्यो शर-जाल वीर लवले ❀ पारे दिशा उज्ज्वल
काटी श्रेष्ठ धनू ध्वजा रथ सबै ❀ पारीदिए खल्बल ।
अर्को दिव्य धनू लिए र उ घनी ❀ काटीदिएथे जब
रक्ताम्म्ये ति दुवै पलाश-फुल झैं ❀ देखा परेथे तब ॥१३४॥
काटी श्रेष्ठ मुकूट औ कवच नै ❀ हा-हा गराईदिए
हर्ने प्राण लिएर बाण दश त्यो ❀ मन्त्रेर छाड्दा भए ।
काटे ती दश बाण वीर लवले ❀ लाग्नै नपाईकन
श्री शत्रुघ्नजिलाइ आठ शरले ❀ हानी गरे गर्जन ॥१३५॥
लाग्यो बाण गएर त्यो शरिरमा ❀ शत्रुघ्नजीको जब
मूर्च्छा पर्न गई ढले रथविषे ❀ हा-हा परेथ्यो तब ।
जो-जो भूपहरू थिए समरमा ❀ अन्याय ठूलो गरी
एक्लो ती लवलाइ शस्त्रहरुको ❀ वर्षा गरे बेसरी ॥१३६॥

काटे ती सब शस्त्र-अस्त्र सहजै ❀ लाग्नै नपाईकन
हानेथे सबलाइ तीक्ष्ण शरले ❀ भागे लिई जीवन ।
ठूलो शब्द भयो दिशा र विदिशा ❀ थर्केर चारैतिर
श्रीशत्रुघ्न सचेत भैकन उठे ❀ सेना भए तत्पर ॥१३७॥
सारा साथ लिई डटेर लवका ❀ बोले अगाडी गई
हैनौ बालक, वीर हौ तिमि कुनै ❀ भन्छू म शंका भई ।
मूर्च्छा पार्न सकेन कोहि विरले ❀ संग्राम-भूमीमहाँ
तिम्रो देखिलिएँ पराक्रम ठुलो ❀ मूर्च्छित् गरायौ यहाँ ॥१३८॥
मैले मूर्च्छित पार्दछू अब तिमी ❀ आफ्नू सुरक्षा गर
यस्ता बात भनी छिटै हृदयमा ❀ ताकेर छाडे शर ।
मूर्च्छा पर्न गए तुरुन्त लवजी ❀ त्यै बाणको चोटले
स्याबासी सबले दिए विजय भो ❀ हाम्रो भनी हर्षले ॥१३९॥
साक्षात् राम-समानका लव थिए ❀ राम्रा त्यसै कारण
बोकी राखिलिए लगेर रथमा ❀ आनन्द मानीकन ।
देखेथे ऋषिपुत्र मित्रगणले ❀ बोकी लगेको जब
सीताका नगिचै पुगीकन भने ❀ देखे-सुनेको सब ॥१४०॥
हे माता ! लवले नमानि बलले ❀ घोडा समातीलिए
तिन्का साथ लडाइँमा ति हयका ❀ मालीक मूर्च्छित् भए ।
आयो चेत अनी उठेर रिसले ❀ पर्खी तँलाई भनी
मूर्च्छा पारिदिए गिरे लव त्यहीं ❀ निर्जीव जस्ता बनी ॥१४१॥
घोडा पक्रनु हुन्न हामि सबले ❀ बिन्ती गरे तापनि
मानेनन्, सब भात खाउ भतुवा ❀ भन्दै लघारे अनि ।
यस्ता ती ऋषिपुत्रका सुनि कुरा ❀ सीता भइन् मूर्च्छित
आयो चेत अनी विलाप गरि ती ❀ रोइन् नराम्रो-सित ॥१४२॥

बाबू ! कहाँ छौ लव वीर आऊ
मेरो दुखी चित्त स्वयं बुझाऊ ।
कस्तो दया-हीन रहेछ भूप
जानेर सानो शिशु त्यो अनूप ॥१४३॥
अन्याय-पूर्वक गरेर लडाइँ यस्तो
मानिन्न जीत कहिल्यै पनि बुद्धि कस्तो ।
नीती-विरुद्ध नृपले कहिल्यै नचल्नू
दुर्नाम हुन्छ भवमा किन यो नबुझ्नू ॥१४४॥
धेरै यै रितका विलाप कुटिमा ❀ सीता रुँदै गर्दथिन्
सम्झीदै कुश पुत्रलाइ मनले ❀ सन्तापमा पर्दथिन् ।
सीता-पुत्र पुगेर उज्जयिनिमा ❀ सेवा महाकालको
पूजा सादर गर्दथे दिन-दिनै ❀ त्रैलोक्यका नाथको ॥१४५॥
पाएथे वरदान घोर तपले ❀ सन्तोष मानीकन
आएथे कुटिमा उसै बखतमा ❀ थालिन् सिताजी रुन ।
देखेथे महतारिको विकलता ❀ आँसू बगेको पनि
माता ! कारण के परेर रुनुभो ❀ साह्रै बनी दुःखिनी ॥१४६॥
भाई छन् लवजी कहाँ ? किन गए ❀ के काम आई परी !
साथीका सँग खेल्दछन् कि अहिले ❀ देख्दीनँ लौ यो घरि ।
माता ! भन्नुहवस् यथार्थ मनमा ❀ शंका मलाई भयो
सीताले सब भन्दिइन् त्यत्ति सुनी ❀ संग्राममा जै भयो ॥१४७॥
हे बाबू ! लवजी थिए यहिँ, पछी ❀ खोजौँ समीधा भनी
निस्केछन् ऋषि-पुत्रका सँग त्यहीँ ❀ क्यै बेर खेले अनि ।
यौटा उत्तम श्यामकर्ण हय क्वै ❀ आएछ राम्रो तहाँ
देखेछन् सुनपत्र श्रेष्ठ शिरमा ❀ पढ्दै गए छिन्महाँ ॥१४८॥

बाँधेछन् हय त्यो समाइ रुखमा ❀ राजा घमण्डी भनी
आए भूप लिएर सैन्य, लवले ❀ मूर्च्छित् गराए अनि ।
आयो चेत उठेर झट्ट नृपले ❀ ठूलो लडाईं गरी
मूर्च्छा पारि लगे तुरुन्त लवजी- ❀ लाई रथैमा धरी ।।१४९।।
आएथे ऋषि-पुत्र भन्न दगुरी ❀ मैले सुनें त्यो जब
थालें रून यहीं बसी धुरु-धुरू ❀ के गर्नु मैले अब ।
जाऊ झट्ट तिमी लडी समरमा ❀ सम्पूर्ण वैरी जिती
भाईलाइ लिएर आउ कुटिमा ❀ शंका नमानी रति ।।१५०।।
आमालाइ भने तुरुन्त कुशले ❀ क्रोधित् भई बेसरी
भाईलाइ म ल्याउँछू, हजुरले ❀ क्यै हुन्न चिन्ता गरी ।
हे माता ! रणमा समर्थ विरले ❀ हो शौर्य देखाउनु
यै हो क्षत्रिय-धर्म माथ अरिको ❀ गर्जेर न्यूराउनु ।।१५१।।
जो भाग्छन् रणबाट जीवन लिई ❀ त्यस्ता सबै काँतर
हुन्छन् भारस्वरूप यो पृथिविमा ❀ मान्छन् ति मर्ने डर ।
त्यस्ता व्यक्ति मरी ठुलो नरकमा ❀ पर्छन् गई आखिर
भोग्छन् कष्टहरू अनेक थरिका ❀ ती पापका दुस्तर ।।१५२।।
हे माता ! म हजूर-सम्मुख यहाँ ❀ भन्छू प्रतिज्ञा गरी
जित्नेछू रणमा उपस्थित रहे ❀ देवेन्द्र शम्भू हरि ।
भाई मूर्च्छित छन् वृथा हजुरले ❀ पर्दैन माता ! रुन
पाऊँ शस्त्र छिटै दिनोस् म रणमा ❀ जान्छू खुशी भैकन ।।१५३।।
उन्का जो कवचादि हुन् सब दिई ❀ धेरै दिइन् आशिष
भाईलाइ फिराइ ल्याउ कुटिमा ❀ फैलिन्छ तिम्रो यश ।
आमाका पदमा झुकेर रणमा ❀ प्रस्थान गर्दा भए
देखी छक्क परे समस्त रणमा ❀ मुर्दाहरू देखिए ।।१५४।।

साह्रै छक्क परे तथापि लवको ❀ हो वीरता यो भनी
निक्कै हर्ष भयो र गर्जन गरे ❀ कालाग्नि जस्तै बनी ।
त्यै बेला कुशलाइ देखि लवजी ❀ अत्यन्त हर्षित् भए
हाम्फाली रथबाट बन्धन सबै ❀ तोडी नगीचै गए ॥१५५॥
दोटै भाइ मिलेर पूर्वतिर वा ❀ अर्को भई पश्चिम
वर्षाए शर बेसरी अनि भने ❀ आईपुगें हेर म ।
तिन्को बाण-प्रहारले समरमा ❀ धेरै मरे सैनिक
भागे प्राण बचाइ कातर डरे ❀ त्यो अश्वका रक्षक ॥१५६॥
धेरै भूपहरू लिएर रणमा ❀ शत्रुघ्न आए जब
देखी एक-समान रूप दुइको ❀ आश्चर्य माने तब ।
देखेथे कुशको प्रभाव रणको ❀ सोधे खुशी भैकन
माताको, कुलको तथा जनकको ❀ के नाम हो लौ भन ॥१५७॥
भ्राता एकसमान रूप गुणका ❀ देख्छू म यस्को पनि
हे बाबू ! तिमिले बताउ खुशिले ❀ हो हेतु यस्तो भनी ।
लागे भन्न बुझाइ वीर कुशले ❀ संग्राममा यो कुरा
सोध्ने योग्य थिएन तापनि सबै ❀ भन्छू म हेतू पुरा ॥१५८॥
जम्ल्याहा दुइ भाइ एक रुपका ❀ हौं जानकीका सुत
हामी क्षत्रिय वीर, दीन जनको ❀ गर्ने सदा छौं हित ।
सेवा वाल्मिकिको गरेर कुटिमा ❀ बस्छौं छ जो आश्रम
विद्या प्राप्त भयो उनै गुरुजिको ❀ पाई कृपा उत्तम ॥१५९॥
भाई हुन् लव यी, म हूँ कुश अनी ❀ को हुन् पिता जान्दिनँ
मैले आफ्नु कहें, तिमी पनि सबै ❀ को हौ बताऊ, किन ?
आयौ यो कुटिमा र अश्व यसरी ❀ छाडीदिएको भन
सोधें जो अहिले सबै गर तिमी ❀ विस्तारले वर्णन ॥१६०॥

एक्लो यो लवलाइ वीरहरुले ❀ जीती अनीती गरी
पारी मूर्च्छित बाँधि राखि रथमा ❀ जान्थ्यौ कहाँ यो घरि ?
राजन् ! फर्कन दिन्नँ युद्ध नगरी ❀ भन्ने विचारीकन
तिम्रो जीत भयो भने हय लिई ❀ सक्छौ तिमी फर्कन ।।१६१।।
यस्ता वाक्य सुनेर वीर शिशुको ❀ शत्रुघ्न चिन्तित् भए
सीताका सुत हुन् भनीकन चिह्नी ❀ झन् शोचमा गाडिए ।
कान्छो बाबु भई परौँ म कसरी ❀ यिन्को गई पाउमा
दिन्नन् अश्व अवश्य वीर दुइले ❀ जित्नै पर्‍यो युद्धमा ।।१६२।।
हाम्रो जीत हुँदैन यो पनि सफा ❀ जानीरहेकै म छु
लड्नू क्षत्रिय-धर्म हो समरमा ❀ यै निम्तिमा लड्दछु ।
यस्तो तर्क गरी स्वयं मनमनै ❀ तत्काल शत्रुघ्नले
पक्रेथे धनु बाण श्रेष्ठ करमा ❀ लड्छू भनी क्रोधले ।।१६३।।
त्यो देखी दुइले गरे धनुषको ❀ टंकार शंख-ध्वनि
वर्षाए शर बेसरी समरमा ❀ शत्रुघ्नले लौ भनी ।
काटेथे शर ती समस्त कुशले ❀ लाग्नै नपाई जब
श्रीशत्रुघ्न रिसाइ फेरि शरको ❀ वर्षा गरेथे तब ।।१६४।।
छाड्यो देखिन अन्धकार हुनगो ❀ सम्पूर्ण युद्धस्थल
थाले भाग्न अनेक वीर डरले ❀ बढ्दै गयो खल्बल ।
छाडेथे जब अग्नि-अस्त्र कुशले ❀ सारा उज्यालो भयो
सारा बाणहरू भएर टुकुरा ❀ संग्राममा फैलियो ।।१६५।।
पर्जन्यास्त्र चलाइ घोर जलको ❀ धारा चलाईदिए
वायव्यास्त्र गरे प्रहार कुशले ❀ सेनाहरू तर्सिए ।
छाडेथे जब पर्वतास्त्र रिसले ❀ शत्रुघ्नजीले त्यहाँ
ठूलो पर्वत आइ वायु थुनियो ❀ हा-हा पर्‍यो छिन्महाँ ।।१६६।।

छाडे पर्वत ढाल्न वीर कुशले ❀ वज्रास्त्र मन्त्रीकन
धूलो पर्वतको भयो अनि सफा ❀ थाल्यो त्यहाँ देखिन ।
श्रीनारायण अस्त्र वीर कुशले ❀ छाडे रिसाई जब
त्यस्ले स्पर्श गरेन कत्ति तनमा ❀ शत्रुघ्नजीको तब ॥१६७॥
बोलेथे कुश वीर-धन्य तिमिले ❀ ठूलो कमायौ जय
यो नारायण अस्त्रको विफलता ❀ देखेर मान्छू भय ।
हान्दै छू अब तीन बाण क्रमले ❀ मेरो प्रतिज्ञा सुन
मूर्च्छा पार्न सकीनँ क्यै गरि भने ❀ जो छन् ठुला सज्जन ॥१६८॥
गर्दैनन् नर-देह पाइ खुशिले ❀ सद्धर्मको आदर
तिन्लाई जति पाप लाग्दछ सबै ❀ लागोस् मलाई, तर ।
यस्ता बात भनी गरे प्रण जसै ❀ केही नमानी डर
छाड्दै छू अब बाण वीर ! तिमिले ❀ आफ्नू सुरक्षा गर ॥१६९॥
यस्ता बात भनी अमोघ शरले ❀ ताकेर हाने जब
सम्झे श्रीरघुनाथलाइ मनले ❀ शत्रुघ्नजीले तब ।
काटी त्यो शरजाल आफ्नु बलले ❀ टुक्रा गराईदिए
त्यो देखी कुशले रिसाइ शर त्यो ❀ तत्काल अर्को लिए ॥१७०॥
छोडे त्यो शरलाइ क्रोधित भई ❀ मन्त्रेर तिन्ले तर
टुक्रा पारिदिए तुरुन्त बिचमै ❀ शत्रुघ्नले आखिर ।
दोटा बाण भए जसै विफल ती ❀ यौटा रह्यो हातमा
माताको अनि सम्झना हुन गयो ❀ ती वीरको चित्तमा ॥१७१॥
त्यो तेस्रो शरलाइ मन्त्र-बलले ❀ ताकेर छाडीदिए
श्री शत्रुघ्नजिले प्रयत्न त निकै ❀ रोक्ने गरेका थिए ।
लाग्यो तैपनि त्यो गई हृदयमा ❀ शत्रुघ्न मूर्च्छा परे
भागे वीर कती र भूपगणले ❀ अत्यन्त हा-हा गरे ॥१७२॥

भन्थे दिव्य कथा ति शेष प्रभुले ❀ हे विज्ञ वात्स्यायन !
श्रीशत्रुघ्न गिरे भनी समरमा ❀ चर्चा चल्यो त्यै क्षण ।
आएथे रथमा चढी सुरथजी ❀ गर्दै ठुलो गर्जन
तिन्लाई दश बाणले कुशजिले ❀ हाने रिसाईकन ॥१७३॥
त्यस्ले काटिदियो ध्वजा रथ धनू ❀ थाले तिनी आत्तिन
हेराहेर गरे तिखा नयनले ❀ दोटै ति योद्धा जन ।
लड्थे श्रेष्ठ गदा तथा मुसलले ❀ योद्धा दुवै पैदल
आए लड्न धुरा उठी नृप जती ❀ सारा भए कत्तल ॥१७४॥
त्यै वेला कुशले रिसाइ धनुको ❀ टंकार पैह्ले गरी
हाने अग्नि-समान एक शरले ❀ लाग्यो गई बेसरी ।
मूर्च्छा पर्न गई ढले सुरथजी ❀ शस्त्रास्त्र त्यागीकन
हाम्रो जीत भयो भनेर कुशले ❀ गर्दा भए गर्जन ॥१७५॥
राख्यो सारथिले लगेर रथमा ❀ तिन्को सुरक्षा गरी
हा-हाकार पर्‍यो पुगे अनि कपी ❀ उफ्रेर सोही घरि ।
देखी ती हनुमानलाइ कुशले ❀ चर्को गरी गर्जिए
पुग्नेछौ यमराजको नगरमा ❀ तत्काल जानीलिए ॥१७६॥
आएथे हनुमान सम्मुख जसै ❀ पारीदिए घायल
यौटा वृक्ष उखेलि झट्ट कपिले ❀ हाने लगाई बल ।
त्यस्ले केहि भएन, वीर कुशले ❀ किंचित् नमानीकन
संहारास्त्र गरे प्रहार कपिको ❀ शेखी उतारीलिन ॥१७७॥
लाग्यो शस्त्र गई जसै हृदयमा ❀ तत्काल मूर्च्छा परे
त्यो देखेर रिसाइ सम्मुख छिटै ❀ सुग्रीव योद्धा सरे ।
धेरै वृक्षहरू उखेलि रिसले ❀ छाड्दै गएथे तर
काटे वृक्षहरू अनी ति कपिले ❀ लामो गरे पुच्छर ॥१७८॥

बाँधे वारुण अस्त्रले समरमा ❀ सुग्रीवलाई अनि
भागे सैन्यहरू चतुर्दिक सबै ❀ लौ मार्न आँटे भनी ।
हाम्रो जीत भयो भनी दुइ जना ❀ अत्यन्त हर्षित् भए
त्यै वेला लवले विनम्र स्वरमा ❀ यो बात भन्दै गए ॥१७९॥
हाम्रो जीत भयो स्वयं हजुरको ❀ सद्‌बुद्धि वा शक्तिले
यस्ता बात भनी तुरुन्त लवले ❀ हाँसी ठुलो हर्षले ।
बाजू-बन्द किरीट वीर कुशले ❀ शत्रुघ्नको पैह्रिए
योद्धा पुष्कलको सहर्ष लवले ❀ एकेक पैह्रीलिए ॥१८०॥
बाँधे सुग्रिव औ कपीकन दुवै- ❀ लाई डुत्याईकन
सीताका नगिचै पुगे ति कुटिमा ❀ गर्छौं भनी दर्शन ।
बाटोमा हनुमान सुग्रिव दुवै ❀ गर्दै गए गन्थन
लंकामा पहिले गरें जति कुरा ❀ हो व्यर्थ त्यो वर्णन ॥१८१॥
लंका पोलिसकी गएँ म जसरी ❀ सीताजिका पासमा
त्यस्ले कीर्ति जती भयो अब सबै ❀ जाने भयो व्यर्थमा ।
पारी बन्धनमा लगे ति शिशुले ❀ यो लाजमर्नू भयो
पैह्लेको बल तेज इज्जत सबै ❀ पानी हुने भैगयो ॥१८२॥
सीतालाइ कसोरि आज मुख यो ❀ देखाउने हो भन
के भन्नन् पछि रामले सब सुनी ❀ दुःखी छ साह्रै मन ।
यस्ता बात सुनेर वीर कपिको ❀ सुग्रीवजीले पनि
आफ्ना कष्टहरू स्वयं भनिसके ❀ अत्यन्त दुःखी बनी ॥१८३॥
सीताले दुइ पुत्रलाइ कुटिमा ❀ देखेर माया गरिन्
स्याबासी दुइ पुत्रलाइ दिइझन् ❀ आशीष धेरै दिइन् ।
पक्रेका कुशले थिए ति हनुमान्- ❀ लाई खुशी भैकन
ती सुग्रीव परेर बन्धन थिए ❀ लाचार सोही क्षण ॥१८४॥

देखी ती दुइ वीरलाइ नगिचै ❀ आश्चर्य सीता भइन्
मेरा पुत्र दुवै भए अब ठुला ❀ भन्दै ति हर्षित् थिइन् ।
हे माता ! लवलाइ डुल्न वनमा ❀ घोडा मिल्यो उत्तम
खेल्छन् भाइ भनेर वानर पनी ❀ ल्याएँ गरी संयम ॥१८५॥
सीताले जब वीर वानर दुवै ❀ देखिन् नगीचै अनि
लागिन् भन्न बुझाइ पुत्र दुइमा ❀ यो के गरेका भनी ?
लंका पोलिदिने यि वीर हनुमान् ❀ यिन्लाइ बाबू ! चिन
राजा वानरका यि वीर बलवान् ❀ सुग्रीव हुन् लौ सुन ॥१८६॥
छाडीदेउ छिटै मलाइ नगिचै ❀ देखे भने मर्दछन्
यिन्ले मद्दत जे जती अघि गरे ❀ को व्यक्तिले गर्दछन् ।
माताको सुनि बात वीर कुशले ❀ बिन्ती गरे सादर
माता ! सुन्नुहवस् कुरा हजुरले ❀ पर्दैन मात्रू डर ॥१८७॥
खेलेको सँगिका बसेर सँगमा ❀ आयो त्यहीं अश्व र
त्यस्को देखि निधारमा चहकिलो ❀ पढ्दै गए पत्र र ।
त्यस्को बात घमण्ड-युक्त मनले ❀ जानेर पक्रीलिए
पारी सोहि निहूँ चल्यो समर यो ❀ संहार गर्दै गए ॥१८८॥
पारेथे लवलाइ वीर सबले ❀ अन्यायले मूर्च्छित
हामी भाइ दुवै मिलीकन लड्यौं ❀ निक्कै नराम्रो-सित ।
शत्रुघ्नादि अनेक मूर्च्छित भए ❀ आए हनूमान् अनि
ती सुग्रीव-समेत वीर दुइले ❀ संग्राम गर्दा पनि ॥१८९॥
बाँधी ती दुइ वीरको पुछरमा ❀ पक्रेर ल्यायौं यहाँ
राजाको बलवान अश्व-सहितै ❀ ल्याएर साम्नेमहाँ ।
सारा बात यथार्थ वर्णन गरी ❀ तिन्ले सुनाए जब
सीताले अति दुःख मानि मनमा ❀ भन्दी भइन् यो सब ॥१९०॥

तिम्रा हुन् रघुनाथजी बुझ पिता ❀ राजा अयोध्या-पति
दाजू पुष्कल, पुत्र हुन् भरतका ❀ धेरै बताऊँ कति ।
तिम्रा हुन् ति कनिष्ठ पितृ बुझिल्यौ ❀ शत्रुघ्न योद्धाकन
रक्षा गर्न भनेर अश्व-सित ती ❀ आए त्यसै कारण ॥१९१॥
घोडा हो यहि अश्वमेध मखको ❀ छाडे त्यसै निन्तिमा
बाबाको किन अश्व यो नबुझि क्यै ❀ पक्रीलियौ व्यर्थमा ।
जिम्मा देउ लगेर अश्व पहिले ❀ शंका नमानी, अनि
श्री शत्रुघ्नजिका परी चरणमा ❀ माफी म पाऊँ भनी ॥१९२॥
माग्नू माफ अनी क्षमा गरिदिनन् ❀ छन् ती दयालू पनि
मातालाइ भने तुरुन्त कुशले ❀ सुन्नूहवस् लौ भनी ।
हो यो क्षत्रिय-धर्म पालन गर्‍यौं ❀ त्यै धर्मको हामिले
यस्मा दोष म केहि देख्दिनँ, कहीं ❀ हाम्रो त्यसै हेतुले ॥१९३॥
यो विस्तार सबै सुनाइ जननी- ❀ लाई दुवै भाइले
छाडे ती दुइ वीर वानरहरू- ❀ लाई निकै हर्षले ।
घोडा पक्रि हिडे दुवै लुरु-लुरू ❀ न्यूराइ आफ्नू शिर
सीता ती दुइ पुत्रका सँग पुगिन् ❀ संग्रममा आखिर ॥१९४॥
साक्षी सूर्य गरी भनिन् कर दुवै ❀ जोरेर हे ईश्वर !
शुद्धात्मा र पतिव्रता यदि भए ❀ भन्छू नमानी डर ।
छन् जो मूर्च्छित वीर सैनिक तथा ❀ मेरा गुणी देवर
हे श्री राम उठून् तुरुन्त सब यी ❀ बिन्ती छ यो सादर ॥१९५॥
सीताका यति वाक्यले सब उठे ❀ मूर्च्छा परेका जति
जै-जैकार गरे समस्त सुरले ❀ आनन्द मान्दै अति ।
त्यो द्रोणाचलमा नगैकन, विना ❀ ल्याएर संजीवनी
सारालाइ तुरुन्त जीवन दिइन् ❀ हुन् धन्य सीता भनी ॥१९६॥

लावा पुष्प अबीर वर्षण गरे ❀ आकाशमा देवले
सीताका दुइ पुत्रको जय भनी ❀ बोले ति शत्रुघ्नले ।
माताको बल औ सतीत्व धन त्यो ❀ देखेर हर्षे सुत
फर्केथे कुटिमा त्यहाँ हुन गयो ❀ आश्चर्य त्यो अद्‌भुत ।।११९७।।
भन्थे दिव्य कथा ति शेष प्रभुले ❀ हे विज्ञ वात्स्यायन
सोधेथे अनि त्यो सुमन्त्र-सित नै ❀ शत्रुघ्नले त्यै क्षण ।
देखें जो अहिले भयो थरि-थरी ❀ आश्चर्य लाग्ने कुरा
त्यस्को वर्णन गर्नुहोस सुमते ! ❀ सुन्छू म ऐह्ले पुरा ।।११९८।।
मन्त्रीले सुनि बात त्यो जति थियो ❀ एकेक भन्दै गए
हे राजन् ! दुइ वीर बालहरुले ❀ त्यो अश्व छाडीदिए ।
यात्रा पूर्ण भयो फिरौं अब छिटै ❀ हामी अयोध्यातिर
श्री शत्रुघ्नजिले भने अब हिडोस् ❀ हाम्रो छिटै लश्कर ।।११९९।।
गंगा-पारि तरे सबै नरपती ❀ योद्धा तथा सैनिक
पौँचेथें दरबार-बाहिर सबै ❀ त्यो अश्वका रक्षक ।
आए लक्ष्मण रामको हुकुमले ❀ भेटे दुवै भाइले
भेटेथे भरतादिले पनि त्यहीँ ❀ अत्यन्त आनन्दले ।।१ ।।
सारा भूपति वीर आदि सबको ❀ गर्दै ठुलो आदर
पौँचे ती सरयू नदी-तटविषे ❀ क्यै बेरमा आखिर ।
कर्ता राम थिए, ति शृङ्गि ऋषिजी ❀ आचार्यको रूपमा
गर्थे यज्ञ सहर्ष वेद-विधिले ❀ उत्साहका साथमा ।।११।।
घोडा साथ लिएर ती सरयुको ❀ सेना पुगे तीरमा
बारम्बार गरे प्रणाम सबले ❀ श्री रामका पाउमा ।
तिन्को भोजनको निमित्त नगिचै ❀ जो पाकशाला थियो
त्यस्को वर्णन सुन्नुहोस् अलिकती ❀ आश्चर्य लाग्ने छ यो ।।१२।।

रानी श्रीदमयन्ति भूप नल औ ❀ त्यस्तै अरू भूप ती
गर्थे हेर-विचार यी सकलले ❀ दृष्टी सबैतर्फ दी ।
पंक्ती ब्राह्मणको बस्यो वरिपरी ❀ घेरा बनाईकन
ल्याई अमृत झैँ मिठा चिजहरू ❀ थाल्दा भए पस्कन ॥१३॥
आए बाँड्न भनेर खीर जब ती ❀ ठूलो कचौराभरि
बोले छक्क परेर ब्राह्मण कुनै ❀ के.हो भनी त्यो घरि ।
अर्का ब्राह्मणले भने मुसु-मुसू ❀ हाँसेर हे विप्र हो !
राहूदेखि डराइ बिम्ब शशिको ❀ आयो कि भन्छू म यो ॥१४॥
अर्को भन्दछ कन्द-मूल फलको ❀ स्वादिष्ट हो यो रस
भान्से भन्दछ यो सुधा सरि मिठो ❀ हो खीर वा पायस ।
खानूहोस थपेर खूशि मनले ❀ ल्याएर दिन्छू अरू
खान्थे ब्राह्मण ती मुखामुख गरी ❀ हेरेर जान्नेहरू ॥१५॥
गर्दा श्राद्ध विशेष तर्पण हुँदा ❀ तस्मै स्वधा भन्दछन्
सोही कारण श्राद्धमा खिर यही ❀ तस्मै भनी बाँड्छन् ।
गर्दा होम दिनू छ आहुति भने ❀ चाहिन्छ यै पायस
जस्ले खान्छ सुधा-समान खिर यो ❀ त्यो बन्छ यस्कै वश ॥१६॥

श्री सूर्यको उदयमा रवि-बिम्ब जस्तो
देखिन्छ लाल र सुगन्ध विचित्र कस्तो ।
अर्का कुनै ति द्विजले सुनि बात त्यस्तो
लागे बुझाउन कुरा मन बुद्धि कस्तो ॥१७॥
यस्लाइ हेर अनि केशर भात जान
चाहिन्छ भाग्य अनि मिल्दछ भात खान ।
हेर्थे यता-उति कती द्विज फर्कि धेर
भान्से पुगे त्यहिँ लिई नगरी अबेर ॥१८॥

के हो चिनिन्न अति उत्तम वस्तु हेर
बाक्लो मिठो अनि सुधा-सरिको अघोर।
हो औषधी कि यहि नै त अजम्मरीको
पारे तयार पहिले नल भूपले यो ॥१०९॥
चाख्नूभयो प्रथम श्रीशिव-पुत्रले त्यो
खाओ थपी-थपि मिठो छ सिखर्नि हो यो।
यस्का अनेक गुण छन् बुझ शाश्त्रमा त्यो
यो खाइ जीवित यसै घरि स्वर्ग जाओ ॥११०॥

ज्ञानी विज्ञ मुनी ऋषीश्वर तपी ❀ योगी गुणी सज्जन
ती सारा क्रमले बसीकन गरे ❀ उत्साहले भोजन।
दुःखी दीन दरिद्र हीन जनमा ❀ द्रव्यादि बाँडे अनि
पाई अन्न र वस्त्र हर्षित भए ❀ जै राम राजा भनी॥१११॥
पूजा-कार्य सकेर यज्ञतिरको ❀ श्रीराम पाल्नूभयो
सारा व्यक्ति उठेर स्वागत गरे ❀ आनन्द झन् फैलियो।
श्री शत्रुघ्न र वीर पुष्कल उठी ❀ तत्काल पाऊ परे
तिन्लाई प्रभुले सुआशिष दिई ❀ आलिंगनादी गरे॥११२॥
राजा वीरमणी, सबाहु र सुमद् ❀ सुग्रीव औ अङ्गद
योद्धा लक्ष्मिनिधी र वीर हनुमान् ❀ श्री नीलरत्नादिक।
सत्यैवान, प्रताप भूपतिहरू ❀ सारा बसेका थिए
आई राम बसी सुमन्त्र-सित यो ❀ विस्तार सोधीलिए॥११३॥
हे मन्त्री ! तिमिले बताउ क्रमले ❀ को हुन् सबै भूपति ?
आएका किन हुन् र कुन् मुलुकका ❀ स्वामी यि हुन् सद्मति।
पक्रे कुन् नृपले कहाँ र कसरी ❀ घोडा छुटायो कहाँ ?
यो आज्ञा रघुनाथको सुनि भने ❀ ती मन्त्रिजीले तहाँ॥११४॥

हे सर्वज्ञ ! हजूरलाइ सब यो ❀ थाहा भए तापनि
सोध्नूभो प्रभुले म भन्दछु सबै ❀ संक्षेपमा लौ भनी ।
हे स्वामी ! हय त्यो हिड्यो खुरु-खुरू ❀ झन् वेगले पूर्वमा
टल्कन्थ्यो सुन-पत्र सूर्य सरिको ❀ जाज्वल्य नीधारमा ॥११५॥
त्यो पाञ्चाल डुलेर उत्तर कुरू ❀ पुग्दो भयो वेगले
त्याहाँबाट दशार्ण देश पुगिगो ❀ देखे जती भूपले ।
सारा भूपतिले समर्पण गरे ❀ साम्राज्य औ सम्पति
त्यो घोडा अहिछेत्रमा पुगिगयो ❀ दौडेर वायू-गति ॥११६॥
त्याहाँ जुन् जगदम्बिका जननिको ❀ गर्दा भए पूजन
पाई अशिष देविको सब हिडे ❀ आनन्द मानीकन ।
पौंचेथे जब राज्यमा सुमदको ❀ तिन्ले सुनेथे जब
श्री शत्रुघ्नजिको परे चरणमा ❀ सुम्पी ठुलो वैभव ॥११७॥
छोरोलाइ लिएर सैनिक सबै ❀ राज्यै गरे अर्पण
आएका यहिँ छन् तिनी चरणमा ❀ पर्छन् खुशी भैकन ।
यौटा आश्रममा पुगेर ऋषिको ❀ घोडा अगाडी गयो
छोरा एक सुबाहुका दमनजी- ❀ लाई त्यहाँ देखियो ॥११८॥
तिन्ले अश्व समाति आफ्नु घरमा ❀ बाँधेर राखीलिए
योद्धा पुष्कल-साथ ती दमनले ❀ संग्राम गर्दा भए ।
हाम्रा पुष्कलले जिते दमनजी ❀ मूर्च्छा परे युद्धमा
आए लड्न पिता सुबाहु, हनुमान् ❀ पौंचेर संग्राममा ॥११९॥
हाने लात र श्राप मोचन भयो ❀ ती भूपतीको अनि
छोरालाइ दिएर राज्य, सँगमा ❀ आए म जान्छू भनी ।
गर्दै छन् अहिले प्रणाम, यहिँ छन् ❀ हे नाथ ! ती भूपति
पाई दर्शन नाथका चरणको ❀ आनन्द मान्छन् अति ॥१२०॥

घोडा त्यो सहसा अदृश्य हुनगो ❀ रेवा नदीमा पसी
हेर्थे सैन्यहरू असक्त सरि भै ❀ त्यस्का किनार्मा बसी ।
पानीमा हनुमानका सँग पसे ❀ शत्रुघ्न योद्धा जब
पानी-भित्र कुनै ठुलो महलमा ❀ स्त्रीलाइ देखे तब ॥१२१॥
घोडा-साथ अनेक आशिष दिई ❀ अन्यान्य शिक्षा दिइन्
सुम्पी मोहन अस्त्रको सफलता ❀ तिन्ले सिकाईदिइन् ।
त्याहाँबाट हिडेर वीरमणिको ❀ दर्बार पौंच्यो हय
ठूलो युद्ध भयो, त्यहाँ हुन गयो ❀ सेनाहरूको क्षय ॥१२२॥
साक्षात् स्वर्ग-समान देवपुरमा ❀ जुन् कार्य जस्तो भयो
जाहेरै छ हजूरलाइ शिवका ❀ प्यारा ति भूपालको ।
आयो विद्युतमालि पक्रि हय त्यो ❀ लइछू भनी हर्षले
त्यस्लाई जब मार्नुभो समरमा ❀ खेदेर शत्रुघ्नले ॥१२३॥
त्याहाँबाट पनी हिड्यो हय जसै ❀ हावा सरी वेगले
कोही वीर अघी सरेन पथमा ❀ पक्रीलिने शक्तिले ।
त्याहाँबाट गयो र अश्व सहसा ❀ ती सत्यवान्ले धरे
तिन्को पूर्ण भयो मनोरथ अनी ❀ सानन्द पाऊ परे ॥१२४॥
पक्री अश्व अगाडि श्रीसुरथले ❀ बाँधीलिएथे जब
जाहेरै छ हजूरमा जसरि त्यो ❀ मुक्त भएथ्यो सब ।
त्याहाँबाट हिडेर कुण्डनपुरी ❀ घोडा गएथ्यो, तर
पक्रेनन् पथमा कुनै अघि सरी ❀ बढ्दै गयो आखिर ॥१२५॥
डुल्दै जंगलमा पुग्यो हय त्यहाँ ❀ राम्रो थियो आश्रम
वाल्मीकी ऋषिको थियो कुटि त्यहीं ❀ त्यो झाडि झन् उत्तम ।
देख्दा रूप दुरुस्त नाथ-सरिकै ❀ राम्रा थिए बालक
अन्दाजी तिनि सोह्र वर्ष जतिका ❀ अत्यन्त नै लायक ॥१२६॥

सानै हुन् तपनि प्रताप शिशुको ❀ आश्चर्यलाग्दो थियो
देख्दा रूप, अनेकको मन खिँची ❀ मोहित् गराईलियो ।
घोडा पक्रिलियौ वृथा किन भनी ❀ सम्झाउँ भन्दै गए
सेनाका पति कालजित् समरमा ❀ तत्काल नै मारिए ॥१२७॥
मूर्च्छा पुष्कललाइ पारि रणमा ❀ शत्रुघ्नलाई पनि
मूर्च्छा पार्नुभयो शिशूकन उठी ❀ शत्रुघ्न क्रोधित् बनी !
उस्तै बालक एक झट्ट रणमा ❀ आए अगाडी सरी
यौटै रूप हुने समान वयका ❀ तिन्ले लडाईं गरी ॥१२८॥
पारी नष्ट अनेक सैनिक त्यहाँ ❀ हा-हा तुल्याईदिए
बाँधी सुग्रिवलाइ बस्त्र गहना ❀ धैरै लिई पैह्रिए ।
योद्धा ती हनुमानको पुछरमा ❀ बाँधी लगेथे जब
हेर छक्क परेर देवगणले ❀ आकाशवाटै तब ॥१२९॥
केही बेर बित्यो र अश्व, हनुमान् ❀ सुग्रीव राजा पनि
आए एक थिइन् सती सँगसँगै ❀ केही नजान्ने बनी ।
तिन्ले त्यो रणभूमितर्फ सहसा ❀ क्यै बेर हेरीलिइन्
जोरी हात दुवै प्रणाम खुशिले ❀ श्रीसूर्यलाई गरिन् ॥१३०॥
त्यो वेला रणभूमिमा जति थिए ❀ मूर्च्छित् तथा घायल
सारा सैन्य मिल्यो र जीवन उठे ❀ के जानु द्रोणाचल !
यौटा शेष नराखि सैनिक उठे ❀ ती नारिको बिन्तिले
आयौं हामिहरू यहाँ हजुरको ❀ सत्कीर्तिले पुण्यले ॥१३१॥
आफ्नू अश्व लिएर यो बखतमा ❀ हामी भयौं हाजिर
मैले बिन्ति गरें सबै हजुरका ❀ प्रश्नादिको उत्तर ।
मेरा पुत्र दुवै भनेर प्रभुले ❀ जाने बुझे तापनि
सोध्नूभो मुनि वाल्मिकीकन सबै ❀ जान्दीनँ केही भनी ॥१३२॥

मन्त्रीले जति जे भने सब सुनी ❀ आश्चर्य मान्छू म त
तिम्रो आश्रमका ति बालक दुवै ❀ को हुन् र कस्का सुत ?
पारे ध्वस्त समस्त सैनिक तथा ❀ ती अश्वका रक्षक
तिन्को को छ सिकाउने थरि-थरी ❀ विद्या र संरक्षक ॥१३३॥
बाँधी सुग्रिव वीर, वायु-सुतको ❀ शेखी उतारीलिने
मेरो भाइ र वीर पुष्कल दुवै- ❀ लाई लतारीदिने ।
मेरो झैं छ स्वरूप बाल दुइको ❀ भन्ने पनी सुन्दछु
जान्ने ती दुइ वीरको विषयमा ❀ इच्छा पनी गर्दछु ॥१३४॥
सारा अस्त्र र ज्ञानमा निपुण छन् ❀ षट्शास्त्र जान्ने पुरा
यो सानै वयमा हुनू निपुणता ❀ हो छक्क पर्ने कुरा ।
हे वाल्मीकि ऋषे ! बताउनुहवस् ❀ को हुन् दुवै बालक
सारा वर्णन गर्नुहोस् ति दुइका ❀ को छन् त्यहाँ रक्षक ॥१३५॥
यो आज्ञा प्रभुको सुनेर मुनिले ❀ हाँस्तै भने सादर
सोध्नूभो प्रभुले म भन्दछु सबै ❀ जाने-जती, ईश्वर !
मेरो आश्रममा कुमार दुइ छन् ❀ हो सत्य यो मान्दछु
तिन्को मिल्दछ रूप नाथसित यो ❀ भन्ने पनी जान्दछु ॥१३६॥
जस्को रूप लिएर जन्म हुनगो ❀ ती हुन् उनैका सुत
गर्दैनन् झगडा कदापि कहिले ❀ अन्यायमा क्वै-सित ।
त्याग्नू गर्भवती सतीकन ठुलो ❀ कुन् न्याय हो नाथको
एक्ली छाडिदिनू लगेर वनमा ❀ यै भूपको न्याय हो ॥१३७॥
रोएको सहसा सुनेर कुटिमा ❀ डाकेर ल्याएँ अनि
भिन्नै एक बनाइ आश्रम त्यहीं ❀ राखें खुशी थिन् तिनी ।
उन्को रक्षक रूपमा ति ऋषिका ❀ पत्नी र छोरी थिए
मैह्ना पूर्ण भयो र मास दशमा ❀ जम्ल्याह छोरा भए ॥१३८॥

जेठाको शुभ नाम हो कुश तथा ❀ हो पुत्र कान्छो लव
पूरा जान्न सकिन्न नाम गुणले ❀ तिन्लाइ हे राघव !
दोटै चन्द्रकला-समान दिनहूँ ❀ बढ्दै गए बालक
तिन्को जे जति कर्म हुन् गरिदिएँ ❀ मैले बनी रक्षक ॥१३९॥
विद्या चौध र शिल्पशास्त्र विकृती ❀ ती आठ षट्शास्त्र भो
विद्या मल्ल र इन्द्रजाल, धनुको ❀ शस्त्रास्त्र प्रत्येकको ।
ताल-ज्ञान र गानशास्त्र तबला ❀ बाजा मृदंगादिको
सत्रञ्जी र सितार जल्तरङ भो ❀ शिक्षा ति प्रत्येकको ॥१४०॥
तिन्लाई सब शास्त्रको दिइसकें ❀ शिक्षा त्यसै कारण
चुक्तैनन् तिनि तालमा र सुरमा ❀ पढ्छन् ति रामायण ।
थाल्छन् ती दुइ भाइ गाउन सँगै ❀ एकै मिलाई स्वर
हुन्छन् मोहित पक्षि जन्तु-सहितै ❀ प्रत्येक नारी नर ॥१४१॥
धेरै वर्ष सिके पनी नसिकिने ❀ मेरो थियो जो गुण
सारा खोसिसके भने पनि भयो ❀ व्यामोहको कारण ।
गंगाका तटमा बसेर ति दुवै ❀ भाई जसै गाउँछन्
सारा राग र रागिनी प्रकट भै ❀ आनन्दले नाच्दछन् ॥१४२॥
सूनें मध्यम षड्ज भेद स्वरको ❀ सन्तोष मान्दै गई
स्याबासी दुइ हात राखि शिरमा ❀ दीएँ म खूशी भई ।
सारा छत्तिस राग-रागिनि तथा ❀ सन्तान तिन्का सब
गर्दा गान-स्वरूप धारण गरी ❀ ती आउँछन् वास्तव ॥१४३॥
तिन्को उत्तम जो गला छ मधुरो ❀ तीखो र मीठो स्वर
सुन्नेको मन पग्लिइन्छ सहजै ❀ पक्षीलिँदामा घर ।
हे राजन् ! जब बस्तछन् दुइ जना ❀ छानेर राम्रो वन
गाऊँछन् अवरोहणादि सहितै ❀ प्रत्येक आरोहण ॥१४४॥

गाए गान मिलाइ तान दुइले ❀ चर्को निकाली स्वर
मीठो तान विभावरी नगरिमा ❀ पुग्दो भयो आखिर ।
तिन्को शब्द सुनी स्वयं गरुडले ❀ स्याबासि धेरै दिए
आफ्ना साथ लिई कुमार ति दुवै ❀ आनन्दले फर्किए ॥१४५॥
राखे आदरले ठुलो महलमा ❀ तिन्को गरी स्वागत
आए सुन्न भनी स्वयं वरुणजी ❀ द्यौता अनेकौं-सित ।
सारा सुन्न बसे वरी-परि त्यहाँ ❀ थाले दुवै गाउन
श्रीरामायण-गान वीर दुइले ❀ गाए खुशी भैकन ॥१४६॥
सारा मोह भए सुनेर स्वर त्यो ❀ पग्लेछ तिन्को मन
तिन्को चेत रहेन गान सुनि त्यो ❀ गन्धर्व, ज्ञानी जन ।
गानाको रस पाइ उत्तम सुधा ❀ नै तुच्छ ठाने त्यहाँ
तिन्को तृप्ति भएनथ्यो वरुणले ❀ रोकीलिए छिन्महाँ ॥१४७॥
आएनन् किन ती भनी जब पुगेँ ❀ देखे वरुण्ले अनि
सोधे आदरले सुपूजन गरी ❀ को हुन् दुवै यी भनी ।
सीताका सुत हुन् जसै भनिदिएँ ❀ आनन्द मानीकन
तिन्को स्वागत बेसरी गरिदिए ❀ सन्तुष्ट भैगो मन ॥१४८॥
धेरै द्रव्य अनेक वस्त्र गहना ❀ तिन्ले चढाईदिए
द्यौताबाट मिल्यो भनेर मतिरै ❀ हेरेर सारा लिए ।
सीता-खातिर ती गुणी वरुणले ❀ भन्थे प्रभू राममा
मेरो बिन्ति चढाउनू हजुरले ❀ उन्को परी पाउमा ॥१४९॥
जो छन् शुद्ध पवित्र शील गुणकी ❀ खानी सती उत्तम
ती छन् श्रेष्ठ पतिव्रता जनककी ❀ छोरी ति सीताकन ।
त्याग्नू योग्य कदापि छैन प्रभुले ❀ हानी छ भुल्नू पनि
सीता सिद्धि हजूरकी अचल छन् ❀ बस्ने ति दासी बनी ॥१५०॥

सीताको महिमा त नीच मतिको ❀ जान्दैन पापिष्ठले
त्यस्ताको सुनि बात हानि प्रभुको ❀ क्यै हुन्न त्यो दोषले ।
तिन्को दोष कुनै म देख्दिनँ बरू ❀ छन् ती सती निर्मल
साक्षात् अमृत रूप शील गुणकी ❀ खानी अती उज्ज्वल ॥१५१॥
हुन् ती स्वर्ग र मोक्ष दान तपकी ❀ खानी र साध्वी पनि
सीता हुन् सब साक्षिरूप जनकी ❀ कल्यणदात्री भनी ।
ब्रह्मा शम्भु र लोकपाल रचना ❀ गर्ने सती जानकी
स्वीकार्नु प्रभुले उचित् छ अहिले ❀ खानी ति हुन् ज्ञानकी ॥१५२॥
स्वामी तीन त्रिलोकका हजुर भै ❀ रानी ति सीता भइन्
यस्मा भेद हुँदैन गर्न प्रभुले ❀ साध्वी ति निर्दोष छन् ।
भूमीकी तिनि छोरि हुन् हजुरले ❀ जान्नू भएकै छ यो
जानी-जानि यसोरि त्याग्नु वनमा ❀ साह्रै नराम्रो भयो ॥१५३॥
हे वाल्मीकि मुने ! सबै भुवनका ❀ मालीकलाई पनि
सारा बिन्ति चढाउनू, वरुणले ❀ यो बात भन्थे भनी ।
सीताजी दुइ वीर पुत्रहरुकी ❀ माता र साध्वीकन
त्याग्नू ती सब लोकपालहरुले ❀ अन्याय मान्छन् भन ॥१५४॥
द्यौता दानव दैत्य सिद्ध सबले ❀ गन्धर्व विद्याधर
निक्कै लट्ठ भए कुमार दुइको ❀ गाना सुनी सुन्दर ।
गर्थे तारिफ बेसरी यिनि सरी ❀ छैनन् कुनै गायक
यिन्को गान गला तथा स्वर पनी ❀ छन् यी सबै लायक ॥१५५॥
हे बाबू कुश वीर, धीर लव छौ ❀ सर्वज्ञ छौ, श्रेष्ठ छौ
आशीर्वाद तथा दिएँ वर पनी ❀ हे बाबु ! विख्यात हौ ।
यौटै राम भनी तिनै भुवनमा ❀ प्रत्येकले मान्दथे
ऐह्ले तीन प्रधान राम हुनुभो ❀ सारा जगत् मान्दथे ॥१५६॥

धैरै छन् प्रभुका चरित्र भवमा ❀ सत्कीर्ति फैलाउने
यौटा निन्दित कर्म जो हुन गयो ❀ सीताजि त्यागीदिने ।
भन्दै छन् लवको र वीर कुशको ❀ प्राणीहरूले जय
जस्का छन् शुभ कर्म हुन्न कहिल्यै ❀ त्यो कर्मको क्यै क्षय ॥१५७॥
ती सर्वज्ञ स्वयं प्रभूकन भयो ❀ संकोच के कारण
बिर्सी ती अघिका कुराहरु सबै ❀ ल्याऊन् सिताजीकन ।
गर्नूपर्छ गृहस्थ-धर्म जनले ❀ आनन्दले पालन
स्वीकार्नोस् गुण शील-युक्त सुत ती ❀ तत्काल डाकीकन ॥१५८॥
आउन्नन् जननी त्यजेर सहसा ❀ डाके पनी ती यहाँ
ती तीनै जनलाइ डाकिलिनुहोस् ❀ खूशी भई मन्महाँ ।
सेना ध्वस्त गरी अघी समरमा ❀ भाई भतीजाकन
सीताले सहसा पुगीकन सबै- ❀ लाई दिइन् जीवन ॥१५९॥
यस्ले स्पष्ट भयो पवित्र रहिछन् ❀ सीता त्यसै कारण
पातिव्रत्य रहेछ श्रेष्ठ र मिल्यो ❀ ती सैन्यको जीवन ।
भन्दै छन् पुरका प्रजा सुजनले ❀ सीता सती झैं अरू
छैनन् कोहि पतिव्रता पृथिविमा ❀ ज्ञानी र जान्नेहरू ॥१६०॥
सीता शुद्ध भए अवश्य प्रभुले ❀ राख्थे खुशीले घर
शंका केहि रहेछ शेष अनि पो ❀ छाडे वनैमा पर ।
गर्नेछन् दुनियाँ अनेक थरिका ❀ चर्चा त्यसै कारण
गर्नूपर्छ सपत्नि भैकन ठुलो ❀ साम्राज्यको शासन ॥१६१॥
यस्तो अर्ति सुनी प्रणाम प्रभुले ❀ वाल्मीकिलाई गरे
जानूभो मुनिजी अनी थरि-थरी ❀ चिन्ता अगाडी सरे ।
डाकी लक्ष्मणलाइ त्यै बखतमा ❀ आज्ञा दिए रामले
बाबू ! जाउ तिमी सुमन्त्र सँगमा ❀ हावा सरी वेगले ॥१६२॥

सीतालाइ बुझाइ पुत्र-सहितै ❀ ल्याऊ यहाँ सादर
यस्मा हुन्न विलम्ब गर्नु अथवा ❀ मान्नू कसैको डर ।
बोले लक्ष्मण-जान्छु जान त छिटै ❀ भन्छू बुझाई, तर
मानीनन् जननी भने गरुँ कसो ❀ यस्को दिनोस् उत्तर ॥१६३॥
त्यस्को उत्तरमा नबोलिकन क्यै ❀ श्रीराम उठ्नूभयो
जाँदा लक्ष्मणजी तुरुन्त रथ त्यो ❀ हावा-गतीले गयो ।
बस्छू नित्य म रामका चरणमा ❀ भन्ने बुझी कारण
क्रोधित् छन् कि मदेखि भिन्न जननी ❀ यस्तै गरी चिन्तन ॥१६४॥
यस्तै तर्कहरू गरेर मनमा ❀ पौंचे कुटीमा जब
ओर्ली त्यो रथबाट केहि पर नै ❀ ढोगीदिएथे तब ।
हे माता ! प्रभुकी सदा प्रियतमा ❀ गर्दै यि सम्बोधन
राखेथे शिर पाउमा जननिका ❀ संकोच मानीकन ॥१६५॥
सीताले सहसा भनिन् कर दुवै ❀ पक्री उठाईकन
मेरा देवर ! रामका प्रिय तिमी ❀ के गर्न आयौ भन ?
देख्दामा तिमिलाइ आज किन हो ❀ शंकित् छ मेरो मन
तिम्रो यो अनुहारमा पनि निकै ❀ देख्छू अशान्ती किन ॥१६६॥
कौसल्या अनि रामको कुशल के ❀ कस्तो छ दर्बारमा ?
ती शत्रुघ्न र भाइ ती भरतको ❀ सञ्चै छ की देहमा ?
मानी त्यो अपकीर्तिको डर अघी ❀ त्याग्छू म सीता भनी
छाड्ने यो वनमा स्वयं तिमि थियौ ❀ बिर्सीसक्यौ त्यो पनि ॥१६७॥
उस्तै छन् कि मदेखि क्रोधित अझै ❀ माफी मलाई दिए
आफ्नू ठान्नु हुँदैन भूपकन यो ❀ नीती छ जानीलिए ।
फैलेको छ सुकीर्ति यो बखतमा ❀ श्रीरामको लोकमा
कीर्तीमा गुणमा त सिन्धु सरिका ❀ ठान्छन् सबै विश्वमा ॥१६८॥

सत्कीर्ती प्रभुकी प्रिया बुझिलिनू ❀ कल्याणको कारण
उन्कै कीर्तिविषे अलीकति कतै ❀ मेरो छ सम्मिश्रण ।
त्यस्ता दीन-दयालु नाथकन क्यै ❀ त्याग्दैन मेरो मन
उन्कै पाउविषे रमाउँछु सदा ❀ रात्री र सारा दिन ॥१६९॥
सोही कारणले रहन्छु प्रभुकै ❀ पाऊ परी साथमा
प्रीति बढ्छ परै बसे पनि, उती ❀ देखिन्न सामान्यमा ।
कीर्ती बढ्न गयो मलाइ वनमा ❀ फालेर श्रीरामको
यो-भन्दा प्रिय छैन केहि प्रभुको ❀ यो नित्य हो, सत्य हो ॥१७०॥
होलान् सासुहरू सबै महलमा ❀ सञ्चै सुबिस्ता-सित
यस्ता बात सुनेर लक्ष्मण भए ❀ क्यै बेर मर्माहत ।
लागे भन्न बताउँछू महलको ❀ सञ्चो-बिसञ्चो अब
आरामै छ समस्त बन्धुजनमा ❀ आफ्नू पुरीमा सब ॥१७१॥
कौसल्या अनि कैकयी सब मिली ❀ भन्थिन् सुमित्रा पनि
सीता हुन् कुलकी वधू महलमा ❀ आऊन् खुशीले तिनी ।
आज्ञा भो प्रभुले मलाइ तिमिले ❀ निम्ता छ भन्नू अनि
ठूलो यज्ञ चलीरहेछ पुरमा ❀ सानन्द आऊन् तिनी ॥१७२॥
देहै मात्र उहाँ छ चित्त प्रभुको ❀ याहीँ छ रातो-दिन
बस्नूहुन्छ हजूरकै स्मरणमा ❀ साह्रै रुवाई मन ।
यो उद्यान र स्वच्छ आश्रम यहाँ ❀ श्री वाल्मिकीको छ जो
सीताजी त्यहिँ बस्तछिन् सुत-सहित् ❀ यै हेतु त्यो धन्य हो ॥१७३॥
सम्झन्छन् दिन-रात राम प्रभुले ❀ माला फिराए सरि
प्रारब्धै बलियो भनी मनमनै ❀ सम्झाउँछन् राम्ररी ।
आँटैं हिड्न यता जसै प्रभुजिले ❀ आज्ञा भयो फेरि यो
सीतालाइ भनीदिनू जति कुरा ❀ भन्छू म एकेक त्यो ॥१७४॥

विश्वामित्रजिका गएर सँगमा ❀ त्यो ताडका राक्षसी
मार्नू मारिच फ्याक्नु सिन्धुतटमा ❀ माने सबैले खुशी ।
भाँच्नू त्यो शिवको धनू, पशुराम्-❀ को शेखि झारीदिनु
कैकेयी विपरीत बन्नु, वनमा ❀ जानू पिताज्ञा हुनु ॥१७५॥
राजा मर्नु र भेटिनू ति हनुमान्, ❀ बाली त्यहीँ मारिनु
तर्नू क्षारसमुद्र, रावण लडी ❀ मार्नू र संग्राममा ।
भालू बाँदर नै सहायक हुनू ❀ फिर्नू जिती युद्धमा
लंकाबाट गई हुनू तिलक-ओ ❀ बन्नू अयोध्यापति ॥१७६॥
तिम्रै पुण्य-प्रतापले सब भयो ❀ मैले गरें जो जति
तस्मात् आउ तिमी ठुलो महलमा ❀ त्यागी त्यहाँको वन ।
छौ प्यारी ! बहुतै पवित्र मनकी ❀ क्यै दोष लाग्यो भनी
हो यो दैवगती विचार गरिल्यौ ❀ जाने नजाने पनि ॥१७७॥
आएको सुख-दुःख भोग्नु जनको ❀ कर्तव्य हो मान्दछु
हाम्रो प्रीति बढाउने स्थिति सदा ❀ राम्रो भनी जान्दछु ।
आफ्ना पुत्र दुवै लिएर सँगमा ❀ आऊ ठुलो यज्ञमा
तिम्रो कीर्ति ठुलो हुनेछ यसरी ❀ फैलेर संसारमा ॥१७८॥
तिम्रो यो अनुपस्थिती हुन गई ❀ साह्रै अँध्यारो भयो
आए झट्ट तिमी र उज्ज्वल सबै ❀ पारे विपत्ती छ जो ।
हे सीते ! तिमि हामि शुद्ध मनका ❀ निर्दोष छौं तापनि
बढ्दा मोह तथा अहं हृदयमा ❀ नाशिन्छ चाँडै भनी ॥१७९॥
ठूलो कीर्ति छ लोकमा बुझ तिमी ❀ हामी दुवै व्यक्तिको
ठूलो वंश र कर्ममा रस बढी ❀ पाइन्छ यो सत्य हो ।
हे भौजू ! अघि, आउने बखतमा ❀ आज्ञा भयो रामले
भन्नू यो तिमिले पुगेर कुटिमा ❀ एकेक विस्तारले ॥१८०॥

आँखामा जल पूर्ण पारि प्रभुले ❀ आज्ञा भएको जति
मैले बिन्ति गरीसकेँ अब अरू ❀ मैले भनूँ के कति ।
ल्याएको छु अनेक वस्त्र गहना ❀ चाहिन्छ जे-जे सब
पैह्री चढ्नुहवस् तुरुन्त रथमा ❀ जाऊँ पुरीमा अब ॥१८१॥
सीताले यति प्रार्थना सुनिसकी ❀ बोलिन् ति हे लक्ष्मण !
फैलेको जति जे छ कीर्ति प्रभुको ❀ त्यस्मा विना-कारण ।
बाधा पार्न मलाइ छैन मनमा ❀ इच्छा कुनै बातको
आफ्नू कीर्ति बढाउने पनि कुरा ❀ भन्दीनँ यो सत्य हो ॥१८२॥
हुन्छन् भूपहरू निरंकुश निकै ❀ पत्यार यो मान्दिनँ
छैनौ आफु तिमी स्वतन्त्र कसरी ❀ जाऊँ त्यहाँ लौ भन ।
स्वामीको यदि दोष केहि छ भने ❀ त्यो छोप्तछन् पत्निले
मैले भन्नु हुँदैन बात सहसा ❀ ऐह्ले त्यसै हेतुले ॥१८३॥
जस्तो रूप अघी जनक्पुरमहाँ ❀ देखीलिएँ रामको
सोही रूप छ यो दुखी हृदयमा ❀ फालेर फालिन्न त्यो ।
जन्मेका प्रभुको सुअंश लिइ जो ❀ मेरा दुवै छन् सुत
पूरा छन् सब अस्त्र-शस्त्रहरुमा ❀ एक्केक पारंगत ॥१८४॥
लैजाऊ दुइ पुत्रलाइ प्रभुका ❀ राखीदिनू काखमा
बस्नेछू म यहीँ रहुन् सुत दुवै ❀ श्रीरामका साथमा ।
ती सासूहरुको प्रणाम पदमा ❀ बिन्ती चढाईदिनू
जो-जो छन् घरमा सबैकन उता ❀ सञ्चै छ यो भन्दिनू ॥१८५॥
यस्ता बात भनेर पुत्र ति दुवै ❀ डाकी भनिन् प्रेमले
डाकेछन् तिमिलाइ वाल्मिकिजिले ❀ जाओ दुवै हर्षले ।
जानूपर्छ अवश्य लक्ष्मण-सितै ❀ आफ्नू अयोध्यापुरी
यस्ता बात सुनी हिडे खुशि हुँदै ❀ पूरा तयारी गरी ॥१८६॥

जाने आफु निधो नगर्न सकि ती ❀ राम्रो कुटीमै रहिन्
सम्झीदै रघुनाथलाइ मनले ❀ चिन्ताविषे गाडिइन् ।
दोटै पुत्र लिएर लक्ष्मण पुगे ❀ चाँडै अयोध्या अनि
जिम्मा वाल्मिकिको दिए सुत दुवै ❀ बस्नू यहीँ नै भनी ॥१८७॥
पौंचे लक्ष्मण रामका हजुरमा ❀ जे-जे भयो त्यो कुरा
त्यो विस्तार गरे प्रभू-चरणमा ❀ यौटा नबिर्सी पुरा ।
केही बेर गरी विचार मनमा ❀ बोले ति हे लक्ष्मण !
फेरी जाउ तिमी बुझाउनु सबै ❀ भन्छू म जे गन्थन ॥१८८॥
हे सीते ! तिमि गर्दछ्यौ त्यहिँ बसी ❀ एक्लै तपस्या किन ?
त्यस्को क्यै फल हुन्न प्राप्त खुशिले ❀ मैले भनेको सुन ।
नारीको तप दान तीर्थ व्रत ती ❀ हुन्छन् उसैका पति
तस्मात् आउ छिटै, सँगै यहिँ बसौँ ❀ आनन्द मानी अति ॥१८९॥
ठूलो यज्ञ छ अड्कियो तिमि-विना ❀ एक्लै नहूने भयो
मैले डाकिलिँदा नआउनु यहाँ ❀ बाधा ठुलो के पर्‍यो ।
मैले जाउ भनी दिएपछि बिदा ❀ आनन्द मानी गयौ
भन्दै छू अब आउ झट्ट तपनी ❀ के कामले रोकियौ ॥१९०॥
पूजा ती ऋषि-पत्निको गरि छिटै ❀ फिर्ने प्रतिज्ञा थियो
आईनौ तर सोह्र वर्ष बितिगो ❀ आश्चर्य ठूलो भयो ।
स्त्रीले जे जति गर्दछन् ति पतिको ❀ कल्याणको खातिर
खूशी छू म भने, त्यहाँ बसि तिमी ❀ के गर्न छौ तत्पर ॥१९१॥
आज्ञा दिन्छु तुरुन्त आउ घरमा ❀ शंका नमानीकन
मैले जो अहिले भनें सब कुरा ❀ भन्नू गई लक्ष्मण ।
आज्ञाले रघुनाथको वन गए ❀ सीताजि फर्काउन
गर्थे तर्कहरू अनेक थरिका ❀ बाटोभरी लक्ष्मण ॥१९२॥

ज्ञानी वाल्मिकिले कुमार ति दुवै ❀ आफ्नू लिई साथमा
हुन्थ्यो यज्ञ जहाँ पुगे तिनिहरू ❀ श्री सर्युको तीरमा ।
यौटै राम थिए त्रिमूर्ति अहिले ❀ प्रत्यक्ष नै देखिए
यस्तो अद्भुत देखि लोकहरुले ❀ आश्चर्य मान्दा भए ।।१९३।।
वाल्मीकि मुनिले कुमार दुइमा ❀ संकेत केही दिए
भाई ती लवले मृदङ्ग करमा ❀ आनन्दले पक्रिए ।
वीणा लीकन त्यो सहर्ष कुशले ❀ सातै मिलाई स्वर
थालेथे जब त्यो बजाउन तिनी ❀ अत्यन्त नै सुन्दर ।।१९४।।
सारा मोह भए सुनेर ध्वनि त्यो ❀ जो-जो थिए दर्शक
आँखाबाट ति मोति झैं जल गिरे ❀ गाना सुनी मोहक ।
धेरै वाद्यहरू लिई अरु पनी ❀ नाचेर गाए जब
सारा जन्तु मनुष्य पक्षि वनमा ❀ झन् लट्ठिएथे सब ।।१९५।।
श्रीवात्स्यायनले सुध्याउनुभयो ❀ श्री शेषलाई अनि
यो रामायणको भएछ रचना ❀ के हेतु कैह्ले भनी ।
लागे भन्न बुझाइ शेष प्रभुले ❀ हे विज्ञ वात्स्यायन !
श्रीरामायणको म भन्छु रचना ❀ संक्षेपमा लौ सुन ।।१९६।।
वाल्मीकि मुनिजी कुनै समयमा ❀ वन्मा गएका थिए
त्याहाँ वृक्ष लता अनेक थरिका ❀ जङ्गल्महाँ देखिए ।
जोडी एक त्यहीँ कर्याङ्कुरुङ्का ❀ खेल्दै थिए वृक्षमा
व्याधाले शर छाडि मारिन गयो ❀ भाले त्यही ठाउँमा ।।१९७।।
पोथी दीन मलीन हीन भइ जो ❀ रोई असाध्यै जब
वाल्मीकि मुनिले लिई जल त्यहीँ ❀ बोले रिसाई तब ।
हे व्याधा ! तिमिले वृथा गरिदियौ ❀ हत्त्या, त्यसै कारण
कीर्ती नष्ट हुनेछ औ नरकमा ❀ बित्नेछ धेरै दिन ।।१९८।।

निस्केथ्यो मुखबाट वाल्मिकिजिको ❀ जुन् श्लोक त्यै स्थानमा
भारद्वाज मुनी उपस्थित भए ❀ ताहीँ कुनै काममा ।
बोले श्लोक सरस्वती खुशि हुने ❀ निस्क्यो अकस्मात् यहाँ
त्यो सुन्दा मुनि वाल्मिकी खुशि भए ❀ आफ्नू दुखी मन्महाँ ।।१९९।।
ब्रह्मा आइ दिए त्यहीँ वर सबै ❀ होला सुसिद्धी भनी
तिम्रो कीर्ति हुनेछ कल्पतक यो ❀ नाशिन्न कैह्ल्यै पनि ।
बोल्यौ उत्तम 'मा निषाद' तिमिले ❀ खल्ने [illegible] शारदा
यस्ले कीर्ति तथा ठुलो सुख फ्नी [illegible] सदा-सर्वदा ।।१।।
श्रीरामायणको समस्त रचना ❀ शंका नमानी गर
कीर्ती फैलिइ शुद्ध निर्मल भई ❀ जानेछ चारैतिर ।
पापीले पनि यो सुने यदि पढे ❀ तर्छन् अवश्यै पनि
यस्तो अर्ति दिई अदृश्य हुनुभो ❀ ब्रह्मा दयालू बनी ।।११।।
त्यो रामायणको गरौँ म रचना ❀ ऐह्ले यहाँ के गरी
यो शंका हुनगो र राम प्रभुले ❀ दर्शन् दिए त्यै घरि ।
पाएथे रघुनाथको र विधिको ❀ सद्बुद्धि खुल्ने वर
श्रीरामायण सात काण्ड रचना ❀ तिन्ले गरे सादर ।।१२।।
पैह्लो उत्तम बालकाण्ड र अयो- ❀ ध्याकाण्ड, आरण्य र
किष्किन्धा अनि काण्ड सुन्दर पछी ❀ हो युद्ध औ उत्तर ।
वाल्मीकि ऋषिको सुरम्य रचना ❀ भन्ने र सुन्ने पनि
जान्छन् मुक्त भएर स्वर्गपुरिमा ❀ बस्छन् ति पार्षद् बनी ।।१३।।
भन्दै छू अब सात काण्डहरुको ❀ सारांश संक्षेपमा
विश्वामित्र पुगेर भाइ ति दुवै ❀ माग्गी लगे साथमा ।
सीताराम विवाह भो, परशुराम् ❀ हारे सबै बातमा
फर्केथे सब ती सहर्ष पुरिमा ❀ सानन्द उत्साहमा ।।१४।।

सीता राम बसे ठुलो महलमा ❀ आनन्दले क्यै दिन
कैकेयी विपरीत भै वन गए ❀ सीता लिई लक्ष्मण ।
राजा मर्नु तथा सुनी भरतले ❀ पौंचेर फर्काउन
नन्दीग्राम बसे खराउ लिइ ती ❀ गर्दा भए शासन ।।१५।।
भो आरम्भ अरण्यकाण्ड त्यहिँ नै ❀ पूरा अयोध्या भयो
गर्दा चाकरि विज्ञको सुजनको ❀ क्यै काल त्यस्मा गयो ।
पौंचे पञ्चवटी डुले वनवनै ❀ तीनै जना तीं अनि
पारे शूर्पणखा बुची अनि बुची ❀ भागी बनी दुःखिनी ।।१६।।
मारेथे खर-दूषणादि वनमै ❀ मारीचलाई जब
सीतालाइ हरेर रावण गयो ❀ लंकापुरीमा तब ।
तारे भक्त कबन्धलाइ र पुगे ❀ श्रीराम पंपापुरी
भेटेथे हनुमानलाइ सकियो ❀ आरण्य राम्रो गरी ।।१७।।
मैत्री सुग्रिव साथमा हुनगयो ❀ साक्षी गरी अग्निको
बाली मारि रजाइँ मित्रकन त्यो ❀ आनन्दले बक्सियो ।
गर्नू पर्वतको अनेक ऋतुको ❀ विस्तारले भर्मण
सम्झाए पुरमा गएर क्रमले ❀ सुग्रीव योद्धाकन ।।१८।।
सीता खोज्न भनी सबैतिर छिटै ❀ सेना पठाईदिए
पौंचेथे जब सिन्धुको तट त्यहीँ ❀ सम्पातिजी भेटिए ।
किष्किन्धा सकियो र काण्ड शुरु भो ❀ विस्तारले सुन्दर
कस्ले सक्तछ सिन्धु तर्न भनि यो ❀ चर्चा चलेथ्यो, तर ।।१९।।
पौंचे सिन्धु तरेर वीर हनुमान् ❀ लंकापुरीमा अनि
जाँदा भित्र लुकेर बीच पथमै ❀ देखा परी लंकिनी ।
भेटेथे पहिले विभीषण, भयो ❀ सीताजिको दर्शन
मारे अक्षकुमारलाइ र पर्‍यो ❀ ब्रह्मास्त्रको बन्धन ।।२०।।

लंका ध्वस्त गराइ वायु-गतिले ❀ फर्के ति वायू-सुत
बिन्ती श्रीरघुनाथमा गरिदिए ❀ एकेक राम्रो-सित।
सेना सागरको पुगेर तटमा ❀ बाँधे बलीयो पुल
ज्ञाता त्यो पुल बाँध्न वानर थिए ❀ ती नील अर्को नल ॥११११॥
पूरा 'सुन्दर' भो र युद्ध शुरु भो ❀ संग्राम त्यो मच्चियो
मर्नु रावण कुम्भकर्ण रणमा ❀ भो भेट सीताजिको।
सातौं उत्तरकाण्डमा हुन गयो ❀ संवाद वाल्मीकिको
घोडा छाडनु यज्ञ गर्नु पथमा ❀ संग्राम भूपालको ॥१११२॥
यो रामायण पाठ गर्छ जन जो ❀ श्रद्धा र भक्तीसित
त्यस्को पाप सखाप हुन्छ, अरुको ❀ गर्ला सबैको हित।
भन्नूभो सब यो कथा सुख दिने ❀ संक्षेपमा शेषले
त्यो वात्स्यायनले यथाक्रम सुने ❀ श्रद्धा तथा भक्तिले ॥१११३॥
हे वात्स्यायन ! फेरि वायु-गतिले ❀ पुग्दा भए लक्ष्मण
ढोगे पाउ परेर दण्डसरिको ❀ लामू तुल्याई तन।
बोले हे जननी ! म फेरि पदमा ❀ आएँ हुकुम्ले गरी
आज्ञा भो प्रभुले विलम्ब नगरी ❀ जाऊँ छिटै यै घरि ॥१११४॥
मैले बात जती भनें सब कुरा ❀ विस्तार पैह्ले गर
जाँदै जान्नँ भनी अडिन् यदि भने ❀ बिन्ती गरे सादर।
यस्तै बात अरू पनी प्रभुजिका ❀ तिन्ले सुनाए जब
बोलिन् चित्त बुझी तिनी मनमनै ❀ हे राम ! हे राघव ! ॥१११५॥
ल्याएका गहना र सारि खुशिले ❀ एकेक पैह्रीलिइन्
आफ्ना ती सँगिनीहरूसित बिदा ❀ तत्काल माग्दीभइन्।
ल्याएको रथमा चढी जनकजा ❀ लागिन् अयोध्यातिर
पौंचिन् क्यै छिनमै उड़े सरि गरी ❀ ओर्लिन् भई सुस्थिर ॥१११६॥

सीताले रघुनाथका चरणमा ❀ ढोगिन् झुकाई शिर
पक्री बाहुलिमा उठाउनुभयो ❀ श्रीराम भै तत्पर ।
तिम्रा साथ बसेर श्रेष्ठ मख यो ❀ गर्छू म पूरा अब
आज्ञा गर्नुभयो प्रसन्न मनले ❀ सीते ! भनी राघव ।।११७।।
कौसल्या जननी भनी चरणमा ❀ ढोगिन् सिताले जब
सीता आइपुगिन् भनी महलमा ❀ आनन्द मानिन् तब ।
सीताजी दुइ पुत्र लीकन गिरिन् ❀ कैकेयिका पाउमा
आशीर्वाद दिइन् प्रसन्न मनले ❀ हातै धरी माथमा ।।११८।।
सीताले दुइ पाउमा विनयले ❀ ढोगिन् सुमित्राकन
आशीर्वाद दिइन् बनून् सुतहरू ❀ धेरै अती सज्जन ।
सीताजी गुरु श्रीवसिष्ठ मुनिको ❀ पुग्दी भइन् सामुमा
मूर्ती जानकिको हटाइ सुनको ❀ राखे सितै लौ त्यहाँ ।।११९।।
पैह्ले यज्ञ गरे ठुलो मरुतले ❀ भाँडा सुनैका थिए
पाएको धन दान बोक्न नसकी ❀ विप्रादिले फाल्दिए ।
ल्याई त्यै धननै कती नृपतिले ❀ याग् राजसूयै गरे
त्यो-भन्दा हयमेधमा प्रभुजिले ❀ सम्पत्ति धेरै धरे ।।१२०।।
मुद्रा जो सुनका थिए ढुकुटिमा ❀ गन्नै नसक्ने गरी
बाँड्नूभो रघुनाथले खुशि भई ❀ पानी परेझैं छरी ।
पाए दीन दरिद्र हीन जनले ❀ इच्छा गरेझैं धन
नाना रत्न सुर्वण वस्त्र धन भो ❀ मिष्ठान्नको भोजन ।।१२१।।
पाए इच्छित वस्तु त्यो बखतमा ❀ हर्षित् भएथे जन
कम्ती केहि भएन श्रेष्ठ मखमा ❀ बढ्दै गयो झन् धन ।
जो-जो दान पुराण शास्त्रहरुले ❀ निश्चित् गरेका थिए
त्यस्को दोबर पारि राम प्रभुले ❀ सानन्द बाँड्दा भए ।।१२२।।

त्यै वेला गुरुले भने विनयले ❀ राजाहरू छन् जति
गाग्रोमा सुनका सपत्निक भई ❀ शंका नमानी रति ।
ल्याऊन् शुद्ध पवित्र स्वच्छ जल लौ ❀ स्नानादिका खातिर
सुन्नासाथ भए सबै नरपती ❀ त्यै काममा तत्पर ॥१२३॥
ल्याए भूपहरू गएर सरयू- ❀ को स्वच्छ पानी जब
घोडालाइ गराइ स्नान गुरुले ❀ तैयार पारे तब ।
घोडालाइ तुरुन्त धाप दिनुभो ❀ श्रीरामले पीठमा
सुम्पेथे तरबार शीघ्र गरुले ❀ श्रीरामको हातमा ॥१२४॥
घोडाको बलिदान दीकन झिकी ❀ बोसो दिने आहुति
यै हो अन्तिम कार्य शेष अब त्यै ❀ गर्नूहवस् सद्मति !
त्यै बेला हय-देह त्यागि सहसा ❀ त्यो देवता झैं भयो
पैह्री उत्तम वस्त्र रत्न गहना ❀ त्यो स्वर्गमा नै गयो ॥१२५॥
सेवामा खुद अप्सरा-गणहरू ❀ देखेर यो के भनी
सोध्नूभो रघुनाथले उसँग यो ❀ केही नजान्ने बनी ।
पैह्ले जन्म हुँदा थियौ तिमि कहाँ ❀ यो जन्म पायौ किन ?
जाँदै छौ अहिले कहाँ गर सबै ❀ यो बातको वर्णन ॥१२६॥
बोले ती-प्रभुलाइ ज्ञात छ सबै ❀ सर्वज्ञ हे राघव !
सोध्नूभो प्रभुले म भन्दछु प्रभो ❀ संक्षेपमा त्यो सब ।
पैह्ले जन्म हुँदा म ब्राह्मण थिएँ ❀ सद्धर्मको रक्षक
गंगाका तटमा बसेर दिनहूँ ❀ ठग्थें म द्रव्यादिक ॥१२७॥
ज्ञानी हूँ म भनेर घोर छलले ❀ आजीविका गर्दथें
गर्थें आर्जन पापको दिनदिनै ❀ आनन्द नै मान्दथें ।
दुर्वासा ऋषि क्रोधमूर्ति सहसा ❀ आए र कोही दिन
मैले गर्न सकीनँ स्वागत कुनै ❀ मन्मा अहं भैकन ॥१२८॥

मेरा कृत्य जती थिए दिनहुँका ❀ प्रत्येक देख्दै थिए
केही बेर नबोलि भित्र मनमा ❀ क्रोधित् निकै देखिए ।
तेरो जो छ चरित्र घोर कपटी ❀ देखें र जानें पनि
ऐल्हे जा पशु-जन्म धारण गरेस् ❀ हो श्राप मेरो भनी ॥१२९॥
मार्गें माफ डरी, परी चरणमा ❀ ब्रह्मन्! बिराएँ भनी
दुर्वासा ऋषिले भने त्यति सुनी ❀ केही दयालू बनी ।
घोडा भैकन श्यामकर्ण तँ रहेस् ❀ ठूलो तबेलामहाँ
गर्नेछन् हय-मेध राम प्रभुले ❀ नै धाप मार्नन् त्यहाँ ॥१३०॥
तेरो मुक्ति हुनेछ, स्वर्गपुरिमा ❀ जालास् बुझीले अब
अर्को छैन उपाय यो विषयमा ❀ मैले बताएँ सब ।
जान्छू स्वर्गपुरी म मोचन गरी ❀ त्यो श्रापको हे प्रभो !
गर्दै छू म प्रदक्षिणा हजुरको ❀ माफी मिलोस् हे विभो !॥१३१॥
देखेथे सबले चरित्र प्रभुको ❀ अत्यन्त हर्षित् भए
पाऊमा रघुनाथको परि-परी ❀ जैकार गर्दै गए ।
सोध्नूभो गुरुलाइ राम प्रभुले ❀ घोडा गयो स्वर्गमा
के गर्ने हयमेध पूर्ण हुनको ❀ चिन्ता पऱ्यो चित्तमा ॥१३२॥
बोले-युक्ति छ अश्वको प्रतिनिधी ❀ कर्पूर हो भन्दछन्
ल्याई पूर्ण गरौं त्यही मख, यही ❀ षट्शास्त्रले मान्दछन् ।
आज्ञाले गुरुको प्रभू खुशि भई ❀ कर्पूर जम्मा गरी
त्यस्कै आहुति देवताकन दिए ❀ वेदोक्तले राम्ररी ॥१३३॥
ब्रह्मा इन्द्र कुबेर औ वरुणजी ❀ श्रीशम्भु विष्णू अनि
पाए हव्य समस्त देवगणले ❀ हो भाग मेरो भनी ।
सारा ब्राह्मण देवता र अतिथी ❀ जो-जो बसेका थिए
भोको कोहि रहेन पंछि पशुमा ❀ सारा अघाईगए ॥१३४॥

पाए द्रव्य अनेक अश्व-मखका ❀ जो कार्यकर्ता थिए
धैरै सम्पति द्वारपाल-सहितै ❀ ऋत्विक्हरूमा दिए ।
लावा पुष्प अबीर वर्षण गरे ❀ आकाशमा देवले
जै-जैकार गरे कठोर स्वरमा ❀ नाचे कती हर्षले ।।१३५।।
आज्ञा भो रघुनाथलाइ गुरुले ❀ सेना र अन्यान्यको
यौटा कार्य छ शेष, स्नान अवभृथ् ❀ सीता तथा रामको ।
यो सुन्दा सबको खुशी मन भयो ❀ सेना-सहित् दौडिए
ठूलो भीड भयो म जान्छु पहिले ❀ भन्दै अगाडी गए ।।१३६।।
बाजा खूब बजाउँदै स्तुति पढी ❀ राजाहरू जो थिए
दौडे ती सरयूतिरै रथ चढी ❀ घोडा कुदाईलिए ।
गर्दा त्यो अभिषेक स्नान तनमा ❀ छीटा परे तापनि
त्यस्ले यज्ञ-समानको फल छिटै ❀ नै प्राप्त गर्ला भनी ।।१३७।।
गर्नूभो जब रामले त अवभृथ् ❀ त्यो स्नान जल्मा जब
जै-जै राम भनेर उच्च स्वरले ❀ भन्थे ति हे राघव !
यस्तो यो हयमेध राम प्रभुले ❀ गर्नूभएको थियो
सुन्नाले पनि पाप जान्छ तनको ❀ हो बात यो शास्त्रको ।।१३८।।
जस्तो त्यो हयमेघ राम प्रभुले ❀ सानन्द गर्नूभयो
त्यस्तो गर्न सकेन कोहि नृपले ❀ यो बात हो शास्त्रको ।
हे वात्स्यायन ! अश्वमेध मखको ❀ पूरा सुनाएँ कथा
यो-भन्दा अरु श्रेष्ठ छैन भवमा ❀ सम्पूर्ण हर्ने व्यथा ।।१३९।।

यो अश्वमेध मखको महिमा अपार
पाउन्न वर्णन गरे पनि कोहि पार ।
श्रीरामदेखि बढि शक्ति छ नाममा जो
सत्तैन बुझ्न सबले प्रभु-भक्ति जो हो ।।१४०।।

बुझ्नेछ जुन् पुरुषले बुझ सिद्ध त्यै हो
ज्ञानी तपी पृथिविमा पनि श्रेष्ठ त्यै हो।
जो गर्दछन् तप बसीकन घोर वन्मा
तिन्को रहन्छ बलियो सित राम मन्मा ॥१४१॥
त्यो युद्धकाण्ड सकि वाल्मिकिजी बिसाए
सातौं त काण्ड पछिका कविले मिसाए।
यो आठवाँकन त शेषजिले बताए
भो आठकाण्ड सबले अनि पढ्न पाए ॥१४२॥
अध्यात्मरामायणको लेखियो सार भक्तिले।
तनहूँ चुँदिबेसीको रम्घाली भानुभक्तले ॥
उन्डाईस सये बीस साल विक्रमको हुँदा।
आषाढ़मा लेखिसकेँ पढून् भक्तहरू सदा ॥

॥ इति आठकाण्ड रामायण समाप्त ॥



सीताराम सीताराम सीताराम जय सीताराम :
सीताराम सीताराम सीताराम जय सीताराम :
रघुपति राघव राजाराम : पतित-पावन सीताराम :